# समर्पण



०0९ पुष ११ गते सिन्धुलीको नांगेडाँडामा जन्मनुभएका प्रकाश काफ्लेको ०४९ साउन १६ गतेका दिन नुवाकोटको घोप्टे भीरमा भएको थाई एयरवेजको दुर्घटनामा परी निधन भएको थियो । प्रतिवद्ध मानव अधिकार प्रवक्ता काफ्ले "जनताको सार्क" निर्माण गर्ने काममा पनि लागिपर्नु भएको थियो ।

जसले यो वर्ष पुस्तकको स्वप्न मात्र देख्न भ्यायो !
तर जसको प्रेरणादायी स्मृति र मार्गदर्शनले वर्ष पुस्तकको !!
तंयारीका निम्ति हरेक पल ऊर्जा प्रदान गरी रह्यो !
नेपालको मानवअधिकार आन्दोलनका तिनै ध्रुवतारामा !!

# मानवअधिकार वर्ष पुस्तक - १९९२

प्रकाशक

अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक)
पोष्टवक्स २७२६, काठमाण्डौ, नेपाल
फोन नं. २७०७७०

पहिलो संस्करण

०४९ फागुन
संख्या: एक हजार पाँचसय प्रति



आवरण र भित्री पृष्ठ सज्जा

जीवन राजोपाध्याय

कम्प्युटर डिजाइन

जनार्दन घिमिरे

टाइप सेटिङ

किरण माली
सन्तोष प्याकुरेल
शंकरप्रसाद बास्तोला
जगदीश दाहाल

मूल्य: रु. १२५।-

मुद्रक

अल्फा प्रिन्टिङ प्रेस
कोपुण्डोल, ललितपुर
फोन नं. ५२३६०४

# मानवअधिकार वर्ष पुस्तक - १९९२


**सल्लाहकार**

ऋषिकेश शाह
वासुदेव ढुङ्गाना

**कार्यकारिणी**

डा. राजेश गौतम
सुबोधराज प्याकुरेल
पवनकुमार ओझा
शिवहरी दाहाल
अशोक थापा

**संयोजक**

सुशील प्याकुरेल

**सम्पादन / परिमार्जन**

कपिल घिमिरे
कुन्दन अर्याल

# भूमिका

मानवअधिकार आन्दोलन एउटा निरन्तर चलिरहने प्रक्रिया हो । मानिसले मानिस भएर बाँच्न शताब्दीऔंदेखि विभिन्न संघर्षहरु गर्दै आएका छन् । उक्त संघर्ष अझै चलिरहेको छ र निरन्तर चलिरहनेछ। हाम्रो देशमा पनि मानवअधिकार संरक्षण र विकासका लागि जनताले यस आन्दोलनलाई गति प्रदान गरिराखेका छन् ।

मानवअधिकार र प्रजातन्त्र एक आपसका पर्यायवाची हुन् । एक बिना अर्काको अस्तित्व रहन सक्दैन । मानव अधिकारको अभावमा प्रजातन्त्र खोक्रो हुन्छ भने प्रजातन्त्रको अभावमा मानवअधिकार लङ्गडो हुन्छ । त्यसैले नै हो नेपालमा प्रजातन्त्र र मानव अधिकार आन्दोलनहरु हातेमालो गर्दै अगाडि बढेका छन् ।

जनआन्दोलनको सुरुवातकै हाराहारीमा मूलत: जनतामा मानवअधिकार सचेतनता अभियानलाई पुऱ्याउने अभिप्रायबाट स्थापित अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ले जनसमक्ष विभिन्न कार्यक्रमहरु गरिसकेको छ । यो संस्थाले मानव अधिकारको क्षेत्रमा परम्परागत किसिमको कार्यशैलीभन्दा पनि देशमा विद्यमान मानवअधिकारका समस्याहरुको खोजी गर्दै तिनलाई उजागर गर्ने अनि ती समस्याहरुको जनसंलग्नताद्वारा समाधान खोज्ने कार्यशैली अघि बढाएको छ । यसै सन्दर्भमा नेपालमा बाँधा मजदूर सम्बन्धी इन्सेकको अध्ययन प्रतिवेदन अनि विविध महिला समस्याबारेका यसका प्रतिवेदनले समस्याहरु जनसमक्ष प्रस्तुत गरेका छन् ।

मानवअधिकारको विश्वव्यापी घोषणापत्र १९४८ इन्सेकको मार्गदर्शक सिद्धान्त हो भने त्यस घोषणापत्रको सर्वव्यापिता र अविभाज्यताका लागि निरन्तर संघर्षरत रहनु यसको घोषित नीति हो । यसैले नै खासगरी राजनैतिक र नागरिक अधिकार अनि आर्थिक-सामाजिक र सांस्कृतिक अधिकारको समान प्राप्तिका लागि इन्सेक सदैव यस आन्दोलनमा अग्रसर छ ।

एकातिर मानव अधिकार आन्दोलनलाई गति र दिशा दिनका लागि आम जनपरिचालनको आवश्यकता पर्छ भने अर्कोतिर यसको विकास र स्थायित्वका लागि सचेत जनदवावको पनि आवश्यकता पर्दछ । सचेत जनदवाव, जनतामा मानव अधिकार बारेको सचेतन अभियानबाट मात्र सम्भव छ अर्थात् मानवअधिकार शिक्षालाई जनसमक्ष पुऱ्याउन आवश्यक छ ।

मानवअधिकारको जगेर्ना र विकास जनताको सचेतन संलग्नताबाट मात्र सम्भव छ र यसका लागि मानवअधिकार सम्बन्धी सूचनाहरु जनतामा निरन्तर पुऱ्याइरहनु आवश्यक पर्छ । मानवअधिकारको स्थितिबारे जति सही सूचना हामी जनसमक्ष पुऱ्याउन सक्छौं त्यत्तिकै हामी जनतालाई यस आन्दोलनमा संलग्न गराउन सक्छौं ।

एउटा परम्परागत सोचाइ छ त्यो के भने मानव अधिकारको हनन जहिले पनि राज्यले गर्छ र त्यसैले प्रत्येक मानव अधिकार हननका लागि सरकार वा राज्य दोषी हुन्छ । तर हामीलाई लाग्छ यो भनाइमा सत प्रतिशत सत्यता छैन । निश्चय पनि मानव अधिकार हननका लागि प्रमुख दायित्व राज्य वा सरकारमा जान्छ तर सधैं त्यस्तो स्थिति मात्र हुँदैन । धेरै स्थितिहरुमा राज्यभन्दा पनि वा राज्यको संलग्नताको निरपेक्षतामा पनि मानवअधिकार हनन हुन सक्छ ।

मानवअधिकारको चेतनाको अभावमा जनताबाट जनताकै मानव हकको उल्लंघन भएको उदाहरण खोज्न हामी नेपालीले झन् कतै जानै पर्दैन । नेपालमा मानवअधिकार हनन भएका तथ्यहरुलाई यथार्थमा विश्लेषण गर्ने हो भने हाम्रो सामाजिक बनौट, हाम्रो चेतना स्तर अनि राजनैतिक दलहरुमा रहेको संकीर्णता अहम् र सत्ता उन्माद अनि मानव अधिकारप्रतिको ओठे भक्तिले गर्दा पनि मानवअधिकार हनन भैरहेको स्पष्ट हुन्छ ।

जबसम्म हाम्रो राष्ट्रिय अङ्गका प्रमुख इकाईहरुले मानवअधिकारको सम्मानलाई आफ्नो जीवन शैलीका रुपमा अंगिकार गर्दैनन् तबसम्म मानवअधिकारको जगेर्ना र विकास गर्न सम्भव छैन । यस्तो स्थितिमा मानवअधिकारबारेमा नियमित अनुगमन हुनु नितान्त आवश्यक छ । हामीलाई राम्ररी थाहा छ पञ्चायत कालमा तत्कालीन सत्ताधारीहरुले बारम्बार नेपालमा मानव अधिकारको ग्यारेण्टी भएको मात्र हैन मानव अधिकारको स्थिति "उत्कृष्ट" रहेको समेत दाबी गर्ने गरेका थिए । त्यस्तै जनआन्दोलन सफल भएर देशमा बहुदलीय व्यवस्था आए पश्चात् पनि यहाँको मानवअधिकारको समग्रमा स्थितिप्रति वादविवाद भइनै राखेको छ । नयाँ संविधानको निर्माण अनि कतिपय मानव अधिकारलाई प्रत्याभूति गर्ने अन्तराष्ट्रिय कानूनहरुमा नेपालले हस्ताक्षर गरी त्यसप्रति आफ्नो प्रतिबद्धता जनाएको छ । तर यी सब कुरा एउटा विषयगत आधार मात्र हुन् । व्यवहारमा मानव अधिकार कस्तो रहृयो यो नै आम जनताको चासोको विषय हो। यसै सन्दर्भमा एकपटक वर्तमान गृहमन्त्रीले नेपालमा

मानवअधिकारको स्थिति संसार मै राम्रो भन्नु भएपछि धेरै व्यक्तिहरु मूलत: मानवअधिकारको क्षेत्रमा काम गर्नेहरुका बीचमा छलफल प्रारम्भ भयो । हरेक सत्तापक्षले आफ्नो समयमा मानवअधिकारको स्थितिलाई "उत्कृष्ट" वा "राम्रो" भन्दै जाने हो भने मानव अधिकार आन्दोलन नै प्रभावित हुन सक्छ । सत्तापक्षले जे जस्तो स्थितिमा पनि "राम्रो" अनि प्रतिपक्षले जे जस्तो स्थितिमा पनि "अति नराम्रो" भन्ने मात्र हो भने यसको सम्वर्धन र रक्षामा प्रतिकूल असर पार्न जान्छ ।

राजनीतिका लागि मानवअधिकार स्थितिको राम्रो वा नराम्रो टिप्पणी गर्ने परम्परालाई तोड्ने जिम्मेवारी मानवअधिकार कार्यकर्ताहरुकै हो । मावअधिकार स्थितिको तथ्यगत प्रस्तुतिद्वारा त्यस्तो प्रचलनलाई धेरै हदसम्म कम गर्न सकिन्छ । हामीकहाँ मानवअधिकार स्थितिको विवाद अलि बढी नै हुने गरेको पाइन्छ । प्रलेख व्यवस्थाको कमीका कारण त्यस्ता विवादहरु तथ्यको धरातलभन्दा पृथक समेत रहेको देखिन्छ । प्रलेख व्यवस्थाको कमी अनि तिनको निश्चित समयावधिभित्र सार्वजनिक प्रकाशनको अभावमा जनताले "कतिखेर कस्तो स्थिति" रह्यो भन्ने खोट्याउन सक्दैनन् । अर्थात् उनीहरुले केही राजनैतिक दल वा "स्वार्थवश" आएका प्रस्तुतमै भर पर्नुपर्ने विवशता हुन्छ । यसैकारण ०४९ सालको सुरुतिर इन्सेकले प्रत्येक वर्ष "मानव अधिकार वर्ष पुस्तक" को प्रकाशन गर्ने निर्णय गरेको थियो । तद्अनुरुप वर्ष १९९२ का लागि वर्ष पुस्तकको तयारी शुरु पनि भयो। तर त्यसैबीच हाम्रा तत्कालीन निर्देशक प्रकाश काफ्लेको हवाई दुर्घटनामा परी देहावशान भएकोले हामी केही समय ढिलो पनि भयौं ।वर्ष पुस्तकको तयारीमा क्रममा प्रकाशको भौतिक अनुपस्थिति अत्यन्त खड्कियो। तर उनको प्रेरणा र निर्देशनले हामीलाई यस अभियानमा पनि उनको आध्यात्मिक संलग्नता बोध भइरह्यो । मानवअधिकार वर्ष पुस्तक नेपालमै यस्तो प्रकारको पहिलोखालको प्रकाशन भएकोले सबैको यसतर्फ ध्यान जानु स्वाभाविक हो । पुस्तकमा कमी कमजोरी भएनन् भन्ने किटान गर्ने पक्षमा हामी छैनौं ।

हामी ३० वर्षको लामो र निर्मम संघर्षपछि प्रजातन्त्रमा प्रवेश गरेका छौं । त्यसैले मानव अधिकारको स्थितिको मापदण्ड-बारे कुरा गर्दा ३० वर्षे शासन काललाई कसरी मापदण्ड मान्न सकिन्छ भन्ने पनि एकाथरिको विचार रहेको छ । सेना परिचालन गरी लादिएको तानाशाही र निरंकुश व्यवस्था भएकोले त्यहाँ मानव अधिकारको अपेक्षा गर्न पनि सकिदैन थियो । त्यसैले नेपाली जनताले मानवअधिकारको बहालीका लागि मात्र संघर्ष गरेका होइनन् । उनीहरु व्यवस्था नै उखेलेर फ्याँक्ने उद्देश्यका साथ आन्दोलनमा लागेका थिए । तर अहिले स्थिति त्यस्तो होइन। अहिले मानवअधिकारको प्रत्याभूति भएको मूल कानून छ, निर्वाचित संसद् अनि सरकार छ र पनि यदि मानव अधिकारको हनन हुन्छ भने यसलाई बडो गम्भीरतापूर्वक लिनुपर्छ भन्ने तर्क पनि सचेत समुदायको छ । त्यस्तै संसारका अरु तेश्रो विश्वका मुलुकहरुको दाँजोमा मात्र हैन दक्षिण एशियाका मुलुकहरुको दाँजोमा नेपालमा अपेक्षाकृत रुपमा हिंसा कम भएको र नागरिक हकको संरक्षण भएको भन्ने एउटा तर्क छ भने यसो भनेर सन्तोष मान्ने हैन बरु अरु मुलुक जस्तो हाम्रो मुलुकमा त्यस्तो रोग प्रवेश नगरोस् भनी अहिले नै हामी शतर्क र सचेत हुँदै मानव अधिकारको रक्षा र विकासमा लाग्नु आवश्यक छ भन्ने सोचाइ अरुको छ ।

हालसम्मको मानव अधिकारको हननमा को कति जिम्मेवार छ भन्ने कुरो त विज्ञ पाठकहरु र मानवअधिकारको क्षेत्रमा काम गर्ने कार्यकर्ताहरुले खोट्याउने कुरो हो । तर एउटा कुरो के चाहिं प्रष्ट छ भने हामीकहाँ मानवअधिकारप्रति सम्मान जनाउने स्थितिको श्रृजना भैसकेको छैन । राज्यको विभिन्न अङ्गमा मानवअधिकार सचेतनाको आवश्यकता छ भन्ने यस पुस्तकको प्रकाशनको सिलसिलामा अध्ययन गरिंदा हामीले महसूस गरेका छौं । राज्यले मानव अधिकारप्रतिको एउटा आफ्नो निश्चित धारणा नबनाएकैले गर्दा हामीले कतिपय नकारात्मक अनुभवहरु बटुल्नु पऱ्यो । कुनै जेलमा जेलरले जेलका समस्या बताउने मात्र हैन जेल सुधारका लागि सुझावहरु पनि दिए - जेल निरीक्षण गर्न दिए भने कतिपय जेलरले हाम्रा कार्यकर्ताहरुलाई "तपाईहरुलाई म केही भन्दिन भित्र जान दिन्न - यो मेरो सुरक्षाको प्रश्न हो" भनेर पनि जवाफ दिए । कतै प्रमुख जिल्ला अधिकारीले मानव अधिकार सम्बन्धी प्रलेख राख्नु राम्रो भन्ने बताउँदै आवश्यक सरसहयोग गरे भने कतै प्रजिअले "तपाई मात्र मानिस भड्काउनु हुन्छ -यातना नदिकन अपराध रोकिंदैन" भन्ने दावी समेत गरे । त्यस्तै प्रहरी प्रशासनमा पनि विविध व्यवहार पाइयो । यी तथ्यहरुले नै हाम्रो राज्यको मानव अधिकारप्रतिको स्पष्ट धारणामा अभाव रहेको बोध हुन्छ ।

राजनैतिक दलहरुमा पनि मानव अधिकारप्रति विविध दृष्टिकोण भएकोले कुनै घटना "स्वभाविक" हुन पुग्छ भने कसैको दृष्टिमा "ठूलो हनन" । सानो र क्षणिक स्वार्थमा पारिवारिक झै झगडाले पनि ठूलो राजनैतिक विवाद र टक्करको श्रृजना गरेको छ । त्यति मात्रै नभएर समाजका प्रत्येक अङ्गको तीव्रताका साथ राजनीतिकरण गरिंदै छ जसले भोलिका दिनमा हाम्रो "शान्ति" माथि समस्या नपर्ला भन्न सकिन्न ।

यिनै सब पृष्ठभूमिमा हामीले मानव अधिकार वर्ष पुस्तक १९९२ को प्रकाशन गरेका छौं । यस पुस्तक प्रकाशनको सिलसिलामा हामीले कतिपय समस्याहरु झेल्नु पऱ्यो । देशको ७५ जिल्लाहरुबाट तथ्याङ्क बटुल्न सबै जिल्लामा स्वयंसेवकहरु पठाउनु पर्ने नै भयो र त्यसका लागि छनौटको क्रमले पनि केही समय लियो । भौगोलिक विकटताले गर्दा केही जिल्लामा

स्वयंसेवकहरुलाई पुग्न ज्यादै गाह्रो भयो र बढी समय लाग्यो। जे भए पनि ७५ जिल्लाबाट उपलब्ध भएअनुसारको तथ्याङ्कको आधारमा यो पुस्तक तयार पारेका छौं। यो पुस्तक तयार पार्ने काममा धेरै व्यक्तिहरुले योगदान गर्नु भएको छ त्यसमा पनि कतिपय नाम यस्ता छन् जसको अनुपस्थितिमा पुस्तकको प्रकाशन असम्भव हुने थियो।

मूलत: विभिन्न जिल्लामा जाने स्वयंसेवकहरु। त्यसपछि वर्ष पुस्तक प्रकाशित गर्ने विचार मात्र गरेको हामीलाई वर्ष पुस्तक प्रकाशनबारे सरसल्लाह दिनु हुने नेपाल मानव अधिकार संगठनका अध्यक्ष श्री ऋषिकेश शाह र नेपाल बार एसोसिएशनका भू.पू. अध्यक्ष श्री वासुदेवप्रसाद ढुङ्गाना, विभिन्न परिच्छेदमा आफ्नो योगदान गर्नुहुने मित्र गौरी प्रधान, गोपाल शिवाकोटी चिन्तन, गोपाल गुरागाई, नरनाथ लुईटेल, वर्ष पुस्तक कार्यकारिणीमा रही योगदान गर्नु हुने कार्यकारी सदस्यहरु, सम्पादन/परिमार्जनका साथै परिच्छेद लेखनमा संलग्न कुन्दन अर्याल र अर्का सम्पादक कपिल घिमिरे तथा प्राविधिक काम गर्न परिश्रम गर्ने साथीहरुप्रति म आभार व्यक्त गर्न चाहन्छु।

पहिलो प्रयासको रुपमा प्रकाशित यस पुस्तकमा रहेका कमीकमजोरीहरुप्रति टिप्पणी गरी सुझाव प्रदान गरिदिनु हुने सबै मानवअधिकारप्रति सचेत व्यक्ति तथा संस्थाहरुलाई म हार्दिक अनुरोध गर्न चाहन्छु। आगामी वर्ष प्रकाशित गरिने दोस्रो अङ्क निश्चय पनि तपाईहरुको सल्लाह र सुझावद्धारा अझ परिष्कृत र बढी उपयोगी हुनेछ भन्ने विश्वास लिएको छु।

अन्त्यमा, पुस्तक प्रकाशनका निम्ति आर्थिक सहयोग जुटाइदिएकोमा नर्वेजियन संस्था नोराडप्रति आभार व्यक्त गर्दछु।

धन्यवाद।

९ अप्रिल १९९३

**सुशील प्याकुरेल**
संयोजक, इन्सेक

# विषय-सूची

# परिच्छेद – १
# नेपालको सामान्य परिचय

## १. भौगोलिक स्थिति

चीन र भारतको बीचमा हिमालयको दक्षिण भागमा २६°२२' उत्तर देखि ३०°२७' उत्तर अक्षांश र ८०°४' पूर्व देखि ८८°१२' पूर्व देशान्तर सम्म फैलिएको नेपाल एक भूपरिवेष्ठित देश हो। यसको क्षेत्रफल १४७,१८१ बर्ग कि.मि. छ। पूर्व पश्चिम ढल्किएर रहेको यो देशको लम्बाई ८८५ कि.मी. छ। तर उत्तर र दक्षिणतर्फ भने यसको फैलावट एकनास छैन। पूर्वबाट पश्चिम फराकिलो हुँदै गएको छ तर मध्य भागमा यसको चौडाई सबैभन्दा थोरै रहेको छ। उत्तर दक्षिण औसत चौडाई १९३ कि.मी. रहेको छ।

## २. भौगोलिक स्वरुप

विश्वकै सबैभन्दा अग्लो सगरमाथा (८८४८ मिटर) देखि लिएर अरु ९ वटा विश्वविख्यात चुचुराहरु देशको उत्तरतर्फ पूर्व पश्चिम फैलिएर रहेका छन्। बाह्रै महिना हिममण्डित रहने सयकडौं शिखरहरुबाट दक्षिणतर्फ लगातार उचाई घट्दै गएको छ र देशको दक्षिणमा रहेको सानो मैदानी पेटीमा आइपुगेर देशको दक्षिणी सीमा समाप्त भएको छ। यो तराई प्रदेशको सबैभन्दा कम उचाई लगभग ३०० मिटर रहेको छ। यसरी नेपालको भौगोलिक स्वरुपलाई मोटामोटी तीन भागमा बाँड्न सकिन्छ।

### २.१ हिमाली प्रदेश

यस प्रदेशमा देशको करीब १५ प्रतिशत भूभाग पर्दछ। यो भाग पूर्वदेखि पश्चिमसम्म नै फैलिएको छ र यसको उत्तर दक्षिण चौडाई २४ देखि २८ कि.मि. छ। करीब ५००० मि. को उचाईमा हिमरेखा पूर्वदेखि पश्चिमसम्म फैलिएको छ। यहाँ बाह्रै महिना हिउँ जम्दछ। नेपालका धेरै नदीहरुको उत्पत्ति यिनै पर्वतीय शिखरहरुको हिम पग्लिएर बनेका हिमनदीहरुबाट हुन्छ। यी उच्च पर्वतहरुका ठाउँ ठाउँमा कोदारी, टिप्ताला, मुस्ताङ, नाम्जा आदि भन्ज्याङहरु छन् जसबाट तिब्बततर्फ आउने जाने गरिन्छ।

जुम्ला, हुम्ला, मुगु, डोल्पा, मनाङ, खोटाङ जस्ता नेपालका धेरै जिल्लाहरुको उत्तरी भाग हिमाली उपत्यका, नदी किनार र पर्वतीय पाखाहरुमा अवस्थित छन्। यस्तै धेरै बस्तीहरु पनि यस भागमा पर्दछन्।

### २.२ पहाडी प्रदेश

यो प्रदेश हिमाली प्रदेशको दक्षिण र तराई प्रदेशको उत्तरमा रहेको छ। यसमा निकै अग्ला पहाड, साँगुरा उपत्यका, टार, बेसीहरु र पाखाहरु छन्। यो फैलावट उत्तर दक्षिण करीब ६४ देखि ८४ किलोमिटरसम्म छ र पूर्व पश्चिम नै फैलिएको छ। यहाँका पहाडहरु १८०० मि. सम्म अग्ला छन्। तर महाभारत लेक ३००० मिटरसम्म अग्लो छ। हिमालयका समानान्तर भई पूर्व पश्चिम फैलिएको यो महाभारत लेक प्राकृतिक छटायुक्त सुन्दरतम प्रदेश हो। यस क्षेत्रको सुन्दरताले पौराणिक कालदेखि नै मानिसको प्राकृतिक सौन्दर्य प्रेमलाई आकर्षण दिएको छ। यसै क्षेत्रको दक्षिणमा चुरे वा शैवालिक श्रेणीका होचा पर्वतहरु रहेका छन्। यसको उचाई ७०० देखि १५०० मि. सम्म छ।

### २.३ तराई प्रदेश

नेपालको दक्षिणमा रहेको समथर गंगा नदीका सहायक नदीहरुले बनाएको पूर्वदेखि पश्चिमसम्म फैलिएको मैदानी भागलाई तराई प्रदेश भनिन्छ। यसको चौडाई २३ देखि ९७ कि.मी. सम्म छ। यस प्रदेशमा तराईको समतल भूभाग, भावर र भित्री मधेश पर्दछन्।

नदी नालाहरुले युक्त यो प्रदेशमा निकै उब्जाउ भएको हुँदा यसलाई नेपालको "खाद्यान्न भण्डार" भनिन्छ। यो क्षेत्रमा विभिन्न बालीहरुको उब्जनी हुन्छ। धरातलीय स्वरुप मैदानी भएको र प्राकृतिक रुपमा उपलब्ध

साधनको विकास गर्न सुगम भएकाले यातायात, सञ्चार तथा शक्तिको राम्रो विकास भएको छ ।

## ३. नदी प्रणाली

नेपालका नदीहरुलाई तीन किसिममा वर्गीकरण गर्न सकिन्छ - तिब्बतमा उत्पत्ति भई नेपालबाट बग्ने, हिमालयमा उत्पत्ति भई बग्ने र महाभारत र चुरेमा उत्पत्ति भई बग्ने । हिमालपारीबाट आउने नदीहरुमा कर्णाली, सुनकोशी, अरुण आदि पर्दछन् भने अरु प्राय: सबैजसो कोशी, गण्डकी र कर्णालीका मुख्य सहायक नदीहरु हिमालबाट उत्पन्न भएका छन् । यी नदी प्रणालीलाई तीन प्रणालीमा विभाजन गरिन्छ: कोशी प्रणाली, गण्डक प्रणाली र कर्णाली प्रणाली ।

### ३.१ कोशी प्रणाली

पश्चिममा गोसाईकुण्डदेखि पूर्वी सिमानासम्म यो नदीको जलाधार क्षेत्र हो । सुनकोशी, तामाकोशी, दुधकोशी, इन्द्रावती, लिखु, अरुण र तमोर यस प्रणालीका ठूला सहायक नदीहरु हुन् । यी नदीहरु हिमाली प्रदेश, मध्य पर्वतीय प्रदेश, चुरे हुँदै एउटै नदी भएर पूर्वी तराईमा निस्कन्छन् र भारतको गंगा नदीमा पुग्दछन् ।

### ३.२ गण्डक प्रणाली

कोशी नदी जस्तै गण्डकी नदीका पनि सात सहायक नदीहरु हिमाली क्षेत्रबाट आई नेपालको मध्य तराईमा नारायणी नदीको नामबाट निस्कन्छन् । पश्चिममा धौलागिरी अञ्चलदेखि बाग्मती अञ्चलको पूर्व भाग यस नदीको जलाधार क्षेत्र हो ।

### ३.३ कर्णाली प्रणाली

कर्णाली नदी नेपालको सबैभन्दा लामो नदी हो । यो हुम्ला, मुगु, भेरी र सेती चार नदीहरु मिली बनेको छ । धवलागिरी पश्चिम व्यास हिमाल पूर्व यसको जलाधार क्षेत्र हो । यो पश्चिम तराईमा निस्कनअघि संयुक्त भई आइपुग्दछ ।

यी बाहेक मेची, कनकाई, कमला, राप्ती, महाकाली बबई आदि नदीहरु महाभारत पर्वतहरुबाट निस्कन्छन् । यिनीहरुमा बाह्रै महिना जलप्रवाह रहिरहन्छ । चुरे पहाडबाट निस्कने नदीहरु मनसुनमा भर पर्ने र मनसुन समाप्त भएपछि सुक्दछन् ।

## ४. ताल तलाउ

हिमाली प्रदेशका दक्षिण भागमा, पहाडी भागमा र तराईमा विभिन्न ताल र कुण्डहरु पाइन्छन् । मुगु जिल्लामा रहेको रारा ताल हिमाली प्रदेशमा रहेको सबैभन्दा ठूलो र मनोरम ताल हो । यस बाहेक फेवाताल, रुपाताल, गोसाईंकुण्ड, फोकसुण्डो ताल, कसरा ताल, सत्यवती ताल, गडुवाल ताल, स्यार्पू आदि तालहरु प्रसिद्ध छन् ।

## ५. जलवायु र वर्षा

धरातलको स्वरुप विविध भएकाले यहाँको जलवायु र वर्षामा पनि भिन्नता रहेको छ । दक्षिणतिरबाट उत्तरतिर धरातल अग्लो हुँदै संसारको सबैभन्दा अग्लो चुचुरो सगरमाथासम्म फैलने भएकाले थोरै दूरीमा पनि भिन्नभिन्न हावापानी पाइन्छ । न्यानो, शीतोष्ण, ठण्डा, समशीतोष्ण, लेकाली र टुण्ड्रा किसिमका हावापानी पाइनु नेपालको विशेषता हो ।

नेपालमा मनसुनी वर्षा जुन महिनादेखि सेप्टेम्बर महिनासम्म हुन्छ । अधिकतम वर्षा ४०७० मि.मी. सम्म १९४१ मा पोखरामा रेकर्ड गरिएको छ र उच्चतम तापक्रम धनगढीमा ४४$^{O}$ से. सम्म पाइएको छ । मानवीय वस्ती भएका स्थानहरुमा सबैभन्दा कम तापक्रम -२.३$^{O}$ जिरीमा रेकर्ड गरिएको छ ।

## ६. रमणीय स्थलहरु

नेपाल सानो देश भए तापनि धरातलको स्वरुप विविध भएकाले यहाँका धेरै स्थलहरु प्राकृतिक हरायुक्त भई मनमोहक रहेका छन् । पूर्व पश्चिम फैलिएका हिमाच्छादित सिधै खडा भएर रहेका हिमशिखरहरुले सदासर्वदा मानव जातिको प्रकृति प्रेमलाई अल्हादित पार्दै आएको छ ।

यी शिखरहरुबाट सुरु भई भै तीव्र गतिमा उपत्यका र भन्ज्याङ हुँदै बग्ने नदीहरु आफैंमा अनुपम प्राकृतिक सौन्दर्ययुक्त रहेका छन् । यी नदीहरुमा हुने जल बिहारले देश-विदेशबाट प्रकृतिप्रेमीहरुलाई आकर्षण दिइरहेको छ ।

यी नदीहरुका किनारमा कैयन धार्मिक स्थलहरु रहेका छन् । यस्ता स्थलहरुले धार्मिक स्वभाव भएका नेपालीहरुको परम्परा, संस्कृति तथा उनीहरुका धार्मिक अनुष्ठानका तरिकाहरु अभिव्यक्त गरेका छन् । कोशी किनारको बराह

मन्दिर, बागमती किनारको पशुपति र गुह्येश्वरीको मन्दिर, नारायणी किनारको देवघाट यी कुराका उदाहरण हुन् ।

पहाडी प्रदेशमा र हिमाली प्रदेशमा रहेका तालहरु, आरोहण नगरिएका हिमशिखरहरुको दृश्यावलोकन, तराई, मध्य तथा हिमाली प्रदेशमा रहेका वन्य जन्तु राष्ट्रिय निकुन्ज तथा आरक्ष, भगवान् बुद्धको जन्मस्थल लुम्बिनी र अनेकौं बौद्ध स्तुप र धार्मिक स्थल, हिन्दू मन्दिर र विविध जातजातिका कला संस्कृतिबारे जिज्ञासा र उत्सुकता जाहेर गर्नु स्वभाविक कुराहरु हुन् ।

## ७. जाति र धर्म

प्राचीनकालदेखि नै नेपाल उत्तरको तिब्बत र दक्षिणको भारततिरबाट आउनेहरुले आबाद हुँदै गएको कुरा इतिहासले स्पष्ट पारेको छ । प्राचीनकालमा अहिर, किराँत र सूर्यबंशी क्षेत्रीयहरुले जातीय संरचनाको शुरुवात गर्न थालेका थिए । नेपालको इतिहासको मध्यकालभन्दा पहिले नै खस, मगर र गुरुङहरु यहाँ बसोबास गरेको पाइन्छ ।

यसरी नेपालमा त्यसबेलामा नै किराँत संस्कृति, भाषा र धर्म प्रचलनमा रहेको देखिन्छ । यसरी नेपालमा तिब्बती-बर्मेली र भारोपेली भाषा प्रचलनमा आई किराँत धर्म र हिन्दू धर्मको संगसँगै विकास शुरुवात भएको देखिन्छ ।

मध्यकालमा आइपुग्दा पनि सामाजिक आधार प्राचीन कालको नै रहेको थियो । वर्ण व्यवस्थाले समाजमा जरा गाड्दै गयो । यसबेला चार वर्ण अठार जात भनिन्थ्यो भने जातीयतामा अझ वृद्धि भई पृथ्वीनारायण शाहको कालसम्म चार वर्ण छत्तीस जात भन्नुपर्ने अवस्था आइसकेको थियो । जातजाति र पेशाका आधारमा इतिहासको विकास-क्रममा जसरी जातीयताको विभाजन भए तापनि नेपालका जाति र जनताको इतिहास प्राचीनकालदेखि तिब्बत र भारततिरबाट आएका आव्रजकहरुको संयोजनबाट सुरु भएको थियो ।

भारततिरबाट प्रवेश गर्नेहरुको मूल थलो तराई, मध्य पहाड र उपत्यकामा थियो भने तिब्बतबाट प्रवेश गर्नेहरुको थलो हिमाली प्रदेशको दक्षिण र महाभारत प्रदेशमा केन्द्रित थियो । कालान्तरमा यिनीहरुबाटै जातजातिहरु बन्दै गए । हाल यी जातजातिहरु देशको संपूर्ण भागमा छरिएर बसोबास गर्दछन् ।

यस बाहेक द्राविड जातिका केही मानिसहरु नेपालमा पाइन्छन् जसलाई देशको आदिवासी हुन् भनेर मानिन्छ । यिनीहरुमध्ये धेरै जसो घुमन्ते जातिहरु पहाडी प्रदेश र तराईमा पाइन्छन् । यिनीहरुमध्ये केही अब कृषि पेशामा पनि संलग्न भएका छन् ।

## ८. धर्म

आधुनिक नेपालमा हिन्दू, बौद्ध, इस्लाम, इसाई धर्म र यिनीहरुको विभिन्न संम्प्रदाय विभाजित धर्म मान्ने जातिहरुको बसोबास छ । केन्द्रीय तथ्याङ्क विभागको १९९१ को आंकडा अनुसार हिन्दू, बौद्ध र इस्लाम धर्म मान्नेहरुको क्रमश: ८६.५, ७.८, ३.५ प्रतिशत रहेको छ भने विभिन्न धर्मावलम्वीहरुको २.१ प्रतिशत रहेको छ ।

## ९. जनसंख्याको बनोट

१९९१ को जनगणनाको प्रारम्भिक आंकडाअनुसार नेपालको जनसंख्या १,८४,९१०९७ पुगेको छ । कुल जनसंख्याको हिमाली प्रदेशमा ७.३५ पहाडी प्रदेशमा ४६.५ तराई प्रदेशमा ४६.७५ प्रतिशत बसोबास गर्दछन् । यसमध्ये शहरी क्षेत्रमा ९.२% जनसंख्या बसोबास गर्दछन् । ग्रामीण क्षेत्रमा ९०.८ प्रतिशत जनसंख्या बस्दछन् ।

यही आंकडाअनुसार जनसंख्या वृद्धिको वार्षिक दर २.०८ प्रतिशत रहेको छ । कुल जनसंख्याको ५८.४ प्रतिशतले नेपाली, ११.१ प्रतिशतले मैथिली, ७.६ प्रतिशतले भोजपुरी, ३ प्रतिशतले नेवारी, ३.५ प्रतिशतले तामाङ, ३.६ प्रतिशतले थारु, १.४ प्रतिशतले मगर र १.५ प्रतिशतले राई र ०.९ प्रतिशतले लिम्बु भाषा बोल्दछन् । यस बाहेक शेर्पा, थकाली, राजवंशी, सुनुवार, सत्तार, दनुवार, संथाल, चेपाङ र अरु भाषा गरी विभिन्न पचास भाषा नेपालमा रहेका पाइन्छ । नेपाली भाषा राष्ट्रभाषा र सरकारी कामकाजको भाषा रहेको छ ।

वर्ल्ड डेभलपमेन्ट रिपोर्ट १९९१ अनुसार नेपालको प्रति हजार जनसंख्यामा कोरा वार्षिक जन्म दर ४१ र मृत्यु दर १३ रहेको छ शिशु मृत्यु दर १२४ रहेको छ । प्रजनन दर ५.७ प्रतिशत रहेको छ भने औसत आयु ५२ वर्ष रहेको छ । प्रति वर्गमील १२५ जनघनत्व रहेको छ ।

## १०. संक्षिप्त इतिहास

प्राचीनकालदेखि वर्तमान युगसम्म नेपालको राजनैतिक भूगोलमा पटक पटक परिवर्तन भइरहेको पाइन्छ । लिच्छविकालमा नेपालको फैलाबट अहिले जतिकै विशाल रहेको प्रमाण पाइन्छ । यो विशाल नेपाल मध्यकाल (वि.सं. ९३७ - १८२५ लाई मध्य काल भनिन्छ) पछि टुट्न गएको थियो । मध्यकालको उत्तरार्द्धमा पुग्दा नपुग्दा विशाल नेपालको केन्द्र कमजोर भइसकेको थियो । केन्द्रको कमजोरीले गर्दा विषयपतिहरु सामन्ती राज्य खडा गरेर

स्वतन्त्र हुन थाले । कर्णाली प्रदेशमा खस राजा नागराजले आफ्नो अधिराज्य जमाए भने दक्षिण सिम्रौनगढमा न्यायदेवले पूर्वी तराई समेत मिलाएर नयाँ राज्य खडा गरे । केन्द्रको राज्यभन्दा यी राजाहरु बलिया हुँदै गए । तर पनि केन्द्रमा रहेको काठमाडौं राज्यलाई नै नेपाल भनिँदै रह्यो । वि.सं. १३०१ मा दिल्लीका राजाले सिम्रौनगढ ध्वस्त पारे । त्यसपछि यसको पतन भयो । पछि गएर कर्णाली प्रदेश पनि संगठित रहन सकेन र बाइसी राज्यहरु जन्मिए । केन्द्रमा रहेको मल्ल शासन पनि दरबारी कलहले गर्दा तीन भागमा राजकुमारहरुलाई बाँडियो । गण्डकी प्रदेशमा पनि स्वतन्त्र भई चौबीसी राज्यहरु उत्पन्न भए । मुकुन्द सेनले पाल्पा राजधानी बनाई कोशी नदीसम्म पूर्वतिर सिमाना फैलाए पनि पछि यो राज्य समेत टुक्रियो । यसरी मध्यकालमा नेपाल स-साना राज्यहरुमा टुक्रिएर रहन गयो ।

नेपाल साना साना राजा रजौटाहरुमा विभाजित भएको यो अवस्थामा गोरखामा अति उत्साही तथा महत्वाकांक्षी युवक पृथ्वीनारायण शाह राजा भए । उनले राजनैतिक चातुर्य र रणकौशलको आधारमा पश्चिममा गण्डकीदेखि पूर्वमा किराँत प्रदेशसम्मलाई आफ्नो राज्यमा मिलाई वि.सं १८२५ मा विशाल नेपालको स्थापना गरे । वि.सं. १८३१ मा उनको मृत्युपछि पनि एकीकरणको काम उनका छोरा बहादुर शाह, बुहारी राजेन्द्र लक्ष्मी, नाति रणबहादुर शाहले जारी नै राखे । रणबहादुर शाहको पालामा पाल्पा पनि नेपालमा मिलाइयो । यस बेलासम्म नेपालको सिमाना पश्चिममा गढवाल र कुमाउ, दक्षिणमा गंगा र पूर्वमा टिष्टासम्म पुगेको थियो । तर पछि भारतमा उपनिवेश बिस्तार गर्दै अघि बढेको इस्ट इण्डिया कम्पनीसित नेपालको लडाई भएपछि नेपालको विस्तार सधैंका लागि बन्द मात्र भएन सुगौली सन्धिद्वारा महाकाली पारीका सबै प्रदेश, पूर्वमा मेची पारीको प्रदेश र दक्षिणमा ठूलो भूभाग गुमाउनु पनि पऱ्यो । पछि जङ्गबहादुरले इस्ट इण्डिया कम्पनीलाई मद्दत गरेबाट अंग्रेजहरुले हालको बाँके, बर्दिया, कैलाली र कञ्चनपुर नेपाललाई फिर्ता दिए । वर्तमान नेपाल सुगौली सन्धि (१८७२ मंसीर १६ गते) बाट रहेको र यही फिर्ता पाएको भूभागमा रहेको छ ।

पृथ्वीनारायण शाहको अवसानपछि नेपाल दरबार आन्तरिक कलहले पुन: अशान्त रह्यो । एकीकरणकालीन सेनानायकहरुको हत्या, देशबाट निर्वासन, कैद र दरबारी शक्ति संघर्षले राजनीति पाँचौ पुस्ताका राजा सुरेन्द्रको पालासम्ममा आक्रान्त भइसकेको थियो । एक स्थायी शासन भीमसेन थापा बाहेक कसैले दिन सकेनन् । भीमसेन थापाको पनि षड्यन्त्रद्वारा पतन भयो ।

यस अनिश्चयको बातावरणबीच कनिष्ठ भारदार जङ्गबहादुर राणाले वि.स१९०३ को कोत र भण्डारखाल हत्याकाण्डबाट राज्य शक्ति आफ्नो हातमा लिए र पछि राजाहरुलाई पनि कमजोर पारी प्रधानमन्त्रीको रोलक्रम आफ्ना भाइ र छोराहरुमा जाने गरी एकतन्त्रीय पारिवारिक शासन स्थापना गरे । नेपालमा १०४ बर्ष राणाहरुको तानाशाही शासन चल्यो ।

बीसौं शताब्दीमा आएको प्रजातन्त्रको लहरले गर्दा नेपालमा पनि राणाहरुको संगठित रुपमा विरोध भयो र ००७ सालमा प्रजातन्त्रको स्थापना गरियो । आठ वर्षसम्मको राजनैतिक तानातान पछि ०१६ सालमा बहुदलीय प्रणालीमा आधारित पहिलो जननिर्वाचित सरकार गठन गरियो । तर सत्र महिनापछि नै राजा महेन्द्रले सैनिक बलमा यो सरकारको पतन गराए । यसपछि राजा महेन्द्रले पञ्चायत प्रणाली भनिने प्रणाली स्थापित गरे । नेपाली कांग्रेस र संयुक्त वाममोर्चाको संयुक्त पहलमा पञ्चायती व्यवस्थाको विरुद्ध गरिएको संघर्षले पञ्चायती शासनको पतन भयो र बहुदलीय राजनैतिक प्रणालीको पुन: स्थापना गरियो ।

## ११. प्रशासकीय ढाँचा

नेपाल एक एकात्मक शासन प्रणाली भएको राज्य हो । नेपाललाई १४ अंचल तथा ७५ जिल्लामा बाँडिएको छ । यी चौध अञ्चलहरुलाई पाँच विकास क्षेत्रमा समाहित गरिएको छ । बहुदलीय व्यवस्थाको आगमन पश्चात कुनै पनि किसिमको प्रशासकीय ढाँचामा अञ्चललाई समावेश गरिएको देखिदैन ।

प्रत्येक जिल्लालाई गाउँ विकास समितिहरु र केही नगरपालिकाहरुमा विभाजित गरिएको छ । देशभरमा कुल नगरपालिका ३६ र गाउँ विकास समितिहरु ३९९५ रहेका छन् । प्रत्येक जिल्लामा एक जिल्ला विकास समिति रहेको छ । यी सबै निकायका पदाधिकारीहरु कानूनद्वारा निर्धारित प्रक्रियाबाट निर्वाचित हुन्छन् ।

यस बाहेक प्रत्येक जिल्लामा श्री ५ को सरकारका विभिन्न मन्त्रालयका अधीनमा विभिन्न सरकारी निकायहरु रहेका छन् । उनीहरुले जिल्ला विकास समितिसित मिलेर सरकारी नीतिहरुको कार्यान्वयन गर्दछन् ।

जिल्ला विकास र गाउँ विकास समितिहरुले आफ्नो क्षेत्रको विकासका लागि योजना बनाउने, लागू गर्ने र मूल्यांकन गर्ने काम गर्दछन् । यस कार्यको सहयोग गर्नका लागि स्थानीय विकास अधिकारीलाई सरकाले नियुक्त गर्दछ । जिल्लामा शान्ति र व्यवस्था बनाउने जिम्मेवारी प्रमुख जिल्ला अधिकारीलाई दिइएको छ ।

जिल्ला विकास समितिलाई आफ्नो कार्य संपादन गर्न

सरकारले अनुदानका साथै विभिन्न किसिमले कोष प्रदान गरेर सहायता गर्दछ । शुल्क लगाउने अधिकार पनि जि.वि.स.लाई दिइएको छ। यी कुराहरु र अधिकार र कर्तव्यको व्यवस्था गरी जि.वि.स. नियमावलीमा अधिकार विकेन्द्रीकरणको व्यवस्था गरेको छ ।

## १२. स्वास्थ्य र शिक्षा

करीब सय वर्षअघि वीर अस्पतालको निर्माणबाट नेपालमा आधुनिक स्वास्थ्य पद्धतिको प्रवेश भएको थियो । त्यसपछिका ५० वर्षसम्म यस दिशामा खास प्रगति हुन सकेन। २००७ सालमा प्रजातन्त्रपछि यस दिशामा पुन: काम शुरु हुन थाल्यो। तापनि यसतर्फ त्यति उत्साहप्रद उन्नति हुन सकेको छैन । सन् १९९१ सम्म अस्पताल संख्या १११ र अस्पताल शैय्या संख्या ४७६८ पुगेको छ । जनसंख्याको अनुपातमा प्रति शैय्या ३८७२ व्यक्ति पर्दछन्। डाक्टर ११९६, आयुर्वेद चिकित्सकहरु १७४, नर्सहरु २९५०, स्वास्थ्य सहायक ११८६ रहेका छन्।

सन् १९७५ देखि प्राथमिक शिक्षा नि:शुल्क गरिएको छ। प्राथमिक स्कूलहरुको व्ययभार सरकारले व्यहोरेको छ र हाल देशमा १७,८४२ प्राथमिक विद्यालयहरु छन् । यी स्कूलहरुमा ३,४४१३८ विद्यार्थीहरुले १९९०मा भर्ना लिएका थिए जसमा छात्राहरुको प्रतिशत ३६ रहेको छ ।

निम्न माध्यमिक विद्यालय संख्या ३,९६४ माध्यमिक विद्यालय १,९५३ र दुई सरकारी र एक निजी समेत तीन विश्वविद्यालय स्थापना भएका छन् । नेपालको साक्षरता १९९१ मा ४० प्रतिशत पुगेको अनुमान गरिएको थियो ।

## १३. आर्थिक अवस्था

नेपाल संसारका गरीब राष्ट्रहरुमध्ये एक हो। यहाँ ९१ प्रतिशत जनताको जीविकाको साधन कृषि नै रहेको छ। उद्योग र गैह्र कृषि रोजगारीको अवसर सिर्जना हुन नसकेकाले २.०६ प्रतिशतका दरले वार्षिक रुपमा बढिरहेको जनसंख्याको चाप पनि कृषि क्षेत्रले नै बेहोर्नु परिरहेछ । कृषिमा आधुनिक प्रविधिको प्रयोग गरेर उत्पादन बढाउन सकिएको छैन भने विविधिकरणमार्फत उत्पादन र बजारको व्यवस्था गरी किसानहरुलाई आधुनिकिकरणतर्फ पनि आकर्षण दिन सकिएको छैन । कृषिले कुल गार्हस्थ उत्पादनको ५६ प्रतिशत अंश ओगटेको छ ।

कृषि प्रधान देश भए तापनि हाल खाद्यान्नमा परावलम्बी हुँदै गइरहेको छ। १९६० को दशकमा खाद्यान्न निर्यात गर्ने सूचीमा रहेको देश नेपालमा १९९०/९१ मा ९,४२५ मे. टन खाद्यान्न न्यून हुन गएको थियो ।

पर्यटन उद्योगले पनि देशको विदेशी मुद्रा आर्जनमा ठूलो भूमिका खेलेको छ ।

१९९० मा कुल २५४,८८५ पर्यटक नेपाल आएका थिए र यसबाट करीब ५ करोड ७० लाख डलरको विदेशी मुद्रा आर्जन भएको थियो ।

यस बाहेक केही नयाँ उद्योगहरु गलैंचा, तयारी छालाका सामान, तयारी पोशाक, हस्तकलाका सामानहरुले बिस्तारै बिदेशी बजारमा प्रवेश गर्दैछन् ।

# परिच्छेद - २

# नेपालको राजनैतिक तथा संवैधानिक विकास

## क. राजनैतिक विकास

पृथ्वीनारायण शाहको एकीकरण अभियान उनको दृढ इच्छा शक्ति र साहसका कारण सफलतापूर्वक सञ्चालित भयो। दरबारमा नेतृत्वको समस्या कहिल्यै पनि रहेन। तर यो अभियान सकिनासाथ एकीकरणमा महत्वपूर्ण योगदान गर्ने उनका भाइहरुले स्वतन्त्र प्रदेशको कामना राखे। यो कुरा पूरा नभएपछि प्रथम पटक दरबारमा विरोधी शक्तिहरुको उदय भयो। पृथ्वीनारायण शाहको मृत्युपछि दरबार षडयन्त्रको केन्द्र बन्न थाल्यो। राजा प्रताप सिंहकी रानी राजेन्द्र लक्ष्मी र देवर बहादुर शाह आपसी वैमनस्य र षडयन्त्रका कारण पालैपालो जेल परे। रानीको मृत्युपछि रणबहादुर शाहले बहादुर शाहलाई फेरि जेल हाले। जेलमा नै उनको मृत्यु भयो।

यसपछि नेपाली राजनीति भन्नु नै दरबारी षडयन्त्र र शक्ति संघर्षको राजनीति हुन पुग्यो। राजा रणबहादुर शाहले आफ्नी ल्याइते रानीबाट जन्मेका छोरा बालक गीर्वाणलाई राजा बनाई राजकाज त्याग गरे। रानीको छिटै मृत्यु भएकाले उनले फेरि सत्ता ग्रहण गर्न खोजे तर शक्तिको स्वाद चाखी सकेका भारदारहरुले उनलाई सत्ता नसुम्पी बालक राजालाई नुवाकोटमा लगी शासन गर्न थाले। यसरी नेपाली सत्ताको प्रयोग द्वैध रुपमा भयो। यो षडयन्त्रको नेपाली राजनीति भीमसेन थापाको कालमा केही थामिएको भए पनि उनको पतन पनि षडयन्त्रबाटै हुन पुग्यो। त्यसबेलाको नेपाली राजनीतिले एकीकरण अभियानका महारथी, ठूला ठूला देशभक्तहरु कसैलाई पनि कुनै न कुनै रुपले दण्ड दिनबाट चुकेन। राजा राजेन्द्रको पालामा भीमसेन थापाको पतनपछि यो स्थितिले चरम रुप लिन पुग्यो।

देशको राजनीति षडयन्त्रबाट शक्ति हत्याउनपट्टि नै सधैं व्यस्त रहेकोले जनताको हित सुविधातर्फ ध्यान दिन सक्ने भीमसेन थापा बाहेक कोही पनि हुन सकेनन्। देशभक्त शक्तिहरु दक्षिणमा रहेको अंग्रेज शासनको प्रभाव र हस्तक्षेपबाट देशलाई मुक्त राख्न चाहन्थे भने स्वार्थी तत्वहरु शक्ति प्राप्त गर्न अंग्रेजको सहायता लिन पनि पछि परेनन्। तर जे भए पनि भीमसेन थापाको कालसम्म नेपाल सरकारका क्रियाकलापमा अंग्रेजहरुको छायाको प्रभाव पर्न सकेन।

भीमसेन थापाको पतनले देशमा शक्ति रिक्तताको स्थिति सिर्जना गर्‍यो। फलत: दरबारमा आफ्नो महत्वाकांक्षा पूरा गर्न विभिन्न गुटहरुले शीर खडा गरे। यसको परिणती स्वरुप कोतपर्व र भण्डारखाल पर्व नामक दुई वीभत्स हत्याकाण्ड नेपाली राजनीतिले बेहोर्नु पर्‍यो। जंगबहादुरले यी काण्डद्वारा आफ्ना सारा प्रतिद्वन्दीहरुको हत्या गराए र आफु सर्वशक्तिमान प्रधानमन्त्री भए। यस संघर्षमा उनलाई साथ दिने रानीलाई पनि उनले अन्तत देश छोड्न बाध्य पारे। प्रधान मन्त्री भएको केही वर्षपछि उनले महाराजको पदवी राजाबाट प्राप्त गरे र महाराज र प्रधानमन्त्रीको हैसियतमा राजालाई कठपुतली बनाई शासन गरे। आफ्नो महाराजको पदवी आफ्ना भाई र छोरामा वंशानुगत रुपमा सर्ने व्यवस्था मिलाएर नेपाली राजनीतिमा सर्वसाधारणको प्रवेश मार्ग पनि बन्द गरे। यसरी राणा परिवारले १०४ वर्षसम्म नेपालमा निरंकुश ढंगले शासन गरे उक्त शासन स्वरुपलाई हेर्दा राणाहरु उपनिवेशवादका कठपुतलीका रुपमा रहेका थिए भन्न सकिन्छ। सत्ता र शक्तिको यो राजनीति राणा परिवारमा पनि प्रवेश भयो फलस्वरुप राणाहरु पनि शक्ति षडयन्त्रका कारण धेरै वंश हत्या, देश निकाला जस्ता अपराध गर्न पछि परेनन्।

राणाहरुको यस कालको विदेश नीति दक्षिणको अंग्रेजहरुलाई प्रसन्न पारी आफू सत्तामा टिकी रहने कुरामा आधारित थियो। यसै कारणले गर्दा जङ्ग बहादुरले सन् १८५७ मा भारतमा भएको सिपाही विद्रोह दबाउन नेपाली सेनाको मद्दत पठाएर नेपाली सेनालाई उपनिवेशवादीको साथ दिने सेनाको रुपमा कलंकित पार्न हिचकिचाएन। यस बेला चीन आफैं कमजोर भएकाले उत्तरतिरबाट कुनै खास राजनैतिक समस्या बेहोर्नु पर्ने स्थिति थिएन।

संसारमा भइरहेको प्रजातान्त्रिक र स्वतन्त्रताका

आन्दोलनहरुले बीसौं शताब्दीको पहिलो र दोश्रो दशकतिर नेपालमा पनि केही प्रभाव पार्न शुरु गरेको थियो। केही सचेत र पढेलेखेका नागरिकहरुले प्रत्यक्ष रुपमा राणाहरुको विरोध शुरु गरे। युवाहरुबाट चर्खा प्रचार आन्दोलन, पुस्तकालयहरुको स्थापना गर्ने जस्ता काम शुरु गरिए । तर राणाहरुले यी कामहरुलाई पनि शक्तिको भरमा दबाउन थाले । वि.सं. १९८० को दशकमा केही युवाहरुले राणाहरुलाई समाप्त पार्न बमको प्रयोग गर्न खोजेका थिए । यसपछि राजनैतिक प्रतिरोधको सिलसिला जारी रह्यो। नेपाल प्रजा परिषद, नेपाली कांग्रेस र नेपाल कम्युनिष्ट पार्टीहरुको गठन भयो । राजदरवारले पनि राणा विरुद्ध क्रान्तिकारीहरुलाई साथ दिएकाले २००७ सालमा राणा शासनको अन्त भई प्रजातन्त्रको स्थापना गरियो ।

## १.१ २००७ सालपछि

२००७ सालमा राणा विरुद्धकै संघर्ष उत्कर्षमा पुग्यो। राजा त्रिभुवनले भारतीय दुतावासमा शरण लिई त्यतैबाट दिल्ली प्रवास गरे । यस घटनापछि राजालाई पदच्यूत गरी राजाका माइलो नातिलाई राणाहरुले राजगद्दीमा राखे । यस कार्यको मान्यता उनीहरुले पाउन सकेनन् । यसै अवसरमा नेपाली कांग्रेसले देशका विभिन्न भागमा सशस्त्र संघर्ष शुरु गरी देशका केही भागमा कब्जा पनि जमाउन सफल भयो। देशको धेरै भागमा जनमानस नै राणा विरोधी भएर उठ्न शुरु भयो । परिणामत बाध्य भएर राणाहरुले आन्दोलनकारीहरु र राजासित सम्झौता गर्न पऱ्यो । यस सम्झौता अनुसार राजालाई पुन: स्थापित गरेर अन्तरिम सरकार गठन गर्ने र संविधान निर्माण गर्न संविधान सभाको चुनाव गर्ने र संविधान नबनेसम्म अन्तरिम संविधान जारी गरी अन्तरिम सरकार गठन गर्ने व्यवस्था गरियो ।

अन्तरिम संविधान जारी गरी अन्तरिम सरकार त गठन गरियो तर राजनैतिक घटनाचक्र पूर्व नियोजित तरिका अनुसार चल्न सकेन । राणाहरु सेनाको बलमा पुन: सत्तामा आउने प्रयास गर्न लागे भने कांग्रेसहरु राणाहरुलाई मन्त्रिमण्डलबाट सधैंका लागि हटाउन चाहन्थे । फलत: यो मन्त्रिमण्डलको विघटन ९ महिनापछि नै भयो । त्यसपछि मातृकाप्रसाद कोइरालाको प्रधानमन्त्रित्वमा नेपाली कांग्रेसको मन्त्रिमण्डल बन्यो तर यो मन्त्रिमण्डल पनि ९ महिना मात्र चल्न सक्यो । त्यसपछि सल्लाहकार सभा गठन भई केही महिना प्रत्यक्ष शासन राजाले गरे । पुन: मातृकाप्रसाद कोइराला, टंक प्रसाद आचार्य डा.के.आइ. सिंह क्रमश: प्रधानमन्त्री भए । यी मन्त्रिमण्डलहरु पनि अफाप साबित भए। यति बेलासम्ममा चुनाव संविधान सभाको कि संसद्को भन्ने विषयमा चर्को विवाद उठिसकेको थियो। अन्तमा राजा महेन्द्रले संसद्को चुनाव गर्ने निर्णय गरी संविधान सभाबाट बनेको संविधानद्वारा जनताको शासन गर्ने भन्ने त्रिभुवनको इच्छालाई समाप्त पारे ।

२०१५ साल फागुन १ गते राजाबाट नेपाल अधिराज्यको संविधान जारी गरियो र फागुन ७ गतेदेखि निर्वाचन प्रारम्भ गरियो। यस चुनावमा प्रतिनिधि सभाको १०९ स्थानहरुमध्ये ७४ स्थानमा नेपाली कांग्रेस विजय हासिल गऱ्यो । द्विसदनात्मक संसद्को माथिल्लो सभामा १८ सदस्य प्रतिनिधि सभाबाट र १८ सदस्य राजाबाट मनोनीत हुने व्यवस्था गरिएको थियो ।

निर्वाचनको परिणामस्वरुप जेष्ठ २०१६ सालमा विश्वेश्वर प्रसाद कोइरालाको नेतृत्वमा मन्त्रिमण्डलको गठन गरियो । तर १७ महिनापछि सेनाको सहायताबाट राजा महेन्द्रले यस सरकारलाई राज्यको शक्तिलाई व्यक्तिगत हितमा प्रयोग गरेको, प्रशासन यन्त्र निष्क्रिय पारेको, कानूनको अवहेलना गरेको भ्रष्टाचार बढाएको, शान्ति सुरक्षा कायम गर्न नसकेको, राष्ट्रिय एकता नै खतरामा पारेको भन्ने आरोप लगाई भङ्ग गरे । प्रधानमन्त्री लगायत मन्त्रीहरु, विभिन्न दलका नेता तथा कार्यकर्ताहरुलाई नजरबन्द गरे। फलत: राष्ट्रिय राजनीति जनताबाट खोसिई पुन: दरवारको पर्खाल भित्र प्रवेश गऱ्यो । राजाले आफ्नो महत्वाकांक्षा पूर्ति गर्न सबै राजनैतिक चालहरु चल्दै गए। संसारको उर्लदो प्रजातन्त्रको भेलबाट सधैं बाहिर रहेर एक्लै शासन गर्न सकिदैन भन्ने उनलाई थाहा थियो। तर राजनैतिक दलहरुलाई शक्ति प्रदान गर्ने इच्छा पनि उनीमा थिएन। तसर्थ पञ्चायती प्रजातन्त्र नामक शासन गर्ने एउटा विधि विधान स्थापित गरी २०१९ सालमा एउटा नयाँ संविधान राजाले जारी गरे ।

यस बीचमा राजनैतिक दलहरुले राजाको यो कदमको विरोध जारी नै राखे । नेपाली कांग्रेसले शसस्त्र संघर्ष पनि चलाउने प्रयास गऱ्यो तर यस्ता सबै प्रयासहरु सैनिक बलले दबाइयो ।

२०२३ सालमा पञ्चायती संविधानलाई थप बल दिंदै निर्दलीय व्यवस्थामा परिणत गरियो र राष्ट्रिय पञ्चायतबाट यसलाई निर्विकल्प व्यवस्था भन्ने प्रस्ताव पास गराइयो । यसरी राष्ट्रिय राजनीतिको एक धारा राजा र राजदरवारको वरिपरि घुम्न लाग्यो भने अर्को धारा आफ्नो अस्तित्व जसरी पनि कायम राखी प्रजातन्त्रको स्थापना गर्न तर्फ अडिग रही रह्यो । नेपाली कांग्रेस र विभिन्न गुटमा विभाजित कम्युनिष्टहरुले व्यवस्थाको विरुद्ध समय समयमा विभिन्न रुपबाट आन्दोलन बढाउँदै लगे। तर शुरुका वर्षहरुमा यस्तो आन्दोलनले गति लिन सकेन। यसबाट उत्साहित भएर २०३२

सालमा संविधानमा दोश्रो संशोधन गरी गाउँ फर्क राष्ट्रिय अभियान नामक अंगको व्यवस्था गरेर पञ्चायतमा रहेर काम गर्ने तर अलिकति पनि उदार विचार राख्ने कार्यकर्ताहरुको पनि सफाई अभियान चलाइयो । यसले पञ्चायतभित्रै पनि असन्तोष बढाउँदै लग्यो र राजनीतिलाई अझै संकुचित पारी दरबारको किलोमा बाँधी चलाउन थालियो ।

यस अवधिमा पञ्चायती शासकहरुले प्रजातन्त्रमा आस्था राख्नेहरुलाई जेल, यातना र मृत्युदण्ड दिन समेत बाँकी राखेनन् । राजनैतिक बन्दीहरुलाई जेल सार्ने नाममा गोली हानेर मारियो, संघर्षमा पक्राउ पर्नेहरु केहीलाई त मृत्यु दण्ड पनि दिइयो । राजकाज अपराधको अभियोग लगाई कैयौंलाई वर्षौं जेल यातना दिइयो । युवावर्गमा प्रजातन्त्रको समर्थन गर्नेहरुलाई सास्ती दिन गुण्डागर्दी, बलात्कार जस्ता अपराधी कार्यमा संलग्न व्यक्तिहरुलाई राष्ट्रवादी विद्यार्थी मण्डल नामले संगठित गरी सास्ती दिने प्रचलन गरियो । यसका नाइकेहरुलाई खेलकूद परिषद जस्ता संस्थामा राखी राज्य स्तरमा प्रजातन्त्र समर्थक विरुद्ध आतंकको सिर्जना गर्ने प्रयास गरियो । यो आतंकले पञ्चायती राजनीति गर्नेहरुलाई पनि आतंकित पारी खेलकूदको संस्था राजनीतिमा हावी हुन पुग्यो । यिनै दमन, वेथिति र निरंकुशता विरुद्ध ०३६ सालमा विद्यार्थीहरुबाट सुरु भएको आन्दोलन अन्य पेशा र तप्कासम्म फैलिएको थियो। ०३६ सालको जनआन्दोललाई साम्य पार्न राजाले सुधारिएको पञ्चायत र बहुदलमध्ये कुन व्यवस्था छान्ने भनी जनमत संग्रहको आव्हान गरे । जनमत संग्रहमा अनेक तिकडम र धांधली भयो । जसले गर्दा झिनो बहुमतले सुधारिएको पञ्चायतले जितेको घोषणा गरियो।

०३७ मा संविधानमा तेश्रो संशोधन गरी पञ्चायतको सञ्चालनमा प्रमुख भूमिका खेल्ने गाउँफर्क राष्ट्रिय अभियानलाई खारेज गरियो र बयस्क मताधिकारका आधारमा निर्वाचन गर्ने व्यवस्था गरियो । तर यो चुनाव प्रणालीमा पनि उम्मेदवारहरु व्यक्तिगत हैसियतमा दरबारले गर्ने राजनीतिको छायामा प्रतिनिधि हुन पर्ने बाध्यता भएकाले यो संशोधनको व्यवस्थाले वयस्क मताधिकार प्रणालिलाई पनि कसरी निस्तेज पार्न सकिन्छ भन्ने एउटा नमूना नै प्रस्तुत गर्‍यो । संविधानमा यो संशोधन क्रमिक सुधार गर्दै जाने पञ्चायती व्यवस्था कि बहुदलीय व्यवस्था भन्ने प्रश्नमा भएको जनमत संग्रहका परिणाम स्वरुप पञ्चायतमा जनताको समर्थन प्राप्त भयो भन्ने आधारमा भएको थियो । यस परिणामले गर्दा पञ्चायतका शासक र दरबार झन् उत्तेजित भई जनताको सेवा गर्न सट्टा प्रजातन्त्रका पक्षधरहरुलाई सताउने ज्याबलका रुपमा परिणत हुन पुगे । देशको राजनैतिक र आर्थिक अवस्था जर्जर हुँदै गयो ।

यसै बीचमा नेपाली कांग्रेसले ०४२ सालमा पञ्चायती व्यवस्थाको अन्त्यको माग राख्दै "सत्याग्रह" आन्दोलन चलाएको थियो । यसमा हजारौं नेता र कार्यकर्ताहरुले गिरफ्तारी दिए । तर यसै समयमा देशका विभिन्न भागमा बम विस्फोटन भएकाले सत्याग्रह आन्दोलन रोकियो । यस आन्दोलनका क्रममा पनि कतिपय व्यक्तिको हत्या गरियो भने कतिलाई बेपत्ता पारी सरकारले प्रजातन्त्रप्रेमीहरुको विरुद्ध निर्ममता प्रदर्शन गर्न बाँकी राखेन । तर पनि नेपाली जनतामा पञ्चायत विरुद्धको आगो विस्तार विस्तारै सल्कँदै गइरहेको थियो । यसै बेला नेपाल र भारत बीच व्यापार र पारवहन सन्धि नवीकरण हुन नसकी भारतले नेपालका १५ मध्ये १३ व्यापारिक नाकाहरु बन्द गरी दिएकाले देशभित्र उपभोक्ता सामाग्रीको अभावले हाहाकार मच्चिन पुग्यो । यस कुरालाई जनताले दरबारको शक्ति, मदान्ध कुटनीति पनि जिम्मेवार भएको महसूस गरे ।

यसै समयमा नेपाली काँग्रेसले ०४६ साउन माघ ७ गते राष्ट्रिय सम्मेलन गरी फागुन ७ गतेदेखि संवैधानिक राजतन्त्र र बहुदलीय प्रजातन्त्रको स्थापनाका लागि आन्दोलन गर्ने घोषणा भयो । नेपालका कम्युनिष्ट पार्टीहरुले पनि संयुक्त वाम मोर्चा गठन गरी संयुक्त जनआन्दोलन गर्ने निर्णय गरे । यसरी कम्युनिष्ट कांग्रेस औपचारिक रुपमा संयुक्त जनआन्दोलन संचालन गर्न सहमत भए अनुसार ०४६ फागुन ७ गतेदेखि प्रजातान्त्रिक आन्दोलन सुरु गरियो । आन्दोलनको क्रममा प्राध्यापक, वकिल, डाक्टर, इन्जिनियर, शिक्षक, सरकारी कर्मचारी लगायत लाखौं जनताले साथ दिए । फलत: ५० दिनमा पञ्चायती सरकार र प्रणाली समाप्त भई ०४६ चैत्र २६ गते बहुदलीय प्रजातन्त्र र संवैधानिक राजतन्त्रको स्थापनाको बाटो खुल्न गयो । त्यसपछि समय समयमा पञ्चायती संविधानका विभिन्न धाराहरु खारेज गरिए । नेपाली कांग्रेसका कार्यवाहक अध्यक्ष कृष्णप्रसाद भट्टराईको प्रधान मन्त्रित्वमा संयुक्त अन्तरिम सरकारको गठन गरियो । यस सरकारले आफ्नो काम संविधान निर्माण गर्न र त्यस अनुसार आम चुनाव गराउने कुरामा केन्द्रित गर्‍यो । अनेक समस्याहरुलाई झेल्दै यो सरकार ०४७ कार्तिक २३ गते नेपाल अधिराज्यको संविधान ०४७ जारी गर्न सफल भयो । ०४८ साल वैशाख २९ गते आमचुनाव गरी अहिले नेपाली कांग्रेसको सरकार गिरिजाप्रसाद कोइरालाको प्रधानमन्त्रित्वमा गठन भएको छ र संसद्‌मा आन्दोलनको सहकर्मी नेपाल कम्युनिष्ट पार्टी (एमाले) प्रमुख प्रतिपक्ष दलका रुपमा स्थापित भएको छ ।

## ख. नेपलमा संवैधानिक विकास

वि.सं. १८२५ मा नेपालको एकीकरण हुनुअघि वर्तमान नेपाल अनेकौं विभाजित साना साना राजा रजौटाहरुबाट शासित थियो । आफ्ना सीमा क्षेत्रमा तत्कालीन राजाहरुले

आफ्ना-आफ्नै ढङ्गबाट शासन गर्दथे । तीमध्ये कैयन त जनजातीय पद्धतिमा सञ्चालित थिए ।

नेपालको एकीकरणपछि पनि पृथ्वीनारायण शाहका उत्तराधिकारीहरुले वि.सं. १९०३ सम्म कुनै प्रकारको कानूनी व्यवस्था मार्फत राज्य सञ्चालन गर्नुपर्ने आवश्यकता देखेनन् । त्यस समयको शासन विशेषाधिकार सम्पन्न शाही इच्छाबाट प्रवाहित भएको थियो । त्यस्तो शाही इच्छा समय समयमा राजाज्ञायुक्त सवाल, सनद, रुका आदि जारी गरी अभिव्यक्त गरिन्थ्यो । यो पद्धतिले नै राज्य सञ्चालनलाई क्रियाशील बनाएको थियो ।

## २.१ मुलुकी ऐन वि.सं. १९१०

यस ऐनले आफ्नो प्रादुर्भाव भन्दा पहिले प्रचलनमा रहेका विधि-व्यवहारलाई संहितावद्ध गरेको थियो र यस्ता प्रचलित कुराहरु सर्वसुलभ तथा सबैका समझ-ग्राह्य थिएनन् । यो ऐनको उद्देश्य प्रचलित विधि-व्यवहारलाई सर्वसुलभ गराउनु मात्र नभै राजा-रैती सबै यसै ऐन मुताविक चल्नु पर्ने प्रवन्ध गरेको थियो । यो ऐन विपरीत कार्य गर्न नपाइने र गरेमा दण्ड गरिने व्यवस्था गरिएको थियो । यस प्रवन्धले यो ऐन नेपालको शासन प्रणालीमा प्रथम माध्यम शक्तिको रुपमा रहेको मान्न सकिन्छ । कानूनको सर्वोच्चता, आधुनिक संविधानको नभई नहुने एउटा विशेषता यस ऐनले आफूमा समेटेको पाइन्छ । "हामीदेखि रैयत तकले यस ऐन बमोजिम रहनु भनी हुकुम बक्स्यौ, श्री प्राइमिनिष्टर लगायतका कारिन्दाले यसै ऐन बमोजिम काम गर्नु" भन्ने प्रस्तावनामा अभिव्यक्तले यस कुरालाई पुष्टि गर्दछ ।

त्यसपछि राजनीति कानूनी राज्यको अवधारणामा आधारित शासनमा विश्वास गर्ने नभएको र जनइच्छा मुखरित गरी शासनमा जनताको इच्छा प्रतिस्थापित गर्ने प्रतिनिधिमूलक माध्यम नभएकाले ऐनमा विद्यमान कानूनको सर्वोच्चताको यो भावनाको अभ्यास हुन सकेन । फलतः आधुनिक सिद्धान्तहरुमा आधारित संवैधानिक राज्य व्यवस्थाको अभ्यास शुरु गर्न देशले अर्को एक शताब्दीभन्दा बढी पर्खनु पर्‍यो । यसो भए तापनि कानूनी शासनको स्थापनातर्फ यो ऐन एक ऐतिहासिक कदम थियो भन्न सकिन्छ ।

## २.२ नेपाल सरकार वैधानिक कानून वि.सं. २००४

यो वैधानिक कानून राणा प्रधानमन्त्री पद्मशमशेरले २००४ साल माघ १२ गतेका दिन जारी गरेका थिए । यस बेला राणाहरुले देशमा आन्तरिक उपनिवेशवादीका रुपमा शासन गरेको १०० वर्ष पुगिसकेको थियो । वरिपरी औपनिवेशिक शासनहरु ढल्दै थिए र देशभित्र पनि गैह कानूनी रुपमा संगठित दलहरुले आन्तरिक औपनिवेशिक शासनका विरुद्ध जनसंगठन गरिरहेका थिए र यसको प्रत्यक्ष असर र चाप राणाहरुमा परिरहेको थियो । देशभित्र बाहिरको यो चापलाई कम गरी राणाहरुद्वारा सञ्चालित शासनलाई दीर्घजीवन प्रदान गर्ने राजनैतिक उद्देश्य प्राप्तितर्फ यो संविधान उन्मुख रहेको थियो । यसै कारणले गर्दा राणा वंशहरुमा सर्ने प्रधानमन्त्रीको उत्तराधिकार जस्ता संरचनामा विधानले कुनै परिवर्तन ल्याउन सकेको थिएन बरु विधान संगत पारिएको थियो ।

राज्यका तीनै अङ्गहरुको शक्ति निर्वाध रुपले राणा प्रधानमन्त्रीले प्रयोग गर्न पाउने व्यवस्था कायम राखिएको यो विधानले प्रजातान्त्रिक आदर्श अनुरुप राज्यका अङ्गहरु र राजकीय संस्थाहरुको विधिसम्मत अभ्यास गर्ने कुनै वातावरण सिर्जना गर्न सकेन । जन इच्छाको शासन प्रणालीमा सञ्चार गर्न कुनै प्रभावकारी उपायको प्रवन्धहीनताको कारणले गर्दा र राणा प्रधानमन्त्रीको सर्वोच्चताको अडान पुनः सुनिश्चित भएकाले गर्दा तत्कालीन जन राजनीतिको आकर्षण यो संविधान पनि बन्न सकेन । फलतः २००७ सालको जनक्रान्तिले यो विधानको पटाक्षेप गर्‍यो ।

## २.३ नेपाल अन्तरिम शासन विधान

००७ सालको क्रान्तिले राजाबाट पञ्जापत्र पाई राजकीय शक्ति हत्याउन पुगेको पारिवारिक राणा शासनको समाप्ति भयो । यसबाट ००४ सालको वैधानिक कानूनको पनि अन्त भएकाले ००७ साल चैत्र १९ गते अन्तरिम शासन विधान जारी गरियो । यसको नामाकरणबाट नै यो संविधान क्रान्ति र क्रान्ति पछिको युगलाई एक प्रजातान्त्रिक आदर्शको बाटोबाट शासन गर्ने कडिको रुपमा प्रस्तुत भएको स्पष्ट छ । श्री ५ त्रिभुवनले यो संविधान जारी गर्दा "अबदेखि हाम्रा प्रजाको शासन उनीहरु आफैले रोजेको विधान परिषद्ले बनाएको प्रजातन्त्रात्मिक विधान अनुसार हुनुपर्छ" भन्ने घोषणा गरे । यो संविधानले राणाहरुका विशेषाधिकार समाप्त पार्‍यो, कार्यपालिका, न्यायपालिका तथा व्यवस्थापिकाका अधिकारहरु श्री ५ मा रहने भए । तर कार्यकारिणी अधिकार श्री ५ र मन्त्रीहरु मार्फत प्रयोग गरिने व्यवस्था गरियो ।

यस संविधानमा व्यवस्था भएका र समय समयमा गरिएका शाही घोषणाहरुमा संविधानको श्रोत को हो भन्ने कुरा स्पष्ट नभएकोले पहिले कहिल्यै विचार नगरिएको संविधानको श्रोत को हो भन्ने विषयमा छलफल र चर्चाहरु

शुरु गरायो। श्री ५ त्रिभुवनको घोषणाले जनताका प्रतिनिधिको विधान परिषद्ले संविधान बनाउने अभिव्यक्ति गरेर संविधानको श्रोत जनता हुन सक्ने संभावनातर्फ इंगित गरे तापनि संविधानले राजालाई नै सार्वभौम बनायो। श्री ५ त्रिभुवनबाट पटक पटक जनता नै संविधानका श्रोत हुन् भन्ने अभिव्यक्ति भए तापनि यो संविधानले निर्माणोत्तर कालमा उठेको प्रजातान्त्रिक आदर्शप्रति प्रतिवद्ध हुँदै अघि बढ्न सकिने भावना पटक पटकका संशोधनहरुबाट कमजोर पारियो। २०१५ सालमा एउटा नयाँ संविधान बनाएर जारी नगरेसम्म यो विधान प्रचलनमा रहने भन्ने व्यहोराको संशोधन गरेर जनताबाट संविधान निर्माण हुने संभावनाको ढोका बन्द नै गरियो। तत्कालीन राजनीतिले यो संविधानको मर्मलाई व्यवहारमा प्रयोग गर्न नसकेकाले यसले स्थापित गर्न खोजेको आदर्श अगाडि बढ्न सकेन। परिणामत: ०१५ साल फागुन १ गते राजाले राजकीय सत्ता र आफूमा रहेको अर्न्तनिहित शाही विशेषाधिकारद्वारा नेपाल अधिराज्यको संविधान जारी गरे।

## २.४ नेपाल अधिराज्यको संविधान २०१५

यस संविधानले बहुदलीय राजनैतिक प्रणालीको अवलम्बन गरी संसद्प्रति उत्तरदायी सरकारको गठन हुने प्रबन्ध गरी संवैधानिक राजतन्त्रका गुणहरु आवद्ध गरेको थियो। स्वतन्त्र न्यायपालिका, द्विसदनात्मक संसद्को स्थापना तथा मौलिक हकको आधारभूत अधिकार पनि दिएको थियो। लोक सेवा आयोग, महालेखा परिक्षक जस्ता संवैधानिक निकायहरुको पनि व्यवस्था गरिएको थियो।

कानूनी राज्य स्थापनातर्फ विस्तारै बढ्दै रहेको चापका कारण केही आधुनिक संवैधानिक सिद्धान्तहरुको समावेश गरिएको भए तापनि प्रजातान्त्रिक अभ्यासका क्रममा पुरातनवादी दृष्टि राजाले छोड्न नसकेका कारण राजा नै संविधानका श्रोत भएर रहे। यस प्रावधानका कारण संविधानको र व्यवस्थाको रक्षक र रक्षा गर्ने शक्ति पनि राजा नै हो भन्ने भावनात्मक बल राजालाई भइ नै रह्यो। फलत: राजाले संविधानले दिएको संकटकालीन अधिकारलाई यही भावनात्मक बलको समेत प्रयोग गरी संविधानका अधिकांश धाराहरु निलम्बन गरी संविधानको आत्मामाथि नै प्रहार गरे। नेपालको संविधान २०१९ जारी भएपछि यो संविधानको अन्त्य भयो।

## २.५ नेपालको संविधान २०१९

२०१७ साल पुष २२ गतेको शाही घोषणाबाट निसृत राजकीय विप्लवबाट बहुदलीय व्यवस्थालाई प्रतिबन्ध लगाई पञ्चायती व्यवस्था नामक नयाँ शासकीय संरचनाको स्थापना गर्ने कार्यको शुरुवात गऱ्यो। यस विचारलाई नेपालको संविधान २०१९ मार्फत लागू गरियो।

यो संविधानले जनताबाट अप्रत्यक्ष रुपले निर्वाचित प्रतिनिधि र राजाबाट मनोनित गरिएका व्यक्तिहरु रहने एक सदनात्मक विधायिकाको व्यवस्था गऱ्यो। मन्त्रिमण्डल राजाप्रति उत्तरदायी हुने र राज्यको दैनिक प्रशासनमा राजालाई सहायता प्रदान गर्ने प्रावधान राखियो। न्यायपालिकालाई राजदरबारले निवेदन सुन्ने र इन्साफ दोहोऱ्याउने आदेश दिने प्रवन्धहरुलाई कायम राखिए।

भिन्न राजनैतिक विचार राख्न नपाइने, शासनको संपूर्ण क्रियाशीलता पञ्चायत प्रणालीका मार्फत मात्र खोज्न सकिने र पञ्चायती पद्धतिभन्दा भिन्न तरिकाबाट राज्य र जनताको समुन्नतिमा कसैले पनि संलग्न हुन र त्यस्तो विचार जनतामा पुऱ्याई जनसंगठन समेत गठन गर्न नपाइने प्रावधान संविधानमा राखिएकाले संविधानको मूल आत्मा नै प्रजातन्त्रका मान्य र आदर्श विपरीत स्थापित गरियो। यसले गर्दा संवैधानिक अभ्यासको संकुचन भई अन्य संवैधानिक अंगहरु पनि अभ्यासहीनताका कारण समयोचित परिमार्जन हुनु सट्टा क्षयोन्मुख हुँदै गए।

कार्यकारी अधिकारको अन्तिम निर्णायक स्थान पनि राजाको सचिवालय नै भएकाले निर्दलीय प्रणालीले समय सापेक्ष सुधार गर्न होइन आफ्ना मूलहरु पनि अरु वैकल्पिक उपाय र शक्तिको अभावमा सच्याउनसम्म सकेन। संविधानको तेस्रो संशोधनले प्रत्यक्ष निर्वाचन प्रणाली र मन्त्रीहरु सदनप्रति र राजाप्रति एकैचोटि उत्तरदायी हुने व्यवस्था गरे पनि प्रजातन्त्रका मान्य सिद्धान्ततर्फ संविधान अलिकति पनि नझुकेकाले पञ्चायत प्रणालीले नत जनताको सेवा गर्न सक्यो न उनीहरुलाई मूलभूत अधिकार नै प्रदान गऱ्यो। अन्तत: जनताको संगठित प्रतिरोधका अगाडि यो संवैधानिक व्यवस्थाले २०४६ सालमा आफ्नो अन्त स्वीकार्नु पऱ्यो।

## २.६ नेपाल अधिराज्यको संविधान २०४७

यो संविधानका निर्माणका प्रारम्भिक विशेषता अन्य परिवर्तित संविधानहरुभन्दा भिन्न रुपमा जनआन्दोलनमार्फत निर्दलीय पञ्चायती व्यवस्थाको अन्त गर्ने शक्तिहरुको संलग्नता हो। निर्दलीय व्यवस्थाको अन्त शाही घोषणाबाट भएको हुँदा र त्यही घोषणाको बाटोबाटै यो संविधान आएको हुँदा राजशक्तिको पनि यसमा साझेदारी रहेको अनुमान गर्न सकिन्छ। संविधान निर्माण गर्ने आयोगमा तीनै शक्तिहरुको प्रतिनिधित्व रहेको हुँदा यो संविधान जनइच्छाको प्रतिनिधित्व गर्न यसका परवर्तिहरु भन्दा सफल पनि भएको छ। यसै

कारण यस संविधानले प्रजातान्त्रिक शासन प्रणालीको स्थापनाका लागि आधुनिक मान्य सिद्धान्तहरुको अवलम्बन गरी पुरातन संरचनालाई समाप्त पार्ने प्रयास गरेको छ। यस संविधानले धेरै महत्वपूर्ण आधारभूत संरचनाहरुलाई स्पष्ट रुपमा अभिव्यक्त गरेको छ जो यस प्रकार छन्।

(१) राज्य शक्तिको श्रोत जनता हुने
(२) नेपाली नागरिकको आधारभूत मानव अधिकार सुरक्षित गर्ने
(३) वालिग मताधिकारलाई सुदृढ गर्ने
(४) संसदीय शासन प्रणालीलाई सुदृढ गर्ने
(५) संवैधानिक राजतन्त्रलाई सुदृढ गर्ने
(६) बहुदलीय प्रजातन्त्रलाई सुदृढ गर्ने
(७) स्वतन्त्र एवं सक्षम न्याय प्रणालीको व्यवस्था गर्ने
(८) कानूनी राज्यको अवधारणालाई साकार पार्ने
(९) राजकीय सत्ता सञ्चालन र सर्वभौम अधिकारको रक्षा संविधान बमोजिम गर्ने।

यी आधारभूत संरचनाहरु असंशोधनीय छन्। यी संरचनाहरुमा परिवर्तन गर्न पाइने छैन। यसरी प्रजातन्त्रमा नभई नहुने वा त्यस्ता प्रत्याभूति बिना वा त्यस्ता कुराहरुको रक्षा गर्न उपयुक्त प्रवन्ध बिना प्रजातान्त्रिक आदर्श प्राप्त गर्न नसकिने प्रावधान यस संविधानले गरेको छ। यसका अतिरिक्त प्रजातन्त्रका पहरेदार (safeguards) को रुपमा रहेका अन्य संवैधानिक निकायहरु महालेखा परीक्षक, लोक सेवा आयोग, निर्वाचन आयोग र प्रेस स्वतन्त्रताका प्रवन्धहरु यस संविधानले गरेको छ।

अन्तमा, आजको अवस्थामा यस संविधानलाई आधुनिक र प्रजातन्त्रका आदर्शहरुबाट मण्डित युगान्तकारी संविधानको रुपमा मान्न सकिन्छ। सामयिक अभ्यास र व्यवहारमा सही उपयोग र त्यसबाट प्राप्त ज्ञान र समाजको चाहनाको संयोजनमा उपयोग गरिने उच्च बौद्धिक तथा व्यवहारिक कौशलले यो संविधान पूर्णता प्राप्त गर्न सक्षम हुन सक्ने देखिन्छ।

# परिच्छेद - ३

# नेपालका मानव अधिकारसंग सम्बद्ध संघ-संस्थाहरु

## १. मानव अधिकारसंग सम्बद्ध संघ-संस्थाहरु

### १.१ अनौपचारिक क्षेत्र सेवा केन्द्र, इन्सेक

असंगठित क्षेत्रलाई संगठित हुन प्रेरणा प्रदान गर्ने तथा सहयोग गर्ने उद्देश्यले साढेतीन बर्षअघि स्थापित अनौपचारिक क्षेत्र अनुसन्धान केन्द्रले वास्तवमा जनता माफ गहिरिएर काम गर्न थालेको भने प्रजातन्त्रको पुन: बहाली पश्चात् नै हो । त्यति बेलासम्ममा यसको नाम आवश्यक सुधारकासाथ अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) भइसकेको थियो । त्यसपछिका दिनहरुमा इन्सेकले देशको तराईदेखि पहाडी इलाकासम्म मात्र हैन, सीमाना पारी पनि आफ्नो परिचय प्रदान गर्न सफलता पाएको छ ।

पछौटे क्षेत्रका जनसमुदायलाई संगठित गर्दै उनीहरु बीच मानवीय मूल्य र मान्यताको प्रसार गर्ने उद्देश्यकासाथ स्थापित इन्सेकले आफ्नो सुरुवात कालमा काठमाण्डौका ठेलावालाहरुको लागि अनौपचारिक शिक्षा तथा नि:शुल्क स्वास्थ्य सेवा प्रदान गर्ने कार्यक्रम सञ्चालन गरेको थियो ।

गत संसदीय आमनिर्वाचन अघि इन्सेकले देशका चेतनाका हिसाबले बढी पिछडिएका बीसवटा जिल्लाहरुमा मतदाता सचेतन कार्यक्रम संचालन गरेको थियो । ०४७ असारदेखि ०४८ वैशाखसम्म सञ्चालित उक्त कार्यक्रमको अवधिमा देशभरका ६ ठाउँमा स्थानीय सहभागिताका आधारमा "निष्पक्ष र धाधलीरहित निर्वाचनका पूर्वाधारहरु" विषयक गोष्ठीहरुको आयोजना गरिएको थियो ।

ऐतिहासिक महत्वको पहिलो संसदीय निर्वाचन धाँधली रहित ढंगले सम्पन्न गर्न "राष्ट्रिय निर्वाचन पर्यवेक्षण समिति" को कियाकलापमा इन्सेक सक्रियतापूर्वक संलग्न रहेको तथा प्रजातन्त्र पश्चात् पहिलो पटक सम्पन्न हुन लागेको सो निर्वाचनको लागि खटिएका १०० जनाभन्दा बढी राष्ट्रिय पर्यवेक्षक एवं स्वयंसेवकका लागि तालिमको आयोजना गरेको थियो । उक्त समितिको निमन्त्रणामा विभिन्न देशहरुबाट आएका ८० जना पर्यवेक्षकहरुले देशका विविध क्षेत्रमा निर्वाचन प्रक्रियाको अवलोकन गरेका थिए ।

इन्सेकले कर्णाली अञ्चलका केही स्थानमा "जारी" प्रथाबारे सुरु गरेको अनुसन्धान सम्पन्न गरिसकेको छ ।

आफ्नो देशको सीमा बाहिरका क्षेत्रीय स्तरका कतिपय कार्यक्रमहरु पनि इन्सेकले सफलतापूर्वक सम्पन्न गरिसकेको छ ।

०४८ चैत्र ४ देखि ११ गतेसम्म काठमाण्डौमा इन्सेकले दक्षिण एशियामा कार्यरत गैर सरकारी संगठनका प्रतिनिधिहरुको उल्लेख्य सहभागिताबीच सूचना र अभिलेख सम्बन्धी तालिम कार्यक्रम सम्पन्न गऱ्यो । नर्वे स्थित हुरिडक्सका प्रतिनिधिहरु-द्वारा प्रशिक्षण प्रदान गरिएको उक्त कार्यक्रममा तिब्बती शरणार्थी र बर्माका प्रतिनिधिको पनि सहभागिता रहेको थियो ।

सूचनाको क्षेत्रमा पनि प्रभुत्ववादलाई पन्छाएर "पिपुल्स सार्क" को परिकल्पना साकार तुल्याउने इन्सेकको उद्देश्य अनुरुप चैत्र ९ गते काठमाण्डौमा सार्क क्षेत्रका पत्रकारहरुको भेला सम्पन्न भयो ।

काठमाण्डौमै इन्सेकले ०४८ भदौ ८ र ९ गते "अति जटिल परिस्थितिमा मानव अधिकारको संरक्षण र सम्बर्धनका लागि सार्क क्षेत्रका केही सक्रिय मानव अधिकारवादी कार्यकर्ताहरुको बैठक" सम्पन्न गऱ्यो । काश्मिर र भुटानका विषयमा गहन छलफल भएको उक्त बैठकलाई धेरैतिरबाट निकै महत्व दिइएको थियो । सोही बैठकले दक्षिण एशियामा हुने मानव अधिकारका उल्लंघनहरुको प्रचार प्रसार गर्ने त्रैमासिक बुलेटिन प्रकाशन गर्ने जिम्मा इन्सेकलाई दिएकोछ।

सोही बैठकको निर्णय अनुसार भुटानी जनआन्दोलनप्रति ऐक्यबद्धता दर्शाउन दिल्लीमा एक कार्यक्रमको आयोजना गरिएको थियो ।

०४८ चैत्र १० देखि ११ गतेसम्म "विकासमा कानूनका निम्ति अन्तरराष्ट्रिय केन्द्र" न्यूयोर्कका अध्यक्ष डा. क्लेयरेन्स जे. डायसको समुपस्थितिमा काठमाण्डौमै सार्क पत्रकारहरुको दोश्रो भेला सम्पन्न भयो । यसले सार्क पत्रकारहरुको मानवाधिकार संघको स्थापनाका निम्ति पूर्वाधार तयार पाऱ्यो ।

भुटानका निम्ति सार्क कानूनवीदहरुको अभियान अन्तर्गत इन्सेकका तत्कालीन निर्देशक प्रकाश काफ्लेको प्रमुख

सक्रियतामा "द ट्रेजिडी अफ भूटान: क्लेन ईट वील ईण्ड" नामक महत्वपूर्ण पुस्तकको प्रकाशन भइसकेको छ ।

नेपालमा बँधुवा मजदुर सम्बन्धी अध्ययन गरी सोको विस्तृत प्रतिवेदन प्रकाशित गरेका साथै ती बांधा मजदूरको विमुक्तिका लागि विविध क्रियाकलापमा इनसेक अगाडि बढ्दै छ । हाल इनसेकद्वारा कमैयाहरुको उन्मूलनका लागि कानून बनाउने दिशामा राय भइरहेको छ ।

इन्सेकले यतिखेर दक्षिण एशियाका अति जटिल परिस्थिति भएका ठाउँहरुको मानवाधिकार उल्लंघन सम्बन्धी नियमित अभिलेख राख्ने काम पनि गरिरहेको छ ।

पीडित महिलाहरुका निम्ति एउटा नियमित मञ्च सञ्चालन इन्सेकको उद्देश्य अनुरुप आउँदो वर्षको शुरुआतमा नेपालमा समाजमा विविध कोणबाट पीडित महिलाहरुको भेला हुने निश्चित भइसकेको छ ।

इन्टरनेशनल कांग्रेस अन डेमोक्रेटिक अल्टरनेटिभ फर डेभलपमेन्ट, ह्युमन राइट्स, जष्टिस एण्ड पीस" इन्सेकको भविष्यको सबभन्दा महत्वाकांक्षी योजना हो । उल्लेखित इन्टरनेशनल कांग्रेस अन्तर्राष्ट्रिय ख्यातिप्राप्त व्यक्तिहरुका माफ काठमाण्डौमा सम्पन्न गराउने स्व. प्रकाश काफ्लेको योजना र सपनालाई इन्सेकले आधारभूत तयारीको चरणबाट अघि बढाउँदै छ ।

पिपुल्स सार्क वा जन-दक्षेसको स्व. काफ्लेको परिकल्पनालाई साकार रुप दिनका लागि त सम्पूर्ण सार्क क्षेत्रका सहयोगी संघ-संस्थाहरु लागिरहेका छन् र यसका लागि इन्सेकले पनि आफ्नोतर्फबाट कार्य गरिरहेछ ।

यस संस्थाको सुरुवात कालदेखि नै अनेकन महत्वपूर्ण पुस्तक पुस्तिकाहरु प्रकाशित भएका छन् । इन्सेकद्वारा मानवाधिकार द्वैमासिक "प्राची" को पनि प्रकाशित भइरहेको छ । चेतना अभिवृद्धिका लागि तयार पारिएका इन्सेकका कैयन पोष्टरहरु गाउँगाउँमा टाँसिएका छन् । इन्सेकले देशका २५ वटा जिल्लाहरुमा मानव अधिकार तथा सामाजिक सचेतन अभियान सञ्चालन गरेको छ । इन्सेकले प्रत्येक वर्ष मानवअधिकार वर्ष पुस्तकको प्रकाशन पनि गर्ने भएको छ । उक्त वर्ष पुस्तकमा देशभित्र वर्षभरि घटेका मानवअधिकार उल्लंघनका घटनाहरुको र यस क्षेत्रमा भएका प्रगतिहरुको जिल्ला पिच्छेको र राष्ट्रिय स्तर समेतको अभिलेख रहनेछ ।

<u>सम्पर्क</u>


अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक)<br>
कलंकी, स्युचाटार, फोन नं. २७०७७०<br>
पो.ब.नं. २७२६,<br>
काठमाण्डौ


## १.२ इन्हुरेड इन्टरनेशनल

अन्तर्राष्ट्रिय मानव अधिकार, वातावरण तथा विकास संस्था - इन्हुरेड इन्टरनेशनलको स्थापना सन् १९८७ मा भएको थियो । मानव अधिकारको पक्षमा विभिन्न कार्य सम्पादन गर्दै आएको यो संस्थाले विश्वव्यापी रुपमा भएका मानव अधिकार उल्लंघनका घटनाप्रति विरोध जनाउने, प्रजातन्त्र विरोधी क्रियाकलापको विपक्षमा जनमत तयार गर्ने, प्रजातान्त्रिक वातावरण विकास निम्ति राष्ट्रिय अन्तर्राष्ट्रिय क्षेत्रमा क्रियाशील रहने उद्देश्य राखेको छ । सिंगो संस्थाले आफ्नो कार्य सम्पादन गर्न संसदीय मञ्च, महिला अधिकार सम्बन्धी केन्द्र, बाल अधिकार सम्बन्धी केन्द्र, वातावरण र विकास सम्बन्धी अध्ययन अनुसन्धान केन्द्र जस्ता संयन्त्रहरु निर्माण गरेको छ ।

मानव अधिकार, वातावरण र विकास सम्बन्धी तथ्यहरुको संकलन गर्नु मानव अधिकार शिक्षा, अनुसन्धान र तालिमका कार्यक्रम सञ्चालन गर्नु, समसामयिक सवालहरुमा विचार गोष्ठी, कार्यशाला गोष्ठी, बैठक र भेलाहरुको आयोजना गर्दै अन्तर्राष्ट्रिय मानव अधिकारका अनुबन्ध, घोषणापत्र र सम्झौता सम्मेलनहरुबारे सरकारको ध्यानाकर्षण गराउनु यस संस्थाका प्रमुख गतिविधिहरु हुन् ।

मानव अधिकार सम्बन्धी कानून निर्माणको सवालमा १९९१ मा काठमाण्डौमा प्रथम अन्तर्राष्ट्रिय सम्मेलन सम्पन्न गरेको यस संस्थाले मानव अधिकारसंग सम्बद्ध अन्य संस्थाहरुसंग मिलेर १९९१ र १९९२ मा मानव अधिकार शिक्षा संचेतना प्रदर्शन कार्यक्रमको आयोजना गरेको थियो । यसले मानव अधिकार बुलेटिन नियमित रुपमा प्रकाशित गरिरहेको छ र अन्तर्राष्ट्रिय मानव अधिकार सम्बन्धी घोषणा पत्र, सम्मिलन र संझौताहरुलाई नेपाली भाषामा अनुवाद गरी प्रकाशित गरेको छ । भुटान र थाइल्याण्डमा भएका मानव अधिकार उल्लंघन सम्बन्धी घटनाहरुको तथ्य पत्ता लगाउन यसले १९९२ मा एउटा आयोग पनि पठाएको थियो ।

साधारण सभा, केन्द्रीय कार्य समिति, सचिवालय, र सल्लाहकार समिति सांगठनिक ढाँचा रहेको यस संस्थाले मानव अधिकारसंग सम्बद्ध अरु राष्ट्रिय अन्तर्राष्ट्रिय संस्थाहरुसंग सम्बन्ध स्थापित गर्दै आएको छ । "अधिकार" र "लिबर्टी" मासिक प्रकाशन र अन्तर्राष्ट्रिय मानव अधिकार, वातावरण र विकास सम्बन्धी पुस्तिकाहरु, स्थलगत र तथ्यगत रिपोर्टहरु, मानव अधिकार बुलेटिन तथा मानव अधिकार कविता संग्रहको प्रकाशन जस्ता उल्लेखनिय कार्य यो संस्थाले गर्दै आएको छ ।

सम्पर्क

इन्हुरेड इन्टरनेशनल
पो.ब.नं.२१२५
२/१९१ पुतलीसडक, काठमाडौं
फोन ४१९६१०

## १.३ नेपाल मानव अधिकार संगठन

नेपाल मानव अधिकार संगठन - नेमाधि संगठनको स्थापना ०४३ मंसीरमा भएको थियो । विश्वव्यापी मानव अधिकारका प्रस्थापनाहरुलाई नेपालको सन्दर्भमा लागू गर्ने गराउने उद्देश्यका साथ स्थापित हाल यस संगठनको संस्थापक अध्यक्ष हृषिकेश शाह हुनु हुन्छ । राजनीतिक दल विशेषसंग असम्बद्ध र लाभ निरपेक्ष रहने गरी जनताका मानव अधिकार र मौलिक अधिकारको प्राप्ति, संरक्षण र विस्तारमा जोड दिंदै आएको नेमाधि संगठनका अन्य संस्थापकहरुमा सूर्य ब. शाक्य, तुल्सीलाल अमात्य, स्व. चूडाप्रसाद शर्मा, शम्भु प्रसाद ज्ञवाली, कृष्ण प्रसाद भण्डारी, पद्मरत्न तुलाधर, मार्शल जुलुम शाक्य, दमननाथ ढुंगाना, भरतमोहन अधिकारी, देवेन्द्र राज पाण्डे, कपिल श्रेष्ठ, स्व. पारिजात, बाबुराम भट्टराई लगायत ८४ जना हुनुहुन्थ्यो । यो संगठनको स्थापना हुनासाथ हृषिकेश शाहको निवासस्थान कमलपोखरीमा राखिएको साइन्वोर्ड तत्कालीन पन्चायती सरकारद्वारा प्रहरी लगाएर फिकिएको थियो ।

०४६ सालको जनआन्दोलनमा राष्ट्रिय अन्तर्राष्ट्रिय सहयोग र समर्थन जुटाउने काममा महत्वपूर्ण भूमिका निर्वाह गरेको यस संगठनले ०४८ मा भएको संसदीय निर्वाचनमा "स्वनिका" भ्रमणदल गठन गर्दै २५ जिल्लाको भ्रमण गरेको थियो । उक्त भ्रमण दलले आमसभा, बैठक, विचारगोष्ठी आदिको आयोजना गरी राजनैतिक पार्टीका नेता, कार्यकर्ता, सुरक्षाकर्मी, निर्वाचन अधिकृत र सर्वसाधारण समेतमा स्वतन्त्र तथा निष्पक्ष निर्वाचन बारे व्यापक जनचेतना र जागरण दिने काम गरेको थियो । निर्वाचन सम्पन्न भए पश्चात स्वनिका शाखाहरुबाट प्राप्त निर्वाचन प्रतिवेदनहरुका आधारमा "आम निर्वाचन २०४८ को राष्ट्रिय प्रतिवेदन" समेत प्रकाशित गरेको थियो ।

यो संगठनले गत ०४७ साल पुष महिनामा केन्द्रीय कारागारका बन्दीहरुले गरेको आन्दोलन सम्बन्धी प्रतिवेदन तयार गरी सुझाव सहित श्री ५ को सरकारमा पेश गरेको, संगठनका केन्द्रीय प्रतिनिधि एवं शाखा प्रतिनिधिहरुले देशका विभिन्न भागमा रहेका जेलहरुको निरीक्षण गरी बन्दीहरुको अवस्था बारे समेतको प्रतिवेदन जनसमक्ष ल्याउने कार्य गर्दै आइरहेको छ ।

स्वदेश तथा विदेशमा घैरहेका मानव अधिकार विरोधी क्रियाकलापको विरोध गर्दै प्रजातन्त्र प्राप्तिको निम्ति भएका शान्तिपूर्ण आन्दोलनहरुलाई सहयोग र समर्थन गरिरहेको छ । ०४८ साउन १५ गतेको खोटाङ गोली काण्ड, ०४८ चैत २४ को काठमाण्डौ गोली काण्ड, ०४८ को बाग्लुङ अमानवीय यातना काण्ड आदि घटनाहरुको स्थलगत प्रतिवेदन तयार गरी जनसमक्ष ल्याउनुका अतिरिक्त न्यायिक जाँच आयोग गठन गर्न र दोषी उपर कार्बाही गर्न समेत माग गर्दै आइरहेको छ ।

४७ जिल्ला शाखा र १२ उपशाखा रहेको यो संगठनको आर्थिक आय स्थापना देखि वर्तमानसम्म स्थानीय श्रोत मात्र भएको बताइन्छ ।

सम्पर्क

नेपाल मानव अधिकार संगठन,
पुतलीसडक
फोन ४११०३३
पोष्ट बक्स नं. ५४२४
काठमाण्डौ

## १.४ मानव अधिकार संरक्षण मञ्च

मानव अधिकार संरक्षण मञ्च - मासमको स्थापना २०४१ साल साउन १३ गते वीरगञ्जमा भएको थियो । स्व. गोपाल गोतामेको घरमा बसेको भेलाले मानव अधिकारको हननप्रति जनचेतना जगाउन र मौलिक हकको संरक्षण गर्न सो मञ्चको गठन गर्ने निर्णय गरेको थियो । त्यसबेला बद्री प्रसाद खतिवडाको संयोजकत्वमा गठित मासमका सदस्यहरुमा गोपाल गोतामे, नन्दन अर्याल, यादव उपाध्याय र पाण्डव राज घिमिरे हुनुहुन्थ्यो । उक्त मञ्चका महासचिवमा स्व. प्रकाश काफ्लेको छनौट गरिएको थियो ।

केही समयपछि उक्त समितिले आफ्नो लक्ष्य अनुसार २०४१ सालको मंसीर २५ गते नेपालमा पहिलो पटक मानव अधिकार दिवस हेटौंडाको खुला मैदानमा भव्य रुपमा मनायो । शुरुका दिनहरुमा यस संस्थाले देशभित्र विभिन्न कारागारमा रहेका राजबन्दीहरुको मुक्तिका लागि "तुरुन्त राजबन्दी रिहाई गर" भन्ने अभियान चलाएको थियो । मञ्चले राजबन्दीहरुका आवश्यकता पूरा गराउन देखि उनीहरुको परिवारहरुको पुनर्मिलन गराउनेसम्मको काम गरेको थियो ।

मञ्चले राजबन्दीहरुमाथि भएको अत्याचारबारे अन्तर्राष्ट्रिय रुपमा जानकारी गराउनुका साथै देशभित्र भएका हत्या, बलात्कार आदिका बारेमा तथ्य पत्ता लगाउने टोली

पठाउने काम पनि गरेको थियो । पञ्चायत कालमा सरकारी स्तरबाट भएका मानव अधिकार हननका तथ्यहरु जनसमक्ष ल्याउने कार्यमा पनि यस संस्थाले अग्रणी भूमिका खेलेको थियो । उक्त समयमा प्रतिवन्धित राजनैतिक पार्टी बीचमा वैमनस्यताले खडा गरेको पर्खाल तोडी प्रजातन्त्रका लागि उनीहरुलाई एउटै मञ्चमा ल्याउन पनि मासमले सक्रिय पहलकदमी गरेको थियो । मासमकै अग्रसरतामा जेठा राजनीतिज्ञ भू.पू. प्रधानमन्त्री स्व. टंकप्रसाद आचार्यको निवासस्थानमा जमघट भई सबै राजनीतिज्ञहरुले एउटै पत्रमा हस्ताक्षर गरेका थिए ।

पञ्चायती दमन चरम सीमामा पुगेको बेला भारतको बँधुवा मुक्ति मोर्चाका नेता स्वामी अग्निवेशको अतिथ्यमा भू.पू. प्रधानमन्त्री टंकप्रसाद आचार्यले प्रहरी घेराबीच मासमको प्रथम राष्ट्रिय सम्मेलनको उद्‌घाटन गर्नु भएको थियो । ०४५ चैत्र २६ गते स्व. प्रकाश काफ्लेको विशेष सक्रियतामा सम्पन्न भएको मासमको प्रथम राष्ट्रिय सम्मेलनले मञ्चको नाम, झण्डा र विधानलाई विधिवत रुपमा पारित गरेको थियो । त्यस बेला विधानमा निम्नलिखित उद्देश्यहरु उल्लेख गरिएका थिए ।

(क) संयुक्त राष्ट्र संघद्वारा घोषित मानव अधिकार सम्बन्धी धारणा र मान्यताहरुलाई नेपाली जनताका माझ प्रचारित र प्रसारित गरी मानव अधिकारको निम्ति सञ्चालित अन्तर्राष्ट्रिय आन्दोलनसंग आवद्ध हुने,

(ख) जनताका आधारभूत र मौलिक हक एवं हितको प्राप्ति, सुरक्षा र प्रवर्द्धनका निम्ति कार्य गर्ने,

(ग) मानव अधिकारको पक्षमा व्यापक जनमतको सृष्टि गर्ने, मानवाधिकार सम्बन्धी धारणाहरु बारे चिन्तन छलफल जारी राख्न, गोष्ठी र सभाहरु सञ्चालन गर्नुका साथै अनुसन्धानमूलक कार्य गरी युगानुकूल धारणा तथा मान्यताहरु प्रतिपादन गर्ने । यसको निम्ति विभिन्न प्रकाशनहरु प्रकाशित गर्ने,

(घ) उपर्युक्त उद्देश्यको प्राप्तिका निम्ति आवश्यक अन्य कार्य गर्ने ।

पहिलो सम्मेलन पछिका दिनहरुमा उल्लेखित उद्देश्यहरुको परिपूर्तिका निम्ति मासमले समय समयमा सभा गोष्ठी र प्रचार प्रसार गर्ने कार्य प्रारम्भ गऱ्यो । मासमले २०४६ सालमा भएको जनआन्दोलनमा देशमा प्रजातन्त्र स्थापना गर्ने कार्यमा संयुक्त संघर्ष समितिबाट चलाएको जनआन्दोलनलाई प्रत्यक्ष सरिक भै सहयोग पुऱ्याएको थियो । त्यस क्रममा मासमका तत्कालीन महासचिव स्व. प्रकाश काफ्लेले नेपालको जनआन्दोलनका निम्ति सहयोग र समर्थन जुटाउन युरोपका विभिन्न मुलुकहरुमा विशेष सक्रियता दर्शाउनु भएको थियो ।

प्रजातन्त्रको उदयपछि मासम निकै सकृय हुँदै जनआन्दोलनमा शहीद हुनेहरुका परिवारलाई सहयोग गर्ने र अपांग भएकाहरुलाई औषधि उपचार गर्ने कार्यमा पनि निकै सक्रिय रह्यो ।

मासमद्वारा जनआन्दोलनका लगत्तै पछि जनआन्दोलनमा भएका अन्याय अत्याचारको सचित्र वर्णन भएको "प्रजातन्त्रको उदय" नामक पुस्तकको प्रकाशन भएको थियो । त्यस बाहेक मानव अधिकारको जनजागरण ल्याउने खालका दर्जनौं पुस्तक/पत्रिकाहरु पनि मासमद्वारा प्रकाशित भइसकेका छन् । मासमले नियमित रुपमा "मानव अधिकार" मासिक बुलेटिन प्रकाशित गर्दै आएको छ ।

मासमले ०४८ सालमा भएको आम निर्वाचन, उप-निर्वाचन र ०४९ सालमा भएको स्थानीय निर्वाचनको स्वदेश तथा विदेशका स्वतन्त्र बुद्धिजीवी एवं पत्रकारहरु-द्वारा पर्यवेक्षण तथा सुपरिवेक्षण गराएको थियो ।

०४९ साउन १० र ११ गते सम्पन्न भएको मञ्चको तेश्रो राष्ट्रिय सम्मेलनले डा. मथुरा श्रेष्ठको अध्यक्षतामा आगामी ३ वर्षको निमित्त २१ जनाको केन्द्रीय कमिटी निर्माण गरेको छ ।

मासमले नेपालभित्र घटेका मानव अधिकार विरोधी घटनाहरुको छानवीन गर्ने र पीडित पक्षलाई राहत दिलाउने प्रयत्न गरिरहेको छ । यस मञ्चले २०४६ सालको जनआन्दोलनमा परी शहीद हुनेहरु तथा राजनीतिक पीडितका छोरा-छोरीहरुलाई पनि शिक्षा दिलाउने कार्य गरिरहेको छ । पाठ्य पुस्तकमा मानव अधिकार सम्बन्धी सामग्री पनि समावेस गरिनु पर्दछ भन्ने विषयमा मासमले श्री ५ को सरकार, शिक्षा मन्त्रालय र विश्वविद्यालयहरुलाई अनुरोध गरिरहेको छ । मासमको आयोजनामा ०४९ माघ ८ गते जनकपुरमा सार्क मुलुकहरुमा मानव अधिकार विषयक द्विदिवसीय क्षेत्रीय सम्मेलन सम्पन्न भएको थियो ।

सम्पर्क

मानव अधिकार संरक्षण मञ्च
माइतीघर, काठमाण्डौ
फोन नं. २२२०९८
पो.ब.नं. ५४५७

## १.५ नेपाल बालमजदूर सरोकार केन्द्र

नेपाल बालमजदूर सरोकार केन्द्र - सिविनको स्थापना ०४३ सालमा भएको थियो । बालबालिकालाई शारीरिक श्रममा लगाउन विद्यमान राष्ट्रिय अन्तर्राष्ट्रिय ऐन कानूनले निशिद्ध गरेको छ तापनि विकासोन्मुख देशहरु बालमजदूर ठूलो संख्यामा रहेको छ । यस सन्दर्भमा बालबालिकाको शारीरिक र मानसिक शोषण गरी उनीहरुमाथि थोपरिने अत्याचार र उत्पीडनबाट मुक्त गर्ने उद्देश्य राखेर सिविनको जन्म भएको थियो । नेपालमा बालअधिकारको संरक्षण अभियानको सिलसिलामा स्थापित गैर सरकारी संस्थाहरुमा यो नै पहिलो संस्था हो ।

यो संस्था मजदूर बालबालिकाका हक अधिकार, स्वतन्त्रता र विकास सम्बन्धी प्रत्यक्ष सरोकार राख्दछ । उनीहरुको मानवीय आवश्यकता, शिक्षा, स्वास्थ्य, सुरक्षा लगायतका सबै पक्षको विकास निम्ति क्रियाशील छ । राष्ट्रिय रुपमा बालअधिकार सुरक्षाको निम्ति सामाजिक जागरण ल्याउने लक्ष राखेको यो संस्था अहिले खास गरी सडक-बालबालिकातिर केन्द्रित रहेको देखिन्छ । उनीहरुको वास्तविक स्थिति र अवस्थाको नियमित अध्ययन अनुसन्धान गर्दै त्यसको सार्वजनिक जानकारी दिने कार्य गरिरहेको छ । साथै नेपालमा बाल मजदूरीको स्थिति, बालकहरु सडकमा आउनु पर्ने परिस्थितिको कारक तत्वको खोजी, बाल बिक्रीको अवस्था, बाँधा बालमजदूर र बाल विवाह जस्ता समस्याहरुको उचित समाधानतर्फ यो संस्था केन्द्रित भएर लागेको छ ।

अहिलेसम्म बालसरोकार केन्द्रले बालअधिकार र बालमजदूरीबारे सचेतना कार्यक्रम, अवसरबाट बंचित बालकहरुको निम्ति शिक्षा, सडक-बालकहरुको लागि सामाजमा पुनर्स्थापना कार्यक्रम, बालबालिकाहरुबारे यावत तथ्य तथ्याङ्कहरु संकलन र प्रकाशन, जनसम्पर्क, सामुदायिक मजदूरहरु, बालमजदूर अधिकार सम्बन्धी गतिविधिहबारे अध्ययन र अनुसन्धान, बाल अधिकार सम्बन्धी कानूनी साक्षरता आदि गतिविधि सञ्चालन गरिरहेको छ ।

१९९२ लाई यस संस्थाले आफ्नो स्थापनाको छैटौं वर्ष दिवसको रुपमा विशेष कार्यक्रमका साथ मनाएको थियो र यसै वर्ष नेपालको गलैंचा उद्योगमा संलग्न बाल मजदूर र उनीहरुको अवस्था बारे तथ्यगत अध्ययन गरेको थियो । त्यसको प्रतिवेदन प्रकाशित भए पछि सरकारी गैरसरकारी क्षेत्रमा थप उत्सुकता पैदा भएको थियो । यसका साथै अन्य गैर सरकारी संस्थाहरुसंग मिलेर यस केन्द्रले सडक-बालकहरुलाई साइकल मर्मत तालिम, उनीहरुका निम्ति अपर्फट सुरक्षा, सडक बाल-बालिकाको निम्ति स्वास्थ्य शिविरजस्ता कार्यक्रम पनि चलाइएको छ । यी सबै कार्यक्रमलाई सडक-बालक रहेका प्रमुख क्षेत्रहरुमा विस्तार गर्ने योजना अनुरुप नारायणघाट, हेटौंडा र अन्य शहरमा पनि शुरु भइसकेको बताइन्छ ।

<u>सम्पर्क</u>

नेपाल बाल मजदूर सरोकार केन्द्र (सीवीन)
कालीमाटी
फो.नं. २७०३३६
पो.ब.नं. ४३७४
काठमाडौं

## १.६ यातना पीडित सरोकार केन्द्र

यातना पीडित सरोकार केन्द्र सिभिक्ट राजनीतिक आन्दोलनको क्रममा यातनाका कारण दु:ख पाएका व्यक्तिहरुको यथोचित सहयोग पुऱ्याउने उद्देश्य राखेर २०४७ साल मंसीर २९ गते स्थापना भएको थियो । ०४६ सालको जनआन्दोलन र त्यसअघि पनि प्रजातन्त्र प्राप्तिका गतिविधिमा संलग्न भएका कारण धेरै नागरिकहरुले अमानुषिक यातना पाएका छन् । शारीरिक तथा मानसिक यातनाले पीडित त्यस्ता व्यक्तिहरुलाई सरकारी तथा गैर सरकारी संस्थाहरुबाट प्रजातन्त्र स्थापनापछि पनि राहत तथा सेवा र उपचार नपाइ रहेको स्थिति थियो । यही स्थितिलाई ध्यानमा राखी स्थापना कालदेखि नै यातना पीडितहरुबारे उपचार अनुसन्धान, तालिम र प्रकाशन गर्दै आएको यस संस्थाले हाल भुटानी शरणार्थीहरुबीच पनि उपचार र परामर्श सेवा प्रदान गरेको छ ।

यातना पीडितहरुके उपचारका निम्ति चिकित्साकर्मी-हरुलाइ नै छुट्टै तालिमको आवश्यकता पर्दछ । यही आवश्यकतालाई पूरा गर्न यस संस्थाले आफ्ना स्वयंसेवक तथा स्वास्थ्यकर्मीहरुलाई स्वदेश तथा विदेशमा तालिमको व्यवस्था गर्ने गरेको बताइन्छ । त्यसै गरी १९९२ को अप्रिलमा भुटानी शरणार्थीहरुमध्ये यातना पीडितलाई सेवा र सहयोग पुऱ्याउन १६ जना स्वयंसेवकहरुलाई तालिमको व्यवस्था, १९९२ अगष्टमा अधिराज्यका विभिन्न भागमा कार्यरत डाक्टरहरुको सेमिनार सञ्चालन, मानवअधिकार, कानून र यातना सम्बन्धी जानकारी गराउन हरेक महिना जागरण, तालिम आदि कार्यक्रम सञ्चालन गरिरहेको छ ।

हालसम्म बागलुङ, सिन्धुली, गोरखा, विराटनगर, काठमाण्डौ आदि ठाउँमा भएका गोली काण्ड तथा यातनापूर्ण घटनाहरुको स्थलगत अध्ययन गर्न टोली पठाएको थियो । ०४६ को जनआन्दोलन कालमा प्रहरीबाट यातना पाएका पीडितहरुलाई उपचार र सरसल्लाह दिइरहेको बताइन्छ । १९९२ को अन्त्यसम्ममा यो संस्थाले ५२ जना नेपाली र ८ जना विदेशी यातना पीडितहरुलाई स्वास्थ्योपचार गरिसकेको पनि बताएको छ । जनआन्दोलनका क्रममा गम्भीर रुपले घाइते भएका र यातना पाएका ५० जनाको उपचार

नेपाल मै गरिएको र ३ जनालाई विदेशमा लगी उपचार गरिएको थियो ।

यस संस्थाले अन्तर्राष्ट्रिय क्षेत्रमा सञ्चालित मानव अधिकार पक्षधर संघ संस्थाहरुसंग सूचना आदान प्रदान गर्ने गरेको छ । संस्थाको उद्देश्य र ध्येयलाई प्रचारित गर्ने तथा गतिविधिहरु बारे जानकारी गराउने उद्देश्यले "यातना मुक्ति" अंग्रेजीमा त्रैमासिक र नेपालीमा द्वैमासिक बुलेटिन प्रकाशित गरिरहेको बताइन्छ । प्रकाशित बुलेटिनलाई देशका सम्पूर्ण मा.वि., सामाजिक क्षेत्रमा कार्यरत संस्था, पुस्तकालय तथा सार्वजनिक जीवनसंग सरोकार राख्ने निकायहरुलाई नि:शुल्क उपलब्ध गराइआएको छ । यसका अतिरिक्त "मनोवैज्ञानिक पीडाबाट मुक्ति" र "मानवाधिकार वर्णमाला" नामक पुस्तक र अन्तर्राष्ट्रिय मानव अधिकार दिवसको सन्दर्भमा पोष्टर प्रकाशन र वितरण गरिएको थियो ।

सम्पर्क

सिभिक्ट
फो.नं. ४१८०८१
पो.ब.नं. ५८३९
काठमाण्डौ

## २. महिला अधिकारसंग सम्बद्ध संघ-संस्थाहरु

### २.१ अखिल नेपाल महिला संघ

अखिल नेपाल महिला संघ - (अनेमसंघ) का कार्यकर्ताहरु आफ्नो संस्थाको इतिहास जहानिया राणा शासनको विरोधमा नेपाली जनमत मुखरित हुन थालेदेखि नै सुरु भएको बताउँछन् । ००४ सालमा साहना प्रधान, मंगलादेवी, कामाक्षा देवी, साधना, स्नेहलता आदिको सक्रियतामा "नेपाल महिला संघ" को स्थापना भएको थियो । सम्भवत यो नै महिला हक अधिकार संरक्षण गर्ने र तत्कालीन शासन पद्धतिको विरुद्ध महिलाहरुलाई सचेत संगठित पार्ने उद्देश्यले गठित प्रथम महिला संगठन हो । स्थापनाको केही समयपछि आएर महिला संघलाई महिला समुदायको शुद्ध सामुदायिक अधिकारका निम्ति मात्रै परिचालित गर्ने वा राजनैतिक रंग दिएर अगाडि बढाउने भन्ने सवालमा विवाद उत्पन्न भयो । विवाद पछि मत्यैक्य हुन सकेन । तत्कालीन भारतीय प्रधानमन्त्री जवाहरलाल नेहरु नेपाल आउँदा कालो झण्डा देखाउने र नदेखाउने प्रसंगले महिला संघमा चलिरहेको विवादलाई उत्कर्षमा पुऱ्यायो । कालो झण्डा देखाउनु हुन्न भन्ने मान्यताका पक्षपातीहरुको नेतृत्व मंगलादेवीले गर्नुभयो र नेपाल महिला संघको नाम मै संगठनलाई क्रियाशील बनाइ रहन थाल्नु भयो । उता कालो झण्डा देखाउनु पर्छ भन्ने मान्यताको पक्षपोषण गर्नेहरुको नेतृत्व कामाक्षा देवीले गर्नु भयो । अन्तत विरोध प्रदर्शन भएरै छोड्यो र त्यसै सिलसिलामा गिरफ्तार भएर कामाक्षा देवी लगायतका महिलाहरुले केही दिन प्रहरी हिरासतमा बस्नु पऱ्यो । विभिन्न राजनैतिक र अरु विवादका कारण समयान्तरमा २००८ सालमा कामाक्षा देवी र साहना प्रधान आदिको सक्रियतामा अखिल नेपाल महिला संघ नामक अर्को महिला संगठनको स्थापना भयो ।

००८ सालदेखि ०१७ सालसम्मको अवधिमा अनेमसंघले नारी उत्पीडनका विरुद्ध संगठन, प्रचार र जागरणको निम्ति उल्लेखनीय कार्य गरेको पाइन्छ । तर ०१७ सालको प्रतिगमनको घटना पश्चात् अरु राजनैतिक संगठन र पार्टीहरुसंगै यो पनि प्रतिवन्धित भयो र आफ्ना क्रियाकलाप र गतिविधिहरुलाई भूमिगत राख्न बाध्य भयो । जति जति निरंकुश पञ्चायती व्यवस्थाको जरा छिप्पिंदै गयो, उति उति अनेमसंघ सिथिल र निसक्रिय हुँदै गएको तथ्य प्रष्ट हुन्छ । तर स्थिति सधैं त्यस्तो रहेन । ०२८ सालपछि महिलाहरुको सानै भए पनि एउटा पंक्ति पुन: क्रियाशील हुन थाल्यो । खास गरी वाम राजनीतिमा संलग्न महिलाहरुले महिला मुक्तिको अभियानलाई व्यवस्थित ढंगले अगाडि बढाउन संगठनको आवश्यकता महसुस गरे । फलस्वरुप ०३७ सालको फागुन १७ गते कम्युनिष्टहरुको एउटा समूहको सहयोगमा शान्ता मानवीको अध्यतामा अनेमसंघको स्थापना भयो । उनीहरुले इतिहासलाई निरन्तरता दिंदै त्यसलाई अखिल नेपाल महिला संघको पुनर्स्थापना गरेको बताए ।

यो पुनर्स्थापित संघ आफ्ना गतिविधिहरुलाई अर्धखुला र अर्धभूमिगत दुवै किसिमले सञ्चालन गर्दै अघि बढ्यो । राजनीतिक, सामाजिक, आर्थिक, साँस्कृतिक लगायत सबै क्षेत्रमा समान अवसर, समान व्यवहार, समान उत्तरदायित्व र समान प्रतिष्ठाका लागि आम महिला बीच प्रचार र संगठनमा आफूलाई क्रियाशील बनाउँदै रह्यो । जिल्ला जिल्लामा सम्पर्क विस्तार गरी जिल्ला र त्यसको मातहत इलाका र गाउँ स्तरीय समिति बनाउँदै हजारौं महिलाहरुलाई संगठित गर्न सफल यस संघले राष्ट्रिय र क्षेत्रीय तथा इलाकीय समस्याहरुका सवालमा भेला गोष्ठी, सभा र बैठकहरु सञ्चालन गऱ्यो । महिला माथि भएका सामाजिक उत्पीडन, हत्या र बलात्कारका घटनाहरुमा दोषी माथि कार्वाही गर्ने माग गर्दै ठूलो संख्यामा महिलाहरु परिचालित गरी दर्जनौं विरोध प्रदर्शनहरुको आयोजना गऱ्यो । ०४६ को जनआन्दोलनको पृष्ठभूमि तयार पार्ने काममा यस संघको पनि भूमिका उल्लेखनीय रहेकोछ ।

संगठनात्मक आधार केही बलियो बनेपछि ०४६ मंसीरमा अनेमसंघले आफ्नो प्रथम राष्ट्रिय सम्मेलन सम्पन्न

गरेको थियो । यो सम्मेलनले अष्टलक्ष्मी शाक्यलाई केन्द्रीय अध्यक्ष निर्वाचित गऱ्यो। हाल यो संघका ६५ जिल्लामा जिल्ला स्तरीय समितिहरु कार्यरत छन् । त्यसका मातहतमा इलाका, गाउँ र टोल स्तरका एक हजार समितिहरु र ३ लाख सदस्यहरु रहेको बताइन्छ। ०४८ साल कार्तिकमा सम्पन्न दोस्रो राष्ट्रिय सम्मेलनले साहना प्रधानलाई अध्यक्षमा निर्वाचित गरेको छ ।

मुलुकमा बढिरहेको बलात्कार, हत्या र अमानवीय उत्पीडनका विरुद्ध प्रभावकारी कदम चाल्ने उद्देश्यले यही संघको सक्रियता र पहलमा ०४९ असार १९ गते "महिला सुरक्षा दवाब समूह नेपाल" को गठन गरिएको छ । न्याय समानता प्राप्तिका लागि र सामाजिक उत्पीडनबाट मुक्ति प्राप्त गर्न आम महिला समुदायलाई सचेत र जागरुक पार्ने उद्देश्य रहेको यस संघले हाल महिलाहरुको व्यापक सहभागितामा देशका विभिन्न ठाउँमा प्रौढ कक्षा, सीपमूलक र उत्पादनमूलक तालिमहरुको सञ्चालन, स्वास्थ्य, कानून शिक्षा आदि र समाजमा महिलाहरुको स्थानबारे छलफल गोष्ठी, भेला र शिविरहरु सञ्चालन गरिरहेको छ ।

<u>सम्पर्क</u>

अखिल नेपाल महिला संघ
केन्द्रीय कार्यालय
फोन नं.२२९४२७
भीमसेनस्थान, काठमाण्डौं

## २.२ ए.बी.सी. नेपाल

कृषि, वन, आधारभूत स्वास्थ्य, सहकारी क्षेत्रमा ए.बी.सी. नेपाल महिलाहरुलाई अधिकार दिलाउने दिशामा कार्यरत छ । सन् १९८७ मा स्थापित यो सामाजिक संस्थाले हाल सिन्धुपाल्चोक र काठमाण्डौको डाँछी एवं भद्रवासमा स्वास्थ्य सेवा र आयमूलक कार्यक्रम सञ्चालन गरिरहेको छ ।

ए.बी.सी.का अनुसार यसले आफ्नो स्थापना कालदेखि हालसम्म दुईसय महिलाहरुलाई आयमूलक तालिम प्रदान गरिसकेको छ। हालसम्म यस संस्थाले चालीस वटा प्रौढ शिक्षा सञ्चालन गरिसकेको छ ।

मेलम्चीमा हाल चर्खा कात्ने काममा १ सय ३५ जना महिलाहरुलाई संलग्न गराइरहेको यस संस्थाले डाँछीमा बाँसका सर-सामान बनाउने काममा महिलाहरुलाई सहभागी गराइरहेको छ भने सिन्धुपाल्चोकमा तालिम सञ्चालन गरिरहेको छ । ए.बी.सी. का अनुसार हाल उक्त संस्थाले उपलब्ध गराइरहेको नि:शुल्क स्वास्थ्य क्लिनिकबाट डाँछीका तीन सय महिलाहरुले लाभ उठाइ रहेका छन् ।

ए.बी.सी. का अनुसार उक्त संस्था महिलाहरुका निम्ति सामाजिक सचेतन अभियानमा पनि लागि परेको छ । संस्थाले सर्वनाम नाट्य समूहसंग मिलेर हालसम्म सिन्धुपाल्चोक, डाँछी, उदयपुर र काठमाण्डौ शहरी क्षेत्रका कार्पेट कार खानाहरुमा १७ वटा सडक नाटक प्रस्तुत गरिसकेको छ । चेलीबेटी बेचबिखन र एड्स विरोधी भावना बोकेका उपरोक्त नाटकहरुका साथै ए.बी.सी.ले विभिन्न प्रकाशन सामग्रीहरु पनि बजारमा ल्याएको छ । ए.बी.सी.ले चेलीबेटी जागरणका गीतहरु सहितका अडियो क्यासेटहरु पनि तयार गरेको छ ।

ए.बी.सी.को महिलाहरुलाई शक्ति सम्पन्न तुल्याउनु पर्छ, त्यसका लागि उनीहरुमा मानसिक विकासका साथै आर्थिक आत्मनिर्भरता पनि वृद्धि हुनु पर्छ भन्ने मान्यता रहेको छ ।

<u>सम्पर्क</u>

ए.बी.सी. नेपाल
छ- २-९०६
पुरानो बानेश्वर
काठमाडौं
फोन: ४७३७२९

## १.३ नेपाल महिला संघ

नेपाल महिला संघ ००४ सालमा स्थापित भएको थियो । यस संस्थाको स्थापनाकालदेखि हालसम्म अध्यक्ष मंगला देवी सिंह हुनुहुन्छ। स्थापनाको केही समयपछि नै शुरु भएको वादविवादले उत्कर्ष प्राप्त गरेपछि कामाक्षा देवी लगायतका महिलाहरु यो संघबाट अलग्गिई अनेमसंघ नामक अर्को संगठन स्थापना गरी क्रियाशील हुन थाले। शुरुमा विशुद्ध सामुदायिक हितको निम्ति मात्र सक्रिय रहने मान्यता राख्ने यो संघ अहिले नेपाली कांग्रेसको भगिनी संगठनको रुपमा स्थापित छ। महिलाहरुको प्रजातान्त्रिक अधिकारको माग गर्दै तत्कालीन प्रधानमन्त्री पद्म शमशेर राणा समक्ष प्रतिनिधि मण्डल पठाएर आफ्ना गतिविधिको शुरुआत गर्ने यो संस्था महिला क्षेत्रमा संगठित स्थापित पहिलो संस्था मानिन्छ। यसको स्थापना ००४ सालमा भूमिगत रुपमा भएको भए पनि मुलुकले ००७ सालमा प्रजातन्त्र प्राप्त गरेपछि ००८ सालतिर श्री ५ त्रिभुवनद्वारा औपचारिक उद्घाटन भएको बताइन्छ।

०४६ सालको जनआन्दोलन पूर्व राजनैतिक गतिविधिमा बढी केन्द्रित यो संस्था जनआन्दोलनपछि आएर सामाजिक र सामुदायिक सीपमूलक कार्यतिर अभिमुख भएको देखिन्छ । पञ्चायती कालको ३० वर्षसम्म भूमिगत रहेको

नेपाल महिला संघ त्यो अवधिभरि गुप्त ढंगले मुलुकमा प्रजातन्त्र स्थापनाको कार्यमा सरिक थियो। गत प्रजातान्त्रिक आन्दोलनमा आफ्नो ठाउँबाट उल्लेखनीय भूमिका निर्वाह गरेको र प्रजातन्त्र प्राप्ति पछि खुल्ला गरेको कुरा संघसंग सम्बद्ध व्यक्तिहरु बताउँछन् ।

"सबैको निम्ति साक्षरता" को नीति अनुरुप देशव्यापी महिला साक्षरता अभियान चलाउने, महिलाहरुमा सामाजिक तथा आर्थिक क्षमताको विकास गर्ने, समाज र परिवारमा महिलाहरुको अधिकारयुक्त अवस्था निर्माण गर्ने, परिवार समाज र राष्ट्रको विकासको निम्ति महिला र पुरुष एक अर्काका पुरक हुन् भन्ने बोध गराउने तथा राजनीतिक क्षेत्रमा ५० प्रतिशत आरक्षणको व्यवस्था गर्ने यो संस्थाको उद्देश्य रहेको छ ।

संघका अनुसार ७१ जिल्लामा जिल्ला समिति बनिसकेको छ । सदस्यता शुल्कलाई आफ्नो आर्थिक आधार बताउने यो संस्थाले देशका विभिन्न ठाउँमा नारी सिलाई बुनाइ केन्द्र, टाइप इन्स्टिच्युट र यस्तै सीपमूलक कार्यक्रमहरु सञ्चालन गर्दै आएको छ । यस बीचमा महिलाहरु सम्बन्धी काम गर्ने विदेशका कतिपय संघ संस्थासंग सम्बन्ध विस्तार गरिएको र उनीहरुको समेत सहयोगमा उपरोक्त कार्यक्रमहरुलाई परिचालन गरिरहेको छ । संघले आफ्ना सदस्यहरुलाई स्वंय सेवकको रुपमा खटाउँदै समाजका विभिन्न क्षेत्रहरुमा सेवा पुऱ्याइरहेको बताइन्छ ।

दुर्गम क्षेत्रमा नियमित र नि:शुल्क स्वास्थ्य शिविर सञ्चालन गर्नु, असहाय महिलाहरुका निम्ति कानूनी सेवा केन्द्र मार्फत नि:शुल्क सेवा प्रदान गर्नु, पायक पर्ने स्थानमा व्यवस्थित किसिमले प्रौढ कक्षा सञ्चालन गर्नु, यसै खेर गएको जमिनमा वृक्षरोपण गर्नु, सीपमूलक तालिम सञ्चालन गर्नु, आदि नेपाल महिला संघको आफ्नै श्रोत परिचालनद्वारा सञ्चालित कार्यक्रम हुन् । त्यसैगरी यो संघले दाता संस्थाहरुको सहयोगमा पनि थुप्रै कार्यक्रमहरु चलाइरहेको बताइन्छ । यस संस्थाको केन्द्रीय अध्यक्ष मंगलादेवी सिंह हुनुहुन्छ ।

सम्पर्क

नेपाल महिला संघ
कमलपोखरी
फोन नं. ४१७६०६
काठमाण्डौ

## १.४ अन्य

महिला अधिकारको क्षेत्रमा कार्यरत परिवर्तनका लागि कार्यरत महिला समूह (वाच) को कार्यक्रम पनि उल्लेखनिय छ । महिलाहरु माथिको हिंसा विरुद्ध अन्तराष्ट्रिय ऐक्यबद्धता जनाउने कार्यमा समेत लागि परेको वाच महिलाहरुको बेचविखन विरोधी अभियानमा पनि संलग्न छ । त्यस्तै श्रृजना महिला विकास केन्द्र, महिला विकास केन्द्र, सी. डब्लु .डी., महिला न्यायिक सेवा परियोजना, सुस जस्ता संस्थाहरु पनि महिला अधिकारको क्षेत्रमा कार्यरत छन् ।

केही समयअघि देशका व्यावसायिक पत्रकारहरुले नेपाल मानव अधिकार पत्रकार मञ्चको पनि गठन गरेका छन । मूलत: पत्रकारितामा संलग्न ती व्यक्तिहरु मानव अधिकारको कुरालाई प्रमुखता साथ उठाउने उद्धेश्यका साथ अगाडि आएका छन् । मञ्चले वर्तमान संविधानको दोस्रो वार्षिकोत्सवको अवसरमा देशको मानव अधिकार स्थितिको संक्षिप्त तर सटिक आंकलन गरेको थियो। सोही अवसरमा मञ्चले विविध खेमाका वरिष्ठ राजनेताहरुको मूल्यांकन समेत संलग्न गरेको थियो । मञ्चले मोनिटर अंग्रेजी द्वैमासिक बुलेटिन प्रकाशन गरिरहेको छ ।

# परिच्छेद – ४

# नेपाल अधिराज्यको संविधान २०४७ र मानवअधिकार सम्बन्धी अन्तर्राष्ट्रिय दस्तावेजहरु

**पृष्ठभूमि**

नेपालको मानव अधिकारको इतिहासमा वि.स ०४६ को जनआन्दोलन र यसले ल्याएका परिणामहरु सन्तोषप्रद तथा अभूतपूर्व रहेका छन् । वस्तुत ०४६ सालको आन्दोलनको प्रमुख मुद्दा नै मानव अधिकारको बहाली तथा प्रचलन रहेको थियो । यस मुद्दामा राष्ट्रिय संघर्षलाई अन्तर्राष्ट्रिय समुदायबाट पनि सकारात्मक योगदान प्राप्त भएको थियो ।

प्रजातन्त्रको स्थापना पश्चात् अन्तरीम शासन व्यवस्था मिलाई देशको लागि नयाँ संविधान निर्माण गरी तत्पश्चात् आम निर्वाचनबाट आएको सरकारलाई सत्ता हस्तान्तरण गर्ने जिम्मेवारी अन्तरिम सरकारको थियो । यस अनुरुप संविधानको निर्माणका निमित्त प्रयत्न शुरु गरिए । संविधान निर्माण गर्ने समितिको सम्बन्धमा पर्याप्त विवाद उठे तर तत्कालीन जाग्रित जनचेतनाको दवाबको कारण यसले सकारात्मक गति लिन सफल भयो । सर्वोच्च अदालतका तत्कालीन न्यायधीश तथा वर्तमान प्रधानन्यायधीशको अध्यक्षतामा अधिकांश कानूनविद्हरु रहेको एक संविधान समितिको गठन गरियो । सो समितिले देशका सबै भाग, क्षेत्र तथा विभिन्न जातजाति समुदायका मानिसहरुको व्यापक विचार तथा सुझाव संकलन कार्य गरी तमाम नेपालीहरुको सहभागिता कायम गर्दै नेपाल अधिराज्यको संविधान ०४७ को मस्यौदा तयार गर्‍यो । मस्यौदामा छलफल, पुन: छलफल तथा समीक्षाहरु गरिए । सत्ताका केन्द्रहरु बीच पर्याप्त वादविवाद तथा कुराकानी भए । देशमा विद्यमान जनचेतना तथा बौद्धिक क्षेत्रको चासोको कारण देशमा प्राप्त प्रजातन्त्रलाई पछाडितर्फ धकेल्ने प्रयत्न सफल हुन सकेन । फलत वर्तमान संविधान नेपालीहरुका निमित्त प्राप्य छ ।

नेपाल अधिराज्यको संविधान २०४७ ले मानवअधिकार लाई मेरुदण्ड मानेर राजनैतिक, आर्थिक, सामाजिक, साँस्कृतिक तथा अन्य लक्ष्यहरु निर्धारण गरेको छ । लक्ष्यहरुको उल्लेख गर्दै प्रस्तावनामा भनिएको छ - "प्रत्येक नेपाली नागरिकको आधारभूत मानव अधिकार सुरक्षित गरी स्वतन्त्रता र समानताको आधारमा नेपाली जनताका बीच भातृत्व र एकता कायम गरी बालिग मताधिकार, संसदीय शासन प्रणाली, संवैधानिक राजतन्त्र तथा बहुदलीय प्रजातन्त्रलाई सुदृढ गर्न र स्वतन्त्र एवं सक्षम न्यायप्रणालीको व्यवस्था गरी कानूनी राज्यको अवधारणालाई साकार पार्ने ।" यसरी नेपाली जनताको व्यापक सहभागिताबाट बनाइएको यस संविधानको मूल लक्ष्यहरु प्रस्तावनामा प्रष्टसंग उल्लेख गरिएको छ ।

नेपाल अधिराज्यको संविधानले नेपालीहरुलाई सार्वभौमसत्ता सम्पन्न बनाएकोले नेपालको इतिहासमा यसको स्थान अद्वितीय रहने छ । संविधानमा मानव अधिकार, प्रजातन्त्र, तथा कानूनी राज्य सम्बन्धी वर्तमान विश्वमा प्रचलनमा रहेका सबै आदर्श तथा उच्चतम लक्ष्य तथा सभ्यताको पूंजको रुपमा रहेको छ । यस क्रममा हेर्ने हो भने विश्वका कुनै पनि राम्रा संविधानमा भएका भन्दा कम व्यवस्था यसमा देखिदैन ।

नेपाल अधिराज्यको संविधान १३३ धारा र ३ वटा अनुसूचीहरुको संग्रह हो जुन २३ वटा भागमा विभाजित छ । यसले नेपाललाई एक वहुभाषिक, वहुजातीय, प्रजातान्त्रिक, स्वतन्त्र अविभाज्य, सार्वभौमसत्ता सम्पन्न, हिन्दू, संवैधानिक राजतन्त्रात्मक अधिराज्यको रुपमा प्रतिस्थापित गरेको छ । नेपालका विभिन्न भाषाहरुलाई राष्ट्र भाषा र नेपाली भाषालाई राष्ट्रिय भाषाको स्थान दिइएको छ । संविधानले स्पष्टसंग शक्ति पृथक्कीकरणको सिद्धान्तलाई अपनाएको छ र सरकारका हरेक अंग आ-आफ्नो क्षेत्रमा स्वतन्त्र एव निर्णय गर्न सक्षम बनाइएको छ । नेपालको परिप्रेक्ष्यमा राजाको स्थान आफ्नै विशेषताहरुले भरिपूर्ण भएको कारण संवैधानिक राजतन्त्रको सिद्धान्तलाई अंगाल्दै श्री ५ लाई नेपालको राष्ट्रिय एवं नेपाली जनताका एकताका प्रतीकको रुपमा स्थापित गरिएको छ र

नेपाली जनताको सर्वोत्तम हित र समुन्नतिका लागि संविधानको पालन र संरक्षण गर्ने जिम्मेवारी दिइएको छ ।

संविधानले हरेक प्रजातान्त्रिक देशका संविधान अनुरुपका खास स्थायी अंगहरुको पनि व्यवस्था गरेको छ। यस क्रममा अख्तियार दुरुपयोग अनुसन्धान आयोग, महालेखा परीक्षक, लोकसेवा आयोग, निर्वाचन आयोग, महान्यायाधिवक्ता लगायतका संवैधानिक अंगहरुको गठन गरी सरकारको हस्तक्षेप बेगर काम गर्न सक्ने गरी काम, कर्तव्य तथा अधिकारको व्यवस्था गरिएको छ। हरेक अंगले संसदद्वारा पारित कानून अनुरुप आ-आफ्नो क्षेत्रको काम गर्नु पर्ने र यस्ता अंगहरु-द्वारा वर्ष भरिमा गरिने कामको प्रतिवेदन श्री ५ समक्ष प्रस्तुत गर्नु पर्दछ र यस्ता प्रतिवेदनहरु संसद्मा छलफल गरिन्छन् । संवैधानिक पदहरुमा नियुक्त गर्ने काममा निष्पक्षता होस् भन्ने हेतुले प्रधानमन्त्रीको अध्यक्षतामा प्रधान न्यायाधीश, प्रतिनिधि सभाका सभामुख, राष्ट्रिय सभाका अध्यक्ष तथा प्रतिनिधि सभामा विपक्षी दलका नेता समेत रहेको संवैधानिक परिषद्ले पदाधिकारीहरुको नियुक्तिको लागि सिफारिश गर्दछ र त्यसरी सिफारिश भएको व्यक्तिलाई श्री ५ बाट नियुक्ति गर्ने व्यवस्था गरिएको छ ।

नेपालको राजनैतिक इतिहासमा राजनैतिक संगठनहरु उपरको संवैधानिक पावन्दी तथा शोषणको अनुभवका कारण भविष्यमा त्यस्तो स्थिति कुनै हालतमा पनि नदोहोरियोस् वा कसैले पनि राजनैतिक अधिकारलाई दुरुपयोग गर्न नसकोस् भन्ने ध्येय राखेर संविधानमा राजनैतिक संगठनहरुका निमित्त स्थान दिइएको छ। यस संविधान अनुसार संविधानसम्मत राजनैतिक संगठन वा दललाई कुनै हालतमा पनि प्रतिवन्ध लगाउन सकिने छैन। हरेक राजनैतिक संगठन वा दलले संविधानमा उल्लेख भएका शर्तहरुका परिपालना गर्ने वचनबद्धताका साथ निर्वाचनका लागि मान्यताका लागि दर्ता गर्नु पर्दछ। संविधानले यस्ता राजनैतिक दल तथा संगठनहरु प्रजातान्त्रिक पद्धति अनुरुप सञ्चालन हुनु पर्ने गर्न अनेकौं शर्तहरु निर्धारण गरेको छ ।

संविधान संशोधन सम्बन्धी व्यवस्था पनि गरिएको छ । संविधानको प्रस्तावनाको भावनाको प्रतिकुल नहुने गरी संविधान संशोधन या खारेज गर्न सकिन्छ र यसका लागि संसद्को प्रत्येक सदनमा सो सदनको सम्पूर्ण सदस्य संख्याको कम्तीमा दुई तिहाई सदस्यहरु उपस्थित भई उपस्थित सदस्य संख्याको दुई तिहाई बहुमत आवश्यक हुन्छ ।

संकटकालीन अधिकारको व्यवस्था पनि संविधानले गरेको छ । संकटकालीन घोषणा गर्ने अधिकार श्री ५ लाई भए पनि मन्त्रिपरिषद्को निर्णय पश्चात मात्र यस्तो घोषणा हुन सक्तछ । संकटकालको उपल्लो हद एक वर्षसम्म रहने छ ।

संविधानले नेपालमा नागरिकताको प्राप्ति तथा समाप्तिका सम्बन्धमा पनि यथेष्ट प्रावधानहरु गरेको छ । अंगीकृत नागरिकता तथा सम्मानार्थ नागरिकता दिने प्रावधानहरु समेत गरेको छ ।

संविधानको भाग ३ र ४ मा क्रमश: मूलभूत अधिकारहरु तथा राज्यका निर्देशक सिद्धान्तहरु उल्लेख गरिएका छन् । राज्यका निर्देशक सिद्धान्त तथा नीतिहरु राज्यको क्रियाकलाप र शासन व्यवस्थाको मुख्य मार्ग निर्देशकको रुपमा रहने हुन र देशको उपलब्ध साधन तथा श्रोत अनुसार क्रमश: लागू गर्दै जाने कुरा उल्लेख गरिएको छ। निर्देशक सिद्धान्त तथा नीतिहरु पर्याप्त उदार तथा प्रगतिशील रहेका छन् र यी सिद्धान्त तथा नीतिहरु कुनै अदालतबाट लागू हुन सक्तैनन् ।

संविधानको भाग ३ को धारा ११ देखि धारा २३ सम्मका १३ धाराहरुमा मूलभूत अधिकारहरु उल्लेख गरिएका छन् ।

अर्को कुरा, अब त नेपालमा जननिर्वाचित संसद् पनि छ जसले जनहित हुने कानून बनाउने तथा राष्ट्रिय नीति निर्धारण गर्ने काम गर्नु पर्ने हो । अहिलेसम्ममा संसद्का चारवटा अधिवेशनहरु समाप्त भइसके । यस बीचमा जनताका वैयक्तिक, राजनीतिक, आर्थिक, सामाजिक, सांस्कृतिक अधिकार तथा प्रजातान्त्रिक विकास र स्वस्थ्य प्राकृतिक वातावरणसंग सम्बन्धित जन्मसिद्ध अधिकारहरुलाई अझ मजबुत र फराकिलो पार्ने कानूनहरु आउन सकेका छैनन् । संसद् पनि अपेक्षित रुपमा उपलब्धिमूलक हुन नसकेको अनुभूति हुन्छ ।

बहुदल आइसकेपछि नेपालीले केही मानव अधिकारहरु अवश्य पाएका छन्। नयाँ संविधान बनेको छ। त्यसले केही अधिकारहरुलाई संरक्षण प्रदान गरेको छ । अन्तरिम सरकारले मानव अधिकारसम्बन्धी केही महत्वपूर्ण अन्तर्राष्ट्रिय महासन्धिहरुलाई अनुमोदन तथा सम्मिलन गरेको छ र संविधानले सुनिश्चित गर्न नसकेका अधिकारहरु पनि नेपाली जनतालाई ती सन्धिहरु मार्फत दिनेजस्तो साहसिलो काम गरेको छ। तर जननिर्वाचित सरकारले संविधान तथा यी अन्तर्राष्ट्रिय सन्धिहरुले दिएका अधिकारहरुलाई प्रभाव-कारी ढंगले लागू गर्नेतिर खास ध्यान दिएको देखिदैन । संविधान तथा अन्तर्राष्ट्रिय सन्धि मार्फत नेपालीले पाएका अनेकौं मानव अधिकारहरुलाई ठोस रुपमा लागू गर्नका निमित्त सरकार र संसद्ले विभिन्न कानूनहरु बनाउनु पर्नेमा त्यसतर्फ खास चासो देखिएको छैन ।

उदाहरणको निमित्त संविधानको धारा १४(२) मा कसैलाई कुनै पनि किसिमको शारीरिक वा मानसिक यातना दिइने छैन भनिएको छ । कसैले यस्तो यातना दिने काम

गरेमा त्यस बापत सरकारले क्षतिपूर्ति भर्नुपर्छ भनिएको छ । तर संविधान जारी भएको तीनवर्ष बितिसक्दा कुनै प्रहरीले कसैलाई शारीरिक वा मानसिक यातना दियो भने त्यसका विरुद्ध कुन अदालतमा कस्तो रीत पु-याएर कसरी उजूर गर्ने तथा के कति क्षतिपूर्ति कसरी पाइने हो भन्ने बारेमा कुनै कानून नबनाइएको हुनाले यस्तो महत्वपूर्ण मानव अधिकार पनि आज अर्थहीन हुन पुगेको छ । जबकि यस्तो कानून बनाउने कुरा संविधानका साथै नेपालमाथि लागू भएको नागरिक तथा राजनीतिक अधिकार र यातना दिन रोक लगाउनेसम्बन्धी अन्तर्राष्ट्रिय सन्धिहरुमा पनि उल्लेख छ ।

यहाँ भन्न खोजिएको कुरा के हो भने, नेपालीले पाउनु पर्ने आधारभूत अधिकारहरु अझै धेरै बाँकी छन् । अहिले यहां संविधान र अन्तर्राष्ट्रिय मानव अधिकार कानून अन्तर्गत प्राप्त अधिकारहरु पनि सबैले राम्रोसंग उपभोग गर्न पाइरहेका छैनन् । सरकारमा बस्नेहरुका मिठा-मिठा भाषण सुनेर नै अझै पनि सन्तोष लिनु परेको छ । यदि यस्तो प्रवृत्ति बढ्दै जाने हो भने नेपालमा मानव अधिकार र कानूनी राज्यको वास्तविक सम्मान हुने छैन । हामीले बहुदलीय प्रजातन्त्रको नाममा पुरानै दुःखहरु फैलिरहनु पर्ने हुन्छ । बहुदल आयो भन्दैमा नेपालीले त्यसलाई सञ्जिवनी बुटी ठान्नुपर्ने स्थिति आज छैन । मुख्य कुरा त यसलाई जनताको पक्षमा उपयोगी बनाउन सक्नुपर्छ ।

यस संक्षिप्त विवेचनामा नेपालको वर्तमान संविधानले प्रदत्त मानव अधिकारहरु, अन्तर्राष्ट्रिय मानव अधिकार सम्बन्धी सन्धिद्वारा प्राप्त अधिकारहरु, तिनको कार्यान्वयन पक्ष तथा नेपालले तत्काल सम्मिलीत गर्न उपयुक्त देखिने अन्य केही सन्धि-सम्झौताहरुका बारेमा चर्चा गरिने छ ।

### वर्तमान संविधान प्रदत्त मानव अधिकारहरु

यस भागमा नेपालको संविधानले २०४७ ले व्यवस्था गरेका मानव अधिकार तथा मौलिक स्वतन्त्रतासम्बन्धी प्रावधानहरुको छोटकरी विवरण प्रस्तुत गरिएको छ:

#### १. समानताको हक (धारा ११)

यस धारा अन्तर्गत सबै नागरिकहरु कानूनको दृष्टिमा समान छन् तथा सबैलाई कानूनबमोजिम समान संरक्षणको हक छ । सामान्य कानूनको प्रयोगमा कुनै पनि नागरिकमाथि धर्म, वर्ण, लिंग, जात, जाति वा वैचारिक आस्था वा ती मध्ये कुनै पनि कुराका आधारमा कसैले पनि भेदभाव गर्न पाउने छैन ।

यस धाराले महिला, बालक, वृद्ध वा शारीरिक वा मानसिक रुपले अशक्त व्यक्ति वा आर्थिक, सामाजिक वा शैक्षिक दृष्टिले पिछडिएका वर्गको संरक्षण वा विकासका लागि कानूनद्वारा विशेष व्यवस्था गर्न सकिने प्रावधान गरेको छ ।

यस अधिकार अन्तर्गत कसैलाई पनि जातिपातीका आधार मा छुवाछुतको भेदभाव गरिने छैन । सबै मानिसलाई सार्वजनिक स्थलमा उपस्थित हुन वा सार्वजनिक उपयोगका कुराहरुको प्रयोग गर्ने समान अधिकार प्राप्त छ । छुवाछुतको भेदभाव गर्ने विरुद्ध कानूनी कारवाही तथा दण्डको व्यवस्था हुने भनिएको छ ।

त्यस्तै गरी समान कामका लागि महिला र पुरुषलाई समान पारिश्रमिक दिनु पर्नेछ तथा यसमा भेदभाव गर्न मनाही गरिएको छ ।

#### २. स्वतन्त्रताको हक (धारा १२)

यस धारा अन्तर्गत कानूनबमोजिम बाहेक कसैको पनि वैयक्तिक स्वतन्त्रताको अपहरण गरिने छैन तथा मृत्युदण्डको सजाय हुने गरी कानून बनाइने छैन । स्वतन्त्रताको हक अन्तर्गत निम्नलिखित स्वतन्त्रताहरु उपलब्ध छन्:

क. विचार र अभिव्यक्तिको स्वतन्त्रता,
ख. बिनाहातहतियार शान्तिपूर्वक भेला हुने स्वतन्त्रता,
ग. संघ संस्था खोल्ने स्वतन्त्रता,
घ. अधिराज्यभरि आवतजावत र बसोबास गर्ने स्वतन्त्रता, र
ङ. कुनै पेशा, रोजगार, उद्योग र व्यापार गर्ने स्वतन्त्रता ।

यस धाराले केही खास परिस्थितिहरुमा कानून बनाएर उल्लिखित अधिकारहरुको प्रयोगमा उचित नियन्त्रण वा सिमाङ्कन गर्न सकिने व्यवस्था गरेको छ ।

#### ३. छापाखाना र पत्रपत्रिकासम्बन्धी हक (धारा १३)

यस अधिकार अन्तर्गत खास अवस्थामा बाहेक कुनै समाचार, लेख वा अन्य कुनै पाठ्य-सामग्री प्रकाशित गर्न पूर्व-प्रतिबन्ध लगाउन पाइने छैन । यस्ता सामग्री छापे बापत छापाखाना बन्द गर्न वा जफत गर्न र कुनै पत्रिकाको दर्ता खारेज गर्न पाइने छैन ।

#### ४. फौजदारी न्यायसम्बन्धी हक (धारा १४)

फौजदारी न्यायका सम्बन्धमा यस धाराले निम्नलिखित व्यवस्था गरेको छ:

(क) तत्काल प्रचलित कानूनले सजाय नहुने कुनै काम गरेबापत कुनै व्यक्ति सजायको भागी हुने छैन र कसैलाई पनि कसुर गर्दाको अवस्थामा प्रचलित कानूनमा तोकिएभन्दा बढी सजाय दिन पाइने छैन ।

(ख) कुनै पनि व्यक्ति उपर अदालतमा त्यसै कसुरमा एक पटकभन्दा बढी मुद्दा चलाउने तथा सजाय गर्न पाइने छैन ।

(ग) कुनै कसुरको अभियोग लागेको व्यक्तिलाई आफ्नो विरुद्ध साक्षी हुन कर लगाइने छैन ।

(घ) अनुसन्धान, तहकिकात वा पुर्पक्षको सिलसिलामा वा अरु कुनै किसिमले थुनामा रहेको कुनै पनि व्यक्तिलाई शारीरिक वा मानसिक यातना दिन पाइने छैन तथा निजलाई निर्मम, अमानवीय वा अपमानजनक व्यवहार गर्न पाइने छैन। त्यस्तो व्यवहार कसैले गरेमा त्यसबाट पीडित व्यक्तिलाई कानूनबमोजिम क्षतिपूर्ति दिनु पर्नेछ ।

(ङ) पकाउ भएको व्यक्तिलाई पकाउ भएको कारण सहितको सूचना यथाशक्य चाँडो दिएर मात्र थुनामा राख्न पाइने छ तथा त्यस्तो व्यक्तिलाई आफूले रोजेको कानून व्यवसायीसंग सल्लाह लिने र निजद्वारा पुर्पक्ष गर्ने पूर्ण अधिकार हुनेछ ।

(च) पकाउ गरिएको र थुनामा राखिएको प्रत्येक व्यक्तिलाई पकाउ भएको ठाउँबाट बाटाको म्याद बाहेक २४ घण्टाभित्र मुद्दा हेर्ने अधिकारीसमक्ष उपस्थित गराउनु पर्नेछ र कुनै पनि व्यक्तिलाई त्यस्तो अधिकारीको आदेशले बाहेक सो अवधिभन्दा बढी थुनामा राख्न पाइने छैन ।

तर माथि (ङ) र (च) मा लेखिएका कुराहरु निवारक नजर बन्दसम्बन्धी कानून (सार्वजनिक सुरक्षा ऐन) अन्तर्गत पकाउ परेका व्यक्तिमाथि लागू नहुने व्यवस्था गरिएको छ ।

### ५. निवारक नजरबन्द विरुद्धको हक (धारा १५)

यस धारा अन्तर्गत नेपाल अधिराज्यको सार्वभौमसत्ता, अखण्डता वा सार्वजनिक शान्ति र व्यवस्थामा तत्काल खलल पर्ने पर्याप्त आधार नभई कसैलाई पनि निवारक नजरबन्दमा राख्न पाइने छैन । निवारक नजरबन्द राख्ने कुनै अधिकारीले कानून विपरीत वा बदनीयतपूर्वक कसैलाई निवारक नजरबन्द राखेमा त्यस्तो नजरबन्द रहेको व्यक्तिलाई कानूनद्वारा तोकिएबमोजिम क्षतिपूर्ति दिइने छ ।

### ६. सूचनाको हक (धारा १६)

यस अन्तर्गत प्रत्येक नागरिकलाई सार्वजनिक महत्वको कुनै पनि विषयको सूचना माग्ने र पाउने हक छ । तर कानूनबमोजिम गोप्य राख्नु पर्ने सूचनाको जानकारी दिन कसैलाई पनि कर लाग्ने छैन ।

### ७. सम्पत्तिको हक (धारा १७)

यस धारा अन्तर्गत सबै नागरिकलाई प्रचलित कानूनका अधिनमा रही सम्पत्ति आर्जन गर्ने, भोग गर्ने, बेचबिखन गर्ने र सम्पत्तिको अन्य कारोबार गर्ने हक प्राप्त छ । सार्वजनिक हितको लागि बाहेक राज्यले कुनै पनि व्यक्तिको सम्पत्ति अधिग्रहण गर्न वा प्राप्त गर्न वा त्यस्तो सम्पत्तिउपर अरु कुनै अधिकार श्रृजना गर्न पाउने छैन । सार्वजनिक हितको लागि त्यसरी सम्पत्ति अधिग्रहण वा प्राप्त गर्दा वा कुनै अधिकारको श्रृजना गर्दा सम्बन्धित व्यक्ति वा संस्थालाई त्यसबापत क्षतिपूर्ति दिनु पर्नेछ ।

### ८. संस्कृति तथा शिक्षासम्बन्धी हक (धारा १८)

यस अन्तर्गत नेपाल अधिराज्यमा बसोबास गर्ने प्रत्येक समुदायलाई आफ्नो भाषा, लिपि र संस्कृतिको संरक्षण र सम्बर्द्धन गर्ने अधिकार प्राप्त छ । प्रत्येक समुदायले आफ्ना बालबालिकालाई प्राथमिक तहसम्म आफ्नो मातृभाषामा शिक्षा दिने गरी विद्यालय सञ्चालन गर्न पाउने व्यवस्था छ ।

### ९. धर्मसम्बन्धी हक (धारा १९)

यस अन्तर्गत प्रत्येक व्यक्तिलाई प्रचलित परम्पराको मर्यादा राखी सनातनदेखि चलिआएको आफ्नो धर्मको अवलम्बन र अभ्यास गर्ने स्वतन्त्रता छ। तर कसैले पनि अरुको धर्म परिवर्तन गराउन पाउने छैन । प्रत्येक धार्मिक सम्प्रदायलाई कानूनबमोजिम आफ्नो स्वतन्त्र अस्तित्व कायम राखी आफ्नो धार्मिक स्थल र धार्मिक गुठीको सञ्चालन र संरक्षण गर्ने हक प्रदान गरिएको छ ।

### १०. शोषण विरुद्धको हक (धारा २०)

यस अन्तर्गत मानिसलाई बेच-बिखन गर्न, दास तुल्याउन, बाँधा बनाउन वा कुनै किसिमले निजको इच्छा विरुद्ध काम लगाउन निषेध गरिएको छ। त्यस्तो कार्य कानूनबमोजिम दण्ड दिइने छ । तर सरकारले सार्वजनिक प्रयोजनका लागि कानूनबमोजिम अनिवार्य सेवाको व्यवस्था गर्न सक्ने छ । यस धारा अन्तर्गत नाबालकलाई कुनै कारखाना, खानी वा यस्ताखाले अन्य कुनै जोखिमपूर्ण काममा लगाउन पाइने छैन ।

### ११. देशनिकाला विरुद्धको हक (धारा २१)

यस अन्तर्गत कुनै पनि नागरिकलाई देशनिकाला गर्न पाइने छैन ।

### १२. गोपनीयताको हक (धारा २२)

कुनै पनि व्यक्तिको जीउ, आवास, सम्पत्ति, लिखत, पत्राचार वा सूचनाको गोपनीयतामा कानूनद्वारा तोकिएको अवस्थामा बाहेक कसैलाई पनि हस्तक्षेप गर्न पाइने छैन ।

### १३. संवैधानिक उपचारको हक (धारा २३)

माथि उल्लेख गरिएका हक र अधिकारहरु कसैले उल्लंघन गरेमा त्यसका विरुद्ध कारवाही चलाउने र आफ्नो हक, अधिकार सुरक्षित गर्न पाउने अधिकार यस धाराले प्रदान गरेको छ ।

उल्लिखित अधिकारहरु मानिसका वैयक्तिक एवं राजनीतिक अधिकारहरु भित्र पर्दछन् । तिनको उल्लंघन भएमा न्यायिक निकायमार्फत पुन: प्रचलन गराउन सकिने छ । तर यी अधिकारहरुको प्रभावकारी उपभोगका निमित्त उत्तिकै महत्वपूर्ण र आवश्यक ठहरिएका आर्थिक, सामाजिक, सांस्कृतिक तथा विकास र वातावरणसंग सम्बन्धित अधिकार हरुका सम्बन्धमा वर्तमान संविधानले प्रभावकारी व्यवस्था गर्न सकेको छैन । आर्थिक, सामाजिक, सांस्कृतिक, विकास र वातावरणसंग सम्बन्धित प्राय:जसो अधिकारहरुलाई संविधानको भाग ४ अन्तर्गत राज्यका निर्देशक सिद्धान्त तथा नीतिहरुभित्र लगेर थन्क्याइएको छ ।

## भाग २

## नेपालमाथि लागू भएका मानव अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय सन्धिहरु अन्तर्गत प्राप्त अधिकारहरु

सन् १९४५ मा संयुक्त राष्ट्र संघको स्थापना भएपछि राष्ट्र संघीय बडापत्रको धारा ५५ र ५६ मा मानव अधिकार का सम्बन्धमा सर्वप्रथम आधिकारिक व्यवस्था भयो । यस बडापत्रमा राष्ट्र संघका सदस्य राष्ट्रहरुले आफ्ना जनताहरुका मूलभूत मानव अधिकार र मौलिक स्वतन्त्रताहरुलाई सम्मान र सम्बर्द्धन गर्ने प्रतिज्ञा गरेका छन् ।

त्यसको तीन वर्षपछि राष्ट्र संघको साधारण सभाले आजभन्दा ४४ वर्ष पहिले सन् १९४८ को डिसेम्बर १० तारिखका दिन सर्वसम्मतिबाट एउटा "मानव अधिकारका सर्वव्यापी घोषणा पारित गर्‍यो । उक्त घोषणा सोही मितिदेखि संसारभरि लागू भयो । यस घोषणाले सम्पूर्ण मानव जातिका लागि वैयक्तिक, राजनीतिक, आर्थिक, सामाजिक र सांस्कृतिक अधिकारहरुलाई सर्वप्रथम अन्तर्राष्ट्रिय मान्यता प्रदान गर्‍यो । नेपाल लगायत राष्ट्र संघका सम्पूर्ण सदस्य राष्ट्रहरुले यस घोषणालाई परम्परागत अन्तर्राष्ट्रिय कानूनका सिद्धान्तका आधारमा समेत अनिवार्य रुपमा पालना गर्नुपर्ने नैतिक दायित्व छ ।

राष्ट्र संघको बडापत्रमा भएको मानव अधिकारसम्बन्धी व्यवस्था तथा मानव अधिकारको यस सर्वव्यापी घोषणाका आधारमा आजसम्ममा मानव अधिकारसम्बन्धी सयौं सिद्धान्त, घोषणा र सन्धिहरु विकसित भइसकेका छन् । ती मध्ये कतिपयलाई नेपालले पनि अनुमोदन तथा सम्मिलन गरिसकेको छ । यसरी नेपाल राज्यपक्ष भएका मानव अधिकार सम्बन्धी सन्धिहरुका बारेमा तल छोटकरीमा चर्चा गरिएको छ ।

### (क) संयुक्त राष्ट्र संघ

मानव अधिकारसम्बन्धी विभिन्न राष्ट्र संघीय सन्धिहरुमध्ये १४ वटा सन्धिहरुलाई नेपालले अनुमोदन तथा सम्मिलन गरी मन्जुर गरिसकेको छ । तसर्थ अब नेपाली जनताले अन्तर्राष्ट्रिय मानव अधिकार कानून अन्तर्गत पनि अनगिन्ती मानव अधिकारहरु उपभोग गर्ने हक पाएका छन् जसलाई नेपाल सन्धि ऐन २०४७ ले पनि मान्यता प्रदान गरिसकेको छ ।

संसद्‌बाट अनुमोदन, सम्मिलन, स्वीकृति वा समर्थनको आवश्यकता नपर्ने मानव अधिकार लगायतका सन्धिहरुलाई प्रभावकारी ढंगले लागू गर्नका निमित्त उक्त सन्धि ऐनको धारा ९(२) अनुसार श्री ५ को सरकारले तुरुन्तै आवश्यक कानून बनाउनु पर्ने व्यवस्था छ । तल उल्लेख गरिएका सन्धिहरुद्वारा हामीलाई प्राप्त अधिकारहरुका सम्बन्धमा केही व्यवस्था वर्तमान संविधान तथा नेपाल कानूनहरुले गरिसकेका छन् तर पनि ती अझै अपूरा छन् । अहिलेसम्ममा बालअधिकारको महासन्धिको कार्यान्वयनका सन्दर्भमा मात्र छुट्टै कानून बनाउने कार्य भएको छ -- त्यो हो, बालबालिकाको हकहितको सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०४८ । तर यस कानूनले पनि बालअधिकारको महासन्धि अन्तर्गतका अनेकौं महत्वपूर्ण अधिकार र तिनको प्रभावकारी कार्यान्वयनसम्बन्धी व्यवस्थालाई समेट्न सकेको छैन ।

जे भए तापनि, संविधान तथा प्रचलित कानूनमा नसमेटिएका तर यी विभिन्न सन्धिहरुले प्रदान गरेका अधिकार हरुलाई अब निर्बाध रुपमा उपभोग गर्न पाउने अधिकार छ । तर यी अधिकारहरुका प्रभावकारी उपभोगका निमित्त

आवश्यक पर्ने कानूनी, प्रशासनीक एवं न्यायिक माध्यमहरु के के हुन् तथा यीमध्ये कुनै अधिकारको उल्लंघन भएमा कस्तो उपचारको बाटो कहाँ र कसरी अपनाउनु पर्ने हो भन्ने बारेमा धेरै नियम-कानूनहरु बनाउने कार्य चाहिं बाँकि नै छ ।

नेपाल मानव अधिकारसम्बन्धी कतिपय अन्तर्राष्ट्रिय सन्धिको राज्यपक्ष भइसकेपछि ती सन्धिहरुको कार्यान्वयन के कसरी गरिएको छ तथा ती अधिकारहरु नेपाली जनताले स्वतन्त्र रुपमा उपभोग गर्न पाइरहेका छन् कि छैनन् भन्ने कुराको लिखित प्रतिवेदन तिनै सन्धिहरु अन्तर्गत गठित राष्ट्र संघीय विभिन्न समितिहरु समक्ष पेश गर्नु पर्दछ। नेपालले त्यसरी पेश गर्नु पर्ने प्रतिवेदनहरुको जम्मा संख्या अहिले सात पुगिसकेको छ । त्यसमध्ये निम्नलिखित ५ वटा प्रतिवेदनहरु पेश गर्नेपर्ने म्याद नाघिसकेको छ ।

### १. आर्थिक, सामाजिक तथा सांस्कृतिक अधिकारको अन्तर्राष्ट्रिय अनुबन्ध

यस सन्धि अन्तर्गत हामीले विभिन्न किसिमका आर्थिक, सामाजिक तथा सांस्कृतिक अधिकारहरु प्राप्त गरेका छौं । यस सन्धिले मुख्यगरी निम्नलिखित अधिकारहरु प्रदान गरेको छ:

- रोजगारीको अधिकार,
- न्यूनतम् बेतन र व्यवसायको अधिकार,
- संघ-संगठन खोल्ने तथा पेशागत मागहरु राख्न पाउने अधिकार,
- सामाजिक सुरक्षाको व्यवस्थाको अधिकार,
- रोजगारी र कामका सम्बन्धमा बालबालिका तथा युबाहरुका अधिकार,
- मानवोचित जीवनस्तरको व्यवस्थाको अधिकार,
- उपयुक्त खाना र बासको अधिकार
- स्वास्थ्यको अधिकार,
- शिक्षा तथा संस्कृतिको अधिकार ।

### २. नागरिक तथा राजनैतिक अधिकारको अन्तर्राष्ट्रिय अनुबन्ध

जनआन्दोलनपछि प्राप्त बहुदलीय व्यवस्थाको सबैभन्दा ठूलो उपलब्धि भनेको हामीले पाएका केही नागरिक तथा राजनीतिक अधिकारहरु नै हुन्। माथि भाग १ मा त संविधानले व्यवस्था गरेका अधिकारहरुका बारेमा मात्र चर्चा गरियो। तर ती अधिकारहरुमाथि संविधान स्वयंले विभिन्न अंकुशहरु लगाएको छ। त्यत्तिले मात्र नपुगेर संविधानले दिएकै अधिकार हरुलाई नै मिच्ने गरी नयाँ कानून बनाउने वा पुराना कानूनमै संशोधन गर्ने कामहरु पनि भएका छन् ।

संविधान तथा कानूनमा हाम्रा अधिकारहरुलाई सीमित गर्दा वा नियन्त्रण लगाउँदा यस सन्धि अन्तर्गत हामीले पाएका अन्तर्राष्ट्रिय मानव अधिकारहरुलाई पर्याप्त ध्यान दिइएको छैन जबकि यस सन्धिले दिएका अधिकारहरुलाई नेपालले पूर्ण रुपमा पालना गर्ने प्रतिज्ञा नेपालले अन्तर्राष्ट्रिय समुदायसमक्ष गरिसकेको छ । तर व्यवहारमा यी अधिकारहरुको उपभोग गर्न अनेकौं कठिनाइहरु देखापरेका छन् ।

यस सन्धि अन्तर्गत हामीले पाएका मुख्य अधिकारहरु निम्नबमोजिम छन्:

*२.१ जीवनको अधिकार वा बाँच्न पाउने अधिकार (धारा ६)*
*२.२ यातना वा निर्दयी, अमानवीय वा अपमानजनक यवहार वा दण्ड विरुद्धको अधिकार (धारा ७)*
*२.३. दासत्व विरुद्धको अधिकार (धारा ८)*
*२.४. व्यक्तिगत स्वतन्त्रता र सुरक्षाको अधिकार (धारा ९)*
*२.५. थुनामा मानवीय व्यवहारको अधिकार (धारा १०)*
*२.६. स्वतन्त्रतापूर्वक हिंडडुल गर्न पाउने अधिकार (धारा १२)*
*२.७. छिटो, छरितो र निष्पक्ष न्यायको अधिकार (धारा १४)*
*२.८. गोपनीयताको अधिकार (धारा १७)*
*२.९. विचार, आस्था र धर्मको अधिकार (धारा १८)*
*२.१०. अभिव्यक्ति स्वतन्त्रताको अधिकार (धारा १९)*
*२.११. खराब मनोभावना फैलाउन नहुने (धारा २०)*
*२.१२. शान्तिपूर्ण भेलाको अधिकार (धारा २१)*
*२.१३. संगठन खोल्न र चलाउन पाउने अधिकार (धारा २२)*
*२.१४. परिवारसम्बन्धी अधिकार (धारा २३)*
*२.१५. स्वतन्त्र र निष्पक्ष निर्वाचनको अधिकार (धारा २५)*
*२.१६. कानूनको अगाडि समानताको अधिकार (धारा २६)*
*२.१७. जातिय, धार्मिक तथा भाषिक समुदायका अधिकार (धारा २७)*
*२.१८. राजाको संकटकालीन अधिकार मानव अधिकार सन्धि तथा नेपालको अन्तर्राष्ट्रिय दायित्व विपरीत (धारा ४)*

संविधानको धारा ११५ लाई राम्ररी गमेर हेर्ने हो भने राजालाई खास परिस्थितिमा देशमा संकटकालको घोषणा गर्ने अधिकारमात्र दिइएको छैन हामीले त नागरिक तथा राजनीतिक अधिकारका अन्तर्राष्ट्रिय अनुबन्धको धारा ४ को बिपरीत हुने गरी राजालाई हाम्रा अन्य मूलभूत मानव अधिकारहरुमा पनि नियन्त्रण लगाउन सक्ने अधिकार दिएका छौं । उल्लंघन गर्न नमिल्ने अन्तर्राष्ट्रिय मानव अधिकारहरु पनि राजाले चाहेमा उल्लंघन गर्न सक्ने शक्ति सुम्पिएको

छौं। संविधानको भाग ३ मा समावेश भएका र धारा ११५ (८) अनुसार राजाले संकटकालका नाममा निलम्बन गर्न सक्ने अधिकारहरु निम्नबमोजिम छन्:

१. धारा १२ को उपधारा (२) को खण्ड (क), (विचार र अभिव्यक्तिको स्वतन्त्रता), खण्ड (ख) (विना हातहतियार शान्तिपूर्वक भेला हुने स्वतन्त्रता), खण्ड (घ) (अधिराज्यभरि आवत जावत र बसोबास गर्ने स्वतन्त्रता), र खण्ड (ङ) (कुनै पेशा, रोजगार, उद्योग र व्यापार गर्ने स्वतन्त्रता),
२. धारा १३ को उपधारा (१) (कुनै समाचार, लेख वा अन्य कुनै पाठ्यसामग्रीको प्रकाशनमा पूर्व-प्रतिबन्ध नलगाइने स्वतन्त्रता),
३. धारा १५ (निवारक नजरबन्द विरुद्धको हक),
४. धारा १६ (सूचनाको हक),
५. धारा १७ (सम्पत्तिको हक),
६. धारा २२ (गोपनीयताको हक), र
७. धारा २३ (संवैधानिक उपचारको हक)।

अर्कोतिर, नेपालले स्वीकार गरी नेपालमाथि लागू भएको नागरिक तथा राजनैतिक अधिकारको यस अन्तराष्ट्रिय सन्धिको धारा ४ ले निम्नलिखित अधिकारहरुलाई संकटकालीन अवस्था तथा अन्य कुनै पनि परिस्थितिमा निलम्बन गर्न नसकिने व्यवस्था गरेको छ, जो यस प्रकार छन्:

१. जीवनको अधिकार,
२. यातना विरुद्धको अधिकार,
३. दासत्व विरुद्धको अधिकार,
४. पश्चात्‌दर्शी कानून विरुद्धको अधिकार,
५. विचार स्वतन्त्रताको अधिकार,
६. अन्त:करणको अधिकार, तथा
७. धर्मको अधिकार।

तसर्थ संविधानको धारा ११५, खासगरिकन धारा ११५ को खण्ड (८) नेपालले स्वीकार यस अन्तर्राष्ट्रिय सन्धिको विपरित छ।

**३. नागरिक तथा राजनैतिक अधिकारको अन्तर्राष्ट्रिय अनुबन्धको ऐच्छिक प्रतेख**

यस सन्धि अन्तर्गत नेपालीलाई श्री ५ को सरकारका विरुद्ध मानव अधिकारका उल्लंघनका विषयमा राष्ट्र संघीय मानव अधिकार समितिमा उजूर हाल्ने अधिकार छ। ती मानव अधिकारहरु उल्लिखित नागरिक तथा राजनैतिक अधिकारहरुको अन्तर्राष्ट्रिय अनुबन्धमा व्यवस्था गरिएका अधिकारहरुसंग सम्बन्धित हुनु पर्दछ।

**४. सबै प्रकारका वर्णभेद उन्मूलनको अन्तर्राष्ट्रिय महासन्धि**

यस सन्धि अन्तर्गत नेपालमा कसैलाई पनि वर्णका आधारमा कुनै पनि किसिमको भेदभाव गर्न पाईदैन। जातिपाती, रङ्गवर्ण, उत्पत्तिका आधारमा नेपालमा प्रचलित छुवाछुत, भेदभाव, घृणा र उँचोनिचो भावनामा आधारित सामाजिक प्रथालाई यस महासन्धिले बन्देज गरेको छ।

**५. रंगभेदी अपराधको दमन तथा दण्डको अन्तर्राष्ट्रिय महासन्धि**

यस सन्धि अन्तर्गत कसैलाई पनि उसको छाला वा रंगका आधारमा कुनै पनि किसिमको भेदभाव गर्न पाईदैन। दक्षिण अफ्रिकाका काला जाति विरुद्ध सेता जातिले चलाएको रंगभेदी आतंक यसको ज्वलन्त उदाहरण हो।

**६. खेलमा रंगभेद विरुद्धको अन्तर्राष्ट्रिय महासन्धि**

यस सन्धि अन्तर्गत रंगभेदको नीति अपनाउने राष्ट्रका नागरिकहरुलाई कुनै पनि खेलकूदमा कसैले पनि भाग लिन दिनु हुदैन। काला जातिका विरुद्ध रंगभेदको नीति अपनाउने दक्षिण अफ्रिका विरुद्धको अन्तर्राष्ट्रिय बहिष्कार यसकोटिमा पर्दछ।

**७. जातिहत्या अपराधको निराकरण तथा दण्डको महासन्धि**

यस सन्धिले कुनै एक जातिविशेषले अर्को जातिविशेषलाई सखाप पार्ने नीति अख्तियार गर्न नपाइने तथा त्यस्तो कार्य गर्नेलाई दण्ड दिनु पर्नेसम्बन्धी व्यवस्था गरेको छ।

**८. बालअधिकारको महासन्धि**

यस सन्धि अन्तर्गत श्री ५ को सरकारले नेपालका सम्पूर्ण बालबालिकाका हक र हितको संरक्षण गर्नुपर्दछ। त्यसमा खास गरिकन निम्नलिखित विषयहरु पर्दछन्:

- जन्म र विकास,
- नागरिक अधिकार र स्वतन्त्रताहरु,
- पारिवारिक वातावरण र वैकल्पिक हेरचाह,
- आधारभूत स्वास्थ्य र बाल-कल्याण,

- शिक्षा, विश्राम र सांस्कृतिक गतिविधिहरु,
- विशेष संरक्षणका उपायहरु ।

**९ नारी विरुद्ध सबै प्रकारका भेद उन्मूलनको महासन्धि**

यस सन्धिले सबै स्त्रीजातिका विरुद्ध हुने कुनै पनि किसिमका अन्याय, अत्याचार, शोषण र भेदभावलाई उन्मूलन गर्नुपर्ने व्यवस्था गरेको छ । तर नेपालले यस सन्धि अनुसार महिलाहरुका हक, हित र अधिकारका संरक्षण एवं सम्बर्द्धन गर्न अझसम्म पनि विशेष कानून निर्माण गरेको छैन । यस सन्धिसंग मेल नखाने भेदभावजनक कानूनहरु अझै पनि विद्यमान छन् ।

**१०. नारीका राजनीतिक अधिकारहरुको महासन्धि**

यस सन्धिले सबै नेपाली नारीहरुलाई समान राजनैतिक अधिकारको व्यवस्था गरेको छ । यस आधारमा नेपाल कानूनले नारीहरुलाई चुनावमा उमेदवार हुन तथा भोट खसाल्न पाउने अधिकार पुरुषसरह समान रुपमा प्रदान गरेको छ तापनि वास्तविक जीवनमा नेपाली नारीहरुले आफ्ना राजनीतिक अधिकारहरुलाई पुरुषहरुसरह समान रुपमा उपभोग गर्न पाइरहेका छैनन् ।

**११. यातना तथा अन्य निर्दयी, अमानवीय वा अमानजनक व्यवहार वा दण्ड विरुद्धको महासन्धि**

यस सन्धिले कुनै पनि व्यक्तिलाई कुनै पनि किसिमको शारीरिक वा मानसिक यातना वा अन्य निर्दयी वा अमानवीय वा अपमानजनक व्यवहार गर्न र दण्ड दिनमा पूर्णत: रोक लगाएको छ । साथै, यस्तो व्यवहार गर्ने प्रहरी, सरकारी कर्मचारी वा सरकारको निर्देशन वा इशारामा काम गर्ने जोसुकैका विरुद्ध पनि कानूनी कारवाही चलाई दण्ड दिने तथा पीडित व्यक्ति र तिनका परिवारलाई उचित क्षतिपूर्ति र पुनर्स्थापनको व्यवस्था गर्नुपर्ने प्रावधान गरेको छ ।

**१२ सन् १९२६ को दासत्व महासन्धि**

**१३. सन् १९२६ को संशोधित दासत्व महासन्धि**

**४ दासत्व, दास-व्यापार तथा दासत्वयुक्त संस्थान एवं व्यवहार उन्मूलनको पूरक महासन्धि**

यी माथिका ३ वटा सन्धिहरु समाजमा प्रचलित कुनै पनि किसिमका दासप्रथा, दास व्यापार र दासत्वपूर्ण व्यवहार र तिनका उन्मूलनसंग सम्बन्धित छन् ।

**(ख) अन्तर्राष्ट्रिय श्रम संगठन**

संयुक्त राष्ट्र संघसंग सम्बन्धित यस अन्तर्राष्ट्रिय संगठन अन्तर्गत पनि मजदूरहरुका हक, हित र मानव अधिकार सम्बन्धी दर्जनौं सन्धिहरु सम्पन्न भएका छन् । तीमध्ये निम्नलिखित ४ वटा सन्धिहरुलाई नेपालले हस्ताक्षर गरी अनुमोदन गरेको छ तथा तिनलाई नेपालमा प्रभावकारी ढंगले लागू गर्ने प्रतिज्ञा गरेको छ, जो यस प्रकार छन्:

१. औद्योगिक सेवामा साप्ताहिकविश्रामसम्बन्धी महासन्धि,
२. पुरुष तथा महिलाहरुलाई समान मूल्यको श्रमबापत समान पारिश्रमिकसम्बन्धी महासन्धि,
३. रोजगारी र पेशामा भेदभाव विषयक महासन्धि,
४. विकासोन्मुख देशहरुमा न्यूनतम वेतन निर्धारित सम्बन्धी महासन्धि ।

नेपालमा यी सन्धिहरुको प्रभावकारी कार्यान्वयन हुन सकिरहेका छैनन् । नेपालले यी सन्धिहरुको कार्यान्वयनका क्षेत्रमा के कस्तो प्रगति भएको छ भनी सरकारले उक्त संगठनसमक्ष आफ्नो राष्ट्रिय प्रतिवेदन पेश नगरेको हालै प्रकाशित एक प्रतिवेदनमा नेपालप्रति खेद प्रकट गरिएको छ ।

व्यावहारिक पक्ष हेर्ने हो भने, नेपालमा उद्योग र कल-कारखानामा काम गर्ने मजदूरहरुले अनेक किसिमका शोषण, अन्याय, अत्यचार र भेदभावको सामना गर्नु परिरहेको छ । त्यस्तै, धेरै ठाउँमा महिलाहरुलाई समान काम गरेबापत पुरुषसरह समान ज्याला दिने चलन छैन । यो समस्या गाउँघरमा झन् चर्को छ । तसर्थ मजदूरी गर्नेहरु सबैका मानव अधिकारहरुको सम्मान गर्नका निमित्त प्रचलित कानून र व्यवहारमा धेरै परिवर्तनहरुको खाँचो छ ।

## भाग ३

### संवैधानिक तथा अन्तर्राष्ट्रिय मानव अधिकारहरुको कार्यान्वयन पक्ष

राज्यले अधिकारहरुलाई संवैधानकि तथा कानूनी मान्यता दिनु वा संयुक्त राष्ट्र संघजस्तो निकायले मानव अधिकारका क्षेत्रमा विभिन्न सन्धि-सम्झौताहरुको निर्माण गर्नु आफैमा पर्याप्त होइन । मुख्य कुरा भइरहेका व्यवस्थाहरुलाई प्रभावकारी कार्यान्यन गर्नका निमित्त के कस्ता व्यावहारिक कदमहरु चालिएका छन् भन्ने कुरा महत्वपूर्ण हुन्छन् । यो कुरा नेपालको परिप्रेक्ष्यमा पनि त्यत्तिकै लागू हुन्छ ।

दक्षिण एसियामा अन्तर्राष्ट्रिय मानव अधिकारहरुलाई मान्यता दिने कार्यमा नेपालको स्थान माथि छ । तर संसार मा यस्ता पनि कतिपय मुलुकहरु छन् जसले मानव अधिकार का सन्धिहरुलाई पर्याप्त मात्रामा अनुमोदन गरेका छैनन् तापनि मानव अधिकारको व्यावहारिक संरक्षणका क्षेत्रमा निकै उन्नति गरेका छन् । नेपालको सबैभन्दा ठूलो विडम्बनाको रुपमा मानव अधिकारसम्बन्धी संवैधानिक, कानूनी तथा अन्तर्राष्ट्रिय व्यवस्थाहरुको कार्यान्वयनको अभाव रहेको छ । सरकारमा बस्नेहरुको अहिलेसम्मको प्रवृत्ति यो देखिएको छ कि उनीहरु संविधान, कानून तथा अन्तर्राष्ट्रिय सन्धिहरु अन्तर्गत प्राप्त अधिकारहरुको वास्तविक उपभोग नेपाली जनताहरुले गर्न पाएका छन् कि छैनन् भन्नेतर्फ भन्दा पनि यी दस्तावेजहरुमा भएका प्रावधानहरुलाई नाराको रुपमा मात्र भट्याएर फारो टार्ने काम गरिरहेका छन् । यी संवैधानिक तथा अन्तर्राष्ट्रिय अधिकारहरुलाई प्रभावकारी रुप दिन विधायिकी, प्रशासनिक तथा न्यायिक कदमहरु नचालिनु, यी अधिकार हरुको उपभोगमा देखा पर्ने बाधा-व्यवधानहरुलाई हटाउन तथा मानव अधिकारका उल्लंघनकारीहरुलाई सजाय दिनेतर्फ कुनै कारवाही नचलाउनु र राष्ट्रिय स्तरमा मानव अधिकार सम्बन्धी निकायको आवश्यकतालाई महत्व नदिनु यसका केही उदाहरणहरु हुन् जसको बारेमा तल संक्षेपमा विवेचना गरिन्छः

### क. मानव अधिकारसम्बन्धी कानून निर्माणको अभाव तथा सरकारी आचरणमा परिवर्तनको खाँचो

२०४७ को जनआन्दोलन पञ्चायतकालीन अप्रजातान्त्रिक प्रवृत्ति र मानव अधिकार विरोधी नियम-कानूनहरुलाई कायम राख्न भएका थिएन । यस राजनैतिक परिवर्तनले कम्तिमा पनि सरकारी स्तरमा व्याप्त भ्रष्टाचार, अन्याय, अत्याचार र प्रहरी तथा स्थानीय प्रशासकहरुबाट हुने ज्यादत्तिहरुलाई समाप्त गर्नेतर्फ ठोस कदमहरु चाल्नेछ तथा नयाँ प्रजातान्त्रिक संस्कारको थालनी गर्नेछ भन्ने लागेको थियो । यसका निमित्त प्रतिपक्षी राजनैतिक शक्तिहरुले पनि विशेष तयारी गर्नेछन् तथा मानव अधिकारका साझा सवालहरुमा राष्ट्रिय सहमतिका निमित्त आवश्यक दबाबको वातावरण श्रृजना गर्नेछन् भन्ने अपेक्षा गरिएको थियो । तर आज यी सवालहरुलाई कसरी उठाउने तथा समाधानको बाटोमा कसरी पुग्नेभन्दा पनि, खास गरिकन, सरकारी पक्षबाट अरुमाथि दोषारोपण गरेका भरमा आफ्नो दायित्व पूरा भएको ठानिरहेजस्तो लाग्छ ।

एउटा निरंकुश शासनप्रणालीको अन्त्य भएर नयाँ प्रजातान्त्रिक प्रणालीको स्थापना भइसकेपछि पनि नेपाली जनता पुरानै पञ्चायती नियम-कानून र प्रशासनिक आचरणबाट शासित हुनु प्रजातन्त्र शब्दकै बेइज्जति हो । हिजो जुन नियम-कानून र प्रशासनयन्त्रबाट अहिले सरकारमा बस्नेहरु पनि सताइएका थिए आज उनीहरु नै सत्तामा पुग्ने बित्तिकै तिनै नियम-कानून, नोकरशाह, प्रहरी प्रशासन तथा गलत सरकारी आचरणबीच रमाउन पुग्नु पनि आश्चर्यकै विषय भएको छ । अहिले आएर पनि सार्वजनिक सुरक्षा, राजकाज, सार्वजनिक अपराधजस्ता पञ्चायती शासकहरुले विरोधीहरुलाई दमन गर्न प्रयोग गरिएका कानूनहरु कायम राख्नु तथा तिनको भरमार प्रयोग गर्नुलाई कुनै पनि दृष्टिले स्वीकार गर्न सकिन्न।

### ख. मानव अधिकार उल्लंघन गर्ने विरुद्ध कारवाहीको अभाव

विगत जनआन्दोलनताका निरंकुश पञ्चायती शासकहरुले चलाएको राज्य-आतंक र हिंसात्मक दमनका घटनाहरुले नेपालको इतिहासमा कहिल्यै बिर्सन नसकिने काला दिनहरुको संझना गराउछन् । यसबखतमा भएका ज्यादती, निर्ममता र दानवीय ढंगबाट भएका मानव अधिकार उल्लंघनका अन्य गंभीर घटनाहरुका बारेमा विभिन्न सरकारी तथा गैह्र-सरकारी निकायहरुले आ-आफ्ना प्रतिवेदनहरु जनसमक्ष ल्याउने अथवा आवश्यक कारवाहीका निमित्त अन्तरिम सरकारसमक्ष प्रस्तुत गर्ने कार्य गरे । गैर-सरकारी क्षेत्रबाट तयार गरिएका यस्ता प्रतिवेदनहरुमा खासगरी मानव अधिकार संरक्षण मन्च, नेपाल मानव अधिकार संगठन र एम्नेस्टी इन्टरनेसनलका प्रतिवेदनहरु देखिएका छन् । यस सिलसिलामा अन्तरिम सरकारले पूर्वान्चल क्षेत्रीय अदालतका तत्कालीन माननीय मुख्य न्यायधीश श्री जनार्दनलाल मल्लिकको अध्यक्षतमा माननीय अतिरिक्त न्यायधीशहरु उदयराज उपाध्याय तथा इन्द्रराज पाण्डेसमेत रहेको तीन सदस्यीय जांचबुझ आयोगको गठन गरेको थियो । उक्त आयोगलाई जनआन्दोलनको कममा घटेका घटनामा के कस्तो जनधनको क्षति भएको रहेछ र के कसको त्रुटिबाट उक्त क्षति हुन गएको रहेछ तथा त्यस कममा श्री ५ को सरकारले के कस्तो कारवाही चलाउनु पर्ने हुन्छ भन्ने सम्बन्धमा ठहर राय सहितको सुझाव दिनका निमित्त क्षेत्राधिकार तोकिएको थियो ।

गैर-सरकारी संस्थाहरुले तयार पारेका प्रतिवेदनहरु बेलाबखत जनसमक्ष प्रस्तुत भैसकेका हुनाले तिनका बारेमा शंका-उपशंका तथा बढी चर्चा-परिचर्चा नभएपनि मल्लिक आयोगद्वारा तयार पारिएको प्रतिवेदनका बारेमा धेरै प्रतिक्रियाहरु व्यक्त हुदै आएका हुन् । अन्तरिम सरकारले यसतर्फ आवश्यक कदम किन नचालेको हो भन्नेबारेमा पनि जनअसन्तोष नदेखिएको होइन । अन्तरिम शासनकालमा आवश्यक कारवाहीका लागि गोप्य राखिएको भनिएको यस प्रतिवेदनलाई

नव-निर्वाचित सरकारले चालू अधिवेशनमा अन्तरिम सरकारको उक्त प्रतिवेदनमाथिको निर्णय तथा महान्यायाधिवक्ताको राय सहित छलफलका निमित्त पेश गरिसके पनि यो सर्वत्र चासोको विषय बनेको हो । अझसम्म पनि संसद्भित्र छलफलकै क्रममा रहेको यो प्रतिवेदनमा उक्त जनआन्दोलनका क्रममा जनताका मौलिक मानव अधिकारहरुका उल्लघनका सम्बन्धमा के कस्ता घटना र तथ्यहरु समावेश छन् तथा ती घटनाका गंभीरताका आधारमा दोषीहरुउपर के कस्तो कारबाही चलाइनु पर्छ भन्ने राय सुझाव दिइएको छ भन्ने जिज्ञासा हामी सबैमा हुनु स्वाभाविकै हो। तसर्थ, जनआन्दोलनका समयमा भएका मानव अधिकार उल्लंधनका घटनाहरु मानवीय मूल्य तथा मान्यता, मानव अधिकारका सिद्धान्त तथा प्रजातन्त्रका न्यूनतम आदर्शका कसीमा के कति गंभीर एवं अक्षम्य थिए भन्ने बारेमा उल्लिखित प्रतिवेदनहरुका समीक्षा गर्नु सान्दर्भिक हुनेछ ।

मल्लिक आयोगको करीब ११०० पृष्ठको प्रतिवेदनमा के कसको त्रुटिबाट के कस्ता जनधनको क्षति हुन गएका छन् सो को उल्लेख गरी मुख्यतया देहायका व्यक्तिहरु विरुद्ध कारवाहीका निमित्त सिफारिस गरेको देखिन्छ:

१. तत्कालीन पनिजांवुसका अध्यक्ष नवराज सुवेदी, तत्कालीन गृह सचिव भक्तवहादुर कोइराला, सवारी मन्त्री प्रकाश बहादुर सिंह, भू.पू. राज्यमन्त्री राधेश्याम कमारो, का.बा.प्र.ना.म.नि. द्वारिकावहादुर श्रेष्ठ तथा प्र.जि.अ. ।

२. तत्कालीन प्रधानमन्त्रीलगायत मन्त्री परिषद्का सदस्यहरु, केन्द्रीय सुरक्षा समिति (प्रधान सेनापतिको अध्यक्षतामा गठित) मा रहेका सदस्यहरु, पनिजांवुसका अध्यक्ष लगायत सो समितिमा रहेका सदस्यहरु, केन्द्रीय सुरक्षा समन्वय समिति (गृह राज्यमन्त्रीको अध्यक्षतामा गठित) मा रहेका विभिन्न सदस्यहरु, केन्द्रीय समन्वय समिति (परशुनारायण चौधरीको अध्यक्षतामा गठित) मा रहेका सदस्यहरु, अंचलाधीश, प्रहरी महानिरीक्षक, प्रहरी अधिकृत, प्रमुख जिल्ला अधिकारीहरु तथा लोकेन्द्र बहादुर चन्द ।

३. आयोगले मुख्यतया जनआन्दोलनको क्रममा जनधनको क्षति गराउनमा प्रत्यक्ष वा परोक्ष रुपमा सम्बन्ध रहेका व्यक्तिहरुलाई मुख्यगरी दुई श्रेणीमा विभाजन गरेको छ जसमा प्रहरी, प्रशासक र नीति निर्देशन बनाई तिनबाट कामकारवाही गराउने व्यक्तिहरु (प्रधानमन्त्रीहरु, मन्त्रीपरिषद्का सदस्यहरु, केन्द्रीय सुरक्षा समिति, केन्द्रीय सुरक्षा समन्वय समिति: महान्यायाधिवक्ता, उपकुलपति, रेक्टर समेत रहेको, परशुनारायण चौधरीको संयोजकत्वमा गठित केन्द्रीय समन्वय समितिमा रहेका व्यक्तिहरु र अंचलाधीशहरु) ।

आयोगले दोषीहरुलाई उनीहरुको कार्यको गंभीरताको आधारमा हैसियत र स्थितिअनुसार विभागीय कारवाही लगायत प्रचलित कानूनबमोजिम आवश्यक कारवाही गर्नु पर्ने राय ठहर दिएको छ। आयोगले अपराधको गंभीरताको आधारमा फौज्दारी कारवाही समेत चलाउनसकिने निष्कर्ष दिएको छ ।

जनआन्दोलनको क्रममा आफूलाई उत्सर्ग गर्ने वीर सपूतहरुको सम्मानार्थ घाइतेहरुको समुचित हितका निमित्त आयोगले विभिन्न किसिमका सुझावहरु दिएको छ । जस अनुरुप अवस्था अनुसार मृतकका आश्रित परिवार एवं आमा-बाबुलाई स्थायी जीविकोपार्जनको व्यवस्था गर्ने, मृतकका आश्रित छोराछोरीहरुलाई स्नातकसम्म पठनपाठनका लागि आवश्यकता पर्ने जति सबै व्यवस्था गर्ने, मृतकहरुको नाममा स्मारक निर्माण गर्ने, घाइतेहरुको उचित औषधोपचार गरिदिनु पर्ने जस्ता विभिन्न सुझावहरु दिएको छ ।

सम्पत्तिको क्षतिको सम्बन्धमा कुनै खास अमूक व्यक्तिद्वारा गराएको भन्ने खुल्न नआएकोले भनी दोषीहरु किटान गर्न सकेको छैन ।

उक्त मल्लिक आयोगको प्रतिवेदनको विषयमा मन्त्रीपरिषद्ले मिति २०४७।३।१८ को बैठकबाट निम्नबमोजिम निर्णय ग-यो:

"१. जनआन्दोलनको कममा २०४६ साल फागुन १ गतेदेखिन ६ गतेसम्म पोखरामा तथा २०४६ साल फागुन ७ गतेदेखि चैत्र मसान्तसम्म मुलुकमा विभिन्न भागमा घटेका घटनाहरुका विषयमा छानबीन गरी प्रतिवेदन पेश गर्न गठित तीन सदस्यीय जांचबुझ आयोगले मिति २०४७।९।१६ मा प्रस्तुत गरेको प्रतिवेदनउपर कारवाही गर्नको निमित्त उक्त प्रतिवेदन नेपाल अधिराज्यका महान्यायाधिवक्ता समक्ष पठाउने"

"२. श्री मरीचमान सिंह श्रेष्ठको अध्यक्षतामा मिति २०४३-३-२ मा गठित र सो पछिका विभिन्न मितिमा समेत निजकै अध्यक्षतामा गठन भएका मन्त्रिपरिषद्का सबै सदस्यहरु, श्री लोकेन्द्रबहादुर चन्द, श्री नैनबहादुर स्वांर, श्री पशुपति शमशेर ज.ब.रा. तथा विगठित पंचायत नीति तथा जांचबुझ समितिका अध्यक्ष, सदस्यहरु एवं सदस्य सचिवको राहदानी जफत गर्ने

व्यवस्था परराष्ट्र मन्त्रालयले मिलाउने र यी व्यक्तिहरुलाई श्री ५ को सरकारको स्वीकृतिवेगर देशबाहिर जान नपाउने गरी रोक लगाउने व्यवस्था गृह मन्त्रालयले गर्ने ।"

"३. जनआन्दोलनका क्रममा मुलुकमा विभिन्न भागमा घटेका घटनाहरुका समेत विषयमा छानवीन गरी प्रतिवेदन पेश गर्न गठित तीन सदस्यीय जांचबुझ आयोगले पेश गरेको प्रतिवेदन अध्ययन गर्दा दोषपूर्ण व्यवस्थाले गर्दा जनआन्दोलनका क्रममा प्रहरीबाट केही ज्यादति हुन गएको भए तापनि वर्तमान सन्दर्भमा प्रहरीको मनोबल कायमै राख्न र प्रहरी प्रशासनको स्थायित्व, कार्यकुशलता एवं आन्तरिक सुरक्षाको सम्पूर्ण जिम्मेवारी प्रहरीले नै वहन गर्नु पर्ने भएको तथा निकट भविष्यमा हुने आम निर्वाचनलाई निष्पक्ष र शान्तिपूर्ण बनाउन प्रहरीको विशेष भूमिका रहने कुरालाई दृष्टिगत गर्दै जांचबुझ आयोगको प्रतिवेदनको आधारमा कुनै कारवाही नगर्ने ।"

आयोगको राय ठहर अनुसार कारवाही हुनु पर्ने भनिएका व्यक्तिहरु मुख्यतया दुई प्रकारका देखिन्छन्:

१. प्रहरी र प्रशासक ।
२. नीति निर्देशन बनाई प्रहरी र प्रशासकबाट काम कारवाही चलाउने देहायका व्यक्तिहरु:

(क) मरीचमान र निजको मन्त्री परिषद्का सदस्यहरु,
(ख) केन्द्रीय सुरक्षा समितिमा रहेका सदस्यहरु,
(ग) केन्द्रीय सुरक्षा समितिमा रहेका व्यक्तिहरु,
(घ) केन्द्रीय समन्वय समितिमा रहेको व्यक्तिहरु ।

महान्यायाधिवक्ता श्री मोतिकाजी स्थापित २०४८।३।२३ प.सं. २०४७।४८, च. नं. १००७० मार्फत श्री ५ को सरकारका मुख्य सचिवलाई सम्बोधन गरी पठाएको रायको केही अंश निम्नबमोजिम छ:

"बहुदलको घोषणा भएपछिका क्षति र घटनाहरुका लागि तत्कालीन प्रधानमन्त्री लोकेन्द्रबहादुर चन्द र गृह मन्त्री नैनबहादुर स्वांर समेत जवाफदेही हुनु पर्ने भनी आयोगको ठहर देखिन्छ ।"

"आयोगको ठहरमा प्रहरी र प्रशासक अर्थात् प्रहरी र अंचलाधीश तथा प्र. जि. अ. हरुले कुनै कुनै घटनामा स्थानीय प्रशासन ऐन २०२८ को दफा ६ को प्रतिकुल बदनीयतपूर्ण कार्य गरेको भनेको देखिन्छ भने कुनैमा स्थानीय प्रशासन ऐन २०२८ को दफा ६ को प्रतिकुल हुने गरी आफ्नो कर्तव्य पालनाको सिलसिलामा लापरवाही गरी कार्य गरेको भनेको देखिन्छ र प्रशासकहरुबाहेकका अन्य व्यक्तिहरु अर्थात् तत्कालीन मन्त्री परिषद्का सदस्यहरु र माथि उल्लिखित विभिन्न समितिका सदस्यहरुका हकमा निजहरुको त्रुटिपूर्ण कामको गाम्भीर्यताको आधारमा कारवाही समेत गर्न पर्ने भएको थियो । तर क-कसलाई कुन कार्यमा कुन कानूनले के कारवाही गर्ने आयोगले केही उल्लेख गरेको देखिदैन । कसैलाई कारवाही र सजाय गर्नलाई त्यस्तो व्यक्तिबाट प्रचलित कुनै कानूनद्वारा गर्न नहुने भनी अपराध घोषित भएको कानून र गरेमा सजाय हुने भन्ने प्रावधान भएको कुनै कानून उल्लंघन भएको हुन पर्दछ । आयोगले कारवाही गर्न सिफारिस गरेको व्यक्तिहरुबाट भएको काम कारवाही कुन कानूनले कसरी अपराधपूर्ण कार्य भयो र त्यसमा कुन कानूनले सजाय गर्न पर्ने हो उल्लेख गर्न सकेको छैन । आयोगले उल्लेख गरेको स्थानीय प्रशासन ऐन २०२८ को दफा ६ अपराध घोषित गर्ने ऐन वा दण्ड गर्ने ऐन होइन । सो दफा केवल शान्ति सुरक्षा गर्ने सिलसिलामा प्रशासनले पाएको अधिकार प्रयोग गर्दा अपनाउने कार्यविधिसम्म मात्र हो । यो कुरा आयोगले बुझेको हुनु पर्ने हो । यति हुँदाहुँदै पनि प्रतिवेदनमा "गाम्भीर्यताको आधारमा कारवाही हुन पर्ने" भन्ने जस्ता ठूलाठूला शब्दहरुमात्र प्रयोग गरी कानून उल्लेख नगरी ठहर तयार गरेको देखिन्छ ।"

"आयोगको प्रतिवेदनको आधारमा मात्र कसैलाई पनि अदालती कारवाही गर्न सकिंदैन । यसको लागि सरकारी मुद्दासम्बन्धी ऐन ०१७ मा भएको व्यवस्था बमोजिम सरकारी वकील एवं प्रहरीले संयुक्त भएर अनुसन्धान तहकिकात गरी क-कसको कार्य के अपराध भए को भन्ने खुल्न र प्रमाणित हुन आएमा त्यस्तो तहकिकातबाट मात्र क-कसउपर के अभियोगमा मुद्दा चलाउन सकिन्छ भन्न सकिने कुरा हो । अधिकारप्राप्त अधिकारीद्वारा अनुसन्धान नगरी आयोगको प्रतिवेदनको आधारमा मात्र केही भन्न सकिंदैन । अत: आयोगले दोषी ठहर गरेका व्यक्तिहरुलाई अदालतमा मुद्दा चलाउने हो भने सम्बन्धित निकायबाट अनुसन्धान गर्नु गराउनु पर्ने देखिन्छ । यस सम्बन्धमा श्री ५ को सरकारद्वारा प्रहरीहरुउपर कुनै कारवाही नगर्ने भनी मिति २०४७-३-१० मा निर्णय गरेको व्यहोरा संस्मरण गराउंदछु ।"

"अहिले आएर अनुसन्धान चालू गर्न उपयुक्त हुने नहुने सम्बन्धमा ठहर अध्ययन गर्दा आयोगले जांचबुझको

सिलसिलामा प्रहरी प्रशासक लगायतका व्यक्तिहरुलाई आफूसमक्ष फिकाई बयान गराउंदा निजहरुले कर्तव्य पालनको सिलसिलामा आदेश अनुसार काम गरेको भन्ने देखिन्छ। मरेका वा घाइतेका नातेदार वा हकदारहरुले आयोगसमक्ष दिएको जानकारीमा कुन प्रहरीले हानेको गोलीले आफ्नो मानिस मरेको हो खुलाउन सकेको छैन, यसैगरी विभिन्न संगठन एवं दलहरुले दिएको जाहेरीबाट समेत घटना भएकोसम्म मात्र खुल्दछ। तर कुन प्रहरीले चलाएको गोलीले मरेको वा घाइते भएको खुलाउन सकेको पाइदैन। आयोगले घटना घटेको लगत्तैपछि अनुसन्धान गर्दा समेत मर्ने मानिसहरु वा घाइते हुनेहरु कुन प्रहरीको गोलीले लागी मरेको खुलाउन सकिएन भनी ठहरमा उल्लेख गरेको देखिन्छ। ठहरमा स्थलगत निरीक्षण गर्दा कुनै प्रत्यक्षदर्शी गवाह भएको भन्नेसम्म पनि देखिदैन।"

"घटना घटेको लगत्तैपछि थालिएको अनुसन्धान समेतबाट उपरोक्त कुरा खुलाउन सकिएको देखिएन भने समयको यत्रो अन्तरालपछि अहिले आएर पुन: अनुसन्धान शुरु गर्दा कुनै सबुद प्रमाण संकलन हुन सक्ने संभावना कमै देखिन्छ।"

"विभागीय कारवाहीको सम्बन्धमा श्री ५ को सरकारले चाहेमा प्रहरीहरुलाई प्रहरी ऐन नियमको रीत पुऱ्याई र प्रशासकको सम्बन्धमा जो हाल श्री ५ को सरकारमा कार्यरत छन्, निजहरुलाई निजामती सेवा ऐन नियमको रीत पुऱ्याई कारवाही गर्न सक्ने कुरा हो। र कर्मचारीउपर गरिने विभागीय कारवाही अख्तियार वालाहरुबाट हुन सक्दछ।"

"मरीचमान लगायत तत्कालीन मन्त्री परिषद्का सदस्य र विभिन्न समितिका सदस्यहरुका सम्बन्धमा विचार गर्दा मन्त्री परिषद्का सदस्यहरु र तत्कालीन संवैधानिक अंगका व्यक्तिहरु हाल पदमा रहेका छैनन्, निजहरुउपर विभागीय कारवाही गर्न सकिने भएन। विभिन्न समितिका सदस्यहरु जो हाल सेवारत छन् निजहरुका हकमा श्री ५ को सरकारले चाहेमा विभागीय कारवाही गर्न सकिने कुरा हो।"

"जनआन्दोलन दबाउन उपरोक्तहरुबाट प्रमुख एवं महत्वपूर्ण भूमिका खेलेको भन्ने ठहरबाट देखिन्छ। यसको साथै निजहरुबाट बनाइएको नीति दिएको आदेशले गर्दा कतिपय मानिसहरुको मृत्यु हुनको अलावा घाइते तथा अनावश्यक थुनामा परेको, थुनामा खानपीन बन्द गरिएको, यातना, शास्तीसासना दिएको आदि मानव अधिकारबाट वञ्चित गरिने कार्यहरु भएको देखिन्छ। निजहरुबाट भएको उक्त कार्यहरुलाई लिएर अदालतमा मुद्दा चलाई सजाय गराउन आयोगको यो प्रतिवेदनको आधारमा मात्र मिल्दैन। त्यसको लागि पनि माथि उल्लिखित निकायबाट अनुसन्धान भएपछि मात्र भन्न सकिने कुरा हो।"

"घाइते भएका व्यक्तिहरुलाई दिइने क्षतिपूर्तिका सम्बन्धमा नीतिगत कुरा भएकोले श्री ५ को सरकारले क्षमताले भ्याएसम्म क्षतिपूर्ति दिन सक्ने नै हुंदा यहां केही उल्लेख गर्न परेन। विभिन्न सम्पत्तिको क्षति भएको सम्बन्धमा आन्दोलनको क्रममा भएको क्षतिमा कसैलाई व्यक्तिगत जवाफदेही बनाउन मिल्ने देखिंदैन। क्षति पुऱ्याउने व्यक्ति कोहो भन्ने कुरा पहिचानसम्म पनि नभएको हुंदा कसैउपर कारवाही हुन सक्ने देखिएन।"

"त्यस सचिवालयबाट प्रेषित पत्रमा नेपाल अधिराज्यको संविधानको धारा ११०(२) उल्लेख गर्दै उक्त धाराबमोजिम पठाएको भन्ने उल्लेख भएको रहेछ। उक्त धाराको उपधारा (२) मा श्री ५ को सरकारको तर्फबाट मुद्दा चलाउने वा नचलाउने भन्ने कुराको निर्णय गर्ने अधिकार महान्यायाधिवक्तालाइ हुनेछ भनिए तापनि त्यसरी निर्णय गरिने कार्य अनुसन्धान तहकिकात पुरा गरिसकेपछि मात्र गरिन्छ। साथै संविधानले उक्त व्यवस्था अनुकुलको ऐन हाल बनिनसकेको र संविधान प्रारम्भ भएका मितिले १ वर्षसम्म साविक ऐन लागु रहिरहने यस्तो व्यवस्था धारा ३१ मा भएको छ। विद्यमान कानूनी व्यवस्था अन्तर्गत सरकारी मुद्दासम्बन्धी ऐन २०१७ को अनुसुची १ मा परेको फौज्दारी मुद्दा चलाउने वा नचलाउने भन्ने कुरा अनुसन्धान कार्य पूरा गरेपछि सम्बन्धित सरकारी वकिल र प्रहरीले निर्णय गर्ने हुंदा यहांबाट कारवाही गर्न नमिल्ने व्यहोरा अवगत गराउंदछु।"

उपर्युक्त प्रतिवेदन, अन्तरिम सरकारको निर्णय तथा वर्तमान महान्यायाधिवक्ता श्री मोतिकाजी स्थापितको राय समेतले देहाय बमोजिमका प्रश्नहरु उठाएका छन्:

१. तत्कालीन संविधानले प्रत्याभूत गरेको अधिकारहरुको प्रयोग गर्दाका अवस्थामा सरकारकै तर्फबाट मानव अधिकारको खुलेआम उल्लंघन गरिएको देखाइएको छ। यस सम्बन्धमा मानव अधिकार संरक्षण गर्नमा सरकार को तर्फबाट के कस्तो जिम्मेवारपूर्ण भूमिका हुनु पर्ने हो?

२. मल्लिक आयोगको प्रतिवेदनको कानूनी स्थिति के हो? यो केवल घटनाको जांचबुझ गरी जानकारी दिने मात्र हैसियत भएको यस आयोगको प्रतिवेदनको आधारमा आवश्यक कानूनी कारवाही गर्न श्री ५ को सरकार बाध्य हुने वा नहुने के हो?

३. आयोगले फौजदारी दायित्वबाट मुक्ति नहुने भन्नेसमेत ठहर पेश गरेपछि फौज्दारी दायित्वलाई श्री ५ को सरकारले निष्क्रिय बनाउन मिल्ने वा नमिल्ने के हो?

४. मल्लिक आयोगको प्रतिवेदनका सम्बन्धमा अन्तरिम सरकारको उक्त निर्णय कानूनी तथा औचित्यका दृष्टिकोणले के कस्तो हैसियत राख्दछ?

५. मल्लिक आयोगको प्रतिवेदनका सम्बन्धमा महान्यायाधिवक्ताको राय कानून अनुरुप छ वा राजनीतिक दृष्टिकोणबाट प्रेरित भएको भल्किन्छ?

६. मल्लिक आयोगको प्रतिवेदनका सम्बन्धमा महान्यायाधिवक्ताको राय सार्वजनिक जानकारीको विषय बन्नु आवश्यक तथा उपयुक्त थियो वा थिएन?

७. मल्लिक आयोगको प्रतिवेदनमा उल्लेख गरेका दोषीहरुलाई के कुन कानूनको प्रयोग गरी के कुन आधारमा कारवाही गर्न सकिन्छ वा कानूनी दृष्टिकोणबाट कारवाही योग्य छैन?

निष्कर्षमा यो भन्न उपयुक्त हुनेछ कि मानव अधिकारका उल्लंघनकारीहरुलाई, खास गरिकन मल्लिक प्रतिवेदन अनुसार दोषी देखिएकाहरुमाथि कानून अनुरुप कारवाही चलाउनै पर्दछ । मानव अधिकार उल्लंघनमा संलग्न व्यक्तिहरुले कुनै कानूनी कार्यविधि वा नियमको अभाव छ भनेर छुट पाउने कुरा अन्तर्राष्ट्रिय मानव अधिकार कानून तथा न्यायका कुनै पनि सिद्धान्तले स्वीकार्दैनन् । अर्को कुरा, यसरी दोषीउपर कारवाही चलाउनु भनेको कुनै बदला लिनु होइन बरु पीडितहरुलाई न्याय दिनु तथा भविष्यमा पुन: यस्ता घटनाहरु दोहोरिन नपाउन् र कसैले त्यस्तो कार्य गरेमा उनीहरु सजायका भागी हुनेछन् भन्ने मनोभावना जगाउनु हो ।

### ग. राष्ट्रिय मानव अधिकार आयोगको आवश्यकतालाई गर्भमै तुहाइयो

पञ्चायतकालमा मानव अधिकारको दुरावस्थाबारे अब कोही पनि अनभिज्ञ छैनन् । त्यसबेला मानव अधिकारको प्रवर्द्धन सरकारी तवरबाट हुने भन्ने कुरा त सोच्नसम्म पनि सकिंदैनथ्यो । दमन र निरंकुशताको स्थितिमा गैरसरकारी स्तरबाट मानव अधिकारको संवर्द्धन गर्ने कार्य पनि प्राय: असंभव थियो । त्यसैले देशमा स्वतन्त्रता, मानव अधिकार र प्रजातन्त्रको पुनर्बहालीद्वारा लोकप्रिय शासन पद्धति अन्तरगत देशलाई अगाडी बढाउने प्रमुख लक्ष्य लिएर नै तमाम पञ्चायत विरोधी राजनैतिक शक्तिहरुको सक्रियता र सयौं शहीदहरुको बलिदानका फलस्वरुप देशमा बहुदलीय शासन पद्धतिको पुनर्स्थापना हुन सकेको हो । आज बहुदलीय शासन प्रणाली अन्तर्गत देशमा प्रजातान्त्रिक मूल्य र मान्यताको विकास गरी मानव अधिकार र स्वतन्त्रताको उपभोग बिना बाधा-अड्चन हुन सक्ने उपयुक्त वातावरणको श्रृजना हुनु पर्ने हो । यी सन्धिहरुको अनुमोदन र सम्मिलन कुनै देखावटी र औपचारिकताका लागि मात्र कदापि हुन सक्तैनन् । तसर्थ यस्ता सन्धिहरुको अनुमोदन तथा सम्मिलन गर्ने राष्ट्रहरु उपर खास दायित्व सृजना हुन्छ जसबाट कुनै पनि राज्यपक्ष पन्छिन मिल्दैन । नेपाल अधिराज्यको संविधान तथा प्रचलित सन्धि ऐन, ०४७ अनुसार समेत नेपाल अधिराज्य राज्यपक्ष भएका कुनै पनि सन्धि-सम्झौताका प्रावधानसंग कुनै नेपाल कानून बाझिएमा सो बाझिएको हदसम्म कानूनको व्यवस्था अमान्य हुन सक्ने सन्दर्भमा त्यस्ता मानव अधिकारसम्बन्धी सन्धि-सम्झौताको बन्धनकारी शक्तिलाई अपहेलना गर्न कुनै पनि दृष्टिले मिल्दैन ।

नेपालमा बहुदलीय व्यवस्था अन्तर्गत जननिर्वाचित सरकारले सत्ता सम्हालिसकेपछि मानव अधिकारका क्षेत्रमा केही सुधार आए तापनि मानव अधिकार उल्लंघनका वास्तविक कारकतत्वहरुको यथार्थ विश्लेषणका अभावमा यस्ता समस्याहरुको निराकरण हुन सकेको छैन । मानव अधिकारप्रतिका सम्मान र संरक्षण गर्ने प्रवृत्तिमा पर्याप्त विकास हुन सकेको छैन । मानव अधिकार उल्लंघनका घटनाहरु अझ पनि हाम्रो सामु घटिरहेका छन् ।

## भाग ४

### नेपालले अनुमोदन गर्न आवश्यक अन्य केही महत्वपूर्ण अन्तर्राष्ट्रिय मानव अधिकार सन्धिहरु

नेपालमा भएको राजनैतिक परिवर्तनपछि नेपालले मानव अधिकारका केही प्रमुख अन्तर्राष्ट्रिय सन्धिहरुको अनुमोदन वा सम्मिलन गरेर जुन प्रतिबद्धता देखाएको छ - त्यसको सह्राहना गर्नै पर्दछ, यद्यपि तिनको प्रभावकारी कार्यान्वयनका क्षेत्रमा प्रशस्त कार्य हुन बांकी नै छ जसको बारेमा माथि विवेचना भइसकेको छ । यसदेखि बाहेक अरु पनि सन्धिहरु छन् जसले नेपालमा मानव अधिकार, प्रजातन्त्र र जनमुखी विकासका निमित्त सही मार्गदर्शन लिने कार्यमा महत्वपूर्ण भूमिका खेल्न सक्दछन् । हुन त सरकारहरुले अहिलेसम्म विकसित भएका मानव अधिकारसम्बन्धी सम्पूर्ण सन्धिहरुलाई अनुमोदन

गरी आफ्ना जनताहरुलाई ती अधिकारहरुको उपभोग गर्न गराउन सक्नुपर्दछ भन्ने आशा गरिएको हुन्छ । तर यो सबै अहिले तत्कालै संभव नभए पनि वर्तमान परिप्रेक्ष्यमा कम्तिमा पनि निम्नलिखित सन्धिहरुलाई सरकारले अनुमोदन वा सम्मिलन गरी तिनलाई नेपालमा कार्यान्वयन गर्नु पर्दछ । ती सन्धिहरुको नामावली यस प्रकार छ:

क संयुक्त राष्ट्र संघ

१ नागरिक तथा राजनैतिक अधिकारका अन्तर्राष्ट्रिय अनुबन्धको दोश्रो उपलेख (मृत्युदण्डको उन्मूलन सम्बन्धी) (Second Optional Protocol to the International Covenant on Civil and Political Rights (on the abolition of the death penalty)).

२. आप्रवासी मजदूर तथा तिनका परिवारकाको संरक्षण वा (अधिकार, हेर्नें) महासन्धि (Convention on the Protection of Migrant Workers and Their Families).

३. युद्धजन्य अपराध तथा मानवता विरुद्धको अपराधमा कानूनी सिमांकन लागू नहुने सम्बन्धी महासन्धि (Convention on the Non-Applicability of Statutory Limitations to War Crimes and Crimes against Humanity).

४ बलजफ्ती मजदूरीको उन्मूलनसम्बन्धी महासन्धि (Abolition of Forced Labour Convention).

५ व्यक्तिका बेचबिखन तथा अरुका वेश्यावृत्तिका शोषण, दमनसम्बन्धी महासन्धि (Convention for the Suppression of the Traffic in Persons and of the Exploitation of the Prostitution of Others).

६. विवाहित महिलाका राष्ट्रियताको महासन्धि (Convention on the Nationality of Married Women).

७ शरणार्थीहरुको हैसियतसम्बन्धी महासन्धि (Convention Relating to the Status of Refugees).

८. शरणार्थीहरुको हैसियतसम्बन्धी उपलेख (Protocol to the Status of Refugees).

९. विवाहको सहमति, न्यूनतम उमेर र विवाह दर्ताको महासन्धि (Convention on Consent to Marriage, Minimum Age for Marriage and Registration of Marriages).

ख. अन्तर्राष्ट्रिय श्रम संगठन

मजदूरसम्बन्धी अन्तर्राष्ट्रिय मापदण्डको कार्यान्वयनलाई सम्बर्द्धन गर्न त्रि-पक्षीय परामर्शसम्बन्धी महासन्धि (न. १४४)

१. बलजफ्ती वा अनिवार्य मजदूरीको महासन्धि (न. २९) (Convnetion Concerning Forced or Compulsory Labour (No. 29)).

२. उद्योग तथा व्यापारमा मजदूरीको निरीक्षणसम्बन्धी महासन्धि (नं. ८१) (Convention Concerning Labour Inspection in Industry and Commerce (No. 81)).

३. संगठन स्वतन्त्रता तथा संगठित हुने अधिकारको महासन्धि (नं. ८७) (Convention Concerning Freedom of Association and Protection of the Right to Organise (No. 87)).

४. पारिश्रमिकको संरक्षणसम्बन्धी महासन्धि (नं. ९५) (Convention Concerning the Protection of Wages (No. 95)).

५. रोजगारीका लागि आप्रवासन सम्बन्धी (परिमार्जित १९४९) महासन्धि (नं. ९७) (Convention Conerning Migration for Employment (Revised 1949) (No. 97)).

६. संगठित हुने अधिकार र सामूहिक सौदाबाजीका सिद्धान्तहरुको कार्यान्वयनसम्बन्धी महासन्धि (नं. ९८) (Convention Concerning the Application of the Principles of the Right to Organise and to Collective Bargaining (No. 98)).

७. सामाजिक नीतिका आधारभूत उद्देश्य तथा मापदण्डसम्बन्धी महासन्धि (नं. ११७) (Convention Concerning Basic Aims and Standards of Social Policy (No. 117)).

८. रोजगारी नीतिसम्बन्धि महासन्धि (नं. १२२) (Convention Concerning Employment Policy (No. 122)).

९. रोजगारीमा प्रवेशका निमित्त न्यूनतम उमेरसम्बन्धी महासन्धि (नं १३८) (Convention Concerning Minimum Age for Admission to Employment (No. 138)).

१०. दुरावस्थायुक्त अवस्थामा आप्रवासन तथा समान अवसरको प्रबर्द्धन एवं आप्रवासी मजदूरमाथि गरिने व्यवहारसम्बन्धी महासन्धि (नं. १४३) (Convnetion Concerning Migrations in Abusive Conditions and the Promotion of Equality of Opportunity and Treatment of Migrant Workers (No. 143))

११. मजदूरसम्बन्धी अन्तर्राष्ट्रिय मापदण्डका कार्यान्वयनको प्रवर्द्धनका निमित्त त्रि-पक्षीय परामर्शको महासन्धि (नं. १४४) (Convention Concerning Tripartite Consultations to Promote the Implementation of International Labour Standards (No. 144)).

१२. रोजगारदाताको इच्छामा रोजगारीको समाप्ति सम्बन्धी महासन्धि (नं. १५८) ९Convnetion Concerning Termination of Employment at the Initiative of the Employer (No. 158)).

१३. स्वतन्त्र राष्ट्रका आदिवासी एवं जनजाति सम्बन्धी महासन्धि (नं. १६९) Convention Concerning Indigenous and Tribal Peoples in Indepented Countries (No. 169).

ग. संयुक्त राष्ट्र संघीय शैक्षिक, वैज्ञानिक तथा सांस्कृतिक संगठन (युनेस्को)

१. शिक्षामा भेदभाव विरुद्धको महासन्धि, १९६० Convention against Discrimination in Education, 1960).

# परिच्छेद – ५
# न्यायपालिका र मानव अधिकार

नेपालको न्यायपालिका प्रजातन्त्रको पुनर्बहाली पश्चात् अत्यन्त सशक्त तथा ज्यादै ठूलो जिम्मेवारी अंगाल्ने संस्थाको रुपमा प्रतिष्ठापित भएको छ । यसभन्दाअघि यसले राजाको न्याय गर्ने अधिकार प्रत्यायोजित हदसम्म प्रयोग गर्दथ्यो । त्यसो हुँदा वास्तविक रुपमा न्यायपालिका स्वतन्त्र थिएन मनिन्थ्यो । वर्तमान संविधानले न्यायपालिकालाई सिद्धान्ततः र वस्तुतः स्वतन्त्र, सक्षम तथा अधिकार सम्पन्न बनाएको छ । सर्वोच्च अदालत संसद् तथा कार्यपालिका यी दुई अंगभन्दा अझ बढी शक्ति सम्पन्न यस कारण पनि छ कि दुवैका निर्णय, काम, कारवाहीहरु संविधान तथा प्रचलित कानूनको उल्लंघन भएमा बदर हुन सक्तछन् । संसद्ले बनाएको कानून असंवैधानिक ठहराउने अधिकार सर्वोच्च अदालतमा छ र सरकारका काम कारवाहीलाई अवैध ठहराउने अधिकार समेत छ ।

वर्तमान संविधानको भाग ११ का धारा ८४ देखि धारा ९६ सम्मका १३ वटा धाराहरुले न्यायपालिकाको सम्बन्धमा समग्र व्यवस्था गरेका छन् । संविधानको धारा ८४ मा नेपाल अधिराज्यको न्याय सम्बन्धी अधिकार यो संविधान र अन्य कानून तथा न्यायका मान्य सिद्धान्त अनुसार अदालत तथा अन्य न्यायिक निकायहरुबाट प्रयोग हुने व्यवस्था छ । संविधानले न्याय सम्बन्धी काम गर्नका लागि नियमित अदालत एवं न्यायाधीकरणको स्थापना गर्न सकिने व्यवस्था गरेको छ । नियमित अदालत ३ तहका छन् - सर्वोच्च अदालत, पुनरावेदन अदालत तथा जिल्ला अदालत । सर्वोच्च अदालत उच्चतम अदालत हो । देशभरि जम्मा ११ वटा पुनरावेदन अदालत छन् जुन विभिन्न क्षेत्रमा रहेका छन् । जिल्ला अदालत प्रत्येक जिल्लामा स्थापना गरिएका छन् । जिल्ला अदालतले कानूनद्वारा अन्यथा व्यवस्था गरिएमा बाहेक सबै किसिमका शुरु मुद्दा मामिलामा न्यायिक निर्णय गर्न पाउँदछ । पुनरावेदन अदालत पुनरावेदन सुन्ने अदालत हो र यसले कानूनद्वारा अन्य निकायको सृजना नगरेसम्म सबै किसिमका अदालत तथा न्यायाधीकरणले गरेको शुरु निर्णयउपर पुनरावेदन सुन्दछ । यस अदालतलाई नागरिकका हक हितको रक्षार्थ बन्दी प्रत्यक्षीकरण, निषेधाज्ञा एवं परमादेश जस्ता विशेषाधिकार (Prerogative) रिटहरु जारी गर्ने अधिकार प्राप्त छ ।

न्यायपालिकाको सबैभन्दा माथिल्लो तह सर्वोच्च अदालत हो । सैनिक अदालतबाहेक नेपालका अन्य सबै अदालत र न्यायिक निकायहरु यसै मातहतमा छन् । यो अभिलेख अदालतको रुपमा रहेको छ । यसले आफू मातहतका अदालत र न्यायिक निकायहरुको निरीक्षण एवं सुपरिवेक्षण गर्न र आवश्यक निर्देशन दिन सक्तछ । त्यस्तै यसले आफ्नो र आफू मातहतका अदालत एवं न्यायिक निकायहरुको अवहेलना भएमा कारवाही चलाइ कानून बमोजिम सजाय गर्न सक्तछ ।

अदालतका न्यायाधीशहरुको नियुक्तिका लागि सिफारिश गर्न निष्पक्ष निकायको व्यवस्था भएको छ । सर्वोच्च अदालतका प्रधान न्यायाधीशको नियुक्ति संवैधानिक परिषद् को सिफारिशमा र अन्य न्यायाधीशको नियुक्ति प्रधान न्यायाधीशको अध्यक्षतामा सर्वोच्च अदालतका वरिष्ठ न्यायाधीश दुईजना, न्यायमन्त्री तथा श्री ५ बाट तोकिबक्सेको विशिष्ट कानूनविद् १ जना समेत रहेको न्यायपरिषद्को सिफारिशमा श्री ५ बाट हुन्छ । जिल्ला अदालतका न्यायाधीशको हकमा नियुक्तिको अधिकार श्री ५ बाट प्रधान न्यायाधीशलाई प्रत्यायोजित हुन सक्तछ । एक पटक न्यायाधीशमा नियुक्त भएपछि उमेरको हद (सर्वोच्च अदालतका न्यायाधीशको हकमा ६५ वर्ष र अन्य अदालतका न्यायाधीशको हकमा ६३ वर्ष) सम्म कानून बमोजिमको (अन्य अवस्थाको कारणबाट बीचैमा नरहेमा) कायम रहन्छन् । सर्वोच्च अदालतका न्यायाधीशहरुलाई प्रतिनिधि सभाको सम्पूर्ण सदस्य संख्याको दुई-तिहाई बहुमतले महाअभियोग लगाइ हटाउन सक्तछ । अन्य अदालतका न्यायाधीशको हकमा न्याय परिषद्ले हटाउन आवश्यक देखी सिफारिश गरेमा श्री ५ बाट हटाउन सकिने प्रावधान देखिन्छ ।

सर्वोच्च अदालतलाई नागरिकका मूलभूत हक अधिकारको संरक्षण गर्ने प्रमुख जिम्मेवारी सुम्पिएको छ । सर्वोच्च अदालतले संसद् तथा सरकार दुवै उपर विशेषाधिकार रिटको रुपमा बन्दी प्रत्यक्षीकरण परमादेश, उत्प्रेषण, प्रतिषेध, अधिकार पृच्छा लगायत जुनसुकै उपयुक्त आदेश जारी गर्न सक्तछ । यसो गर्दा खास खास अवस्था छोडेर सैनिक अदालत तथा अधिकार क्षेत्रको अभाव भएकोमा बाहेक संसद्ले

चलाएको विशेषाधिकारको कारवाई तथा निर्णयमा सर्वोच्च अदालतले हस्तक्षेप गर्न सक्तैन ।

संविधानद्वारा प्रदत्त मौलिक हक उपर अनुचित बन्देज लगाउने वा संविधानसंग बाझिएको वा बाझिने कुनै कानूनलाई सर्वोच्च अदालतले असाधारण अधिकार क्षेत्र प्रयोग गरी प्रारम्भदेखि नै वा निर्णय भएको मितिदेखि अमान्य र बदर घोषित गर्न सक्तछ ।

संविधानद्वारा प्रदत्त मौलिक हक प्रचलनको लागि वा अर्को उपचार नभएको वा अर्को उपचार भए पनि सो उपचार अपर्याप्त वा प्रभावहीन देखिएको कुनै कानूनी हकको प्रचलनका लागि वा सार्वजनिक हक वा सरोकारको कुनै संवैधानिक वा कानूनी प्रश्नको निराकरणका लागि तथा सो प्रयोजनको लागि पूर्ण रुपमा न्याय गरी उचित उपचार प्रदान गर्न सर्वोच्च अदालतले रिट तथा कुनै पनि अन्य आदेश जारी गर्न सक्तछ ।

सर्वोच्च अदालतलाई राय प्रदान गर्ने अधिकार क्षेत्र समेत प्राप्त छ । श्री ५ बाट संविधान वा अन्य कानूनको व्याख्या सम्बन्धी कुनै जटिल कानूनी प्रश्नमा सर्वोच्च अदालतको राय बुझ्न चाहिबक्सेमा त्यस्तो प्रश्नको सम्बन्धमा सर्वोच्च अदालतले राय सहितको प्रतिवेदन चढाउन सक्तछ ।

उपरोक्त अधिकारका अलावा यसले साधारण अधिकार क्षेत्र अन्तर्गत काम कारवाही निर्णय गर्ने तथा कानूनद्वारा तोकिएको अवस्थामा आफ्नो फैसला वा अन्तिम आदेशको पुनरावलोकन गर्न सक्तछ ।

नेपाल अधिराज्यको संविधान २०४७ लागू भए पश्चात् सर्वोच्च अदालत उपरको जिम्मेवारी अत्यन्तै विस्तृत ढंगबाट बढेको छ । संसद् तथा सरकारका काम, कार्वाही तथा निर्णय विरुद्ध सार्वजनिक सरोकारका सार्वजनिक हित सम्बन्धी मुद्दा (Public Interest Litigation) पर्याप्त संख्यामा सर्वोच्च अदालतमा दायर भएका छन् । अधिकांश मुद्दाहरु विचाराधीन छन् तापनि केही मुद्दामा सर्वोच्च अदालतले निर्णयहरु पनि दिइसकेको छ जस उपर मिश्रित प्रतिक्रियाको स्थिति छ । जहाँसम्म मौलिक हक हनन सम्बन्धी गम्भीर मानव अधिकारका सवालमा सर्वोच्च अदालतको भूमिकाको प्रश्न हो, त्यसबारे अझै धेरै विवादहरु निर्णयाधीन भैरहेकाले स्पष्टसंग केही भन्न सकिने स्थिति छैन । यसबारे आगामी वर्षहरुमा स्पष्ट स्वरुप देख्न पाइनेछ । तर हालसम्म निर्णित विवादहरुको अवलोकन गर्दा मिश्रित देखा परेको छ, उत्साहप्रद भने मान्न सकिने स्थिति देखा पर्दैन । यस सम्बन्धमा सर्वोच्च अदालतका केही निर्णयहरु, जो मानिसका मूलभूत अधिकारसंग सरोकार राख्तछन्, को विवेचना तल गरिन्छ

(क) समानताको अधिकारको सम्बन्धमा सर्वोच्च अदालतले इमान सिंह गुरुङ्ग वि. श्री ५ को सरकार भएको बन्दी प्रत्यक्षीकरणको (०४७ को रिपुइ नं. ५१) मुद्दामा विस्तृत विवेचना गरेको छ (निर्णय मिति ०४९/५/५/६) उक्त मुद्दामा निवेदक अन्य गैर सैनिक इमानसिंह गुरुङ्ग समेतलाई सेनानी भरत गुरुङ्गलाई सैनिक ऐन २०१६ को दफा ४५(ख) अनुसारको कसुर गर्न उक्साएको भन्ने आरोपमा जनरल सैनिक अदालतले आठ वर्ष कैद गर्ने निर्णय गऱ्यो । मुख्य अपराधी भरत गुरुङ्गलाई २ वर्ष ६ महिना कैद भएको थियो । सो अनुसार कैदमा बसेका इमानसिंह गुरुङ्गले नेपाल अधिराज्यको संविधानको धारा ११ र १२ बमोजिमका प्रत्याभूत मौलिक हकको उल्लंघन गरी असमान व्यवहार गरी व्यक्तिगत स्वतन्त्रताको उल्लंघन गर्ने तथा असैनिकलाई सैनिक कानून लगाउने उक्त सैनिक ऐन ०१६ को दफा १ उपदफा ३ को खण्ड (ख) लाई असंवैधानिक ठहराई बन्दी प्रत्यक्षीकरणको रिट-द्वारा थुनाबाट मुक्त गरी पाउँ भनी सर्वोच्च अदालतमा रिट निवेदन पर्दा सो मुद्दा संविधानको व्याख्यासंग सम्बन्धित भएकोले पूर्ण इजलासबाट हेरियो । सर्वोच्च अदालतले उक्त ऐनका प्रावधान तथा समानता सम्बन्धी मौलिक हकको सम्बन्धमा विस्तृत विवेचना गरी उक्त ऐनलाई गैर संवैधानिक (Ultravides) ठहराई निवेदकलाई कैदबाट मुक्त गरी मौलिक हकको संरक्षण गरेको छ । सो निर्णयमा पुग्दा सर्वोच्च अदालतको विवेचना बहुतै गम्भीर तथा मानव अधिकार प्रति ज्यादै सम्वेदनशील रहेको पाइन्छ । मुद्दामा फैसला दिनु हुँदै सम्माननीय प्रधान न्यायाधीशज्यूले भन्नु भएको छ - "... उपधारा (१) मा (धारा ११ को) नेपालका नागरिक-हरुलाई समानताको हकको संवैधानिक प्रत्याभूति भएको देखिन्छ । सो अनुसार कानूनको कार्यान्वयनमा राज्यको कुनै निकाय वा पदाधिकारीले गरेको कुनै कार्य वा व्यवस्थापिकाले जारि गरेको कुनै कानूनबाट नागरिकहरुका बीच असमान व्यवहार हुन जाने भएमा त्यो असंवैधानिक र अमान्य हुन्छ । उक्त संवैधानिक प्रावधानले कानूनको कार्यान्वयनमा एउटा नागरिकको तुलनामा अर्को नागरिकलाई बढी सुविधा वा बढी संरक्षण वा बढी दायित्व बहन गराउन मनाही गरि राज्यलाई समान व्यवहार गर्न बाध्य गरेको मात्र नभै नागरिकहरुका बीच भेदभाव गरि असमान व्यवहार गर्ने कानून बनाउन पनि निषेध गरेको छ । नेपालको कुनै नागरिक वा

नागरिकहरुको कुनै समूह वा वर्गलाई कानून अन्तर्गत अन्य नागरिकहरुले पाएको सुविधा अधिकार वा संरक्षणबाट बञ्चित गर्नु वा अन्य नागरिकहरुले कानून अन्तर्गत बहन गर्नुपर्ने बढी वा ठूलो अभि-भारा वा दायित्व बोकाउनु संविधान प्रदत्त समानताको हकको प्रतिकूल हुन्छ। ...... सैनिक कानून मुख्यत: सैनिक अधिकृत र जवानहरुलाई नै लागू हुने कानून हो । सैनिक अधिकृत र जवानहरुका सम्बन्धमा त्यस्तो कानून लागू गर्नु सिद्धान्तत: समानताको हकको प्रतिकूल संझन मिल्दैन ... ... तर जहाँसम्म गैर सैनिक व्यक्तिको कुरा छ ...... संयुक्त अधिराज्य, संयुक्त राज्य अमेरिका र भारत जस्ता प्रजातान्त्रिक देशका निर्णयहरुलाई हेर्दा सेनासंग सम्बन्ध नभएका असैनिक व्यक्ति उपर सैनिक कानून लागू हुने खण्ड (घ) जस्तो कुनै व्यवस्था रहेको पाइदैन । ...... तसर्थ निवेदक जस्तो एउटा गैर सैनिक नागरिकलाई सैनिक ऐन लागू गर्ने गरी विवादग्रस्त खण्ड (घ) मा भएको व्यवस्था अनुचित र भेदभावपूर्ण छ भन्ने निष्कर्षमा म पुगेको छु ।"

(ख) वैयक्तिक स्वतन्त्रताको सम्बन्धमा समेत सर्वोच्च अदालतले निर्णय गरेको पाइएको छ । इमानसिंह गुरुङको मुद्दामा सर्वोच्च अदालतले सैनिक अदालतको निर्णयबाट थुनामा परेको भए पनि असंवैधानिक ऐन प्रयोग गरी थुनिएको कारण निजको वैयक्तिक स्वतन्त्रताको अपहरण भएको ठहर गर्दै थुनाबाट मुक्त गर्दा सम्माननीय प्रधान न्यायाधीशज्यूले वैयक्तिक स्वतन्त्रता सम्बन्धी धारा १२ (१) प्रतिको सर्वोच्च अदालतको चनाखोपन देखाउँदै विवाद चर्चा गर्नु भएको छ। सम्माननीय प्रधान न्यायाधीशज्यू भन्नु हुन्छ - "कानून बमोजिम बाहेक कुनै पनि व्यक्तिको वैयक्तिक स्वतन्त्रताको अपहरण नहुने प्रत्याभूति वर्तमान संविधानले मात्र होइन कि साविकका संविधानहरुमा नागरिक अधिकार ऐन २०१२ ले पनि गर्दै आएको सन्दर्भमा खास गरी वैयक्तिक स्वतन्त्रताको कुरामा संविधानले नै उपचार माग्ने बाटो बन्द गरेको अवस्थामा बाहेक थुनामा परेको व्यक्तिको वैयक्तिक स्वतन्त्रता कानून बमोजिम अपहरण भएको हो वा होइन भन्ने कुराको जाँचबुझ सो व्यक्ति थुनामा रहुन्जेल जहिले सुकै पनि यस अदालतले गर्ने र संविधान वा प्रतिकूल थुनामा राखिएको देखिएमा बन्दीलाई थुनाबाट मुक्त गर्ने उपयुक्त आदेश जारी गर्न सक्तछ । थुनामा राख्ने निकाय साधारण अदालत होस् वा सैनिक सबैले संविधान कानूनमा भएका व्यवस्थाहरुको पालन गर्नै पर्छ । संविधानले सैनिक अदालतको कारवाही र निर्णयमा हस्तक्षेप गर्न यस अदालतलाई केही बन्देज अवश्य लगाएको छ, तर त्यसको अर्थ सैनिक अदालतले जे गरे पनि हुन्छ भन्ने चाहिं होइन । यदि सैनिक अदालतले कानूनको रीत नपुऱ्याई अथवा कानून वा संविधानको प्रतिकुल कसैलाई थुनामा राख्तछ भने त्यस सम्बन्धमा यस अदालतमा उजुर गर्ने बाटो बन्द भए पनि त्यो थुना अवैध नै हुन्छ । त्यस्ता थुनाको विरुद्ध उजुर गर्ने बाटो खुल्लासाथ सम्बन्धित व्यक्ति यस अदालतमा आउन सक्तछ र यस अदालतले पनि त्यसलाई अवैध घोषित गरी बन्दीलाई थुनाबाट मुक्त गर्न सक्तछ ।"

(ग) नेपाल अधिराज्यको संविधान २०४७ को धारा १४ मा फौज्दारी न्याय सम्बन्धी हक प्रत्याभूत गरिएको छ । यस धारामा मानव अधिकार सम्बन्धी विश्वव्यापी घोषणापत्रमा उल्लेख भएका फौज्दारी न्याय तथा स्वच्छ पुर्पक्ष सम्बन्धमा गरिए सरहका मूलभूत व्यवस्थाहरु गरिएका छन् । यस प्रसंगमा उपधारा (६) मा प्रहरीद्वारा हिरासतमा राखिएको वा पक्राउ गरिएको व्यक्तिलाई २४ घण्टा भित्र मुद्दा हेर्ने अधिकारी समक्ष प्रस्तुत गरेर मात्र थप अवधि पुर्पक्षका निमित्त थुन्न सकिने प्रावधान गरिएको छ । अन्य विकासशील मुलुक जस्तै नेपालमा पनि २४ घण्टाको यो अनिवार्य व्यवस्था मानिसको स्वच्छ पुर्पक्ष पाउने अधिकार कुण्ठित नहोस् भन्ने हिसाबले गरिएको हो तापनि फौज्दारी मुद्दाको छानवीन तहकिकात, अभियुक्त पक्रने लगायतका अन्य काम कुरामा करीब करीब एकछत्र अधिकार पाएका प्रहरीबाट त्यस्तो मानव अधिकारको बराबर उल्लंघन भैरहन्छ । नेपालको सर्वोच्च अदालत बारम्बार यस्ता मुद्दामा निर्णय दिनु पर्ने परिस्थितिमा आइराखेको छ । यसक्रममा नयाँ संविधान लागू भएपछि यस मौलिक हकको संरक्षण गर्ने अडानमा क्रमश: खुकुलो हुँदै गएको पाइन्छ । यस कारणबाट सर्वोच्च अदालतले कानूनविद्हरुको मानव अधिकार को संरक्षणमा प्रतिगामी पाइला चालेको भन्ने आलोचना सुन्नु परेको छ ।

प्रजातन्त्रको पुनर्स्थापना पश्चात्का धेरैमध्ये यहाँ तीनवटा मुद्दाको निर्णय मात्र चर्चा गरिएको छ ।

मीना श्रेष्ठ विरुद्ध काठमाण्डौ जिल्ला अदालत भएको बन्दी प्रत्यक्षीकरणको (०४७ को रि.नं. ९५७) मुद्दामा (नेकाप २०४७ पृ.६७१) सर्वोच्च अदालतका माननीय न्यायाधीशज्यू श्री सुरेन्द्रप्रसाद सिंह तथा माननीय न्यायाधीशज्यू श्री त्रिलोकप्रताप राणाको संयुक्त बेंचबाट "धारा १४ (छ) ले प्रदान गरेको हक मौलिक हक हो र कानूनले दिएको बाटाको म्याद बाहेकको अरु कुनै छुटबाट थुनामा राखी व्यक्तिको हक कुण्ठित गर्न सकिदैन ..... तर्कको आधारमा रिट निवेदन खारेज गर्ने हो भने यसले नेपाल अधिराज्यको संविधान २०४७ धारा १४ (छ) ले गरेको संवैधानिक व्यवस्था नै निष्कृय (defeat) हुन्छ" भन्दै थुनाबाट मुक्त गरिएको थियो। यस्तै २४ घण्टाभित्र मुद्दा हेर्ने अदालतमा पेश नगरेकोले मौलिक हक हनन भयो, थुनाबाट मुक्त हुनाका लागि परेको निवेदक श्याम भन्ने बजरंग चैतन्य ब्रम्हचारी विरुद्ध श्री ५ को सरकार जिल्ला प्रहरी कार्यालय धनुषा भएको बन्दी प्रत्यक्षीकरणको (०४८ सालको रिट नं. १३७५) को मुद्दामा (नेकाप २०४८ पृ. ६०) तत्कालिन प्रधान न्यायाधीशज्यू श्री धनेन्द्रबहादुर सिंह र मा.न्या. श्री त्रिलोकप्रताप राणा भएको संयुक्त इजलासले अघिल्लो निर्णयमा भए अनुसार नै थुनाबाट मुक्त गर्नु भएको थियो। निर्णय दिने क्रममा प्र.न्या. श्री धनेन्द्र बहादुरले "२४ घण्टा भित्र मुद्दा हेर्ने अधिकारी समक्ष प्रस्तुत गर्नु पर्ने बाध्यात्मक व्यवस्था हो र त्यस्तो अधिकारीको आदेशले मात्र २४ घण्टाभन्दा बढी थुनामा राख्न पाइने, त्यस्तो आदेश बेगर २४ घण्टाभन्दा बढी थुनामा राखिए त्यस्तो थुना गैर कानूनी हुने भन्दै वैयक्तिक स्वतन्त्रताको संरक्षण गर्ने दायित्व नेपाल अधिराज्यको संविधानले सर्वोच्च अदालतलाई असाधारण अधिकार प्रदान गरि सुम्पिएको छ र त्यस्तो व्यक्तिको वैयक्तिक स्वतन्त्रता कानून विपरीत अपहरण गरी थुनामा राखेको छ भने त्यस्तो गैर कानूनी थुनाबाट मुक्त गराई वैयक्तिक स्वतन्त्रता जस्तो अमूल्य हक प्रचलन गराउने दायित्व सर्वोच्च अदालतको हो" भन्नु भएको छ।

उक्त दुवै मुद्दामा २४ घण्टा नाघेपछि अदालतमा मुद्दा चलाई अदालतको आदेशले बन्दीलाई थुनामा राखिएको थियो। थुनामा राख्नेतर्फबाट अदालतको आदेश वैध छ र अदालत कै आदेशबाट नै थुनामा राखिएको हुँदा "२४ घण्टाको" मौलिक हकको जिकिर अप्रासंगिक हुन्छ भन्ने प्रतिवादलाई अस्वीकार गर्दै प्र.न्या. श्री धनेन्द्रबहादुर सिंह भन्नुहुन्छ - "अदालतबाट पछि थुनछेकको आदेशबाट थुनामा रहेको कारणबाट अघिल्लो गैर कानूनी थुनालाई मान्यता दिने हो भने संविधानले प्रदान गरेको वैयक्तिक स्वतन्त्रता सम्बन्धी मौलिक हक नै निष्प्रयोजन हुन गई कुण्ठित हुन जान्छ भन्दै वैयक्तिक स्वतन्त्रतातर्फ व्याख्या गर्दा वैयक्तिक स्वतन्त्रता अपहरण गर्नेतर्फ नभै वैयक्तिक स्वतन्त्रता कायम गर्नेतर्फ नै अदालतको व्याख्या हुनुपर्दछ।"

ठ्याम्मै यस्तै विषयवस्तुमा सर्वोच्च अदालतको ५ जना न्यायाधीशहरु रहेको पूर्ण इजलासले सर्वोच्च अदालतका आफ्ना उपरोक्त दुवै नजीरसंग सहमत नभै फैसला गरेको कारण सर्वोच्च अदालतको मौलिक हक संरक्षण गर्ने जिम्मेवारी उपर कानूनविद्हरु आशंकित भएका छन्। अम्बरबहादुर गुरुङ्ग विरुद्ध काठमाण्डौ जिल्ला अदालत समेत भएको बन्दी प्रत्यक्षीकरणको (०४८ सालको रि.पु.इ.नं. ५४) मुद्दा (नेकाप २०४९ पृ. ३१) मीना श्रेष्ठको मुद्दामा भएको व्याख्यासंग सहमत नभएकोले पूर्ण इजलासमा पेश गर्नु भन्ने आदेश अनुसार पूर्ण इजलासमा प्रस्तुत गरिएको थियो। पूर्ण इजलासले अघिल्ला दुवै निर्णय विरुद्ध आफ्नो निर्णय गरेको थियो। उक्त इजलासमा प्र.न्या. श्री विश्वनाथ उपाध्याय, मा.न्या. श्री हरगोविन्द सिंह प्रधान, मा.न्या. श्री मोहनप्रसाद शर्मा, मा.न्या. श्री केशव प्रसाद उपाध्याय र मा.न्या. श्री लक्ष्मणप्रसाद अर्याल उपस्थित हुनुहुन्थ्यो। मा.न्या. श्री हरगोविन्द सिंहले असहमति जनाएकोले ४:१ जनाको इजलासबाट उक्त निर्णय भएको थियो। बहुमतको राय मा.न्या. श्री लक्ष्मणप्रसाद अर्याल एवं थप छुट्टै राय प्र.न्या. श्री विश्वनाथज्यूले लेख्नुभएको थियो। उक्त निष्कर्षमा पुग्न मा.न्या. श्री लक्ष्मणप्रसाद अर्यालले गिरफ्तार गर्दाको अवस्थामा गैर कानूनी रुपले थुनिएको भए पनि रिट निवेदनको सुनवाई हुँदा कानून बमोजिम मुद्दा चलाई अदालतको आदेशानुसार थुनामा रहेको स्थितिमा पूर्व अवैधतालाई आधार बनाई अदालतको कारवाहीमा असर पर्न जाने हुन्छ र जुन बखत थुनाको वैधताको परीक्षण भैरहेको छ सो समयमा थुना कानूनी देखिन्छ भने बन्दी प्रत्यक्षीकरणको रिट जारी गर्न मिल्दैन भन्ने तर्क दिनु भएको छ। उहाँले २४ घण्टाको व्यवस्था पक्राउ

गर्ने अधिकारीप्रति लक्षित छ तसर्थ सो व्यवस्थाको दायित्वको उल्लंघन गर्ने अधिकारी उपर कारवाही हुनु पर्ने तर्क दिनु भएको छ। यसबाट भविष्यमा मानिसको वैयक्तिक स्वतन्त्रतामा प्रहरी जस्तो सशक्त निकायले हस्तक्षेप गर्ने आघात पार्ने संभावनालाई प्रशस्त बल पुग्ने मान्न सकिने स्थिति उत्पन्न भएको छ। कानूनविद्हरुले यस निर्णयलाई मानव अधिकार एवं नागरिकको वैयक्तिक स्वतन्त्रताको संरक्षणको हिसावले नकारात्मक (setback) भनेको पाइन्छ।

वैयक्तिक स्वतन्त्रतामा आँच पुग्नेखालको अर्को निर्णय सर्वोच्च अदालतले थुनामा राखिने व्यक्तिलाई थुनुवा पुर्जी दिनुपर्ने नपर्ने विषयमा कमल प्रसाद बास्तोला विरुद्ध विशेष प्रहरी विभाग समेत (०४८ को रि.नं. २३६७) को बन्दी प्रत्यक्षीकरणको मुद्दामा ०४९/२/३२/१ गतेका दिन गरेको छ। अदालती बन्दोवस्तको १२१ नं. मा मुद्दाका सम्बन्धमा जुनसुकै व्यहोराले थुनामा राख्दा यस्तो अभियोगमा यस कानूनको यो नम्बर दफा अनुसार थुनामा राखिएको हो भनी सो थुनामा राखिने व्यक्तिलाई कारण खोलि थुनुवा पूर्जी नदिई थुनामा राख्नु हुँदैन भन्ने बाध्यात्मक कानूनी व्यवस्था रहेको छ। निवेदक कमल प्रसादलाई विशेष प्रहरी विभागले सो अनुसार पुर्जी नदिई थुनामा राखे उपर प्रस्तुत रिट मुद्दा दायर गरिएको थियो। सो मुद्दामा सर्वोच्च अदालतले सो ऐन बमोजिम ऐनको दफा समेत खुलाई थुनुवा पुर्जी दिनुपर्ने भन्ने कथन कानूनसंगत देखिएन भनेर निर्णय दिएर कानूनको बाध्यात्मक व्यवस्थाको परिपालना गर्न नपर्ने गरी वैयक्तिक स्वतन्त्रतामा आघात पार्ने मार्ग प्रशस्त गरिदिएको छ। वैयक्तिक स्वतन्त्रताको संरक्षणमा बन्दी प्रत्यक्षीकरणको रिट पश्चात नेपाल कानूनमा सवभन्दा महत्वपूर्ण व्यवस्था उक्त अ.ब. १२१ नै हो भने पनि हुन्छ। कानून बनाउने विधायिकाले वैयक्तिक संरक्षणका लागि गरेको उक्त प्रावधान नभएको खण्डमा पनि कारण सहितको सूचना दिएर मात्र थुनामा राख्नु प्राकृतिक न्याय तथा मानिसको मूलभूत अधिकारको कुरा हो।

(घ) संविधानको धारा १५ मा नजरबन्द विरुद्धको हक सुरक्षित गरिएको छ। कानून विपरीत वा बदनीयतपूर्वक नजरबन्द रहेको व्यक्तिले कानून-द्वारा तोकिएको बमोजिमको क्षतिपूर्ति पाउने अधिकार पाएको छ। यो संवैधानिक हकको प्रचलनको प्रश्न श्री सर्वोच्च अदालतको सन्मुख पूर्ण बहादुर छन्तेल विरुद्ध प्र.जि.अ. दाङ समेत भएको बन्दी प्रत्यक्षी-करणको (०४८ सालको रिट नं. १४१३) मुद्दामा (नेकाप २०४८ पृ. २९८) आएको थियो। सो मुद्दामा थुनामा रहेको पूर्ण बहादुर छन्तेल राष्ट्रिय प्रजातन्त्र पार्टीको कार्यकर्ता थियो र उसलाई पार्टीको प्रचार प्रसार गर्न गैरहेको बखत केही प्रहरीहरु आएर बिना पुर्जी बलजफ्ती पक्राउ गरी कारागारमा थुनामा राखियो। भेटघाट समेत गर्न नदिइ राखेको निज छन्तेलको हकमा दर्ता गरिएको बन्दी प्रत्यक्षी-करणको निवेदनमा कार्वाही चल्दैका अवस्थामा सर्वोच्च अदालतको तर्फबाट मा.न्या. श्री रुद्र बहादुर सिंह र मा.न्या. श्री लक्ष्मणप्रसाद अर्यालले मिति ०४८/६/१८/६ मा निर्णय गर्नु हुँदै क्षतिपूर्ति दिने सम्बन्धमा ऐन बनेपछि मात्र क्षतिपूर्ति पाउने हकको श्रृजना हुने देखिएकोमा तत्काल क्षतिपूर्ति ऐन बनी नसकेको कारणले क्षतिपूर्ति निर्धारण गर्न मिलेन" भनी रिट निवेदन खारिज गर्नु भयो। सो निर्णय पश्चात मिति ०४८/७/२८ मा लालमोहर लागी सार्वजनिक सुरक्षा (दोश्रो संशोधन) ऐन २०४८ लागु भएको छ र सो ऐनले क्षतिपूर्ति तोक्ने अधिकार जिल्ला अदालतलाई प्रदान गरी सोको लागि मानिने आधारको हकमा नजरबन्द राखिएको अवधि, निजको सामाजिक प्रतिष्ठा, नजरबन्द रहेबाट निजलाई परेको आर्थिक हानि इत्यादि कुराहरु रहेका छन्।

(ङ) नेपाल अधिराज्यको संविधानले सूचनाको हकलाई संरक्षण गरेको छ। धारा १६ मा प्रत्येक नागरिकलाई सार्वजनिक महत्वको कानून बमोजिम गोप्य नराखिने कुनै पनि विषयको सूचना माग्ने र पाउने हक उल्लेख छ। सो हकको उल्लंघन भएको कुरामा परेका रिट मुद्दामा सर्वोच्च अदालतले आवश्यकतानुसार निर्णय दिदै आएको छ। तर यस हकका पक्षमा सर्वोच्च अदालतले प्रसिद्ध ऐतिहासिक टनकपुर मुद्दा (बालकृष्ण न्यौपाने वि. श्री ५ को सर कार (०४९ सालको रि.नं. १८५१) मा ०४९/८/३०/३ मा निर्णय सुनाउँदै बोलेको छ। सो मुद्दा नेपालको जलश्रोतको बाँडफाँड सम्बन्धी भारतसंग गरिएको सन्धि संविधानको धारा १२६ (२) को प्रतिकुल भएको हुँदा बदर हुनु पर्दछ भन्ने

कुरामा चलेको थियो। श्री ५ को सरकारले भारतसंग भएको "समझदारी" गोप्य दस्तावेज भनि नक्कल दिन चाहेको थिएन। सर्वोच्च अदालतको विशेष इजलासमा बस्नु भएका सम्माननिय प्र.न्या. विश्वनाथ उपाध्याय, मा.न्या.हरु श्री सुरेन्द्रप्रसाद सिंह, श्री त्रिलोकप्रताप राणा, श्री गजेन्द्रकेशरी वास्तोला र श्री ओमभक्त श्रेष्ठ समेतका ५ जना न्यायाधीशले एकमतबाट निर्णय गर्दै प्रत्येक नेपाली नागरिकलाई सार्वजनिक कुरामा सूचना माग्ने र पाउने हक हुन्छ भन्ने कुरालाई प्रचलन गराउनु भएको छ। सो हकका बारेमा सर्वोच्च अदालतको दृष्टिकोण यसरी व्यक्त भएको छ "प्रजातान्त्रिक शासन व्यवस्थामा सरकार जनताप्रति उत्तरदायी हुने भएकाले उसका काम कारवाहीहरुमा पारदर्शिता हुन आवश्यक छ। यसैबाट देशका जनताहरुलाई सरकारमा रहेका आफ्ना प्रतिनिधिहरुले गरेका सार्वजनिक कामहरुको जानकारी भै सरकार ले उत्तरदायित्वपूर्ण किसिमले काम गरे वा नगरेको समीक्षा गर्ने अवसर प्राप्त हुन्छ। त्यसैले श्री ५ को सरकारले आफ्ना नीति र आफूले गरेका सबै महत्वपूर्ण निर्णय तथा सार्वजनिक कार्यहरुको जानकारी जनतालाई समय समयमा दिनु पर्छ। यो उसको नैतिक कर्तव्य र जिम्मेवारी हो। यिनै कुराहरुलाई आत्मसात् गरेर हाम्रो नयाँ संविधानले जनतालाई सुसूचित हुने अधिकार मौलिक अधिकारको रुपमा प्रत्याभूत गरेको छ। सार्वजनिक महत्वका विषयमा सरकारले अपनाएको नीति र गरेको निर्णय र कामहरुको सम्बन्धमा जानकारी दिने एकातर्फ सरकारको कर्तव्य हो भने अर्कोतर्फ त्यस्तो सूचना माग्ने र पाउने नागरिकको अधिकार पनि हो।"

(च) श्री सर्वोच्च अदालतको समक्ष संविधानको भाग १७ मा भएको राजनैतिक संगठनहरु स्थापना गर्ने, दर्ता गर्ने लगायतका व्यवस्थाहरुको मूल्यांकन गर्नु पर्ने अवस्था पनि परेको छ। धारा ११२ को उपधारा ३ ले प्रष्टसंग "धर्म सम्प्रदाय, जात जाति वा क्षेत्रीयताको आधारमा गठित राजनैतिक संगठन वा दललाई निर्वाचन आयोगले राजनैतिक संगठन वा दलको रुपमा मान्यता दिने छैन" भन्ने व्यवस्था गरेको छ। साथै धारा ११३ (३) मा "कुनै राजनैतिक संगठन वा दलको नाम, उद्देश्य, चिन्ह वा झण्डा धार्मिक, साम्प्रदायिक, देशलाई विखण्डित गर्ने प्रकृतिको हुन हुँदैन" भन्ने लेखिएको छ। यस प्रावधानलाई दृष्टिगत गरी निर्वाचन आयोगले खगेन्द्रजंग गुरुङले खोलेको "नेपाल राष्ट्रिय जनजाति पार्टी" लाई दर्ता गर्न इन्कार गरे उपर खगेन्द्रजंग गुरुङले निर्वाचन आयोग विरुद्ध परमादेशको रिट माग गर्दै (०४७ को रि.न. ११८९) मुद्दा दायर गर्नु भयो। सो मुद्दामा ०४७-१२-१७-१ का दिन निर्णय दिँदै मा.न्या. श्री सुरेन्द्रप्रसाद सिंह तथा मा.न्या. श्री त्रिलोकप्रताप राणाले निर्वाचन आयोगको निर्णयलाई समर्थन गर्दै "जनजाति भन्ने नामले कुनै खास वर्गलाई अर्थ्याउने र भिन्न भाषा, संस्कृति धर्म नस्ल जातिहरुले मातृस्थलको आधारमा स्वशासित प्रान्त कायम गर्दा साम्प्रदायिक प्रकृतिको भई संविधान बमोजिम निर्वाचनको लागि मान्यता प्राप्त गर्न सक्तैन। त्यस्तो राजनैतिक दल दर्ता गर्न समेत मिल्ने देखिँदैन" भन्ने निर्णय दिनु भएको छ।

संविधानले देशको राजनीतिमा सशक्त योगदान गर्न सक्षम पार्टीहरुको निर्माण भएमा यसबाट सकारात्मक योगदान पुग्न जाने कुरालाई हृदयंगम गरी हरेक पार्टीले प्रतिनिधि सभामा खसेको मतको ३% मत नल्याएमा त्यस्तो पार्टीले कानूनी मान्यता नपाउने तथा त्यस्ता पार्टीबाट जित्ने उम्मेदवारले सदनमा स्वतन्त्र हैसियतमा स्थान पाउने व्यवस्था समेत गरेको छ। दोश्रो पल्टको निर्वाचनमा त्यस्तो पार्टीले आफ्नो चुनाव चिन्हमा लड्न नपाउने व्यवस्था संविधानमा रहेको समेतका कारण काठमाण्डौ जिल्लाको ५ नं. क्षेत्रमा उप निर्वाचन हुँदा उत्पन्न समस्याले उल्लेखित संवैधानिक प्रावधानका विरुद्ध सर्वोच्च अदालतको सहारा खोजियो। मुद्दाका निवेदक प्रशान्त महर्जन नेपाल किसान मजदूर पार्टीबाट उम्मेदवार भएका थिए। पहिलो आम निर्वाचनमा उक्त पार्टीले ३% मत नल्याएको कारण संवैधानिक प्रावधानको आधारमा निर्वाचन आयोगले निज प्रशान्त महर्जनलाई स्वतन्त्र लड्न सक्ने तर पार्टीको नाउँबाट लड्न नसक्ने जनाउँदै मनोनयन पत्र दिन इन्कार गऱ्यो। यसलाई राजनैतिक स्वतन्त्रता तथा संविधान प्रतिकूल ठहराइ माग गर्दै दायर भएको प्रशान्त महर्जन विरुद्ध निर्वाचन आयोग भएको उत्प्रेषणको (२०४७ सालको रि.नं. १९८९) मुद्दामा सर्वोच्च अदालतले संविधानलाई व्याख्या गर्दै "राजनैतिक दलको प्रतिनिधिको हैसियतले मनोनयनपत्र दाखिल गर्न नपाउने स्वतन्त्र भई मनोनयन पत्र दाखिला गर्नु पर्ने भन्ने निर्णय राजनैतिक दलको रुपमा निर्वाचनमा

भाग लिन पाउने राजनैतिक दलको मौलिक हक कुण्ठित गरी निर्वाचन अधिकृतले निर्णय गरेको......, निर्वाचन सम्बन्धी हक स्वेच्छामा निर्भर गर्ने प्रकृतिको हक हो। तसर्थ निर्वाचनमा भाग लिन चाहने तर तोकिएको शर्त पूरा गर्न सक्ने र नसक्ने दुबै प्रकारका राजनैतिक दल हुने हुनाले निर्वाचनमा दलको हैसियतबाट भाग लिनबाट वञ्चित गर्न मिल्दैन" भनी निर्वाचनमा भाग लिन पाउने अधिकारको संरक्षण गरेको छ।

सर्वोच्च अदालत मानव अधिकारप्रतिको आफ्नो दायित्वमा निकै चनाखो रहन खोजेको देखिन्छ। यस क्रममा सर्वोच्च अदालको निर्णयमा अभिव्यक्त कुराहरु निकै उपयुक्त देखिन्छन् । इमानसिंह गुरुङको मुद्दामा निर्णय दिंदै प्र.न्या. श्री विश्वनाथ उपाध्यायले लेख्नु भएको छ- "हाम्रो वर्तमान शासन व्यवस्था एउटा प्रजातान्त्रिक शासन व्यवस्था हो। यो व्यवस्थामा कानून सर्वोपरि भएकोले सबैले कानून र संविधानको अधिन रहेरै आफ्नो अधिकार को प्रयोग र कर्तव्यको पालन गर्नु पर्दछ। यो कुरा सबैले खास गरी देशको शासन व्यवस्थालाई संविधान र कानून बमोजिम उत्तरदायीपूर्ण रुपमा सञ्चालन गर्ने कर्तव्य भएको सरकारी निकाय र पदाधिकारीहरुले बुझ्नु र आत्मसात् गर्नु आवश्यक छ।

# परिच्छेद – ६

# संसद् र मानव अधिकार

नेपाल अधिराज्यको संविधान २०४७ अनुसार श्री ५, प्रतिनिधि सभा र राष्ट्रिय सभा नामका दुई सदन सहितको व्यवस्थापिका संसद् हो। संविधानले संसद्लाई सर्वोच्च स्थान दिएको छ र यस दृष्टिबाट हेर्दा संसद् सर्वाधिकार सम्पन्न अंगको रुपमा रहेको छ। संसदीय प्रणाली अन्तर्गत नेपालको संसद् बेलायतको संसद् तथा भारतीय संसद् भन्दा कमजोर छैन।

नेपालमा २०४६ सालसम्म एकछत्र सार्वभौमसत्ता प्रयोग गरि आएको राजसंस्था वर्तमान संविधान अन्तर्गत संवैधानिक राजतन्त्रमा परिणत भएको छ। श्री ५ लाई नेपालको राष्ट्रियता एवं नेपाली जनताको एकताको प्रतीकको रुपमा संविधानले मान्यता प्रदान गर्दै नेपाली जनताको हित र समुन्नतिका लागि संविधानको पालना र संरक्षण गर्ने दायित्व सुम्पेको छ। संसद्मा श्री ५ को स्थान राष्ट्र प्रमुखको हैसियतको रहेको छ। यस अन्तर्गत श्री ५ बाट संसद्को अधिवेशनको आव्हान तथा अन्त्य गर्ने, प्रतिनिधि सभाका सम्पूर्ण सदस्य संख्याको १/४ सदस्यले प्रतिनिधि सभाको बैठक बोलाउन वाञ्छनिय छ भनी समावेदन गरेमा समय तोकी प्रतिनिधि सभाको बैठक बोलाउन, संसद्को कुनै वा दुबै सदनको संयुक्त बैठकलाई सम्बोधन गर्ने, प्रत्येक सालको पहिलो अधिवेशन प्रारम्भ भएपछि दुबै सदनको संयुक्त बैठकलाई सम्बोधन गर्न सक्ने व्यवस्था छ। श्री ५ बाट संसद्को दुबै वा कुनै सदनलाई रायका लागि सन्देश पठाउन सकी बक्सन्छ। श्री ५ बाट संसद्द्वारा पारित विधेयक स्वीकृतिको लागि पेश भएकोमा पुन: विचार विमर्श हुन आवश्यक छ भन्ने ठहराइ पुन: फिर्ता पठाउन सकिबक्सिन्छ। संसद्बाट पारित विधेयकमा श्री ५ बाट ३० दिनभित्र स्वीकृत भएपछि सो विधेयक ऐन बन्दछ। श्री ५ बाट प्रधानमन्त्रीको सिफारिशमा प्रतिनिधि सभाको विघटन गरी पुन: ६ महिना भीत्र निर्वाचन हुने मिति समेत तोकी बक्सन सक्नेछ।

प्रतिनिधि सभा बालिग मताधिकारको "एक व्यक्ति एक मत" को आधारमा प्रत्यक्ष तर गोप्य मतदानद्वारा छानिएका प्रतिनिधिहरुको सभा हो। नेपाल अधिराज्यका ७५ जिल्लालाई जनसंख्याको आधारमा छुट्टाछुट्टै निर्वाचन क्षेत्रमा विभाजन गरी प्रत्येक क्षेत्रबाट एक सदस्यको निर्वाचन गरिन्छ। यस्ता निर्वाचन क्षेत्र २०५ वटा छन्। प्रतिनिधि सभाको कार्यकाल संकटकालीन स्थितिको कारण १ वर्ष बढाउन सकिने अवस्था बाहेक ५ वर्ष गरिएको छ। १८ वर्ष उमेर पुगेका प्रत्येक नागरिकलाई मतदान गर्ने अधिकार प्राप्त छ। कुनै पनि उम्मेदवार एकभन्दा बेसी निर्वाचन क्षेत्रबाट उम्मेदवार हुन पाउँदछ। संसद् सदस्यको योग्यता निर्धारित गरिएका छन् र कुनै व्यक्ति अयोग्य भएको छ भन्ने कुराको अन्तिम निर्णय सर्वोच्च अदालतको प्रधान न्यायाधीश वा निजले तोकेको सर्वोच्च अदालतको अर्को न्यायाधीशले गर्दछ। प्रत्येक संसद् सदस्यले संसद्मा पहिलो पटक भाग लिनुअघि निर्धारित रुपमा सपथ गर्नु पर्दछ। प्रतिनिधि सभाको अध्यक्षता गर्न प्रतिनिधि सभाले आफ्ना सदस्यबाट एकजना सभामुख र एकजना उपसभामुखको निर्वाचन गर्दछ। सभामुखको अनुपस्थितिमा उपसभामुखले अध्यक्षता गर्दछन्। संसद्मा श्री ५, श्री ५ बडामहारानी र श्री ५ का उत्तराधिकारीको आचरणको सम्बन्धमा, अदालतमा विचाराधीन रहेको कुनै मुद्दा सम्बन्धमा र कुनै न्यायाधीशले आफ्नो कर्तव्य पालनको सिलसिलामा गरेको कुनै कार्यको सम्बन्धमा छलफल गर्न प्रतिबन्ध लगाइएको छ। उल्लेखित बाहेक अरु कुरामा विधिवत छलफल गर्ने कुरामा पूर्ण वाक स्वतन्त्रता संसद् सदस्यलाई प्राप्त छ।

राष्ट्रिय सभा स्थायी सदन हो र यसमा जम्मा ६० जना सदस्यहरु रहन्छन् जसमध्ये ३५ जना सदस्यहरु प्रतिनिधि सभाद्वारा समानुपातिक प्रतिनिधित्वको सिद्धान्त बमोजिम एकल संक्रमणीय मतको आधारमा, पन्ध्र जना सदस्यहरु प्रत्येक विकास क्षेत्रका स्थानीय निकायका प्रमुख, उप प्रमुख तथा सदस्यहरु मतदाता रहेको निर्वाचन मण्डलको एकल संक्रमणीय मतको आधारमा निर्वाचित हुन्छन्। बाँकी १० जना राष्ट्रिय जीवनका विभिन्न क्षेत्रमा विशिष्ट योगदान पुऱ्याएका व्यक्तिहरुमध्येबाट श्री ५ बाट मनोनीत व्यक्तिहरु रहने व्यवस्था छ। राष्ट्रिय सभाका एक तिहाई सदस्यहरुको पदावधि हरेक दुई वर्षमा समाप्त हुन्छ। राष्ट्रिय सभाका सदस्यको पदावधि ६वर्षको हुन्छ। राष्ट्रिय सभाको अध्यक्षता गर्न राष्ट्रिय सभाले आफ्ना सदस्यहरु मध्येबाट एकजना अध्यक्ष र एकजना उपाध्यक्ष निर्वाचन गर्दछ।

नेपालको संविधानले संसद्भित्र समिति प्रणाली लागू

गरेको छ। यस अनुसार विभिन्न किसिमका स्थायी अस्थायी समितिहरु गठन गर्न सकिन्छ। संविधानले प्रतिनिधि सभालाई विभिन्न स्थायी तथा अस्थायी समितिहरु गठन गर्न सक्ने अधिकार दिएको छ भने राष्ट्रिय सभाले राष्ट्रिय सभा नियमावली अन्तर्गत मात्र स्थायी अस्थायी समिति गठन गर्न सक्तछ। दुई सदन बीचको कार्य प्रणालीलाई व्यवस्थित गर्न कुनै विधेयकमा रहेको मत भिन्नता अन्तर्गत वा अन्य कुनै खास कार्यका लागि प्रतिनिधि सभा र राष्ट्रिय सभाको सदस्य संख्याको अनुपात २:१ को हिसावले बढिमा १५ जना सदस्य रहेको दुबै सदनको संयुक्त समिति गठन हुन सक्तछ।

प्रतिनिधि सभाका कार्यहरुलाई व्यवस्थित र प्रभावकारी ढंगबाट सम्पादन गर्न र सदस्यहरुलाई मुलुकको शासनमा बढी मात्रामा सरिक गराउने प्रयोजन अनुसार निम्न बमोजिमका स्थायी समितिहरुले निम्न क्षेत्रका विषयमा काम गर्दछन्।

(क) अर्थ समिति
- अर्थ र आर्थिक योजना

(ख) सार्वजनिक लेखा समिति
- सार्वजनिक लेखा र महालेखा परीक्षकको वार्षिक प्रतिवेदन

(ग) परराष्ट्र तथा मानव अधिकार समिति
- कानून, न्याय प्रशासन, संसदीय व्यवस्था प्रत्यायोजित व्यवस्थापन, मानव अधिकार विदेशी राष्ट्र र संघ संस्थासंग सम्बन्धित, अख्तियार दुरुपयोग अनुसन्धान आयोग र महान्यायाधिवक्ताको वार्षिक प्रतिवेदन

(घ) प्राकृतिक श्रोत र साधन तथा वातावरण संरक्षण समिति
- जलश्रोत, भूमिसुधार, भूमि व्यवस्था, कृषि, वातावरण संरक्षण, वन र भू-संरक्षण

(ङ) जनसंख्या तथा सामाजिक समिति
- शिक्षा, संस्कृति, स्वास्थ्य, श्रम र सामाजिक कल्याण

(च) राज्य व्यवस्था समिति
- मन्त्रिपरिषद्, गृह, सामान्य प्रशासन, रक्षा र लोकसेवा आयोगको वार्षिक प्रतिवेदन

(छ) विकास तथा सञ्चार समिति
- आवास भौतिक योजना, निर्माण यातायात सञ्चार, उद्योग, पर्यटन, आपूर्ति, वाणिज्य र स्थानीय विकास।

राष्ट्रिय सभा नियमावली २०४८ अन्तर्गत निम्न समितिहरु राष्ट्रिय सभामा गठन गरिएका छन् :

(क) दुर्गम क्षेत्र समिति - यस समितिले नेपाल अधिराज्यमा र सामाजिक र आर्थिक रुपबाट विपन्न दुर्गम तथा अविकसित क्षेत्रहरुमा श्री ५ को सरकारको शिक्षा, स्वास्थ्य, खानेपानी, यातायात जस्ता आधारभूत सुविधाहरु के कति पुऱ्याउन सकेको छ त्यसबाट स्थानीय जनजीवनमा के कस्तो प्रभाव परेको छ त्यसको अध्ययन गरी राय र सुझाव पेश गर्दछ।

(ख) प्रत्यायोजित व्यवस्थापन तथा सरकारी आश्वासन समिति - यसले संसदद्वारा प्रत्यायोजित अधिकार बमोजिम बनाइएका नियम, विनियम तथा जारि गरिएका आदेशहरु वा सूचनाहरु प्रत्यायोजित व्यवस्थापनको सीमाभीत्र रही गरिएका छन् छैनन् र मन्त्रिपरिषद्का सदश्यहरुले श्री ५ को सरकारको तर्फबाट सभामा समय समयमा दिएका आश्वासनहरुलाई पूरा गर्न श्री ५ को सरकार-द्वारा के कस्ता कदमहरु उठाइएका छन् हेरी प्रतिवेदन गर्दछ।

उपरोक्त बाहेक राष्ट्रिय सभाका अध्यक्ष तथा राष्ट्रिय सभा स्वयंले आवश्यकतानुसार विभिन्न समितिहरु गठन गर्न सक्तछन्।

नेपालमा २०४६ को सफल जन आन्दोलनको परिणाम स्वरुप मिति २०४७ वैशाख ६ गतेका दिन नेपाली कांग्रेस, संयुक्त वाममोर्चा तथा राजाका प्रतिनिधि सम्मिलित संयुक्त अन्तरिम मन्त्रिपरिषद् बन्यो र यस मन्त्रिपरिषद्ले नेपालको संविधान २०१९ अन्तर्गतको व्यवस्थापिकाको अधिकार ०४७/७/२२ गते सम्म र सो उप्रान्त नेपाल अधिराज्यको संविधान २०४७ अनुसारको संसद्को अधिकार प्रयोग गऱ्यो। प्रथम प्रतिनिधि सभाको निर्वाचन २०४८ साल वैशाख २९ गतेका दिन भयो र निर्वाचनको नतिजा निम्न बमोजिम रह्यो :

| | |
|---|---|
| (क) नेपाली कांग्रेस | - ११० सदस्य |
| (ख) नेकपा (एमाले) | - ६९ सदस्य |
| (ग) संयुक्त जनमोर्चा | - ९ सदस्य |
| (घ) नेपाल सद्भावना पार्टी | - ६ सदस्य |
| (ङ) राष्ट्रिय प्रजातन्त्र पार्टी (चन्द) | - ३ सदस्य |
| (च) ने. क. पा. (प्रजातन्त्रवादी) | - २ सदस्य |
| (छ) नेपाल मजदूर किसान पार्टी | - २ सदस्य |
| (ज) राष्ट्रिय प्रजातन्त्र पार्टी (थापा) | - १ सदस्य |
| (झ) स्वतन्त्र | - ३ सदस्य |

नेपाली कांग्रेस पार्टीले बहुमत ल्याएको हुँदा २०४८ साल जेठ १५ गते गिरिजाप्रसाद कोइरालाको नेतृत्वमा मन्त्रिपरिषद्को गठन भयो । प्रतिनिधि सभाको पहिलो अधिवेशन ०४८/२/२२ गते बस्यो । ०४८/३/१२ गतेका दिन राष्ट्रिय सभाको निमित्त निर्वाचन भयो । राष्ट्रिय सभामा दलीय स्थिति निम्न रहेको छ :

| | | |
|---|---|---|
| (क) नेपाली कांग्रेस | - | ३१ जना |
| (ख) नेकपा (एमाले) | - | १६ जना |
| (ग) संयुक्त जनमोर्चा | - | २ जना |
| (घ) नेपाल सद्भावना पार्टी | - | १ जना |
| | | ५० जना |
| श्री ५ बाट मनोनीत | - | १० जना |

## १. कार्य विवरणको लेखा-जोखा

### १.१ अन्तरिम मन्त्री परिषद्

अन्तरिम कालमा व्यवस्थापकीय अधिकार प्रयोग गर्दै मन्त्रिपरिषद्ले पञ्चायत व्यवस्थालाई मद्दत गर्ने तथा बहुदलीय शासन व्यवस्थाको अनुकूल नहुने झण्डै २४ वटा ऐन कानूनहरु खारेज गऱ्यो । मन्त्री परिषद्ले वाक तथा प्रकाशन स्वतन्त्रता ऐन जस्ता कैयौं मानव अधिकारको उल्लंघन गर्ने कानूनलाई खारेज तथा संशोधन गऱ्यो । ट्रेड युनियन क्रियाकलाप गर्न छुट दियो तथा मानिसलाई निर्वाध रुपमा संघ संस्था खोल्ने अधिकार रोक्ने, कानूनहरु खारेज गरी संघ संस्था दर्ता गर्ने सञ्चालन गर्ने अधिकार दियो । मुलुकी ऐनको मृत्युदण्ड दिने ज्यान सम्बन्धीको प्रावधान खारेज गर्ने लगायत धेरै कामहरु गऱ्यो । यसै अवधिमा मानव अधिकार सम्बन्धी अनुवन्ध, ऐच्छिक प्रोटोकल तथा यातना तथा क्रूर व्यवहार सम्बन्धी अभिसन्धि, बाल अधिकार सम्बन्धी अभिसन्धिहरुलाई अनुमोदन प्रदान गरियो र सन्धि ऐनको निर्माणद्वारा यस्ता विषयहरु व्यवस्थित गरिए । अन्तरिम सरकारले व्यवस्थापकीय अधिकार प्रयोग गर्दा निम्न कुराहरु मानव अधिकारको दृष्टिबाट अवहेलना गर्ने तथा कानूनी शासनको प्रतिकूल मानी आलोच्य बन्न पुगेका छन् ।

(क) मानव अधिकारको उल्लंघन गर्ने ऐनहरु यथावत राखिएको - यसमा केही सार्वजनिक (अपराध र सजाय) ऐन २०२७ लाई लिन सकिन्छ । किनकि यही ऐन लगाएर राजनैतिक कार्यकर्ता तथा अन्यको मानव अधिकारको उल्लंघन गरिन्थ्यो । यस ऐनलाई अझ सजायको मात्रा बढाएर संसद्ले कायमै राखेको छ ।

(ख) सार्वजनिक सुरक्षा ऐन जस्तो मानिसका मानव अधिकार उल्लंघन गर्ने ऐनलाई संशोधन गरी मानव अधिकार उल्लंघन गर्ने थप व्यवस्था गरियो । जस अनुसार सरकारले चाहेमा देश बाहिर जाने स्वतन्त्रतामा जुनसुकै बेला आघात पार्न सकिने भएको छ ।

(ग) प्रजातन्त्रको पुन:बहाली पश्चात् कानूनी शासनको सबैभन्दा भयंकर उल्लंघन बौद्धिक समुदायको संस्था त्रिभुवन विश्वविद्यालयमा गरियो । विश्वविद्यालयका पदाधिकारीहरुले आफूले प्रयोगै गर्न नपाउने अधिकार प्रयोग गरी कानूनको अख्तियारी बेगरै कार्यकारिणी अधिकार प्रयोग गरि सहायक प्राध्यापकलाई स्थायी, सहप्राध्यापकलाई उपप्राध्यापकमा र उप प्राध्यापकलाई सहप्राध्यापकमा बढुवा तथा अन्य विभिन्न पदमा नियुक्ति लगायत अनगिन्ती गैर कानूनी कामहरु गरे । त्यस्ता गैर कानूनी कामलाई अन्तरिम मन्त्री परिषद्ले दुई दिनका निमित्त नयाँ ऐन बनाई भूतलक्षी (Retrospective) तवरबाट लागू गरी त्रिभुवन विश्वविद्यालयका सबै गैर कानूनी काम, कारवाही तथा निर्णयलाई मान्यता प्रदान गरेको छ । सो ऐन तथा सो अनुरुप गरिएका काम कार्वाहीलाई अवैध (Ultravides) गरी पाउनेबारे सर्वोच्च अदालतमा मुद्दा चलिरहेको छ ।

(घ) छापाखाना र प्रकाशन स्वतन्त्रता अकुण्ठित तवरबाट संविधानमा रहेको छ । तर छापाखाना र प्रकाशन सम्बन्धी ऐनको २०४८ को दफा १४ र १५ ले नेपाल अधिराज्यको संविधान २०४७ को धारा १३ को उल्लंघन गर्दछ । किनकि यसबाट पूर्व प्रतिवन्ध लगाउन सक्ने अधिकार सरकारलाई प्राप्त हुन्छ ।

### १.२ संसद्का क्रियाकलाप

सन् १९९२ को वर्षसम्ममा संसदका ३ वटा अधिवेशनहरु सञ्चालन भैसकेका छन् । यस अवधिमा संसद्को क्रियाकलापको संक्षिप्त झलक तल उल्लेख गरिएको छ ।

**प्रथम अधिवेशन**

प्रतिनिधि सभा

(१) **वैठक सम्बन्धी विवरण -**

प्रतिनिधि सभाको प्रथम अधिवेशन ०४८/३।६ देखि ०४८/६/१३ गते सम्म जम्मा १०२ दिन चालू रह्यो। ती दिनहरु मध्ये ७३ दिनहरुमा ९५ पटक बस्यो र बैठकले ५०५ घण्टा ३७ मिनेट लियो।

(२) संकल्प -

प्रतिनिधि सभामा निम्न दुईवटा संकल्पहरु स्वीकृत गरिए :

(क) देशमा विद्यमान वास्तविक सुकुम्वासी समस्या समाधान गर्न श्री ५ को सरकारले एक उच्च स्तरीय आयोग गठन गरोस्।

(ख) पिछडिएका वर्ग, जात जाति, जनजाति र समुदायको भाषा, संस्कृति लिपि र कलाको यथोचित विकास गरियोस्।

(३) जरुरी सार्वजनिक महत्वको प्रस्ताव -

प्रतिनिधि सभामा जम्मा ११ वटा जरुरी सार्वजनिक महत्वका प्रस्तावमाथि छलफल गरियो जसमध्ये अर्घाखाँची, रौतहट, खोटाङमा भएका अशान्ति एवं गोलीकाण्ड, कर्मचारी संगठनले सञ्चालन गरेको आन्दोलन, शान्ति सुरक्षाको अभाव, नागरिकता सम्बन्धी समस्या इत्यादि मानव अधिकार सम्बन्धी कुराका अलावा मूल्य वृद्धि, खडेरीजस्ता समस्याहरुका छलफलका विषय रहे।

(४) ध्यानाकर्षण -

प्रतिनिधिसभाको प्रथम अधिवेशनमा जम्माजम्मी ४४ वटा विषयमा सम्वन्धित मन्त्रीहरुको ध्यानाकर्षण गराइयो जसमध्ये अधिकांश विषयहरु सुसूचित हुने अधिकार, मानिसका वैयक्तिक स्वतन्त्रता, खाद्यान्न अभाव, अवैध तालावन्दी, महामारी, चोरी, डकैती, हत्या, वतावरण प्रदूषणजस्ता विषयहरु प्रमुख रहे।

(५) विधेयकहरु -

प्रतिनिधि सभाको प्रथम अधिवेशनमा जम्मा १८ वटा विधेयक पारित गरिए।

(६) प्रश्नहरु -

प्रतिनिधि सभाको प्रथम अधिवेशनमा सोधिएका प्रश्नहरुको विवरण निम्न रह्यो-

मौखिक - १२२०
लिखित - १०९
अल्पसूचना - ७५

राष्ट्रिय सभा

(१) वैठक सम्बन्धी विवरण -

राष्ट्रिय सभाको प्रथम अधिवेशन २०४८/३/१३ गते शुरु भै ०४८/६/१३ सम्म जम्मा ९५ दिन चालू रह्यो। ती दिनहरुमध्ये ४० दिनमा ५६ पटक बैठक बस्यो र बैठकले जम्मा ११० घण्टा ११ मिनेट समय लियो।

(२) संकल्प -

राष्ट्रिय सभाले प्रथम अधिवेशनमा निम्न एक संकल्प स्वीकृत गऱ्यो।

(क) सुदूर पश्चिमाञ्चल क्षेत्रमा विकासका पूर्वाधारहरु खडा गर्न श्री ५ को सरकारले विशेष योजना तर्जुमा गरी कार्यान्वियन गरोस्।

(३) जरुरी सार्वजनिक महत्वको प्रस्ताव -

राष्ट्रिय सभामा पनि जम्मा ११ वटा जरुरी सार्वजनिक महत्वको प्रस्ताव उपर छलफल गरिए, जसमध्ये निजामती कर्मचारी संगठनका कर्मचारीलाई निलम्बन गरिएको, सुकुम्वासी समस्या, नागरिकता, मूल्य वृद्धि, न्यायपालिकाको क्षेत्रमा विद्यमान अन्योल तथा अनिश्चितता लगायत चेलीबेटीको बिक्री तथा शोषण जस्ता महत्वपूर्ण मानव अधिकार सम्बन्धी मुद्दाहरुमा छलफल गरिए।

(४) ध्यानाकर्षण -

राष्ट्रिय सभाको प्रथम अधिवेशनमा २५ वटा विषयमा सम्बन्धित मन्त्रीहरुको ध्यानाकर्षण गराइयो जसमा जनताको सुसूचित हुने अधिकार, शिक्षा प्रणाली, दलित जातिको उत्थान, प्रहरी हिरासतमा यातना, खाद्यान्नको अभाव, औषधि उपचारको अभाव जस्ता विषयहरु प्रमुख रहे ।

(५) विधेयकहरु -

राष्ट्रिय सभाले जम्मा ६ वटा विधेयकहरु पारित गऱ्यो ।

(६) प्रश्नहरु -

राष्ट्रिय सभाको प्रथम अधिवेशनमा सोधिएका प्रश्नहरुको विवरण निम्न रह्यो -

मौखिक - १६२
लिखित - ८
अल्पसूचना - १

**द्वितीय अधिवेशन**

प्रतिनिधि सभाको द्वितीय अधिवेशन ०४८/११/९ देखि ०४८/१२/२ गतेसम्म र राष्ट्रिय सभाको द्वितीय अधिवेशन ०४८/१२/७ गतेसम्म चल्यो । प्रतिनिधि सभाले जम्मा २४ दिन चलेको मध्ये २० दिनमा २४ पटक बैठक बसी १०१ घण्टा ३० मिनेट समय लियो । राष्ट्रिय सभा चालू रहेको २९ दिनमध्ये २१ दिनमा २५ पटक बैठक बसी ६० घण्टा ५० मिनेट समय लियो ।

प्रतिनिधि सभा तथा राष्ट्रिय सभाको द्वितीय अधिवेशनमा कुनै पनि संकल्प पेश गरिएन ।

प्रतिनिधि सभामा जम्मा २ वटा जरुरी सार्वजनिक महत्वका प्रस्तावमाथि छलफल गरिए जसमध्ये एउटा शान्ति सुरक्षामा सुधार ल्याउन पर्ने प्रस्ताव गृहमन्त्रीसंग सम्बन्धित थियो भने अर्को खाद्यान्न लगायतका वस्तुहरुको मूल्य वृद्धि र अभाव भएको भन्ने प्रस्ताव आपूर्ती मन्त्रीसंग सम्बन्धित थियो । राष्ट्रिय सभामा जरुरी सार्वजनिक महत्वका ५ वटा प्रस्ताव उपर छलफल भयो । जसमध्ये प्रधानमन्त्रीको भारत भ्रमणताका गरिएका सन्धि, सम्झौताबारे सदनलाई कुनै जानकारी नदिएको बारेको प्रस्ताव जलस्रोत मन्त्रीसित सम्बन्धित, सदनको प्रथम अधिवेशन पश्चात् मुलुकमा हत्या, हमला, तोडफोड र लुटपीट समेतमा सरकारी नियन्त्रण हुन नसकेकोले असुरक्षाको स्थिति रहेको भन्ने प्रस्ताव गृह मन्त्रीसंग सम्बन्धित, अत्यधिक मूल्य वृद्धि भएको भन्ने प्रस्ताव आपूर्ति मन्त्रीसंग सम्बन्धित, समाजमा मादक पदार्थको अत्यधिक प्रयोग र प्रचलनले सामाजिक मूल्य मान्यता, नैतिकता र स्वास्थ्य क्षेत्रमा गम्भीर असर पुऱ्याएको भन्ने प्रस्ताव गृह मन्त्रीसित सम्बन्धित र श्री ५ को सरकारले विदेशी मुद्राको विनिमय दर सम्बन्धी नीतिमा परिवर्तन गरेबाट मुलुकको औद्योगिक र आर्थिक स्थितिमा प्रभाव परेको भन्ने प्रस्ताव अर्थ मन्त्रीसंग सम्बन्धित थियो ।

प्रतिनिधि सभामा कला र संस्कृतिको संरक्षण, शिक्षा नीतिको तर्जुमा, वन र वन्य जन्तुहरुको संरक्षण, प्राथमिक शिक्षा मातृभाषामा दिनु पर्ने, सञ्चार माध्यमलाई तटस्थ, निष्पक्ष एवं वस्तुनिष्ठ बनाउनु पर्ने, नदी नियन्त्रण, पर्यटन विकास जस्ता १४ वटा विषयमा सम्बन्धित मन्त्रीहरुको ध्यानाकर्षण गराइयो । राष्ट्रिय सभामा घरसंघाको पुर्जी, उच्च माध्यमिक शिक्षा पद्धतिजस्ता १२ वटा मूलभूत आवश्यकताका महत्वपूर्ण कुरातर्फ मन्त्रीहरुको ध्यानाकर्षण गराइयो ।

प्रतिनिधि सभामा १३ वटा विधेयक र राष्ट्रिय सभामा ७ वटा विधेयकहरु पारित गरिए ।

प्रतिनिधि सभामा मौखिक ३९५ एवं लिखित ४० प्रश्नहरु र अल्पसूचना १ तथा राष्ट्रिय सभामा मौखिक ७६, लिखित १ प्रश्नहरु र १९ वटा अल्पसूचना सोधिए ।

प्रतिनिधि सभाको द्वितीय अधिवेशनमा भारत तथा अन्य मित्र राष्ट्र तथा अन्तर्राष्ट्रिय संघ संस्थासंग भएको सम्झौता, सन्धि र समझदारीहरु टेवुल गरिए । राष्ट्रिय सभामा भारतसंग भएका सन्धि, संझौता र समझदारीका कागजपत्रहरु मात्र टेवुल गरिए ।

राष्ट्रिय सभामा संविधान संशोधन सम्बन्धी प्रस्ताव बैठकमा प्रस्तुत हुँदा बैठकले अस्वीकृत गऱ्यो ।

**तृतीय अधिवेशन**

प्रतिनिधि सभाको तृतीय अधिवेशन २०४९ साल आषाढ १५ गते सोमबार देखि प्रारम्भ भै २०४९ साल भाद्र ३१ गते बुधवार सम्म जम्मा ८० दिन चालू रह्यो । यी दिनहरुमध्ये ५६ दिनमा ६२ पटक बैठक बस्यो र बैठकले ४१७ घण्टा ३० मिनेट समय लियो । यही अवधि चलेको राष्ट्रिय सभाले जम्मा १४९ घण्टा समय लिएको थियो ।

श्री ५ बाट २०४९ साल आषाढ १७ गते बुधवार अपरान्ह ४.३० बजे दुवै सदनको संयुक्त बैठकलाई संबोधन गरिबक्स्यो र आषाढ २६ गते अर्थ मन्त्रीले बजेट पेश गर्नु भयो । संसदले ०४९ साल साउन १६ गतेका दिन नुवाकोट

जिल्लामा थाई टि.जी. ३११ एयर बस दुर्घटना ग्रस्त हुदा त्यस्मा यात्रा गरिरहेका यात्रुको असामयिक निधनप्रति गहिरो शोक व्यक्त गर्दै बहाहरुको आत्माको चिर शान्तिका लागि कामना गर्‍यो ।

अधिवेशन कालमा विभिन्न संवैधानिक आयोगहरुको ०४७।४८को वार्षिक प्रतिवेदन पेश गरिए । प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाको भारत भ्रमणको अवसरमा भएका सन्धि संझौता वा समझदारीहरु सम्बन्धी कागजातहरुको अध्ययन एवं छानवीन गरी प्रतिवेदन पेश गर्न गठित विशेष समितिको प्रतिवेदन समेत पेश भयो । यसै अधिवेशनमा श्री ५ को सरकारले पोल्याण्डसंग गरेको व्यापार सम्झौता लगायत वैदेशिक सहायता सम्बन्धमा भएका संझौताहरुको विवरवण एवं शिक्षा तथा संस्कृति मन्त्रालयले हस्ताक्षर गरी लागू गरेको पाटन दरबार संरक्षण योजना सम्बन्धी संझौता विवरण पेश गरियो ।

प्रतिनिधि सभाले महिलाहरुको अमर्यादित र असभ्य व्यवहार भैरहेको पृष्ठभूमिमा अबोध बालिकाहरुसंग गरिएका बलात्कारजस्ता जघन्य अपराध रोक्ने विषयको र सबै नेपालीले शाही सेनामा प्रवेश पाउन पर्दछ भन्ने विषयका दुई वटा संकल्प स्वीकृत गर्‍यो । राष्ट्रिय सभाले नेपाल अधिराज्यमा बातावरवण सन्तुलन राख्न र पानीको श्रोत वृद्धि गर्न श्री ५ को सरकारले प्रशस्त मात्रामा वृक्षरोपण गरी संरक्षण गर्ने कार्यक्रम सञ्चालन गरोस् भन्ने संकल्प स्वीकृत गर्‍यो । प्रतिनिधि सभामा ११ वटा जरुरी सार्वजनिक महत्वका प्रस्ताव प्रस्तुत गरिए जसमा मानव अधिकार तथा मौलिक-हकहरुको उल्लघंन भएको, कमैयाहरुलाई ऋण मुक्त गरी उनीहरुको बसोवास र रोजगारको व्यवस्था गरियोस् भन्ने, ०४८ साल चैत्र २४ गते काठमाण्डौ लगायत देशका विभिन्न भागहरुमा घटेका गोली काण्डका घटनाहरु, शान्ति सुरक्षाको व्यवस्था, भ्रष्टाचार र कमिशनतन्त्र, मंहगी, २०४६ को जनआन्दोलन पछि देशमा विपक्षीहरुलाई दवाउने, फसाउने, यातना दिने कार्य भएको भन्नेजस्ता मूलभूत प्रश्नहरु उठाइएका थिए ।

प्रतिनिधि सभामा २७ वटा र राष्ट्रिय सभामा २९ वटा जरुरी सार्वजनिक महत्वका विषयहरुमा सम्बन्धित मन्त्रीहरुको ध्यानाकर्षण गरियो । प्रतिनिधि सभामा उत्पत्ति भएका मूल विधेयक १४ र संशोधन विधेयक १० गरी जम्मा २४ र राष्ट्रिय सभामा मूल विधेयक ५ र संशोधन १२ गरी जम्मा १७ वटा विधेयक पारित गरिए ।

प्रतिनिधि सभामा १११८ मौखिक, ११५ लिखित र ५ अल्प सूचनाको प्रश्न सोधिए भने राष्ट्रिय सभामा ३५४ मौखिक २ लिखित र ४ अल्प सूचनाको प्रश्न सोधिए ।

श्री ५ महाराजधिराजबाट संसद्को तृतीय अधिवेशन २०४९ साल भदौ ३१ गते व बुधवार अपरान्ह ५ बजेदेखि अन्त्य गरिबक्स्यो ।

## अधिवेशन कालमा मानव अधिकार उल्लंघन

संसद् नै कानूनद्वारा नागरिकका मौलिक अधिकार हरुलाई कानूनी राज्यको सिद्धान्त अनुरुप उपयोग गर्ने, गर्न दिने वातावरण श्रृजना गर्ने प्रमुख निकाय हो । यसले संविधानद्वारा प्रदत्त कतिपय मौलिक हकको उपयोग गर्ने सम्बन्धमा आवश्यक पर्ने कानूनको निर्माण गरेकै छैन वा गर्ने चासो नै देखाएको छैन भने कतिपय कानून निर्माण गर्दा मानव अधिकार तथा संविधानको उल्लंघन गर्ने कानून निर्माण गरेको छ । मानव अधिकार उल्लंघन गर्ने कानूनलाई खारेज गर्नुको सट्टा अझ त्यसतर्फ बढी क्रियाशील हुने गराएको देखिएको छ । यस कुरालाई निम्न कुराले पुष्टि गर्दछन् :

(क) नेपाल अधिराज्यको संविधान ०४७ द्वारा प्रदत्त मौलिक हकहरु उपयुक्त कानून निर्माणद्वारा मात्र उपयोग र संरक्षण गर्न सकिने व्यवस्था भएको छ । यसक्रममा निम्न विषयमा कानूनको निर्माण नभएबाट मानिसका संविधानद्वारा प्रदत्त मौलिक हकहरु हनन भैनैरहेका छन् :

(१) फौजदारी न्याय सम्बन्धी हकको धारा १४ (४) द्वारा अनुसन्धान तहकिकात वा पुर्पक्षको सिलसिलामा वा अरु किसिमले थुनामा रहेको व्यक्तिलाई शारीरिक वा मानसिक यातना वा निर्मम अमानवीय वा अपमानजनक व्यवहार गरिएमा कानूनले निर्धारित गरे बमोजिम क्षतिपूर्ति पाउने हक प्रदान गरिएको छ । यस विषयमा हालसम्म कुनै कानून नबनेबाट प्रहरी यातनामा पर्ने व्यक्तिले क्षतिपूर्ति प्राप्त गर्नेतर्फ दावीसम्म गर्न सक्ने स्थिति छैन ।

(२) सूचनाको हक धारा १६ ले सुरक्षित गरेको छ । यो हकको सम्बन्धमा संसद्ले पुरानो पञ्चायत व्यवस्था अन्तर्गतको गोप्यता सम्बन्धी ऐन खारेज गरी नयाँ ऐन निर्माण नगरेबाट नागरिकको सूचना पाउने हक कुण्ठित भैराखेको छ ।

(३) धारा १८ ले संस्कृति तथा शिक्षा सम्बन्धी हकको संरक्षण गरेको छ । यस हकको प्रचलन गर्ने सम्बन्धमा नेपाल अधिराज्यभित्र बस्ने प्रत्येक समुदायले आफ्नो भाषा, लिपि र संस्कृतिको संरक्षण र सम्वर्द्धन गर्न र प्रत्येक समुदायले आफ्ना बालबालिकालाई आफ्नो मातृभाषामा प्राथमिक तहसम्म शिक्षा दिने गरी विद्यालय सञ्चालन गर्न पाउँदछ । यो हकको प्रचलन उचित कानूनको अभावमा कुण्ठित भएको छ ।

(४) धारा २० द्वारा प्रदत्त शोषण विरुद्धको हक उपयुक्त र प्रभावी कानूनको अभावमा शोषित, पीडित मानिसले उपभोग गर्न पाइराखेका छैनन् । नेपालमा कमैया प्रथा, हलिया प्रथा जस्ता कैयौं पुरातन प्रथाले गरीब, असहाय

मानिसको शोषण गरिहेका छन्, बाँधा सरह मानिसलाई प्रयोग गरिराखेका छन्। यो कुरा अनुसन्धानले प्रमाणित गरेको छ भने स्वयं संसद्मा सांसद् तथा मन्त्रीज्यूहरु बराबर उल्लेख गर्दै रहनु हुन्छ। तर यसलाई प्रभावी रुपमा रोक्नाका लागि उपयुक्त र प्रभावी कानूनको निर्माण आजसम्म हुन नसकेबाट मानव अधिकारको उल्लंघन व्यापक तवरबाट भैरहेको छ।

(५) धारा २२ द्वारा प्रदत्त गोपनीयताको हकको कसैले उल्लंघन गरेमा कस्तो र कसरी उपचार पाउने हो, कुन हदसम्म गोपनीयताको हक संरक्षण हुने हो भन्ने बारेमा कानूनको निर्माण हुन बाँकी नै देखिन्छ।

(ख) संसद्द्वारा बनाइएका कैयौं कानूनले मौलिक हक तथा संविधानको व्यवस्थाको उल्लंघन गर्ने वा गरिराखेका छन्। केही उदाहरणहरु तल उल्लेख गरिएका छन्।

(१) नेपाल अधिराज्यको संविधान २०४७ अनुसार नेपालको न्याय प्रणाली प्रतिद्वन्दात्मक पद्धति भएको छ। धारा ८४ अनुसार न्याय सम्बन्धी अधिकार अदालत तथा अन्य न्यायिक निकायबाट गरिनुपर्दछ। यो न्यायका मान्य सिद्धान्त तथा कानूनको शासनका निमित्त प्राथमिक आवश्यक कुरा पनि हो। संसद्ले यस्ता कैयौं कानून बनाएको छ जसले उपरोक्त संवैधानिक आसय तथा आदेशको उल्लंघन गर्दछन्। तल उल्लेख भएका ऐनहरुले सम्बन्धित निकायलाई आफै वादी आफै न्यायकर्ता जस्तो प्राकृतिक न्याय विपरीत न्याय निर्णय गर्ने अधिकार मात्र दिएको छैन, सजायको मात्रा पनि चर्कोसंग बढाएको छ।

क. फोहोर मैला प्रवन्ध तथा श्रोत परिचालन ऐनले केन्द्रलाई सजाय गर्ने अधिकार दिएको छ।

ख. बीमा ऐनले बीमा समितिलाई १० हजारसम्म जरिवाना गर्ने अधिकार प्रदान गरेको छ।

ग. हातहतियार खरखजाना ऐनले प्रजिअलाई मुद्दा हेर्ने अधिकार मात्र दिएको छैन अपितु यसले सजायको मात्रा ५ गुनासम्म बढाएको छ।

उल्लेख भए अनुसारका जस्तै कैयौं अन्य ऐनहरु छन् जस्तो चलचित्र (निर्माण, प्रदर्शन तथा वितरण) ऐन, खाद्य ऐन, जलश्रोत ऐन, खानेपानी संस्थान ऐन, बोनस ऐन, वन ऐन इत्यादि।

(ग) (१) फौजदारी मुद्दामा अभियुक्त दोषी हो भन्ने कुराको प्रमाण पुऱ्याउने भार अभियोग लगाउने पक्ष उपर रहने कुरा हो तर नेपालमा यस्ता कैयौं ऐनहरु हालसम्म कायम छन् जसले अभियोग लाग्नासाथ कसूर गरेको अनुमान गरी खण्डन गर्ने भार अभियुक्त उपर राखेका छन् जस्तो लागू औषध (नियन्त्रण) ऐन, विदेशीहरु सम्बन्धी ऐन।

(२) पञ्चायत कालमा मानव अधिकारको व्यापक उल्लंघन गर्ने कैयौं ऐनहरु थिए जसमध्ये धेरै खारेज गरिए पश्चात् केही ऐनहरु जस्तै सार्वजनिक सुरक्षा ऐन, केही सार्वजनिक (अपराध र सजाय) ऐन यद्यपि कायम छन्। यी ऐनहरु मूलत: मानव अधिकारको उल्लंघन गर्ने दृष्टिबाट बनेका हुन् र प्रजातन्त्रको पुनर्बहाली पश्चात् समेत सरकारले यी ऐनहरुको प्रयोग गरी मानव अधिकारको उललंघन गरिआएको छ। यस्ता प्रकृतिका यी ऐनहरुलाई संसद्ले यथावत मात्र राखेको छैन बरु त्यसमा मानव अधिकारको उल्लंघन गर्ने थप प्रावधान थपिएको, सजायको मात्रा बढाइएको समेत छ। यस्तो सार्वजनिक सुरक्षा ऐन अन्तर्गत देश बाहिर जान नदिने गरी सजाय गर्न सक्ने प्रावधान थप भएको छ भने केही सार्वजनिक अपराध र सजाय ऐन अन्तर्गत हुन सक्ने सजायको मात्रा बढाएर १० हजारसम्म जरिवाना र दुई वर्षसम्म कैद गर्न सकिने गरिएको छ।

(३) फौजदारी मुद्दामध्ये श्री ५ को सरकार वादी हुने मुद्दामा अपराधिक घटनाबाट पीडित व्यक्तिले अपराधबारे सूचना दिन्छ र उसको मुद्दामा हैसियत साक्षीसरह हुने कानूनी व्यवस्था छ। यस्तो स्थितिमा मानिसका संपत्ति, बैयक्तिक हक अधिकार हरुमा परेको आघातको उपचार गराउने निकाय प्रहरी हो। यस्ता कैयौं स्थितिहरु देखिएका छन् जसमा प्रहरीको अपराधीसंग साँठगाँठ रहेको हुन्छ। यसकारण प्रहरीले शुरुमा अपराधको सूचना नै दर्ता गर्न इन्कार गर्दछ, गरिहाले पनि अनुसन्धान तहकिकात गर्दैन, वा गलत तरिकाले तहकिकात गरी अपराधी छुटाउन मद्दत गर्दछ वा मुद्दा नै दायर नगर्ने धेरै घटनाहरु पाइएको छ। यस्तो क्रियाकलापबाट मानिसहरु पीडित हुन्छन् र उनीहरुका हकको संरक्षण हुन सक्तैन। यस्ता क्रयाकलाप गर्ने प्रहरी तथा निकाय उपर उजुर गर्ने र उपचार पाउने गरी कानून निर्माण हुन नसकेबाट मानव अधिकारको बराबर उल्लंघन भैरहेको छ। संसद्ले बनाएको वर्तमान सरकारी मुद्दा सम्बन्धी ऐनले पनि यस कुरातर्फ कुनै ध्यान दिएको छैन।

# परिच्छेद -७

# श्री ५ को सरकार र मानव अधिकार

नेपाल अधिराज्यको कार्यकारिणी अधिकार संविधान तथा अन्य कानूनबमोजिम श्री ५ र मन्त्रिपरिषद्मा निहित रहेको छ। सबै कार्यकारिणी कामहरु श्री ५ को सरकारको नाममा हुन्छ। संविधान तथा अन्य प्रचलित नेपाल कानूनको अधिनमा रही नेपाल अधिराज्यको शासन व्यवस्थाको सामान्य निर्देशन, नियन्त्रण र सञ्चालन गर्ने अभिभारा मन्त्रिपरिषद्उपर रहेको छ। नेपाल अधिराज्यको संविधानका विभिन्न धाराहरुले श्री ५ बाट गरिने धेरै कामहरु उल्लेख गरेको छ। त्यसो हुँदा श्री ५ को सरकारले गर्ने र श्री ५ बाट हुने काममा फरक हुन जाने हो कि भन्ने आशंका उत्पन्न हुन सक्तछ। यसलाई धारा ३५ (२) ले स्पष्ट गरी दिएको छ र सो अनुसार श्री ५ बाट मात्र वा मौसूफको स्वविवेकमा वा अन्य कुनै निकाय वा पदाधिकारीको सिफारिशमा गरिबक्सने भनी किटानी साथ व्यवस्था भएको कुराहरुमा सोहीअनुसार श्री ५ बाट हुन्छ र सो कुराहरु बाहेकका अरु सबै श्री ५ बाट हुने कार्यहरु मन्त्रिपरिषद्को सल्लाह र सम्मतिबाट मात्र हुन्छन्। मन्त्रिपरिषद्को सल्लाह र सम्मतिबाट हुने वा गरिने कामको विवरण विशाल छ। संविधानद्वारा श्री ५ बाट स्वविवेक प्रयोग गरेर गर्ने कामहरु अत्यन्तै सीमित गरिएका छन्। यस दृष्टिबाट हेर्दा श्री ५ ले मन्त्री परिषद्को सल्लाह बेगर कुनै काम गर्न सकिबक्सदैन र "राजाले कुनै गल्ती गर्दैन" भन्ने बेलायती स्थापित मान्यतालाई नेपाल अधिराज्यको संविधान ०४७ ले नेपालमा स्थापित गर्न खोजेको छ। मन्त्रीपरिषद्को सल्लाह र सम्मति प्रधानमन्त्री मार्फत जाहेर हुन्छ। श्री ५ मा मन्त्रिपरिषद् वा अन्य कुनै निकाय वा पदाधिकारीले कुनै सल्लाह वा सिफारिश चढाएको छ छैन वा के कस्तो सल्लाह वा सिफारिश चढाएको छ भन्ने प्रश्न कुनै पनि अदालतमा उठाउन सकिदैन। यस दृष्टिबाट यस्तो सल्लाह गोप्य रहने अनुभव हुन्छ तर यस्ता प्रश्नहरु सार्वजनिक महत्वका हुने कारण जनताले धारा १६ को सूचनाको हक अन्तर्गत जानकारी पाउने अधिकार प्राप्त गर्दछन् कि गर्दैनन् वा सो धारा अनुसार श्री ५ लाई कस्तो सूचना दिइएको छ भन्ने कुरामा कुनै नागरिकले अदालतमा मुद्दा चलाउन पाउँछ पाउँदैन भन्ने यस प्रसंगमा महत्वपूर्ण छ।

मन्त्रिपरिषद् प्रतिनिधि सभाप्रति सामूहिक रुपमा जिम्मेवार हुन्छ। मन्त्री आफ्नो मन्त्रालयको काममा व्यक्तिगत रुपमा प्रधानमन्त्री र प्रतिनिधि सभाप्रति उत्तरदायी हुन्छन्। प्रतिनिधि सभामा बहुमत प्राप्त राजनैतिक पार्टीको संसदीय दलको नेतालाई श्री ५ बाट प्रधानमन्त्री नियुक्त गरिबक्सन्छ र निजको अध्यक्षतामा मन्त्रिपरिषद्को गठन हुन्छ। मन्त्रिपरिषद्मा आवश्यकतानुसार उप-प्रधानमन्त्री तथा अन्य मन्त्री, राज्यमन्त्री वा सहायक मन्त्रीहरु रहन्छन् र यिनीहरुको चयन प्रधानमन्त्रीद्वारा हुन्छ र श्री ५ बाट उनीहरुलाई नियुक्त गरि बक्सन्छ। संसद् सदस्य नभएको व्यक्ति उप-प्रधानमन्त्री वा अन्य मन्त्री बन्न सक्तछ तर प्रधानमन्त्री बन्न सक्तैन। यस्तो मन्त्री हुनेले ६ महिनाभित्र संसद्को सदस्यता प्राप्त गरी सक्नु पर्दछ।

श्री ५ बाट स्वीकृत गरिबक्सेको नियमावलीका अधिनमा-रही श्री ५ को सरकारको कार्य विभाजन तथा कार्य सम्पादन हुने छ। यो नियमावलीको पालना भएको छ छैन भन्ने प्रश्न कुनै पनि अदालतमा उठाउन पाइने छैन।

संसद्मा कुनै दलले बहुमत प्राप्त गर्न नसकेको खण्डमा दुई वा दुई भन्दा बढी दललाई मिलाएर बहुमतको विश्वास प्राप्त गर्न सक्ने नेतालाई प्रधानमन्त्रीको पदमा नियुक्त गरिने छ। त्यस प्रकार गर्दा पनि बहुमत प्राप्त हुन नसकेको खण्डमा संसदमा सबभन्दा ठूलो संसदीय दलको नेतालाई प्रधानमन्त्री नियुक्त गरि निजलाई बहुमतको विश्वास प्राप्त गर्न तीस दिनको समय दिइन्छ। त्यसरी दिएको समयभित्र त्यस्तो दलले विश्वासको मत प्राप्त गर्न नसकेमा प्रतिनिधि सभा भंग गरी ६ महिनाभित्र अर्को निर्वाचन गराउनु पर्दछ।

देहायका विषयमा श्री ५ मा सूचना जाहेर गर्ने कर्तव्य प्रधानमन्त्रीउपर रहेको छ:

(क) नेपाल अधिराज्यको शासन व्यवस्था सम्बन्धी मन्त्रिपरिषद्का निर्णयहरु,

(ख) संसद्मा पेश गरिने विधेयकहरु,

(ग) श्री ५ बाट मौसूफमा जाहेर गर्न निर्देशन बक्सेको खण्ड (क) वा (ख) मा उल्लेखित विषयहरु सम्बन्धी अन्य कुराहरु,

(घ) देशको सम-सामयिक परिस्थिति र शान्ति सुरक्षा, राजनैतिक, आर्थिक सामाजिक, प्रशासनिक र वैदेशिक सम्बन्धका कुराहरु ।

श्री ५ बाट राष्ट्रिय महत्वका विषयमा मन्त्रिपरिषद्लाई सुझाव वा प्रोत्साहन वा सचेत गराउन सकिबक्सन्छ ।

प्रधानमन्त्री, उप-प्रधानमन्त्री र अन्य मन्त्रीहरुले श्री ५ समक्ष र राज्यमन्त्री तथा सहायकमन्त्रीले प्रधानमन्त्री समक्ष आफ्नो पद र गोपनीयताको सपथ ग्रहण गर्नु पर्दछ । मन्त्रीले संसद्को कुनै पनि सदन वा त्यसको उप-समितिमा उपस्थित हुन र कारवाई तथा छलफलमा भाग लिन पाउँदछ तर आफू सदस्य नभएको सदन वा त्यसको समितिमा मतदान गर्न पाउँदैन ।

प्रधानमन्त्रीले आफ्नो कार्यकालभित्र कुनै बखत आफूमाथि प्रतिनिधि सभाको विश्वास छ भन्ने कुरा प्रष्ट गर्न आवश्यक वा उपयुक्त ठानेमा विश्वासको मतको लागि प्रतिनिधि सभामा प्रस्ताव राख्न र छलफल गराउन सक्तछ । प्रतिनिधि सभाको सम्पूर्ण सदस्य संख्याको एक चौथाइ सदस्यले प्रधानमन्त्री उपर प्रतिनिधि सभाको विश्वास छैन भनी लिखित रुपमा अविश्वासको प्रस्ताव राख्न सक्तछन् तर यस्तो अविश्वासको प्रस्ताव एक अधिवेशनमा एकपटकभन्दा बढी हुन सक्तैन । यस्तो अविश्वासको प्रस्तावउपर छलफल गरिने र प्रतिनिधि सभाको सम्पूर्ण सदस्य संख्याको बहुमतबाट निर्णय लिइन्छ ।

मन्त्रीपरिषद्का प्रधानमन्त्री, मन्त्री तथा राज्यमन्त्रीहरु एक वा एकभन्दा बढी मन्त्रालयका प्रमुख हुन्छन् । मन्त्रालयका काम, कारवाहीको रेखदेख, निर्देशन, निरीक्षण तथा सञ्चालनका लागि उनीहरु पूर्णत: जवाफदेही हुन्छन् । नेपालमा जम्मा २२ वटा मन्त्रालय छन् । वातावरण तथा संसदीय मन्त्रालय प्रजातन्त्रको स्थापना पश्चात् थप भएका नयाँ मन्त्रालय हुन् ।

प्रजातन्त्रको स्थापना पश्चात् सरकार चलाउने जिम्मेवारी त्रिपक्षीय शक्तिउपर रहेको थियो । नेपाली कांग्रेस, संयुक्त वाममोर्चा तथा श्री ५ का प्रतिनिधिहरु रहेको ११ सदस्यीय अन्तरिम सरकारको गठन गरियो, जसको नेतृत्व नेपाली कांग्रेसका अध्यक्ष कृष्ण प्रसाद भट्टराईले प्रधानमन्त्रीको रुपमा लिनुभएको थियो । यस अन्तरिम मन्त्रिपरिषद्लाई मोटामोटी तीनवटा काम सुम्पिएको थियो - देशको शान्ति सुरक्षा कायम गर्दै मुलुकको शासन चलाउनु, देशका निमित्त एक उपयुक्त संविधान निर्माण गर्नु तथा सो नयाँ संविधान अनुरुप आम निर्वाचन गराउनु । नेपालको इतिहासमा अन्तरिम मन्त्रिपरिषद् जस्तो शक्तिशाली सरकार कहिल्यै भएको थिएन किनकि यो स्वयं सर्वशक्तिमान कार्यपालिका तथा विधायिका शक्तिबाट ओतप्रोत रहेको थियो । वि.सं. २०४७ भरि तथा २०४८ सालको जेठ १५ गतेसम्म यस मन्त्रिपरिषद्ले शासन चलायो । यसले आफूलाई तोकिएका पछिल्ला दुईवटा काम सफलताका साथ सम्पन्न गऱ्यो तर प्रथम कामका सन्दर्भमा भन्ने विभिन्न तर्कहरु सुन्न पाइएका छन् । स्वयं वर्तमान प्रधानमन्त्रीले अन्तरिम सरकारले थुप्रै कुडाकर्कट थुपारी दिएको थियो जुन कुरा साफ गर्न कठिनाइ परेको बताउनु भएको थियो ।

अन्तरिम सरकारको पालामा नेपालमा मानव अधिकारको सन्दर्भमा उल्लेखनीय कुरा के रहयो भने यसले सन्धि अभिसन्धिलाई सन्धि ऐनको रुपमा पारित गर्नुका साथै अन्तर्राष्ट्रिय मानवाधिकार सम्बन्धी १९६६ का दुईवटा अनुवन्ध र ऐच्छिक प्रोटोकललाई अनुमोदन गरेर मानव अधिकारमा कीर्तिमान कायम गऱ्यो । यसै अवधिमा यातना, क्रूर तथा अमानवीय सजाय तथा व्यवहार सम्बन्धी १९५६ को अभिसन्धि र बाल अधिकार सम्बन्धी १९९० को अभिसन्धिमा अनुमोदन तथा हस्ताक्षर गऱ्यो । यी सबैले मानव अधिकार को क्षेत्रमा नेपालको अवस्थालाई धेरै माथि पुऱ्याए ।

अन्तरिम शासन अवधिमा ०४७ वैशाख १० गतेको प्रहरी हत्याको छानवीन नहुनु, योजनाहरु स्थगित गरिएको कारण बजेट चुनावलाई प्रभावित गर्ने गरी पार्टी कार्यकर्ता मार्फत बजेट खर्च गराउनु तथा चुनावमा शासक दल बाहेकका अन्य पार्टीहरुलाई चुनाव प्रचार प्रसार गर्न नदिनुजस्ता कार्यउपर सरकारले नियन्त्रण गर्न नसक्नु मानव अधिकारको क्षेत्रमा उल्लंघन भएको मानिएको छ । यसका अतिरिक्त निर्वाचनलाई प्रभाव पार्ने गरी नागरिकता नियमावली प्रकाशमा आयो जसलाई सर्वोच्च अदालतले पछि खारेज पनि गरिदियो ।

वि.सं.०४८ साल वैशाख २९ गते आइतवार भएको आम निर्वाचनमा नेपाली कांग्रेसलाई बहुमत प्राप्त भयो । निर्वाचनको करीब १६ दिनपछि गिरिजाप्रसाद कोइरालाको नेतृत्वमा १५ सदस्यीय मन्त्रिपरिषदको गठन भयो र ७ दिन पछि अरु दुईजना राज्य मन्त्रीहरु थप गरिए । तत्पश्चात् ०४८ पुष १५ गते मन्त्रिपरिषद्मा हेरफेर गरियो र सो मन्त्रिपरिषद्ले आफ्नो कार्यकाल अद्यापि सञ्चालन गर्दैछ ।

मन्त्रिपरिषद्ले प्रजातान्त्रिक पद्धतिअनुरुप शासन चलाउँदै आएको छ तापनि यसले कैयौं संवैधानिक प्रावधान तथा मान्यता र मानव अधिकारको उल्लंघन गर्दै आएको छ । सरकारद्वारा मानवाधिकार क्षेत्र तथा संविधानको उल्लंघनका केही उदाहरणहरु निम्न बमोजिम उल्लेख गर्न सकिन्छ :

(क) प्रजातन्त्र तथा मानव अधिकारको व्यापक उल्लंघन

भएको कारणले पञ्चायती व्यवस्था धरासायी भएको हो । प्रजातन्त्रको पुन:स्थापना पश्चात् मानिसले प्रजातन्त्र तथा मानव अधिकार बहाली तथा उपभोग गरी परिवर्तनको आभास खोज्नु स्वाभाविकै हो तर परिवर्तित शासन व्यवस्था पञ्चायत शासन व्यवस्था कै अनुकरण र शैलीबाट गुज्रिरहेको अनुभव समस्त देशबासीमा व्याप्त रहेको छ । नामको बहुदलीय व्यवस्था एवं प्रजातन्त्र भए पनि सत्ताशीन पार्टीले सर्वत्र आफ्नो एकाधिकार तथा राजनैतिक लाभ लिने काम गरेको छ ।

(ख) मानवाधिकार तथा देशको समग्र हितको दृष्टिले बहुदलीय व्यवस्थामा कर्मचारीतन्त्र, प्राध्यापक, शिक्षक, प्रहरी, सैनिक जस्ता संस्थाहरु तटस्थ राख्नु र रहनु अनिवार्य मानिन्छ । वर्तमान सरकारले सम्पूर्ण कर्मचारीतन्त्र तथा शिक्षक एवं प्रहरीजस्ता राष्ट्रका आधारशिलामा प्रहार गरी सत्ताशीन पार्टीका तावेदारमा परिणत गर्ने अक्षम्य दुस्साहस गरेको छ । नेपाल जस्तो गरिबी तथा पछौटे देशमा सत्ताशीन पार्टी तथा सरकारको यस प्रकारको क्रियाकलापबाट तमाम कर्मचारीतन्त्र, शिक्षक तथा प्रहरी जस्ता संस्थाहरु सत्ताशीन पार्टीका कार्यकर्ताको रुपमा विकसित हुन जाने गम्भीर परिस्थिति नेपालमा श्रृजना भएको कारण मानवाधिकारको पक्षमा गम्भीर खतरा श्रृजना भैराखेको छ ।

(ग) सरकारले ०४६ सालको आन्दोलनमा मानवाधिकार को उल्लंघन गर्ने तत्कालीन शासकहरुका विरुद्ध कारवाही नगरेर सो समयको मानव अधिकारको उल्लंघन, सत्ताको दुरुपयोग गरी आन्दोलन दबाउने सन्दर्भमा छानबीन गर्न गठन भएको मल्लिक आयोग तथा बल्लभ शमसेर आयोगका प्रतिवेदनहरुलाई दराजमा थन्काई दिएको छ । ती प्रतिवेदनहरुमा कार्बाही हुन पर्ने भनिएका कैयौं व्यक्तिलाई सरकारका विभिन्न उच्चतम पदहरुमा नियुक्त गरी सम्मानित गरिएको दृष्टान्त एकातर्फ रहेको छ भने अर्कातर्फ त्यस बेलाका आन्दोलन दबाउने व्यक्तिहरुले खुलेआम चुनौती दिइराखेका छन् ।

(घ) सरकारले शान्ति, सुरक्षा, अमन चयन कायम राख्ने काम गर्न सकेको छैन । चोरी, डाका, हत्याजस्ता घटनाहरु समग्र रुपमा वृद्धि भएको छ भने राजधानी जस्तो ठाउँमा बालिका बलात्कारका घृणित र जघन्य अपराध गर्नेहरुउपर नियन्त्रण नहुनाले दिन परदिन यस्ता कुकृत्य बढ्दै गएका छन् ।

(ङ) संविधानद्वारा प्रदत्त मौलिक हकको उल्लंघन मानवाधिकारको क्षेत्रमा देखिने अर्को महत्वपूर्ण पक्ष हो । प्रजातन्त्र पश्चात् सयौं व्यक्तिहरु आफ्ना हकको संरक्षणका लागि संविधान प्रदत्त सभा जुलुस गर्ने, विरोध गर्ने अधिकारको प्रयोग गर्दा मारिएका छन् । यस क्रममा २०४८ साल चैत्र २४ गतेको गोली काण्ड, अर्घाखाँची गोली काण्ड, खोटाङ जिल्लाको दिक्तेलमा भएको गोली काण्ड, काबासोती गोलीकाण्ड प्रमुख छन् र यी सबका अलावा कैयौं अन्य हत्या काण्डहरु भएका छन् । यी घटनामा दोषी पत्ता लगाई दण्ड दिनेतर्फ सरकारले कुनै चासो देखाएन । यसबाट निर्दोष मानिसहरु मारिए ।

सरकारले सूचनाको हकको पनि बराबर उल्लंघन गर्दै आएको छ । यो कुरा प्रसिद्ध टनकपुर सम्बन्धी मुद्दामा प्रष्टसंग देशका सामु प्रष्ट भएर आयो । सर्वोच्च अदालतले सूचनाको हक उल्लंघन भएको सम्बन्धमा बोलेको समेत छ ।

(च) सरकारले आफ्नो पक्षमा काम नगर्ने शिक्षक, कर्मचारीहरुलाई जागिरबाट खोस्ने, अपायक पर्ने ठाउँमा सरुवा गर्ने, कारवाही गरी सजाय गर्ने जस्ता काम गरेको उदाहरणहरु थुप्रै पाइएका छन् । नेपाल निजामती कर्मचारी संगठनले आफ्ना हक हितका लागि माग राख्दा अन्यायपूर्वक सुनवाई नगरेबाट प्रदर्शन तथा हडताल गर्ने अधिकारको प्रयोग गर्दा कर्मचारीको आन्दोलनलाई केवल जोर जबर्जस्ती दबाइएन, कर्मचारीलाई सेवाबाट जबर्जस्ती अवकास दिइयो, अपायक ठाँउमा सरुवा गरियो, ग्रेड रोक्का गरियो । यतिसम्म कि अदालतको विचाराधीन रहेका व्यक्तिहरुलाई निर्णयको टुङ्गो लाग्नुभन्दा पहिले नै खोसुवाको सजाय समेत गरिएका प्रमाणहरु देखिन्छन् । सरकार तथा सत्ताशीन पार्टीको भन्दा छुट्टै विचारधारा राख्ने शिक्षक तथा कर्मचारीहरुको समानान्तर संघ खोलेर स्थापित संगठनहरु भाँड्ने, त्यसमा फुट पार्ने जस्ता कामहरुद्वारा संगठन गर्ने मानव अधिकारको व्यापक उल्लंघन गरिएको कुरा बितेका बर्षमा स्पष्टसंग देखनमा आएको छ र सम्पूर्ण तथ्यले सो कुरा पुष्टि गर्दछ ।

(छ) सरकारले मानव अधिकारको उल्लंघन कर्मचारीहरुलाई अनुचित तथा अन्याययुक्त तवरबाट कानूनमा संशोधन गरी सेवाबाट हटाएर गरेको कुरा सर्वत्र थाहा भएको कुरा हो। सरकारी कर्मचारीको सेवाका शर्त निर्धारण गर्ने निजामती सेवा नियमावली ०२१ पञ्चायत कालको राष्ट्रिय पञ्चायतको समितिले असंवैधानिक घोषित गरेको कानून थियो। वर्तमान नेपाल अधिराज्यको संविधान ०४७ संग उक्त नियम स्पष्टसंग बाभिने भएकोले धारा १३१ अनुसार संविधान लागू भएको मितिले १ वर्षपछि स्वत: खारेज हुने थियो। उक्त कानून विधान निर्माणको दृष्टिले समेत अमान्य र गलत थियो। त्यस्तो कानून खारेज गरी नयाँ उचित र योग्य ऐन बन्नु पर्ने सर्वत्र माग भै रहेको थियो। जसलाई सरकारले समेत अनुमोदन गरी नयाँ निजामती सेवा ऐनको विधेयक संसद्को तेश्रो सदनमा छलफलका लागि प्रस्तुत गरिसकेको र संसद्को विचाराधीन रहेको अवस्थामा पुरानो उही नियममा संशोधन गरी प्रयोग नै गर्न नमिल्ने नियम ७.१.३ को प्रावधानलाई प्रयोग गरी बीस वर्षको सेवा पुगेका हजारौं कर्मचारीलाई सेवाबाट अवकाश दिइयो। यसरी अवकाश दिइनेक्रममा बीस वर्ष सेवा पुगेकामध्ये आफ्ना मन परेका र आफ्नो पार्टीका समर्थकहरु राखेर अरुलाई योग्य, अयोग्य केही विचार नगरी सेवाबाट हटाउने काम भयो। बीस वर्ष पुगेका कर्मचारी हटाउनका लागि कुनै निश्चित शर्त र नियमहरु कुनै विकसित नगरी अधिकांश कर्मचारीहरु हटाइएको तथ्य सर्वत्र खुल्ला चर्चाको विषय रहयो। स्वयं नेपाली कांग्रेसका सर्वमान्य नेता गणेशमान सिंहले समेत यस प्रकार कर्मचारी हटाउँदा त्रुटि भएको कुरा स्वीकार गर्नु भएको छ। यो क्रम केवल सरकारी कर्मचारीका सम्बन्धमा मात्र होइन अर्ध सरकारी तथा सरकार नियन्त्रित संस्थानहरुमा समेत लागू गरिएको छ। यसबाट कानूनको शासनको गम्भीर उल्लंघन भएको स्पष्टसंग बुझ्न सकिन्छ।

(ज) नेपालमा केही ऐनहरु पञ्चायतकालमा बनेका छन् जसको प्रयोग सरकारले आफ्ना विरोधीहरुलाई दबाउनका निम्ति मात्र प्रयोग गर्न सकिने स्थिति छ। त्यसैले यी ऐनलाई मानव अधिकारको उल्लंघन गर्ने ऐनको संज्ञा दिई खारेजीको माग बराबर हुँदै आएको हो। यस्ता ऐनमा मुख्यत सार्वजनिक अपराध ऐन ०२७ र सार्वजनिक सुरक्षा ऐन ०४६ प्रमुख छन्। प्रजातन्त्र बहाली पश्चात् यी ऐनहरु खारेज गरिनु पर्ने माग मानव अधिकार कार्यकर्ताले बराबर गर्दै आए तर प्रजातान्त्रिक सरकारले सो कुराको बेवास्ता मात्र गरेन यी ऐनको व्यापक प्रयोग गरेर आफ्नो विरोध गर्नेहरुलाई मुद्दा चलाएर दु:ख दियो। यो ऐनको शिकार हुनेहरुमा कर्मचारी आन्दोलन गर्ने कर्मचारी, गाउँ जिल्लामा सरकार तथा नेपाली कांग्रेसको विरोध गर्नेहरु धेरै छन्। यस कुराको गम्भीरता श्री ५ को सरकारले प्रकाशन गरेको तथ्याङ्क सम्बन्धी पुस्तिकामा प्रकाशित भएका तथ्याङ्कले पुष्टि गर्दछ। सन १९८९/९० मा सार्वजनिक अपराध सम्बन्धमा ५२७ मुद्दाहरु चलाइएका थिए भने सन् १९९०/९१ मा ११४१ मुद्दा चलाइएका थिए। यद्यपि १९९१/९२ को तथ्याङ्क प्रकाशित भएको छैन तर यो तथ्याङ्क बढेकै पाइएको छ। यी ऐनद्वारा मानवाधिकार उल्लंघनको अर्को पक्ष के पाइएको छ भने सरकारले यस ऐन अन्तर्गत मुद्दा चलाएर सजाय गर्ने अधिकार जिल्लाको प्रमुख जिल्ला अधिकारीलाई दिइएको छ जुन कुरा नेपाल अधिराज्यको संविधान २०४७ को धारा ८४ को प्रतिकूल मानिन्छ किनकि उक्त धाराद्वारा न्याय गर्ने अधिकार न्यायिक निकायलाई मात्र हुने व्यवस्था गरिएको छ जबकि प्रमुख जिल्ला अधिकारी पूर्णत शान्ति सुरक्षाको काम गर्ने प्रशासकीय अधिकारी हो। वर्तमान प्रजातान्त्रिक सरकारले अझ एक कदमअघि बढेर सो ऐनद्वारा हुन सक्ने सजायको मात्रा समेत संशोधन गरेर बढाएको छ।

(झ) संविधानको उल्लंघनका थुप्रै उदाहरण भेट्न सकिन्छ जसमध्ये दुईटा मात्र उदाहरण यहाँ प्रस्तुत छन्। प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाले सन् १९९१ मा भारतको यात्रा गरी थुप्रै सन्धि समझदारीमा हस्ताक्षर गर्नु भयो जसमध्ये एउटा टनकपुर सम्बन्धी सन्धि समेत परेको छ। उक्त सन्धिद्वारा नेपालको पश्चिमी सीमाको महाकाली नदीको जल तथा विजुलीको बाँडफाँड गरिएको छ। प्राकृतिक श्रोतको बाँडफाँड सम्बन्धी सन्धि संझौताहरुको अनुमोदन संसद्को दुईतिहाई बहुमतबाट हुनुपर्ने व्यवस्था नेपाल अधिराज्यको संविधान २०४७ को धारा १२६ (२) मा प्रष्टसंग गरिएको छ। यस्तो संवैधानिक प्रावधान हुँदाहुँदै पनि टनकपुर सम्बन्धी उक्त संझौता संसद्मा अनुमोदन गराइएन फलत सो

कुराको संवैधानिकता सम्बन्धी प्रश्न सर्वोच्च अदालतमा छलफल भयो। विवाद सर्वोच्च अदालतमा पुग्दा र फैसला हुँदासम्म सरकारले उक्त दस्तावेजलाई सन्धि मान्न इन्कार गरी समझदारी हो मात्र भन्दै रह्यो । आखिर अदालतले फैसलाद्वारा सन्धि ठहराइदिएको छ । यस प्रकारको संविधानलाई होच्याउने कार्य एकातर्फ भैराखेको छ भने यस घटनाबाट सारा राष्ट्र आकर्षित भै सरकारको विरोध हुनाले विकास कार्यक्रमहरु ठप्प भए भने सरकारको छवि जनमानसमा धुमिल हुन पुगेको छ। अर्कोतर्फ न्याय गर्ने अधिकार न्यायिक निकायमा रहने संवैधानिक मान्यताको विपरीत सरकारले थुप्रै यस्ता कानूनहरु बनाएको छ जसमा प्रशासकीय निकायलाई ठूलठूला रकम जरिवाना गर्ने, कैद गर्ने जस्ता विधिवत रुपमा न्याय गर्ने अधिकारहरु प्रदान गरेको छ । यसबाट सरकारले संविधानको अक्षर तथा भावना विपरीत कार्य गरिरहेको सजिलै अनुभव गर्न सकिन्छ । प्रशासकीय निकायलाई दिइएका न्यायिक अधिकारको केहि उदाहरण यस प्रकार छन्- केही सार्वजनिक (अपराध र सजाय) ऐनले प्र.जि.अ. लाई सो ऐन अन्तर्गतको कसुरमा १० हजारसम्म रुपैया र दुई वर्षसम्म कैद गर्न सक्ने अधिकार दिएको छ । बीमा ऐन अन्तर्गत बीमा समितिलाई १० हजारसम्म जरिवाना गर्ने, वन ऐन ०४९ले मुद्दा हेर्ने अधिकार प्रशासकीय अधिकृतलाई दिने व्यवस्था गरेको छ भने खानेपानी संस्थानलाई ५ हजारसम्म जरिवाना गर्न सक्ने अधिकार छ । यस्ता सजाय गर्ने न्यायिक अधिकार यसै ऐनले प्रशासकीय अधिकारीलाई प्रदान गरेका छन ।

(ञ) कार्यपालिका, न्यायपालिका तथा व्यवस्थापिका एक अर्काका सहयोगी हुँदाहुँदै नियन्त्रण गर्ने निकाय हुन् । न्यायपालिकाले अरु दुबै निकायलाई न्यायिक तवरबाट नियन्त्रण गर्दछ । यस क्रममा नेपालको सर्वोच्च अदालतमा टनकपुर सम्बन्धी विवाद चलिरहेको बेलामा मुद्दामा असर पर्ने गरी देशका प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाले सर्वोच्च अदालतका न्यायाधीशहरुलाई संबोधन गर्दै वक्तव्य दिनुभयो । वक्तव्यमा मुद्दा हराएमा देशको विकास पच्चीस वर्ष पछि पर्दछ भन्ने चेतावनी तथा अप्रत्यक्ष तवरबाट त्रास देखाउने काम गर्नु भयो। प्रधानमन्त्रीको उक्त अन्तरवार्ताको सम्बन्धमा सर्वोच्च अदालतमा मानहानी मुद्दा दायर गरिएको र हालसम्म चलिरहेको छ । यसले निश्चय नै मानवाधिकारको संरक्षण गर्ने कुरामा प्रतिकुल परिस्थिति सृजना गरेको भन्न सकिन्छ ।

(ट) कानूनबमोजिम सजाय भोगिरहेका व्यक्तिका सम्बन्धमा समेत नातावाद कृपावाद चलेको कुरा नेपाली बौद्धिक जगत् तथा प्रेस जगत्मा ताजा नै रहिरहेको छ। प्रजातन्त्रको पुन: बहाली भएपछिका केही महिना नबित्तै अन्तरिम सरकारद्वारा नशालु पदार्थ, सुन लगायत अन्य वस्तुहरु तस्करी गर्ने कैयौं कुख्यात व्यक्तिहरु कैद भुक्तान हुनु अगावै कैदबाट छोडिए । हालै ताइवानका सांसद्लाई जेलबाट छुटाउने सन्दर्भमा गरिएको प्रयत्न समेत चर्चित रहेको छ । नेपालका चर्चित तथा कुख्यात अपराधीहरु डी.बी. लामा, भरत गुरुङ्ग तथा भीमप्रसाद गौचन - जस्ता व्यक्तिहरु छुट्न सफल भए। तर जेलमा कसैले हेरचाह नगर्ने, कोही आफन्त तथा धन ठेल्न नसक्ने कैयौं व्यक्तिहरु अझै जेलमा सडिरहेका छन् । दुईटा दृष्टान्त मात्र यस प्रसंगमा पर्याप्त हुनेछ। सप्तरी जिल्लाको राजविराज जेलमा अठहत्तर वर्षको सोभित चौधरी भन्ने अन्धो मान्छे जेलमा सडिरहेको छ जसले कैदको सजाय भोगी पनि सकेको छ । हाल सप्तरी जिल्लाको पंसेरा गा.वि.स.का सातेनदास ताती सप्तरी वनरझुला कन्चीरा बस्ने सातेन दास तत्माद्वारा ०३१ सालमा भएको अपराध बापत जेलमा छन् । सातेन ताती ०२८ सालदेखि ०३६ सालसम्म काठमाण्डौ जेलमा थिए। जेलमा रहेको व्यक्तिले जेलमा बसेको बखत अन्यत्र घटेको अपराधको सम्बन्धमा जेलमा राखिनु भन्ने कुरा निश्चय नै अचम्मको कुरा हो ।

(ठ) स्थानीय निर्वाचन वि.सं. ०४९ साल जेठमा सम्पन्न भयो। सो निर्वाचन हुँदा नेपाली कांग्रेसको निर्वाचित सरकारले शासन सञ्चालन गरेको थियो । शासन निर्वाचनमा नेपाली कांग्रेसका कार्यकर्ताहरुले गरेको खुलेआम धाँधलीको केही कतै छानबीन भएन न त कसैलाई कानूनअनुरुप सजायका लागि मुद्दा चलाइयो । यसमा एउटै दृष्टान्त उधृत गर्नु काफी हुने ठहर्दछ - प्रधानमन्त्रीको गृहनगर तथा कांग्रेसको गढ मानिएको विराटनगरमा नेपाली कांग्रेसका कार्यकर्ता उमेश गिरीले हातहतियार लिएका गुण्डाहरु सहित हातमा पिस्तोल लिई पड्काउँदै विराटनगर न.पा. वार्ड नं २ र १३ को बुथ कब्जा

गरी मतपेटिका तथा मतदान केन्द्र तोडफोड गरी फ्याँकी दिए। निजलाई प्रहरी प्रशासनले नत पक्राउ गऱ्यो नत सोधपुछ सम्म नै गरियो। निज फुक्का भएर खुलेआम यथावत हिड्दै रहे तर त्यो दिनको निर्वाचन भने रद्द गरी अर्को दिन सञ्चालन गरियो।

(ठ) नेपालमा मानवाधिकारको उल्लंघन भएका गुनासाहरुमा छानवीन तथा अनुसन्धानका लागि एक उच्चस्तरीय मानव अधिकार आयोगको गठन होस् भन्ने माग मानव अधिकार कार्यकर्ता एवं बुद्धिजीवी समेतबाट बराबर तीव्र रुपमा उठाइदै आइएको छ र संसद्मा समेत सो कुराको प्रस्ताव राखियो। तर सरकार भने यस विषयमा टसमस भइ राखेको छैन। कैयौं गोली काण्डको सम्बन्धमा छानवीन नगर्ने सरकार मानवाधिकारप्रति संवेदनशील नभएको कुरा मानवाधिकार आयोगको गठन गर्नेतर्फ चासो नदेखाई बेवास्ता गरेको कारणबाट समेत प्रष्ट हुन्छ।

# प्रष्ट पार्न आवश्यक केही कुरा

१. यथासम्भव विश्वसनीय घटनाहरु मात्रै उल्लेख गरिएका छन्।

२. घटनाहरु १९९२ भरिका अर्थात् ०४८पुष १७ देखि ०४९ पुष १६ सम्मका मात्र उल्लेख गरिएका छन्।

३. जनआन्दोलन पश्चात्का पनि केही महत्वपूर्ण घटनाहरु र जेलका बन्दीहरुको विवरणमा केही पुराना सिलसिला उल्लेख गर्दा उपरोक्त उल्लेखित अवधि अगाडि वा त्यही सिलसिलामा पछाडिका कुरा पनि पर्न गएका हुन सक्छन् ।

४. १९९२ अगाडिका घटनालाई "इटालिक्स" मा उल्लेख गर्ने प्रयत्न गरिएको छ।

५. कुनै कुनै प्रसङ्गमा सत्तापाक्षका वा सत्ता विपक्षका बुझिनेखालका कुरा पर्न सक्छन्, जस्तै नेपाल राष्ट्रिय शिक्षक संघ र नेपाल राष्ट्रिय शिक्षक संगठन। यी दुईमध्ये संघलाई सत्तापक्षको नजिक ठानिन्छ । तर यसको अर्थ संगठनलाई प्रतिपक्षको अर्थमा लिइएको होइन। घटनाहरु उल्लेख गर्दा विपक्षमा रहेको भनी उल्लेख गरिएको अर्थ संघको सामानान्तर रहेको भनी बुझ्नु हुन आग्रह गर्दछौं। अर्थात् राजनीतिक विभाजनलाई वर्ष पुस्तकले उल्लेख गर्न चाहेको छैन ।

६. कतिपय घटनाहरु विश्वसनियताको अभावमा प्रकाशित गर्न सकिएन । कतिपय घटनाहरुको निश्चित मिति प्राप्त भएनन्। तथापि स्थानीय बासिन्दा, प्रत्यक्षदर्शी र स्वयं घटना पीडितको भनाइलाई मुख्य आधार मानेर यी घटनाहरु उल्लेख गरिएका छन्।

७. मानवअधिकारको क्षेत्रमा सबैले चासो राखुन् र भएका कमी– कमजोरी हटाउनेतर्फ यस्ता घटनाले हामीलाई सचेत पारुन् भन्ने मात्र मनसायले घटनाहरु प्रकाशित गरिएको छ। प्रसंगवश कसैको निजी जीवन र स्वाभिमानमा चोट पर्न गएको भएमा हामी क्षमाप्रार्थी छौं।

८. जारी, देउकी, बादी , दास बांधा प्रथाजस्ता कुरीतिको यथार्थ तथ्यांक पाउन सकिएन। यसर्थ यस्ता कुराहरु उल्लेख गर्दा ती परम्पराले पारेको प्रभाव र तिनको प्रकट चरित्रलाई समाजले स्वीकारेको हदसम्मको परिमाणमा जस्ता तस्तै उल्लेख गरेका छौं।

९. हामी पचहत्तरै जिल्लामा पुग्यौं । तर सम्पूर्ण जिल्लाका सबै भागमा पुग्न सकेनौं। यसकारण सम्भव भए सम्ममा शोधका आधारमा नै यी घटनाहरु उल्लेख गरिएका छन्।

१०. कतिपय सूचनाका श्रोतका रुपमा पत्रपत्रिकामा प्रकाशित समाचारलाई पनि लिइएको छ । १९९३ अर्थात पुष १६, ०४९ पछिका घटनाहरु र यस पुस्तकमा उल्लेखित घटनाहरुको अर्को वर्ष अर्थात १९९३ मा हुने स्वरुप र विकासबारे आगामी वर्ष पुस्तकमा उल्लेख गरिनेछ ।

११. कुनै घटनाको शीर्षकमा कुनै व्यहोराको उल्लेख नभएको हुनसक्छ । जस्तै हत्या / गोली प्रहारको घटनामा यातना पनि दिइएको छ भने उक्त घटनाको विवरण सोही शीर्षकमा समाविष्ट भएको हुन सक्छ । यसरी त्यसप्रकार माथिल्लो शीर्षकमा उल्लेख भएको घटनाका बारेमा गिरफ्तारी / यातनाको मूल शीर्षकमा विवरण छुट भएको पनि हुन सक्छ ।

१२. सम्बन्धित निकायसम्म उजुरी पुऱ्याउने, अन्यायको प्रतिकार गर्न संगठित हुने चेतनाको अभाव र तत्पर तपूर्वक शीघ्र न्याय सम्पादन हुने स्थितिको पनि कमीका कारण हामीले आफ्नै परिवेश र परिस्थितिमा यो काम सम्पन्न गरेका छौं । स्थानीय बोली र लयका कारण कतिपय ठाँउ र नाममा पनि केही फरक परेको हुन सक्छ। त्यस्तो भएको भए जानकारी दिनुभई सच्याउने मौका दिनुहुन सबैमा अनुरोध गर्दछौं।

१२. तथ्यांकका अन्य आधारहरु:

क. केन्द्रीय तथ्यांक विभागको वर्ष पुस्तक १९९१ र १९९२

ख. केन्द्रीय तथ्यांक विभागको तथ्यांक गतिविधि ०४९-०५०, (मंसीर-फागुन) शैक्षिक तथ्यांकको लागि उपयोग गरिएको छ ।

ग. स्थानीय सामाजिक संघ, संस्था, व्यक्तिहरु र

घ. स्थानीय न्यायीक, अर्ध न्यायिक, प्रशासनिक, सुरक्षा सम्वन्धी निकायहरु ।

# पूर्वाञ्चल



१.१ झापा

१.२ इलाम

१.३ पाँचथर

१.४ ताप्लेजुङ्ग

१.५ मोरङ्ग

१.६ सुनसरी

१.७ धनकुटा

१.८ तेह्रथुम

१.९ भोजपुर

१.१० संखुवासभा

१.११ सप्तरी

१.१२ सिराहा

१.१३ उदयपुर

१.१४ खोटाङ्ग

१.१५ ओखलढुंगा

१.१६ सोलुखुम्बु



# १. पूर्वाञ्चल

## मेची

# १.१ झापा

| | | |
|---|---|---|
| जनसंख्या | : | ५९४,१०० |
| साक्षरता | : | ५७.३ प्रतिशत |
| महिला साक्षरता | : | ४५.४ प्रतिशत |
| क्षेत्रफल | : | १६०६ वर्ग कि. मी. |

मेची अञ्चलमा अवस्थित झापा जिल्लाको दक्षिणी भाग भारतसंगको खुला सीमानाले गर्दा हुने गरेको चौपाया चोरी, डकैती, लागु पदार्थ ओसारपसार, तस्करी आदि यहाँका चुनौतिपूर्ण समस्याहरु हुन् । त्यस्तै यस जिल्लामा भुटानबाट ओइरो लागेका शरणार्थी समस्याले जिल्लालाई मात्र नभएर समग्रमा नेपाललाई नै प्रतिकूल प्रभाव पारिहेको छ ।

## १. बाँच्न पाउने अधिकार

संविधानमा सम्पूर्ण नेपालीलाई सम्मानपूर्वक बाँच्न पाउने अधिकारको यथेष्ट प्रावधान रहे तापनि व्यवहारमा यी कुराहरु अनुवाद हुन सकेका छैनन् ।

### १.१ हत्या / गोली

२०४९ साउन ३१ गते यसै जिल्ला निवासी गंगा देवी भट्टराईको मृत्युलाई रहस्यमय रुपमा लिइएको पाइन्छ ।

विर्तामोडमा दुई नवजात शिशुहरुको लाश प्राप्त हुनुले पनि उनीहरुको बाँच्न पाउने अधिकार खोसिएको प्रतीत हुन्छ ।

*२०४८ कार्तिक महिनामा शनिश्चरे गा.वि.स. वडा नं. ३ अवस्थित कृष्ण राइस मिलको हाता बाहिर १७ वर्षीय युवती गीता कुर्मीलाई बलात्कार गरी मारेको घटना पनि यहाँ चर्चाको विषय बनेको थियो ।*

### १.२ जेल

२०१९ सालमा निर्माण भएको यहाँको जेलको पुन निर्माण मरम्मत तथा संभार गर्नु पर्ने आवश्यकता टड्कारो देखिएको छ । अति जीर्ण अवस्थामा रहेको जेल भवन र सुरक्षण पर्खालहरु कुनै पनि बेला भत्किन सक्ने अवस्थामा छन् । कारागार ऐन र नियम बमोजिम प्राप्त सुविधाहरु अहिलेको बढ्दो मूल्य वृद्धिलाई दृष्टिगत गर्दा साह्रै अपुग भएको देखिन्छ । तसर्थ यस विषयलाई लिएर जेल सुविधा सम्बन्धी ऐन र नियममा नै संशोधन गर्नु पर्ने विचार सम्बन्धित व्यक्तिहरुको रहेको छ ।

१७५ बन्दीहरु मात्र अटाउन सक्ने क्षमता भएको यस जेलमा हाल २२८ बन्दीहरु रहेका छन्, जसमध्ये १८ महिला, २ नावालक र बाँकी पुरुषहरु छन् । जेलमा क्षमता भन्दा बढी बन्दीहरु रहेकोले पर्याप्त खानेपानी, उपयुक्त शौचालय र ढल निकासको समस्या देखियो । साथै जेलमा घरेलु उद्योग तथा सीप विकास सम्बन्धी तालिम र व्यवस्थाका लागि स्थापित तानहरु मर्मत गर्न समेत पैसा नभएर त्यसै थन्किरहेको पाइए । बन्दीहरुले मूढा बनाएर बेच्ने गरेको भने पाइयो । जेलमा नावालकहरुका लागि पाठशाला शिक्षाको पनि व्यवस्था छैन । जेलभवन जीर्ण अवस्थामा रहेकोले वर्षात्मा पानी चुहिने गर्दछ र रातभर जाग्राम नै बस्नु पर्ने कुरा बन्दीहरुले व्यक्त गरेका थिए ।

जेलको चर्पीको फोहर कम्पाउण्ड भित्रको खुला नालामा बग्दै कम्पाउण्ड बाहिरको खेतमा पुग्ने गर्छ । यसले गर्दा जेल कम्पाउण्ड त दुर्गन्धमय छ नै बाहिरको खेतवारी समेत दुर्गन्धमय र काम नलाग्ने भएको छ । खेतका किसान बारम्बार यो गुनासो लिएर प्र.जि.अ. र जेलरकहाँ आउने गर्छन् । तर वर्षौं बितिसक्दा पनि यो समस्याको समाधान गरिएको छैन ।

यहाँ खेलकूदका लागि उपलब्ध सामग्रीहरु बन्दीहरुको संख्याका दृष्टिमा अपुग भएको देखिन्छ । तर जेलमा पुस्तक पत्रिकाहरु निर्बाध रुपमा उपलब्ध गराएको र यदि बन्दीले आफ्नो गच्छे अनुसार टि.भि., रेडियो, क्यासेट राख्न चाहेमा सहर्ष स्वीकार गरिने कुरा जेलर तर्कराज कोइरालाले बताएका थिए ।

२०३७ मंसिर ८ गतेको हत्या सम्बन्धी घटनाको अभियोगमा २०३७ चैत्र ८ गते पक्राउ परेका ताप्लेजुङका कुलबहादुर नेपाली हाल झापा जेलमा रहेका छन् । २०४२ सालमा ताप्लेजुङ जिल्ला अदालतले उनलाई जन्मकैदको सजायँ तोकेको थियो ।

यतिखेर कुलबहादुर भन्दछन् - "मरेको भनिएको व्यक्ति मानबहादुर नेपाली विश्वकर्मा प्रहरी थियो भन्ने कुरा फैसलाको दिन थाहा पाएँ । उनीसग मेरो देखाभेटसम्म भएको थिएन र त्यो व्यक्ति अहिले परिवार सहित भानुचोक धरान मास्तिर बस्छ भन्ने कुरा मलाई थाहा छ । तर के गर्नु आफु जन्मकैदमा परि हालियो । अदालतको फैसला दैवको हुकुम ।"

मानबहादुर मारिएको जाहेरी ओलाङचुङगोला चेकपोष्टका नासु गजेन्द्रले दिएका थिए । तर फैसलाको दिन कुलबहादुर र लेखबहादुर लिम्बुले नै मारेको देखेको होइन, म संगै सुतेको मान्छे बिहान हेर्दा मरिसकेको थियो भन्ने बयान उनले दिएका थिए । लेखबहादुर लिम्बु हाल ताप्लेजुङ जेलमै जन्मकैद भोगीरहेका छन् । लेखबहादुर लिम्बु तत्कालिन जिल्ला सभापति सूर्यमान गुरुङका मीतभाइ हुन् । भनिन्छ सूर्यमान र लेखबहादुर बीच वैरभाव थियो । लेखबहादुरलाई फसाउन सूर्यमानले चालेको चालमा कुलबहादुर फसेको पनि बताइन्छ ।

### १.३ गिरफ्तारी / यातना

यस वर्ष गिरफ्तारी र यातनाका उल्लेखनीय घटना प्रकाशमा आएनन् ।

## २. मौलिक अधिकार

देशमा आएको राजनैतिक परिवर्तनपछि प्राप्त प्रजातन्त्रलाई यस जिल्लामा केही मुठ्ठीभरहरुले आफ्नो स्वार्थमा लगाएको देखिन्छ । अर्थात् ९० प्रतिशत भन्दा बढी यहाँका शोषित, पीडित किसान मजदूरहरु प्रजातन्त्रको ज्योतिबाट बञ्चित रहेका भेटिए । त्यस्तै यहाँका हरेक सामाजिक संघ-संस्थाहरुलाई राजनीतिकरण गरेको प्रतीत हुन्छ भने स्वयं जिल्ला प्रशासकहरुद्वारा राजनैतिक प्रतिशोधको भावनाले ओतप्रोत भई फरक विचारधारा राख्ने शिक्षक, कर्मचारी, राजनैतिक कार्यकर्ता एवं जनतालाई अनेकौं सामाजिक प्रताडना दिएर सत्तापक्षीय पार्टीमा समाविष्ट हुन दवाब दिने गरेको गुनासो पनि पाइयो ।

यसैको उदाहरण हो - टाघनडुब्बा गा.वि.स.मा अवस्थित एक घरमा डकैती हुँदा पक्राउ परेका ४ जना व्यक्तिहरु ससम्मान रिहाइ भएका थिए ।

हल्दीवारी गा.वि.स. वडा नं. ९ मा नेपाल विद्यार्थी संघद्वारा आयोजित सांस्कृतिक कार्यक्रम माथि भएको आक्रमण, त्यस्तै पृथ्वीनगर गा.वि.स. वडा नं. ८ मा अंश मुद्दाको विषयमा लिएर पिना कुमारी शिवाले हरि अधिकारी माथि गरेको कुटपीटका घटना आदि यस जिल्लाका मानव अधिकार उल्लंघन सम्बन्धी घटनाहरु हुन् ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानले उपरोक्त कुराहरुको ग्यारेण्टी गरे तापनि फरक विचारधारा राख्नेहरुले यी कुराहरु खोजीनीति गरेमा राजनैतिक नेताहरुको कोपभाजन हुनुपरेको देखिन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा जाति, भाषा, धर्म सम्बन्धी विवाद भएको पाईदैन ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

०४९ जेठ-असारमा सम्पन्न स्थानीय निर्वाचनका क्रममा झापाका सबैजसो राजनैतिक दलले आ-आफ्नो पकड र प्रभाव रहेको क्षेत्रमा अवान्छित हस्तक्षेप गरेको बताइन्छ ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

हालसम्म जिल्लामा न्यायिक निकायको निर्णय प्रति प्रश्नवाचक चिन्ह लगाउने स्थिति देखिएको छैन भने अर्ध

न्यायिक निकायहरुको निर्णय राजनैतिक प्रतिशोध र प्रशासनिक दवावबाट भएको प्रतित हुन्छ ।

यस वर्ष अर्थात् २०४९ पुस मसान्तसम्म यहाँको जिल्ला अदालतमा देवानी दुनियावादी ७९१ फौजदारी सरकार वादी २०८, फौजदारी दुनियावादी ५६९ गरी जम्मा १५६८ मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

सुकुम्वासी समस्या यस जिल्लामा देखा परेको छ । यहाँ सुकुम्बासीका रुपमा आदिवासी र तराई मूलका बासिन्दाहरु रहेको पाइन्छ ।

यस जिल्लामा सुकुम्बासी समस्या भन्दा भूटानी शरणार्थी समस्याले बढी पिरोलेको छ । दमकको बेलडांगी १ र २, टिमाई र गोलधापमा गरी ८० हजारभन्दा बढी भूटानी शरणार्थीहरु रहेका छन् । उनीहरुलाई राष्ट्रिय तथा अन्तर्राष्ट्रिय संघ संस्थाहरुले सुविधा र सहयोग उपलव्ध गराए तापनि यस जिल्लामा रहेका यति बिघ्न शरणार्थी संख्याले जिल्लाको आर्थिक, सामाजिक र वातावरणीय विकासका लागि अवरोध खडा भएको देखियो ।

## ४. महिला अधिकार

देशको संविधानमा महिला हक हितको प्रावधान यथेष्ट रहेता पनि व्यवहारमा महिलाहरुले ती अधिकारहरु उपभोग गर्न पाईरहेका छैनन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यहाँ महिला बेचबिखन समस्या प्रत्यक्ष रुपमा देखिएको छैन । बलात्कारका घटनाहरु भने यस जिल्लामा बराबर हुने गरेका छन् । जारी र बहुविवाह प्रथा शहर बजारमा भन्दा गाउँघरतिर अद्यापि देखिन्छ । देउकी र वादी प्रथा जिल्लामा नदेखिए पनि दाइजो प्रथाले यहाँ जरा गाडिसकेको छ । दाइजो नल्याएको रिसमा कतिका छोरी बुहारीहरुले अकाल मै मृत्यु वरण गर्नु परेका घटनाहरु पनि यहाँ घटेका छन् ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

विशेष गरेर अनियमित रुपमा बढेको भूटानी शरणार्थी समस्या नै यस जिल्लाको विविध क्षेत्रको विकासका लागि चुनौतीका रुपमा खडा भएको छ ।

■



# १. पूर्वाञ्चल

## मेची

# १.२ इलाम

| | |
|---|---|
| जनसंख्या | : २२९,४२९ |
| साक्षरता | : ५२.५ प्रतिशत |
| महिला साक्षरता | : ३९.१ प्रतिशत |
| क्षेत्रफल | : १७०३ वर्ग कि. मी. |

मेची अंचलमा अवस्थित इलाम देशको रमणीय र मनोरम क्षेत्रहरु मध्ये पर्दछ । यस जिल्लामा राजनैतिक प्रतिशोधका कारण लगाइएको सार्वजनिक अपराध तथा अन्य मुद्दाहरु हत्या, बलात्कार आदि मानव अधिकार उल्लंघनका प्रमुख घटनाहरु हुन् ।

२०२८ सालदेखि यस जिल्लाको चुलाचुली क्षेत्रको अव्यवस्थित बसोबास प्रमुख समस्याको रुपमा रही आएको छ । करीव ३४ सय परिवार रहेको यस क्षेत्रमा व्यवस्थित बसोवासका लागि १६ वटा आयोग बनिसकेका छन् । तर २०४८ भदौमा मच्छेन्द्रबहादुर केरुङ्को अध्यक्षतामा गठित आयोगले भने २०४९ चैत मसान्तसम्ममा यस क्षेत्रमा सुचारु रुपले बसोवासको व्यवस्था पूरा गर्ने जानकारी दिएको छ ।

## १. बाँच्न पाउने अधिकार

देशको संविधानले सबै नेपालीलाई सम्मानपूर्वक बाँच्न पाउने प्रत्याभूति गरे तापनि व्यवहारमा राजनैतिक प्रतिशोध, व्यक्तिगत रिसइवी र प्रतिष्ठाको अस्वस्थ होडबाजीले यस जिल्लाका बासिन्दाहरु भयमुक्त हुन सकिरहेका भने देखिदैनन् ।

### १.१ हत्या / गोली

२०४८ माघ ५ गते प्याङ गा.वि.स. वडा नं. ७ बस्ने अनिल राई सोही गा.वि.स. वडा नं. ९ मा भएको विवाहमा सघाउन जाँदा राजनैतिक प्रतिशोधका कारण केही व्यक्तिहरुद्वारा छुरा प्रहार गरी हत्या भएको थियो ।

२०४९ वैशाख २२ गते प्याङ गा.वि.स. वडा नं. ५ बस्ने बल बहादुर साउदेनलाई उत्तर थेवेको घरमा बाँधेर राखेको अवस्थामा मरिरहेको फेला परेकोले स्थानीय बासिन्दाहरु मदन थेवे, गौतम थेवे, जहरमान, ऐतराज, उत्तर थेवे, विजय थेवे र विमल थेवे उपर मुद्दा चलिरहेको छ ।

२०४९ असार १ गते जिल्ला प्रहरी कार्यालय इलामका क्वार्टर गार्डकमाण्डर प्र.ज.अर्कवीर चेमजोङले प्र.ह. धनराज रसाइलीलाई पेस्तोल बुझाउँदा धनराज रसाइलीको हातबाट अचानक पेस्तोल पड्किन् गई प्र.ज. हर्कवीर चेमजोङ घाइते भए र उपचारार्थ विराटनगर लैजाँदा बाटामै उनको मृत्यु भएको थियो ।

### १.२ जेल

यहाँको जेलको स्थिति साह्रै दयनीय रहेको छ । जेलमा भौतिक सुविधाहरु उपलब्ध भएको देखिदैन । ५५ जना बन्दीहरु अटाउन सक्ने क्षमता भएको यस जेलमा हाल ६८ जना बन्दीहरु छन् । आफूसंग मानवीय व्यवहार नगरेको धारणा बन्दीहरुले व्यक्त गरेका थिए ।

### १.३ गिरफ्तारी यातना

राजनैतिक प्रतिशोध र व्यक्तिगत रिसइवीका कारण यहाँका प्रहरीले मात्र होइन प्रशासकहरुले पनि मानसिक यातना र पीडा दिएको बताइन्छ

नेपाल राष्ट्रिय शिक्षक संगठनका सदस्य एकराज गुरुङलाई २०४९ जेठ २४ गते एक हुल मानिसहरुले सांघातिक आक्रमण गरे। गुरुङले त्यसको विरुद्ध जाहेरी दिंदा तत्कालीन स्थानीय प्रशासकले फरक विचार राख्नेहरुलाई यसरी नै सिध्याउनु पर्छ भन्दै जाहेरी लिन अस्वीकार गरेका थिए।

एकराज घिमिरेको घरमा प्रहरीद्वारा नै हात हतियार लुकाएर राखियो। त्यसपछि राजनैतिक प्रतिशोधको भावनाले निज घिमिरे उपर स्थानीय प्रशासकले हात-हतियार तथा खर-खजानाको मुद्दा लगाइ पक्राउ गरिएको थियो।

२०४८ पुस महिनामा स्थानीय फिक्कल बस्ने पासाङ घिसिङका घरमा हातहतियार सहित भारतका २२ जना सी.आर.पी. प्रहरी घुसी खानतलासी गरेका थिए।

२०४८ माघ २९ गते सोयाङ गा.वि.स.मा मोहियानी सम्बन्धी झगडालाई लिएर खड्गबहादुर बराइलीको अनुहार मा एसिड खनाइएको थियो।

## २. मौलिक अधिकार

यस जिल्लामा संविधानले दिएको मौलिक अधिकार र राजैतिक स्वतन्त्रताको राजनैतिक पार्टीका कार्यकर्ताले मात्र होइन प्रशासनले पनि उपहास गरेको देखिन्छ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ। तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन्।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन। अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन। चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन्।

यस वर्ष यहाँको जिल्ला अदालतमा देवानी तर्फ २५७ र फौजदारी तर्फ ३१६ गरी ५७३ मुद्दाहरु दायर भएका थिए।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन। त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन।

### ५.२ अन्य अमानवीय व्यवहार



# १. पूर्वाञ्चल

## मेची

## १.३ पाँचथर

| | | |
|---|---|---|
| जनसंख्या | : | १७५,८२१ |
| साक्षरता | : | ४४.५ प्रतिशत |
| महिला साक्षरता | : | २६.८ प्रतिशत |
| क्षेत्रफल | : | १२४१ वर्ग कि. मी. |

मेची अन्चलका ४ जिल्लाहरुमा पाँचथर सुगम र दुर्गम जिल्लाको दोसाँधमा रहेको छ । अशिक्षा, अज्ञानता र जनचेतनाको अभावमा जनताले संविधान प्रदत्त अधिकारहरु व्यवहारमा अनुवाद गर्न सकेका छैनन् । विशेष गरेर यस जिल्लामा राजनैतिक प्रतिशोधका कारण मानव अधिकार हनन्का घटनाहरु घट्ने गर्दछन् ।

### १. बाँच्न पाउने अधिकार

संविधानले सबै नेपालीलाई समान रुपले अधिकार सम्पन्न बनाए पनि राजनैतिक पूर्वाग्रहको भय र त्रासले यस जिल्लाका वासीहरु सन्त्रस्त छन् ।

#### १.१ हत्या / गोली

२०४९ जेठ ४ गते फलैचा गा.वि.स. वडा नं. ४ गडी दोभानमा चण्डी पूर्णिमा बजार लागिरहेको बेला बजार मा युवा-युवती बीच छेडछाड हुँदाहुँदै हुलदङ्गा हुन गएको थियो र सो हुलदङ्गाबाट बच्न ताप्लेजुङ्ग जिल्ला आङ्खोम गा.वि.स. वडा नं. ३ बस्ने वर्ष १८ का लक्ष्मण देवान खोला तरेर भाग्ने उद्देश्यले अँधेरी रातमा खोलामा फाल हाले । तर खोला निकै गहिरो हुनाले निज लक्ष्मण देवानको लाश ३ दिनपछि ३ किलोमिटर तल आङ्खोप र सादेवा गा.वि.स.को बीच सिदाखोलामा फेला पर्‍यो । निज मृतकका पिताले यस घटनालाई राजनितिक रुप दिई घटनामा उपस्थित भएका र नभएकाहरु केही किटान नगरी ३३ जना माथि कर्तव्य गरी ज्यान मारेको मुद्धा दायर गरे । जसमा ११ जनालाई तत्काल हिरासतमा लिइयो । प्रहरीले ५३ दिनसम्म हिरासतमा राखेकाहरुमाथि बकाउन यातना पनि दिएको देखिन्छ ।

*२०४८ साउन ५ गते मेमेङ गा.वि.स. वडा नं. २ का ३८ वर्षीय मेहेरमान कन्दङ्वाको मध्यरातमा अज्ञात व्यक्तिद्वारा गोली हानी हत्या गरिएको थियो । हत्याको आरोपमा सोही गा.वि.स. वडा नं. २ मच्छेबुङका यज्ञराज केरुङ्ग लगायत अन्य दुई जनालाई २०४८ मंसीर ७ गतेदेखि हालसम्म दयनीय अवस्थामा हिरासतमा राखेको देखिन्छ ।*

*२०४७ फागुन १६ गते मेमेङ गा.वि.स. वडा नं. २ मच्छेबुङमा मेला लागेको बेला सुरक्षामा खटिएका प्रहरीले पसलबाट कर उठाएकोमा विरोध जनाउँदा अनियन्त्रित भीड जम्मा हुन गयो । सो भीडलाई तितरवितर पार्न प्रहरीले गोली चलायो । गोलीबाट एकजना बृद्ध महिलाको तत्काल मृत्यु भयो । भीड झन् उत्तेजित भएको देखेर सहायक निरीक्षकले बन्दुकमा गोली भर्न लागे, सोबाट भीडलाई बचाउन प्रेमजङ्ग केरुङले प्रहरी सहायक निरीक्षकमाथि खुकुरी प्रहार गरे । प्रहरीमाथि सांघातिक आक्रमण गरी ज्यान मार्ने उद्योग गरेको आरोपमा निज केरुङलाई मरणासन्न अवस्थासम्म अमानवीय यातना दिइयो । र २९ दिनसम्म हिरासतमा यातना खाएका प्रेमजङ्ग केरुङलाई पुर्पक्षको लागि जेल चलान गरिएको थियो ।*

२०४९ असोज २१ गते च्याङथापू गा.वि.स. वडा नं. ७ चामलिङ डाँडा बस्ने ५० वर्षीय अमरबहादुर विरामी अवस्थामा थिए र त्यसै बखत सुरेन्द्रसंग भनाभन हुनाका साथै सामान्य कुटपीट भयो । त्यसपछि निज अमर कुमारलाई २३ गते ज्वरो आएको र ज्वरो मै मादक पदार्थ सेवन गरेकोले निमोनिया हुन गई असोज २८ गते मृत्यु भयो । सो मृत्युलाई



*आङखुङका लक्ष्मण देवानको शव यात्राका सहभागीहरु*

राजनीतिकरण गरी सोही गा.वि.स.का रवीन चामलिङले कृष्णकुमार राई र उनका भाइ सुरेन्द्र राईमाथि कर्तव्य गरी ज्यान मारेको मुद्दा दायर गरेका थिए।

## १.२ जेल

पाँचथर जिल्लाको जेलको स्थिति अन्य जिल्लाको तुलानामा अनुकूल मान्नुपर्छ। ३० जना बन्दीहरु अट्न सक्ने क्षमता भएको यहाँको जेलमा १ महिला, २४ पुरुष गरी २५ जना बन्दीहरु छन्। महिला र पुरुषका छुट्टा छुट्टै कक्ष भएको यहाँ १५ जना जेल कर्मचारीहरुमा १ जना पनि महिला छैनन्। जेल कर्मचारीहरुको व्यवहार सन्तोषजनक रहेको यस जेलमा बन्दीहरुलाई आर्थिक आर्जन गर्ने प्रशस्त अवसरहरु छन्। यहाँ ढाका टोपी बुन्ने, काठको काम गर्ने, मुढा बनाउने, जुत्ता सिउने, लुगा सिउने आदि अनेक घरेलु कामहरु भएको देखिन्छ।

## १.३ गिरफ्तारी यातना

नागी गा.वि.स. वडा नं. ३ बस्ने वर्ष २४ का मनस्थिति अलि खलबलिएको मणिकुमार म्याङबोले २०४९ कात्तिक २५ गते सोही गाउँको देवीप्रसाद आचार्यका गोठमा गएर बाछी काटी मुटु कलेजो खाए। निज मणिकुमार म्याङबोलाई गोवध गरेको अभियोगमा जिल्ला अदालतले १० वर्षको कैद गर्ने निर्णय गरिसकेको छ।

भारपा गा.वि.स. वडा नं. ६ बस्ने ३७ वर्षीय देवीप्रसाद लोवालाई २०४९ कात्तिक ६ गते अमरपुर गा.वि.स. वडा नं. ६ सिंगापुरका चौकी हवल्दार र प्रहरी सहायक निरीक्षक कालीबहादुर साम्सुहाङले पुरानो मुद्धाको कैद भुक्तान गर्न बाँकी भएको भनी पक्राउ गरी यातना र अमानवीय व्यवहार गरेको देखिन्छ।

च्याङथापु गा.वि.स. वडा नं. १ मा निर्माणाधीन प्राथमिक विद्यालयको विषयलाई लिएर भनाभन हुँदा कृष्णकुमार राईले मानबहादुरलाई घाँटीमा चुपी हानी सख्त घाइते बनाएका थिए। ज्यान मार्ने उद्योग गर्ने अभियुक्त कृष्णकुमार राई ७ वर्षको कैद भुक्तान गर्दैछन्।

२०४९ मंसीर १३ गते फाकतेप गा.वि.स. वडा नं. ४ बस्ने आसाहाङ सुतिरहेको बेला पुरानो रिसइवी साधन मादक पदार्थ सेवन गरी कृष्णध्वज च्यामजुङ, मान बहादुर च्यामजुङ, अविन्द्रप्रसाद च्यामजुङ, धनकुमार च्यामजुङ, चन्द्रबहादुर च्यामजुङ, धनबहादुर च्यामजुङ, जयबहादुर च्यामजुङ, भविन्द्र च्यामजुङ, खड्गबहादुर च्यामजुङ, जसबहादुर



*मृतक लक्ष्मण देवानको शव*

च्यामजुङले राती ९ बजे घर बाहिर ल्याइ सामूहिक रुपमा सांघातिक हमला गरे । हमला पश्चात् पीडित असहायको उपचार जिल्ला अस्पतालमा हुन नसकेर काठमाडौंमा ल्याई गरिएको थियो । हाल पीडितको मनस्थिति खलबलिएको छ ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

२०४९ जेठ १५ गते स्थानीय निर्वाचनको क्रममा रानीटार गा.वि.स. वडा नं. २ मा अवस्थित माध्यमिक विद्यालयमा निर्वाचन सुचारु रुपले भइरहेको बेला ईश्वरीप्रसाद तिमिल्सिनाले जाली नामावली ल्याई मत खसाल्न शुरु गरेपछि विवाद र हंगामा शुरु भयो । मतदान अधिकृतले सो कार्यको क्षमा माग्दै निज अधिकृत कै आदेशमा सार्वजनिक रुपमा सबै मतपत्रहरु जलाइए । यो मतदान स्थगित भएको र पुन: मतदानको सूचना सार्वजनिक रुपमा टाँसियो । तर सोही समय निर्वाचन अधिकृतसमक्ष केही व्यक्तिहरुले बुथमा आक्रमण र आतङ्क गरी मतपेटीका खोसेर जलाइएको भन्ने प्रतिवेदन तयार गरे र सोको आधारमा ४ जनालाई पक्राउ गरी २२ दिनसम्म हिरासत राखी मुद्धा दायर गरेको देखिन्छ ।

२.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यहाँको जिल्ला अदालतमा यस वर्ष देवानीतर्फ १८५, सरकारवादी फौजदारीतर्फ १८, दुनियाबादी फौजदारी तर्फ १७०, संक्षिप्त फौजदारीतर्फ १२८ र विशेष अदालत ऐन अन्तगर्त ५० वटा मुद्दाहरु दर्ता भएका छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

संविधानले महिलालाई समान अधिकार दिएतापनि यस जिल्लामा छोराछोरीबीच व्यापक भेदभाव गरिन्छ । समाजका गतिविधिबाट महिलालाई ओझेल पारिएको छ। बाल मजदूरी रहेको यस जिल्लामा बाल-बालिकाहरु शिक्षाको ज्योतिबाट बञ्चित छन् । यस जिल्लामा छोरीलाई विवाहका नाममा रितखाने भनी एक प्रकारले बेच्ने परिपाटी देखिएको छ ।

### ४.१ महिला किनबेच र बलात्कार

यस जिल्लामा महिला किनबेच प्रत्यक्ष रुपमा देखिएको छैन । तर बलात्कारको समस्या भने यदाकदा देखिन्छ । २०४९ कात्तिक ११ गतेका दिन पन्चमी गा.वि.स. वडा नं. ९ अमरपुर गाउँ बस्ने वर्ष १८ का राजकुमार लिम्बूले सोही स्थान बस्ने वर्ष ८ की कुमारी इन्द्रनामलाई बेलुकी घर फर्किरहेको समयमा खोल्सामा समातेर मुखमा रुमाल कोची जबरजस्ती करणी गरेर बेहोश अवस्थामा छाडेका थिए ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

पाँचथर बहु-धार्मिक, बहु-भाषिक र बहु-जातिय सम्प्रदाय भएको जिल्ला हो । हरेक जातिको आ-आफ्नो परम्परा र संस्कृति छ । अधिकांश लिम्बू जाति बसोबास भएको यस जिल्लामा परम्परागत रुढीवादले जरा गाडेको छ । देशमा २०१६ सालमा किपट प्रथा उन्मुलन भए तापनि यस जिल्लामा सो प्रथा अद्यापि यथावत छ । जग्गा धनीलाई सुब्बा भन्ने प्रचलन भएको यस जिल्लामा औकात र गच्छे अनुरुप किपोटिया, रैती, थरी, मुखिया आदिको व्यवहार गरेको अझै देखिन्छ ।

■



# १. पूर्वाञ्चल

## मेची

# १.४ ताप्लेजुङ

| | | |
|---|---|---|
| जनसंख्या | : | १२००७२ |
| साक्षरता | : | ४६.९ प्रतिशत |
| महिला साक्षरता | : | ३२.५ प्रतिशत |
| क्षेत्रफल | : | ३६४६ वर्ग कि.मी |

मेची अञ्चलको विकट जिल्लाहरुमा पर्ने ताप्लेजुङ जिल्ला भौगोलिक रुपमा मात्र होइन आर्थिक, राजनैतिक, सामाजिक तथा शैक्षिक स्तरबाट पनि पिछडिएको छ । अधिकांश लिम्बु जनजातिहरुको बसोबास रहेको यस जिल्लाको उत्तरमा शेर्पा तथा अन्य भागमा बाहुन, क्षेत्री, तामाङ, नेवार, दमाई, कामी आदि जातिहरु पनि बसेको पाइन्छ । उत्तरी हिमशृंखलाको काखमा रहेको ताप्लेजुङ जिल्ला संभवत अधिराज्य कै अशान्त जिल्लाहरुमध्ये पर्दछ । जिल्लामा मानव अधिकार स्थितिको अध्ययनबाट यहाँ राजनैतिक प्रतिशोध, हत्या, आतंक, मारपीट, अङ्गभङ्ग आदि जीवनशैली भैसकेको प्रतीत हुन्छ ।

## १. बाँच्न पाउने अधिकार

संविधानले सारा नेपालीलाई निसङ्कोच सम्मानपूर्वक बाँच्ने अधिकार सुम्पिए पनि यहाँको वस्तुस्थिति हेर्दा कुन बेला, कुन जमातले कुन जमातमाथि आक्रमण गर्छ भन्ने भय र त्रासको बादल मडारिइरहेको पाइन्छ ।

### १.१ हत्या / गोली

*राजनैतिक प्रतिशोधका कारण गत २०४७ भदौ महिनामा सिनाम गा.वि.स.का रामबहादुर दर्जीको हत्याबाट शुरु भएको यो क्रम अद्यापि कायमै छ ।*

२०४९ जेठ ३१ गते गत स्थानीय निर्वाचनमा थिङलाबु गा.वि.स. का उम्मेदवार नन्दहाङ लिम्बूलाई खेत जोत्न जाँदा बीच जंगलमा १२ जनाको हुलले सांघातिक आक्रमण गरी हत्या गरेको थियो। हत्या पश्चात् २१ जनामाथि कारवाही भएको छ । जसमा ३ जना थुनामा रहेका, ४ जना फरार रहेका र बाँकी तारेखमा छुटेका थिए ।

२०४८ वैशाख ११ गते सिनाम गा.वि.स.का राजनैतिक कार्यकर्ता इन्द्र थेवे र रुकमान थेवेको केही नेताहरुको निर्देशनमा हत्या भएको बताइन्छ । उक्त हत्या काण्डको मुद्दा श्री ५ को सरकारले फिर्ता लिई हत्याको अभियोग लागेका बीरेन्द्र राईलाई ससम्मान छुटाएर यस्ता हत्या काण्डहरु पुन: दोहोऱ्याउन प्रोत्साहित गरेको छ ।

२०४९ वैशाख १८ गते फुङलिङ गा.वि.स. वडा नं. ५ ताप्लेजुङ बजारमा अवस्थित प्र.जि.अ. निवास स्थानमा प्र.जि.अ. ऋषिकेश पौडेल स्थानीय निर्वाचनको काममा व्यस्त रहेको अवस्थामा उहाँकै सुरक्षा गार्ड प्रहरी हवल्दार आस बहादुर राईले साथमा भएको रिभल्वरद्वारा ४ राउण्ड गोली प्रहार गरेका थिए । यो घटना पश्चात् प्रहरी हवल्दार आसबहादुर राईले सोही गा.वि.स. वडा नं. ८ मा अवस्थित अम्बिटार भन्ने जङ्गलमा झुण्डिएर आत्महत्या गरेका थिए । उक्त रहस्यमय गोलिकाण्ड किन र के कति कारणले घट्यो त्यसको किटानका साथ पत्ता लाग्न सकेको छैन ।

२०४८ चैत १९ गते लिमखिम गा.वि.स. वडा नं. ३ बस्ने वर्ष ५५ का काजिमान लिम्बुले आफ्नो छोरा वर्ष २६ का डिल्लीराम लिम्बुलाई पहिले दिएको अंश दुरुपयोग गरी सिध्याएपछि खुकुरी लिएर पुन: बलजफ्ती अंश माग्न आउँदा भरुवा बन्दुकद्वारा गोली प्रहार गरी हत्या गरेका थिए । हालसम्म पनि काजिमान लिम्बु फरार रहेका छन् ।

२०४९ जेठ २ गते फुङलिङ गा.वि.स. वडा नं. ६ बस्ने वर्ष ६५ का इसाई धर्मावलम्बी पदमबहादुर लिम्बुले

आफ्नै श्रीमती ऐतरानी लिम्बुलाई बारम्बार धर्म परिवर्तन गर भनी भन्दा नमानेको रिसमा ऐतरानी लिम्बू घाँस काट्न जंगल गएको मौका पारी खुकुरी प्रहार गरी हत्या गरेका थिए। हाल अभियुक्त थुनामा सजाय भोगिरहेका छन्।

२०४९ असोज २१ गते निघुरादिन गा.वि.स. वडा नं. ७ सुके खोल्सीमा बडादशमीको दिन बमबहादुर लिम्बुले मादक पदार्थ सेवन गरी मातेको अवस्थामा राजनैतिक रिसइवी साध्न सोही गा.वि.स. का अध्यक्ष गणेश पोमुलाई मार्न जाँदा बाटामा टेकबहादुर थुलुङले मार्नु हुँदैन भनेर सम्झाउँदा रिसको झोंकमा उनले आफूसंग रहेको खुकुरी प्रहार गर्दा आफ्नो सुरक्षाका लागि टेक बहादुर थुलङले ढुंगा प्रहार गरे, जसबाट गहिरो चोट लागी असोज २३ गते बमबहादुर लिम्बुको मृत्यु भएको थियो।

२०४८ माघ २० गते तेल्लोक गा.वि.स. वडा नं. ५ फुन्दुवा बस्ने शेरबहादुर पारा लिम्बुकी छोरीको विवाहमा निम्त्याइएका पाहुनाहरुबीच रित खाने र नखाने साँस्कृतिक परम्पराका विषयमा उत्पन्न बादविवाद अन्तत घातक रुपमा परिणत भएको थियो। मामाङ्खे गा.वि.स. वडा नं. ५ बस्ने शेर बहादुर लिम्बुले तेल्लोक गा.वि.स. बस्ने वर्ष २५ का भवानी प्रसाद लिम्बुमाथि छुरा प्रहार गरी हत्या गरे भने उक्त भीडन्तमा पाराहाङ लिम्बु, कृष्ण प्रसाद भट्टराई, रामा थापा लगायत केही व्यक्तिहरु घाइते भएका थिए।

## १.२ जेल

वि.स. १९५२ मा अमिन चन्द्र कुँवरले बनाएको यहाँको जेल भवन साह्रै पुरानो र जीर्ण अवस्थामा रहेको छ। यहाँ वर्षात्मा पानी चुहिने गर्दछ भने जेलको उचित सर सफाई नहुनाले हरेक वर्षायाममा हैजा र विभिन्न सरुवा रोगको प्रकोपले सताउने गर्छ। यहाँको जेलमा १९ जना बन्दीहरु छन्। जेलमा घरेलु उद्योगको कुनै सुविधा छैन। साथै जेलमा देश विदेशको ज्ञानका लागि रेडियो, पत्र-पत्रिका, वाचनालय, पाठशाला, खेलकूद र मनोरञ्जनका सामग्रीहरुको अभाव देखिन्छ। जेलबाट प्राप्त भौतिक सुविधा र स्वास्थ्य सेवाको उचित सुविधा नभएको यो जेलमा देशको राजनैतिक परिवर्तनपछि हालसम्म कुनै राजनैतिक दलका नेता, जनप्रतिनिधि र प्रशासकहरुले मुख नदेखाएको गुनासो बन्दीहरुले पोखेका थिए।

## १.३ गिरफ्तारी / यातना

मुख्यतया राजनैतिक पूर्वाग्रहका भावनाले यहाँका धेरै व्यक्तिहरु गिरफ्तारी र यातनाको शिकार हुनु परेको थियो।

२०४९ जेठ महिनामा चण्डी पूर्णिमाको अवसरमा सांगु गा.वि.स. वडा नं. ८ ताम्राङमा लागेको मेलामा चागे गा.वि.स. बस्ने वृटिश सेनामा कार्यरत भेषराज लिम्बुको संखुवासभा नूनढाकी बस्ने पदम बहादुरसंग सामान्य वादविवाद भएपछि एक हुल आई निज लिम्बुमाथि सांघातिक आक्रमण गरी मरणान्त अवस्थामा पुऱ्याउनुका साथै उसंग भएका धनमाल पनि लुटेर लगेका थिए।

२०४९ असोज १६ गते (जमरे औंसीको अघिल्लो दिन) सांगु गा.वि.स. का निर्वाचित उपाध्यक्ष मनिकुमार सेरेङ, सोही गा.वि.स. बस्नेहरु खड्गबहादुर सेरेङ, शान्तिराम निरौला, नरसिंह बहादुर सेरेङ, हरिकृष्ण अधिकारी आदिको घरमा राजनैतिक पूर्वाग्रहले गर्दा एक हुल पसी सामानहरु जथाभावी फाल्ने, थाम, दैलो तोडफोड गर्ने, बालिनाली नष्ट गर्ने, खोरका कुखुरा लुट्ने, सुंगुर काटी खाने आदि गरेका थिए।

२०४९ मंसीर २२ गते सांगु गा.वि.स. वडा न. ९ मा बस्ने पिपलबोटे कान्छो भन्ने लिम्बुले आफ्नो रीतिरिवाज अनुसार गरेको वरखीमा सामान्य विवाद उत्पन्न भएपछि सोही गाउँका हरि लिम्बुले धारिलो हतियार प्रयोग गरी निज पिपलबोटे कान्छोका कान्छी औंला काटी अंगभंग गराएका थिए।

२०४९ साउन १ गते लिवाङ गा.वि.स. वडा नं. ७ मा चाडवाड मनाउन भेला भएका परिवारमा विवाद उत्पन्न भएपछि दाजु पदमसिंह लिम्बुले भाइ तमर लिम्बुलाई छुरा प्रहार गरी घाइते बनाएका थिए। तर सो काण्डमा राजनैतिक रुपमा बदला लिने नियतले शुकबहादुर लिम्बु, हरिबहादुर लिम्बु र नरबहादुर नाइदेम्बानाई झुठा मुद्दामा फसाइएको थियो।

२०४९ पुस १२ गते शिक्षक खगेन्द्रकुमार शिवाकोटी



*फूडलिङ गा.वि.स. वार्ड नं. १ को वडा सदस्यको एमाले उम्मेदवार चन्द्र बहादुर श्रेष्ठ खुकुरी र लाठीको प्रहार पश्चात घाइते अवस्थामा*

काम विशेषले पाँचथर आङबुङबाट आफ्नो घर तेह्रथुम, हवाकुतर्फ गैरहेको बेला निघुरादिन गा वि स वडा न १ तमर खोलाको लिम्बुनीपुल नजिकै चिया पसलमा राजनैतिक विवादका कारण केही व्यक्तिहरुले मरणासन्न अवस्थामा कुटपीट गरी फ्याँकेका थिए ।

## २ मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

बहु भाषी, बहु धर्म सम्प्रदाय र विभिन्न जनजाति रहेको यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको भने देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा संविधानले प्रत्याभूति गरेका जनताका मौलिक अधिकारहरुको उपहास गरिएको प्रतीत हुन्छ । भनाइको तात्पर्य गत वर्ष सम्पन्न स्थानीय निर्वाचनमा यस जिल्लामा जुन राजनैतिक दलको जहाँ जहाँ पकड र बाहुल्य छ, त्यहाँ उसले अनियमित, धाँधली र अशान्त वातावरण सिर्जना गरेको अनुभूत हुन्छ । एकातिर यी राजनैतिक शक्तिहरुले आफ्ना विचारसंग फरक मत राख्ने मतदाताहरुलाई भरसक मतदानबाट बञ्चित गर्ने प्रयास गरेको देखिन्छ भने अर्कोतिर आफ्नो विचारसंग असहमत राख्ने राजनैतिक शक्तिहरुका अस्तित्वलाई दबाउन विभिन्न हथकण्डाहरु अपनाएको महसूस हुन्छ । युम्मेदिन, सिनाम, सांगु, ढुंगेसाँघु, थुकिम्बा, थिङलाबु, लिवाङ, खोकलिङ, सन्थाक्रा आदि क्षेत्रहरुमा स्थानीय निर्वाचनमा अनियमित, धाँधली र अशान्ति भएको देखिन्छ ।

स्थानीय निर्वाचनका सिलसिलामा २०४९ जेठ १६ गते खोक्लिङ गा.वि.स. वडा नं. ९ दोवोम्मा डेरा गरी बसेका हरि साँवामाथि जिल्लाका राजनैतिक नेताहरुको निर्देशनमा एक उच्छृंखल जमातले मतदान गर्न नदिने दवाव दिएपछि उत्पन्न विवादको निहुँमा सांघातिक आक्रमण गऱ्यो । जसबाट पीडित हरि साँवाको टाउकोमा गम्भीर चोट, हात भाँचिनुका साथै घुँडामा हाड निस्केकोले सोको उपचार जिल्ला अस्पतालमा हुन नसकी काठमाडौं नर्सिङ होममा गराइएको थियो ।

२०४९ जेठ १५ गते फुङ्लिङ गा.वि.स. वडा न. २ बालसुबोधनि संस्कृत मा वि मा शान्तिपूर्वक मतदान भैरहेको बेला सोही गा.वि.स. वडा न. ८ का छत्रपति प्याकुरेलको नेतृत्वमा गाउँ बाहिरबाट आएको हुलका कारण त्याहाँ विवादको श्रृजना भयो । विवाद बढ्दै गए पश्चात् सोही गा.वि.स. वडा नं. १ का वडा सदस्यका उम्मेदवार चन्द्र बहादुर श्रेष्ठलाई एक्लै पारी खुकुरी र लाठीले कुटपीट गरी मरणासन्न अवस्थामा पुऱ्याइएको थियो ।

यस जिल्लामा जनताका मौलिक अधिकार र राजनैतिक अधिकारहरु अल्पमतमा परेका राजनैतिक कार्यकर्ताहरुले निर्वाध रुपमा उपभोग गर्न सकेका छैनन् । उदाहरणका लागि स्थानीय निर्वाचनको प्रचार प्रसारको क्रममा साँघु र थिलाम्बु पुगेका नन्दहाङ लिम्बु लगायत अन्य कार्यकर्ताहरुमाथि गैर कानूनी अमानवीय व्यवहार गरिएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा देवानी तर्फ १३८, फौजदारी दुनियावादी तर्फ १६८, संक्षिप्त देवानी तर्फ २, संक्षिप्त फौजदारी तर्फ ३७ सरकारवादी फौजदारी तर्फ २९ र निर्वाचन अपराधमा २ गरी जम्मा ३७६ मुद्दाहरु दायर भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

देशमा राजनैतिक परिवर्तनपछि २०४७ वैशाखमा रन्धोज लिम्बूको नेतृत्वमा आएको एक हुलले तापेथोक तथा तेल्लोक गा.वि.स. का निमुखा जनताका २४ घर भत्काउनु साथै घरभित्र रहेका मालसामान, भाँडाकुंडा तथा अन्य वस्तुहरु बाहिर फालेर ती पीडित जनताहरुलाई सुकुम्बासी तथा भूमिहीन बनाएको थियो । यस जिल्लाका कुल २०८७३ मध्ये २०९ घरमा सुकुम्बासी तथा भूमिहीनहरु रहेका छन् । जिल्लाको कुल जनसंख्याको १ प्रतिशत संख्या भूमिहीन सुकुम्बासीहरु छन् ।

## ४. महिला अधिकार

महिला हक र अधिकारहरुलाई देशका संविधानले यथेष्ट व्यवस्था गरे पनि यहाँका महिलाहरुको स्थिति अझै पनि पाषाणयुगको जस्तो छ । यहाँ जारी प्रथा, बहुविवाह प्रथा विद्यमान छ । विहेवारीमा रितभात खाने भनेर अप्रत्यक्ष रुपमा महिलाहरुमाथि शोषण गरेको अनुभव हुन्छ ।



०४७ बैशाख, तापेथोक गा.वि.स. मा भएको तोडफोड

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु बिवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारीप्रथा बाहेक देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु बिवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।



छुरा प्रहारबाट घाइते भएका तेल्लोक गा.वि.स. वार्ड नं. १ पुरहाङ लिम्बु

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

अधिकांश लिम्बु जातिको बसोबास भएको यस जिल्लामा उनीहरुको संस्कृति, परम्परा, रीति रिवाज, चाडपर्व आदि कुनै पनि शुभकार्यमा जाँड रक्सीको यथेष्ट प्रयोग हुने हुनाले यस जिल्लामा सानातिना कुरामा उत्पन्न भएको विवादले राजनैतिक रुप लिदै अन्त्यमा गएर हिंसा र हत्यामा समाप्त हुने अनेकौ उदाहरणहरु देखिएका छन् । तसर्थ यस जिल्लालाई धैर्यवान्, शान्त, संयमित बनाउनुका साथै यहाँका बासिन्दाहरुलाई शान्तिपूर्वक आफ्ना प्रजातान्त्रिक अधिकार हरु क्रमबद्ध रुपमा उपभोग गर्न सक्षम बनाउन सर्वप्रथम यस जिल्लामा जन्मदेखि मृत्युसम्म अपरिहार्य रहेको मादक पदार्थको प्रचलनलाई दुरुत्साहित गर्नु प्रमुख आवश्यकता रहेको अनुभव हुन्छ ।



# १. पूर्वाञ्चल

## कोशी

# १.५ मोरङ

| | | |
|---|---|---|
| जनसंख्या | : | ६७६४१७ |
| साक्षरता | : | ४७.८ प्रतिशत |
| महिला साक्षरता | : | ३४.५ प्रतिशत |
| क्षेत्रफल | : | १८५५वर्ग कि. मी. |

मोरङ राजनैतिक रुपले अधिराज्यको चेतनशील जिल्लामध्ये एक पर्दछ। कोशी अञ्चलमा अवस्थित यस जिल्लामा हुने प्रमुख घटनाहरुमा राजनैतिक प्रतिशोधका कारण उत्पन्न विवाद, झै झगडा, हत्या, आत्महत्या, चोरी आदि प्रमुख छन्।

## १. बाँच्न पाउने अधिकार

संविधानले सम्पूर्ण नेपालीलाई शान्तिपूर्ण बाँच्ने अधिकार प्रदान गरे तापनि यस जिल्लामा राजनैतिक प्रतिशोधका कारण उत्पन्न झै झगडा तथा अन्य कारणले गर्दा जिल्लावासीहरु भय मुक्त हुन नसकेको प्रतीत हुन्छ।

### १.१ हत्या / गोली

*देशको राजनैतिक परिवर्तन पछि २०४७ कात्तिक ८ गते लेटाङमा भएको हत्या काण्डबाट शुरु भएको श्रृंखला अद्यापि कायम नै रहेको अनुभूति यहाँका नागरिकहरु गरि रहेछन्।*

२०४८ फागुन ९ गते सोराभाग गा.वि.स. वडा नं. ३ कर्सिया बजारमा पानी थापिरहेका सत्य नारायण राजवंशीको कर्सिया प्रहरी चौकीका प्रहरी जवान धनेन्द्र तामाङको हातबाट अचानक पड्केको गोलीद्वारा मृत्यु भएको थियो।

२०४८ चैत २२ लेटाङ गा.वि.स. बस्ने श्रीमती सीता खरेल राती एक्लै सुतिरहेको मौका पारी गलत नियत राखेर सोही गा.वि.स. बस्ने कृष्णमोहन ठाकुर उपस्थित भयो। आफ्नो अस्मिता बचाउनका लागि हतियारद्वारा सीता खरेलले गरेको प्रहारबाट ठाकुरको मृत्यु भएको थियो र हत्याको अभियोग लागेकी सीता खरेल हाल कैदीका रुपमा जेल सजाय भोगिरहेकी छन्। स्मरणीय छ, सीताको पति विदेशमा छन्।

२०४८ फागुन २९ गते बेलबारी गा.वि.स.मा भएको बस दुर्घटनाबाट मेघनाथ अधिकारीको मृत्यु भएको थियो भने क्यामुना खनाल र शोभा निरौला घाइते भएका थिए। सो दुर्घटनापछि कारवाहीका लागि दवाब दिन जम्मा भएको उत्तेजित भीड माथि प्रहरीद्वारा गोली चलाईंदा राजेन्द्र तिमिल्सिनाको तत्काल घटनास्थलमै मृत्यु भएको थियो भने शहजीत दर्जी र फणीन्द्र विष्ट घाइते भएका थिए।

घाइते शोभा निरौलालाई उपचारको लागि काठमाण्डौ लगिएकोमा उनको त्यहिं मृत्यु भयो।

०४८ बैशाख ३ गते विराटनगर नगरपालिका वडा नं. ९ गोश्वारा रोडस्थित रामेश्वर लाल राजकुमार गोयलको घरमा सोही नगरपालिका वडा नं. ५ जामुनगाछी बस्ने आनन्द कामत मृत अवस्थामा फेला परेका थिए। कामतको मृत्यू रहस्यमय ढंगले भएको थियो।

### १.२ जेल

मोरङ जिल्लामा रहेको जेलमा सुनसरी जिल्लाका बन्दीहरुलाई पनि राखिने गरिएको छ। २०४५ सालमा आएको भूकम्पले जेलको स्थिति क्षतविक्षत भएपछि हाल सिंघिया नदीको किनारमा निर्माण गरिएको तर प्राविधिक रुपले अस्वीकृत जेलमा बन्दीहरु राखिने गरिएको छ। तर महिला बन्दीहरुलाई भने पुरानो भवनमा राखिएकोले उनीहरुको जीवन असुरक्षित रहेको देखिन्छ। स्मरण रहोस् अन्तरिम

कालमा जेल सुधारको प्रतिवेदन पेश गर्न गठित श्री बद्री राम भण्डारीको आयोगले महिला जेल २ दिन भित्र खाली गर्नु पर्ने प्रतिवेदन दिएको थियो । जेलमा बन्दीहरुको संख्या बढी भएकोले जेलको नियमानुसार आवश्यकता पुऱ्याउन नसकेको विचार जेलर स्वयं व्यक्त गर्दछन् । यस जेलमा महिलाहरु पनि अलि बढी नै रहेको हुनाले उनीहरुको हक, हित र सुविधाको विषयमा कुनै महिला संघ संस्था र महिला कानूनी परियोजनाबाट खोजिनीति नगरेको विचार महिला बन्दीहरुमा रहेको पाइयो ।

यहाँको जेलमा २५ महिला र ३९३ पुरुष गरी ४१८ जना बन्दीहरु रहेका छन् ।

### १.३ गिरफ्तारी / यातना

खास गरेर यस जिल्लामा जिल्ला प्रशासकहरुले नै राजनैतिक दलका कार्यकर्ताका रुपमा आफ्नो कार्य सम्पादन गरेको पाइयो ।

यस जिल्लामा राजनैतिक प्रतिशोधका कारण यातना दिने सजिलो उपायको रुपमा विशेष गरेर वन सम्बन्धी झुठो मुद्दा लगाउने गरिएको छ ।

मोरङ शनिश्चरे गा.बि.स. वडा नं. ७ र ५ को बीचमा पर्ने संखुवारा बजारमा सोही गा.बि.स. वडा नं. २ बस्ने हेमकुमार सुन्दास र अर्जुन तामाङ माथि भएको सांघातिक आक्रमण मानव अधिकार हननकै घटनाहरु मध्येको एक हो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त कुराहरुको ग्यारेण्टी गरे तापनि व्यवहारमा यी कुराहरु लागू हुन सकेको छैन । त्यसको सिंहावलोकन नै गर्नु पर्ने अपरिहार्यता देखिएको छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा विविध जाति, भाषा र धर्मावलम्बीहरु एक आपसमा सद्भाव मैत्री कायम गरी बसोबास गरेका छन् ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा सम्पन्न गत स्थानीय निर्वाचनलाई मूल्यांकन गर्ने हो भने संविधान प्रदत्त जनताको राजनैतिक स्वतन्त्रतालाई उपहास गरेको पाइन्छ ।

स्थानीय निर्वाचन अन्तर्गत विराटनगर नगर पालिकाका अधिकांश वडाहरुको चुनावमा उदन्ड शैली अपनाइएको थियो । यसै नगरपालिकाको वडा नं. २ मा



*०४९ जेठ १५ गते भएको विराटनगर नगरपालिकाको चुनावका क्रममा वडा नं. १३ मा तरबार र लाठी धारी व्यक्तिहरु देखिएको हस्तक्षेपको एक झलक ।*

शान्तिपूर्ण निर्वाचन भैरहेको बेला केही व्यक्तिहरुको आक्रमण द्वारा केही व्यक्ति घाइते भएका थिए। ने.कां. जिल्ला सदस्य उमेश गिरीको नेतृत्वमा जीपमा आएको टोलीले पेस्तोल चलाएर र तरवार र लाठी चेन प्रयोग गरेर वडा नं. २ र १३ को मतदान भाँडेको थियो । पछि चुनाव बदर गरिएको भएता पनि विपक्षीहरु सबैले निर्वाचन बहिष्कार गरेका थिए । त्यस्तै वडा नं. ४ को बुथमा अवैध मतपत्रहरु खसालिएको थियो, जसको नियन्त्रण गर्न नसकी अन्ततः विपक्षीहरुले चुनाव बहिष्कार गरी नारा, जुलुश प्रदर्शन गरेका थिए। जसमा २ राजनैतिक कार्यकर्ता महेश रेग्मी र राम घिमिरेलाई पक्राउ गरि दुई दिनपछि छोडिएको थियो। यसैगरी वडा नं. १५ मा आफ्नो पराजय निश्चित भएपछि निर्वाचन बदर गरिएको थियो। वडा नं. १, ५, ६, ७, ११ र १७ मा पनि निष्पक्ष, शान्तिपूर्ण रुपमा मतदान नभै एक पक्षीय रुपमा भएको थियो।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

जिल्लाको न्यायिक र अर्ध न्यायिक निकायमा विभाजन गरी हेर्दा अर्ध न्यायिक निकायका निर्णयहरु सन्तोषजनक भएको देखिंदैन। यी अर्ध न्यायिक निकायहरुले विशुद्ध न्यायिक निर्णय गर्नुका साटो प्रशासनिक तथा राजनैतिक दवावका आधारमा निर्णयहरु गरेको पाइयो।

मोरङ जिल्ला अदालतमा २०४८ साउन १ गतेदेखि २०४९ असार मसान्तसम्म विभिन्न अपराधमा गरी ३५७० मुद्दाहरु दर्ता भएका थिए।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा मोहियानी समस्या व्यापक रुपमा देखिएको छ। मोहीहरुलाई कानूनी व्यवस्थाको ज्ञान नहुनु, चेतनाको कमी रहनु तथा पछौटेपनले गर्दा यस जिल्लामा दिन प्रतिदिन मोहीहरुको संख्या घट्दै गएको छ। यसरी एकातिर मोहीहरुलाई जमिन्दारहरुबाट शोषण गरिएको छ भने अर्कोतिर मोहीहरु स्वयंले पनि जानी या नजानी नियमित कूत तिर्ने गरेको पाईदैन।

त्यस्तै सुकुम्बासी समस्याले पनि यस जिल्ला जरा गाडिसकेको छ। महेन्द्र राजमार्गको छेउछाउका सुन्दरपुर, दुलारी, इन्द्रपुर, बेलवारी, डाँगीहाट, बयरवन, पथरी, लेटाङ आदि गा.वि.स.हरुमा सुकुम्वासीहरुको संख्या अधिक रहेको छ।

बयरवन गा.वि.स.को ५० प्रतिशत जनसंख्या सुकुम्वासी समस्याबाट पीडित छ। सट्टा भर्ना स्वरुप प्रदान गरिएको २५८ विघा जग्गाको हालसम्म सुकुम्बासीहरुले जग्गा




*स्थानीय निर्वाचनमा भएको हस्तक्षेपका विरुद्धमा विराटनगर बजारमा निस्किएको सर्वदलीय विरोध ऱ्याली*

धनी प्रमाण पत्र प्राप्त गर्न सकेका छैनन् ।

बेलबारी गा.वि.स.मा करीब २५०० घर सुकुम्बासीहरुको रहेको देखिन्छ । लेटाङ गा.वि.स.मा ५ प्रतिशत जनसंख्या सुकुम्वासीहरुको रहेको छ । हाल यस क्षेत्रमा सुकुम्वासीहरुको ओइरोले यहाँका पुराना वासिन्दाहरु मगर, तामाङ जातिलाई कतै विस्थापित गराउने त होइन भन्ने शंका उत्पन्न भएको देखिन्छ ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

२०४८ फागुण ९ गते मंगलवारेको पुष्प होटेलमा काम गर्ने सीसी नाम गरेकी १० वर्षीया बालिकालाई ४-५ जनाले बलात्कार गरे । सो को उजुरी १२ गते प्रहरीमा गरिएको थियो । निज बालिका उक्त पीडाले सिकिस्त भइसकेकीले उजुरी गरेकै दिन उपचारका लागि कोशी अंचल अस्पताल बिराटनगर लगियो । तर पाठेघर फुटिसकेको हुनाले उपचार गर्दा गर्दै १९ गते उनको मृत्यु भयो ।

२०४९ भाद्र ३१ गते विराटनगर वडा नं. १४ को शान्ति शितल लजमा ११ वर्षकी बालिका मेनुका अधिकारी बलात्कृत भइन् । उनले बताए अनुसार खोजी गर्दा लजको कोठा भाडामा लिई उनलाई काम दिन्छु, छोरी बनाउँछु भनेर फकाएर लगी बलात्कार गर्ने व्यक्ति प्रहरी अ.स.ई. विष्णु बहादुर सुब्बा रहेछन् भन्ने पत्ता लाग्यो । निज बालिकाले नै सो घटना बारे जिल्ला प्रहरी कार्यालयमा उजुरी पनि दिइन् । तर हालसम्म कुनै कारबाही भएको पाइएन ।

*२०४८ मंसीर २१ गते बयरबन गा.वि.स. २ की वर्ष १३ की बालिका कमला लिम्बुलाई सोही ठाउँका बालकृष्ण नेउपानेले बलात्कार गरे । घटनाका प्रत्यक्षदर्शी गोपाल खतिवडा भएको उक्त मुद्दा जिल्ला अदालतमा दायर गरियो । अदालतद्वारा ७० दिने पक्राउ पूर्जी जारी भयो । तर अभियुक्त पक्रा परेका थिएनन् ।*

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लाको पथरीस्थित शरणार्थी शिविरमा करीब २० हजार जति भूटानी शरणार्थीहरु रहेका छन् । शरणार्थीहरुलाई विभिन्न अन्तर्राष्ट्रिय संघ संस्थाहरुले सहयोग गरे तापनि यो समस्याले आर्थिक, सामाजिक र वातावरणीय रुपमा विकटतातिर धकेलिरहेको छ । आफूलाई असहाय, बास्ता बिहिन र निराश ठान्ने ति शिविरका शरणार्थी युवतीहरुसंग सहयोगी संस्थामा कार्यरत व्यक्तिहरुले नै अनुचित सम्बन्ध राख्ने गरेको गुनासो शिविर छेउका केही बासिन्दाहरु गर्दछन् ।

■



# १. पूर्वाञ्चल

## कोशी

## १.६ सुनसरी

| | | |
|---|---|---|
| जनसंख्या | : | ४६४७६७ |
| साक्षरता | : | ४३.६ प्रतिशत |
| महिला साक्षरता | : | २८.६ प्रतिशत |
| क्षेत्रफल | : | १२५७ वर्ग कि. मी. |

कोशी अञ्चलमा अवस्थित सुनसरी जिल्लामा विगत एक वर्षमा त्यस्तो गम्भीर मानव अधिकार सम्बन्धी घटनाहरु भएको देखिंदैन । यस जिल्लाको दक्षिणमा भारतसंग खुला सीमाना भएकोले चौपाया चोरी, हात-हतियार ओसार-पसार र डकैतीहरु भई मानव अधिकार हननका घटनाहरु हुन्छन् । जिल्लाको उत्तरी भेगमा राई लिम्बूहरुको अधिक बसोबास भएकोले मादक पदार्थको व्यापक प्रचलनले एक आपसमा कुटपीट र मारपीटका घटनाहरु हुने गरेका छन् ।

राजनैतिक प्रतिशोध, व्यक्तिगत रिसइवी र सामाजिक प्रतिष्ठाको विषयलाई लिएर समाजमा अप्रिय घटना हुनु भनेको हाम्रो यस समाजमा परम्परा नै भइसकेको देखिन्छ ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

२०४८ चैत ३० गते नरसिंग गा.वि.स. वडा नं. २ बस्ने जगमोहन दासकी छोरी वर्ष १९ की शारदा देवी मण्डल बेपत्ता भएकी थिइन् । र २०४९ वैशाख ४ गते उनको क्षतविक्षत लाश खेतमा फेला परेको थियो । लाशको प्रकृति हेर्दा बलात्कार गरी हत्या गरेको देखिन्थ्यो ।

२०४९ भदौ १४ गते प्रकाशपुर गा.वि.स. बस्ने शुक्रबहादुर लिम्बू प्रकाशपुर हटियाबाट घर आउँदा बाटामा सोही गा.वि.स. बस्ने शुकरा मगर रक्सीले मातेर आफूसंग लिएको पैसा सन्ते माझीले नतिरेकोले गाली गर्दै थिए । सो देखेर निज शुक्रबहादुर लिम्बूले सम्झाउँदा उल्टै शुकरा मगर शुक्रबहादुर लिम्बू माथि जाइ लागे । उक्त झगडा छुट्याउने हेतुले गेवा माझी र बेचना माझीले शुक्रबहादुर लिम्बूलाई धकेल्दा निज लिम्बू भुईमा पछारिई घाइते भएको र २०४९ भदौ १६ गते विराटनगर अस्पतालमा उपचार गर्दागर्दै मृत्यु भएको थियो । मृत्यु पछि गेवा र बेचना माझी बेपत्ता भएका छन् भने शुकरा मगर जेल सजाय भोगिरहेका छन् ।

#### १.२ जेल

यस जिल्लामा जेल नभएको र जेल सम्बन्धी काम विराटनगरबाट हुने गरेको छ ।

#### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा फरक विचार राख्नेहरुमाथि अथवा राजनैतिक प्रतिशोधका कारणले झुठा मुद्दा लगाई गिरफ्तार र यातना दिएको पाइन्छ । यस कार्यमा जिल्लाका राजनैतिक नेताहरु नै सक्रिय रहेका बताइयो ।

श्रीपुर गा.वि.स.मा फरक विचारधारा राख्ने उपर लगाइएको लुटपीटको मुद्दा, त्यस्तै २०४९ पुस ५ गते देवन राय माथि लगाइएको मुद्दा यसका उदाहरणहरु थिए ।

२०४९ पुस ४ गते साहेवगंज गा.वि.स. वडा नं. ३ मा अवस्थित भदै शाहको चिया पसलमा भएको टनकपुर सम्बन्धी वाद विवादको विषयलाई लिएर कुशेश्वर पोद्दारले फरक विचारधारा राख्ने प्रकाश कुमार शाह, निजका बाबु

मानिकलाल शाह, भाइ शंकर कुमार शाह, बैनी ज्वाई भोला शाह उपर सार्वजनिक अपराधको मुद्दा लगाएका थिए ।

यस जिल्लाको दक्षिणी भाग जल्पापुर, मुराहा, घुस्की गा.वि.स. हरुमा कुख्यातीका रुपमा परिचित र अदालतबाट विभिन्न मुद्दामा सजाय पाएका भुटाहा गा.वि.स. वडा नं. ७ बस्ने एक व्यक्ति सत्ता पक्षीय पार्टीमा प्रवेश गरी विपक्षीहरुको नामोनिशान मेटाउने काममा सक्रिय भई उपरोक्त गा.वि.स. हरुमा आतंक मचाउँदै आएको बताइन्छ ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

संविधानले उपरोक्त अधिकारहरुको ग्यारेण्टी गरे तापनि व्यवहारमा शक्तिशाली राजनैतिक पार्टीहरुको बाहेक अन्य पार्टी र व्यक्तिहरु यसबाट वञ्चित भएको प्रतीत हुन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

विविध जनजाति, भाषाभाषी र धार्मिक सम्प्रदायहरु बसोबास गरेको यस जिल्लामा धार्मिक सहिष्णुता भने अद्यापि कायम छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा निर्वाचन "जसको शक्ति उसको भक्ति" मा निर्भर रहेको छ ।

२०४८ माघ २६ गते सम्पन्न यस जिल्लाको क्षेत्र नं. ३ को उप निर्वाचनमा जल्पापुर, देवानगंज, कप्तानगञ्ज, मध्यहर्षाही गा.वि.स. का मतदान केन्द्रहरुमा विपक्षी राजनैतिक दलहरुका कार्यकर्तामाथि आक्रमण समेत हुन गई, एक पक्षीय रुपमा मतदान कार्य भएको थियो ।

त्यस्तै उपनिर्वाचनकै क्रममा २०४८ माघ २३ गते इनरुवामा आमसभा गरी ट्रयाक्टरमा फर्केका कार्यकर्ताहरुमाथि आक्रमण हुँदा नवीन थापा (केरावारी गा.वि.स.) रामकुमार मगर (लेटाङ गा.वि.स.), योगराज राई (लेटाङ), उत्तम प्रधान (लेटाङ), बौवालाल यादव (मध्यहर्षाही गा.वि.स.) र बुद्धि पासवान (मोरङ) घाइते भएका थिए ।

२०४८ माघ २४ गते कप्तानगंज बजारबाट फर्कंदा बाटामा राजनैतिक कार्यकर्ता गुरु बराल र जीतु उप्रेतीमाथि केही गुण्डाहरुद्वारा आक्रमण भएको थियो ।

२०४८ माघ २५ गते उपनिर्वाचन कै क्रममा देवानगञ्जमा भएको कार्यकर्ता भेटघाटमाथि लाठी प्रहार हुँदा ९ जनाभन्दा बढी राजनैतिक कार्यकर्ताहरु घाइते भएका थिए ।

२०४८ माघ २६ गते भएको उप निर्वाचन अवलोकन गर्न गएका सांसदहरु सी.पी. मैनाली, राधाकृष्ण मैनाली, लालबाबु पण्डित आदि चढेको मोटरमाथि इनरुवामा आक्रमण हुँदा मोटरमा चढेका सांसदहरु सामान्य घाइते भएका थिए ।

यस जिल्लामा २०४९ जेठमा सम्पन्न स्थानीय निर्वाचनमा पनि अनियमित र अशान्ति भएको देखिन्छ ।

२०४९ जेठ १५ गते देवानगञ्ज गा.वि.स.मा गलत तरिकाबाट भएको मतदानको प्रतिकार गर्दा प्रतिपक्षका उम्मेदवार एवं राजनैतिक कार्यकर्ताहरु दुखीलाल मेहता, टिमाई मेहता, मनोज मेहता घाइते मात्र भएका थिएनन्, उल्टै दुखीलाल मेहता उपर डाँका मुद्दा दायर गरी हाल जेल चलान गराइएको देखिन्छ ।

स्थानीय निर्वाचनको क्रममा घुस्की, श्रीपुर, जल्पापुर, भोकाहा, हरिपुर गा.वि.स.मा सामान्य अशान्तिका घटनाहरु भएका थिए भने यसै क्रममा हरिपुर गा.वि.स.मा भएको विवादमा प्रहरीले चलाएको गोलीद्वारा अवधनारायण मरवेता घाइते भएका थिए ।

भुटाहा गा.वि.स.को निर्वाचन परिणाम पश्चात् निस्केको विजयी जुलुसमाथि अन्य पक्षले आक्रमण गर्दा लगभग २५ जना घाइते भएका थिए ।

मधेली, इटहरी गा.वि.स.मा निर्वाचनका क्रममा सामान्य झडप भएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लावासीहरु सुगम र निष्पक्ष न्यायिक अधिकारबाट बञ्चित रहेका छन् । यहाँ राजनैतिक नेताहरुद्वारा पूर्वाग्रहित भएर फरक विचारधाराका राजनैतिक कार्यकर्ताहरुमाथि सार्वजनिक अपराध मुद्दा लगाउन प्रशासनिक निकायहरुलाई दबाब दिने गरेको पाइएको छ । तसर्थ यहाँ सार्वजनिक अपराधका ९५ प्रतिशत भन्दा बढी मुद्दाहरु प्रतिशोधात्मक भावनाले लगाएकाले वास्तविकता भन्दा बाहिरका हुन्छन् भन्ने धारणा जिल्लाका बुद्धिजीविहरुको रहेको देखिन्छ ।

यस वर्ष यहाँको जिल्ला अदालतमा देवानी र फौजदारी तर्फ गरी ४३८७ मुद्दाहरु दायर भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# १. पूर्वाञ्चल

## कोशी

# १.७ धनकुटा

| | | |
|---|---|---|
| जनसंख्या | : | १४६७२४ |
| साक्षरता | : | ४८.५ प्रतिशत |
| महिला साक्षरता | : | ३३.५ प्रतिशत |
| क्षेत्रफल | : | ८९१ वर्ग कि. मी. |

कोशी अञ्चलका ६ जिल्लाहरुमध्ये धनकुटाको आफ्नै इतिहास, गरिमा र महत्व छ ।

### १. बाँच्न पाउने अधिकार

देशको संविधानले प्रत्येक नेपालीलाई सम्मानपूर्वक बाँच्ने अधिकार दिए तापनि आर्थिक, सामाजिक, भौगोलिक विविधताले गर्दा आफ्ना अधिकारहरु व्यवहारमा अनुवाद गर्न सकेका छैनन् ।

### १.१ हत्या / गोली

यस जिल्लामा हत्या र गोली सम्बन्धी खासै घटना भएको छैन । तर २०४९ असोज ११ गते ओखेबाट धरानतर्फ गइरहेको को.अ.ख. २ नं. को ट्रक दुर्घटना भई २२ जनाको मृत्यु भएको विभत्स घटना भने यस जिल्लामा बहुत गम्भीरताका साथ लिइएको छ । सो दुर्घटनाको मूल कारण भने सम्बन्धित निकायले गैर जिम्मेवारीका साथ मालसामान ओसार्ने ट्रकलाई यात्रुवाहक गाडीका रुपमा चल्न छुट दिनु नै हो भनिन्छ ।

### १.२ जेल

धनकुटाको जेल साह्रै नाजुक अवस्थामा रहेको छ । २०४५ भदौमा गएको भूकम्पले क्षतिग्रस्त भएको यहाँको जेलको मरम्मत तथा सम्भार गरिएको छैन । हाल कारागार शाखाको कार्यालय रहेको घरको भुईं खण्डका दुईवटा स-साना कोठाहरुलाई नै जेल बनाइएको छ ।१५ जना पुरुष र ४ जना महिला गरी १९ जना बन्दीहरुले खाना बाहेक अन्य केही सुविधा पाएका छैनन् ।

जेलभित्र एकापट्टी मात्र सानो चोक रहेको छ र बन्दीहरुलाई चौबीसै घण्टा कोठाभित्रै थुनिन्छ । उनीहरुलाई बिहान दिसा पिसाव गर्न र मुख धुन अनि दिउँसो भात खान र बेलुकी फेरी भात खान मात्र छोडिन्छ । त्यस बाहेक एक जनालाई भात पकाउन र भाँडा माझ्न छोड्ने गरेको पाइन्छ ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक पूर्वाग्रह साध्न अनेकौं बहानाहरु बनाएर गिरफ्तार गरिएको र यातनाहरु दिइएको छ । २०४९ मंसीर १५-१७ को बीचमा स्थानीय खानेपानीको पाइप काटेको आरोपमा आँखीसल्ला गा.वि.स. वडा नं. ८ साप्तेनटार बस्ने डम्बर बहादुर श्रेष्ठलाई बिना पूर्जी गिरफ्तार गरियो । त्यस्तै सोही आरोपमा हात्तीखर्क गा.वि.स. वडा नं. ६ का ६७ वर्षीय किसान हर्क बहादुर लिम्बु, गोपालराम लिम्बु र सुश्री दुर्गा लिम्बुलाई २०४९ कात्तिक २२ गतेदेखि २८ दिनसम्म हिरासतमा राखिएको थियो ।

हात्तीखर्क गा.वि.स. वडा नं. ४ का डमरुवल्लभ अधिकारी लगायत केही किसानहरुलाई जग्गाधनी रमेश

पौडेलले कुत बुझाउँदा भरपाई नगरेकोले भनाभन भएपछि सोको बहाना बनाई झुठा मुद्दा दिएको र निज मोहीहरुलाई गिरफ्तार गरी अन्ततः खेत जोत्ने अधिकारबाट बञ्चित गरिएको थियो ।

२०४९ वैशाख ७ गते दुई विद्यार्थी समूहबीच झडप हुँदा केही विद्यार्थीहरु घाइते हुनाका साथै सांसद माथि समेत हातपात भएको थियो । हातपात पश्चात् सांसद उपर सार्वजनिक अपराधको मुद्दा लगाइएको थियो ।

२०४९ वैशाख २५ गते प्रहरीलाई उपचार नगरेको रिसमा सिभिल ड्रेसमा प्रहरीको एक जत्था मातेर राति धनकुटा अस्पताल भित्र प्रवेश गरेर ड्युटीमा रहेका डाक्टर जगतनारायण गिरीलाई अमानवीय तरीकाले कुटपीट गरी अचेत अवस्थामा छाडिदिएका थिए । सोही अस्पतालका स्वास्थ्यकर्मी विजेश्वर मण्डल पनि कुटपीटमा परी घाइते भएका थिए ।

संसदीय निर्वाचन र स्थानीय निर्वाचनको रिस साध्न महाभारत गा.वि.स.का राजनैतिक कार्यकर्ताका साथै सान्ने गा.वि.स.का उपाध्यक्ष नरेन्द्र स्याङ्बो र सोही गा.वि.स. वडा नं. ५ का सदस्य खिमबहादुर आलेलाई सार्वजनिक अपराध ऐन अन्तर्गत झूठा मुद्दा लगाइएको थियो । त्यसै गरी राजनैतिक कार्यकर्ताहरु कमल चेम्जोङ र पूर्ण चेम्जोङलाई सार्वजनिक अपराध ऐन अन्तर्गत झूठा मुद्दा लगाई ३५ दिनसम्म हिरासतमा राखी विना पुर्पक्ष छोडिएको थियो ।

*०४८ पुस १ गते स्थानीय राजारानी बजारमा उत्पन्न भएको इसाई धर्म सम्बन्धी विवादमा रेवती घिमिरे र सन्त चेमजोङलाई १२ दिनसम्म प्रहरीले यातनाका साथ हिरासतमा राखेको थियो ।*

२०४८ सालको कर्मचारी आन्दोलनलाई समर्थन गरेको बहानामा यस जिल्लाका विभिन्न कार्यालयका १२ जना कर्मचारीलाई अवकाश दिइयो, ३२ जनाभन्दा बढी कर्मचारीको ग्रेड रोक्का गरियो साथै घटुवा र अपायक पर्ने क्षेत्रमा सरुवा गरिएको थियो ।

त्यस्तै यस जिल्लामा शिक्षकहरु पनि यातना र मानसिक पीडाको शिकार भएको पाइयो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।



फोटोः वर्ष पुस्तक

*धनकुटा जेलको बाहिरि दृष्य*

## २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

संविधान प्रदत्त अभिव्यक्ति, भेला र संगठित हुने अधिकारबाट कोही वञ्चित भएको नदेखिए पनि गत स्थानीय निर्वाचनमा धनकुटा नगरपालिका वडा नं. ६ को बुथमा अनियमितता भएको थियो, जसको कारण मतदाताहरु मतदान गर्ने अधिकारबाट वञ्चित भए । धनकुटा नगरपालिका वडा नं. १ का सदस्य पदमा विजयी भएपछि पनि चिन्तन तामाङलाई जिल्ला विकास समितिको निर्वाचनमा "भ्रष्टाचार गरेको अभियोगमा" उम्मेदवारबाट वञ्चित हुनु परेको थियो । धनकुटा नगरपालिका वडा नं. ६ मा केदार श्रेष्ठलाई उम्मेदवार हुन दिइएन । त्यस्तै ताङ्खुवा गा.वि.स. का उपाध्यक्षका उम्मेदवार विष्णु प्रसाद लिम्बू र सोही गा.वि.स. वडा नं. ७ का सदस्यका उम्मेदवारलाई छानबीन नगरिकन पेश्की फछ्र्यौट नगरेको भन्ने निवेदनको भरमा उम्मेदवार हुनबाट वञ्चित गरिएको थियो ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्षमा यहाँको जिल्ला अदालतमा १२५ वटा मुद्दाहरु दर्ता भएका थिए ।

# ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

# ४. महिला अधिकार

संविधानमा महिला हक हितको यथेष्ट प्रावधान भए तापनि व्यवहारमा जारी प्रथा, बोक्सी, छुवाछुत ज्यूँका त्यूँ रहेका छन् ।

## ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष धनकुटामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

## ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

जारी प्रथा यस जिल्लामा फाटफुट देखिएको छ । बहुविवाह पनि गाउँ घरतिर अद्यापि कायम छ । परेवादिन गा.वि.स. वडा नं. ३ बस्ने दुर्गा के.सी.ले श्रीमती र छोराछोरी हुँदाहुँदै सोही गाउँकी गीता कार्कीसंग पुन: दोस्रो विवाह गरे ।

# ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

## ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

## ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा छुवाछुत, जातिपाति, धामी, झाँक्री, बोक्सी र दासदासी प्रथा अझै गाउँघरतिर कायम रहेको पाईयो । साथै मानव अधिकार सम्बन्धी प्रमुख समस्याहरुमा सवारी दुर्घटना, आगलागी, चोरी, सार्वजनिक अपराधका घटना आदि छन् ।

■

# १. पूर्वाञ्चल



## कोशी

## १.८ तेह्रथुम

| | | |
|---|---|---|
| जनसंख्या | : | १०२९५२ |
| साक्षरता | : | ५४.६ प्रतिशत |
| महिला साक्षरता | : | ३७.८ प्रतिशत |
| क्षेत्रफल | : | ६७९ वर्ग कि. मी. |

कोशी अञ्चलका ६ जिल्लाहरुमा तेह्रथुम पिछडिएको जिल्ला हो । राजनैतिक प्रतिशोधका अतिरिक्त जातिपाती, छुवाछुत तथा तल्ला जातिहरु माथिको अमानवीय व्यवहार आदि रुढीवाद र कुरीति ग्रस्त पिछडिएको मनस्थितिबाट उत्पन्न समस्याहरु यहाँका मानव अधिकार हननका मूल कारकहरु हुन् ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

हत्या / गोली जस्ता घटनाहरु यस जिल्लामा नभए तापनि मूल रुपमा राजनैतिक प्रतिशोधबाट उत्पन्न घटनाहरु व्यापक भएको पाइयो ।

#### १.२ जेल

यस जिल्लामा जेलको स्थिति दयनीय नै छ । नियम कानून अनुसार प्राप्त सुविधा समेत उपभोग गर्न नसकेका यहाँका बन्दीहरु भौतिक सुविधाद्वारा पनि बञ्चित छन् । यस जेलमा हाल २३ पुरुष, ४ महिला र २ नाबालक सहित २९ जना बन्दी छन् ।

#### १.३ गिरफ्तारी / यातना

राजनैतिक पूर्वाग्रहका कारण विनाकसूर गिरफ्तार गरिएका घटनाहरु यहाँ प्रशस्तै भेटिए । गत २०४८ सालको आम निर्वाचनमा सोल्मा गा.वि.स. को काँडे भन्ने ठाउँमा दुई राजनैतिक दलका कार्यकर्ता बीच भएको झडपका सन्दर्भमा स्थानीय प्रहरी अधिकृतले एक पक्षीय कारवाही गरेर सोल्मा गा.वि.स.का अध्यक्ष अम्वरबहादुर गुरुङ, साल्ला गा.वि.स. का अध्यक्ष पुष्पप्रसाद सुवेदी, काँडेका शिक्षक रस बहादुर कार्की र जिरिखिम्ती वडा नं. ९ बस्ने राधा विष्ट माथि सार्वजनिक मुद्दा चलाएका थिए । २०४९ कात्तिकको अन्त्यतिर आङ्गदिम गा.वि.स. का अध्यक्ष गुरुप्रसाद भट्टराई र दांगपा गा.वि.स. का मजदूरहरुबीच ज्यालाको विषयलाई लिएर चलेको विवादपछि भट्टराईमाथि कालोमोसो दल्ने काम भयो । त्यस पश्चात् दांगपाका १४ जना मजदूर हरुलाई स्थानीय प्रशासनले ११ दिनसम्म हिरासतमा लिनुका साथै उनीहरुमाथि सार्वजनिक मुद्दा लगाइएको थियो । ती मजदुरहरु अद्यापि तारीख खेप्दै छन् ।

२०४९ भदौ ५ गते म्याङ्लुङ गा.वि.स.मा लागेको मेला भरी सोही गा.वि.स. वडा नं. १ बस्ने हरेराम उप्रेती घर फर्किरहेको बेला निजलाई मादक पदार्थ सेवन गरेका प्रहरीहरु गोविन्द बहादुर कार्की, ज्ञान बहादुर प्रधान, शेर बहादुर श्रेष्ठ र मीन बहादुर कार्कीले बाटो छेकी कुटपीट र लछारपछार गरी हिरासतमा राखे । प्रहरीको उक्त यातनाबाट निज उप्रेतीको देब्रे आँखामाथि कञ्चटमा गहिरो घाउ लागेको थियो ।

### २. मौलिक अधिकार

राजनैतिक पूर्वाग्रहले गर्दा स्थानीय नेताहरुको दबावमा इन्द्रायणी प्रा.वि. तोक्मा (जलजले) का शिक्षक रामप्रसाद

ढकाल, श्रीसिंह वाहिनी प्रा.वि. अम्फुवा जिरिखिम्तीका शिक्षक चूडामणि ढकाल, श्री अमरसिंह नि.मा.वि. सेर्मा ओमाक्चुङका शिक्षक उमेश दाहाल र कृष्ण प्रसाद भट्टराई, नारायण नि.मा.वि. साव्लाका शिक्षक परशुराम सुवेदी तथा लिसिबुङ प्रा.वि. खाम्लालुङका शिक्षक मोहन अर्याललाई निष्काशन गरिएको थियो ।

मौलिक अधिकार अन्तर्गत धार्मिक स्वतन्त्रताको प्रावधान भए तापनि यस जिल्लामा ठूलाठालुहरुले अन्य पिछडिएका जनजाति तथा निमुखाहरुमाथि शोषण गरेको पाइन्छ ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा २१० वटा मुद्दा दर्ता भएका थिए । जसमध्ये ५८ वटा फछ्र्यौट भइसके ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लाको सुङनाम गा.वि.स. वडा नं. ८ को लसुने (सडकाते डाँडा) मा ८ परिवारहरु सुकुम्बासीका रुपमा सरकारी स्वामित्व भएको जग्गामा घर बनाई बसेका छन् । उनीहरुको तीन पुस्तादेखि अधिराज्यको कुनै पनि स्थानमा घर जग्गा छैन । उनीहरुको जीविकोपार्जनका लागि कृषि शाखा, पाखिबास (धनकुटा) ले १० वटा बङ्गुर नि:शुल्क उपलब्ध गराइदिएको कुरा सुकुम्बासीहरुले बताए ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा कर्मचारीहरु प्रहरी र प्रशासनको भयबाट मुक्त नभएका घटनाहरु पनि छन् । नेपाल दूर सञ्चार संस्थानका कर्मचारी कैलाश कुमार कार्की जिल्ला प्रहरी कार्यालयमा टेलिफोन शुल्क उठाउन जाँदा जिल्लाका प्रहरी नायब उपरीक्षक मोहन कृष्ण खड्काले निज कार्कीलाई अमानवीय व्यवहार गर्नुका साथै केहीबेर हिरासतमा राखेका थिए ।

राजनैतिक प्रतिशोधको भावनाले सत्तापक्षका स्थानीय नेताको आडमा पौठाक गा.वि.स. वडा नं. ६ बस्ने डम्बर बहादुर लिम्बूकी श्रीमती नरमाया लिम्बु र छोरी खिलमाया लिम्बूलाई श्रीजुङ गा.वि.स. बस्ने अमृत बहादुर लिम्बु (झाँक्री) ले बोक्सीको आरोप लगाएपछि स्थानीय बासिन्दाहरुले निज आमा छोरीलाई सिस्नो पानी लगाई अमानवीय व्यवहार गर्नुका साथै गाली बेइज्जती गरी समाजबाट बहिष्कार गरेका थिए ।



# १. पूर्वाञ्चल

## कोशी

# १.९ भोजपुर

| | | |
|---|---|---|
| जनसंख्या | : | १९८,३०१ |
| साक्षरता | : | ४२.७ प्रतिशत |
| महिला साक्षरता | : | २७.३ प्रतिशत |
| क्षेत्रफल | : | १५०७ वर्ग कि. मी. |

कोशी अञ्चलमा अवस्थित भोजपुर जिल्लामा पनि मानव अधिकार हननका मुख्य घटनामा राजनैतिक प्रतिशोध, हत्या, आत्महत्या, रिस इवी आदिलाई लिन सकिन्छ ।

## १. बाँच्न पाउने अधिकार

संविधानले प्रत्येक नेपालीलाई सम्मानित एवं स्वतन्त्रतापूर्वक बाँच्ने अधिकार प्रदान गरेता पनि जिल्लाको राजनैतिक परिस्थिति र तनावपूर्ण वातावरणले गर्दा यस जिल्लामा असुरक्षा, भय र त्रासको वातावरण रहेको छ ।

### १.१ हत्या / गोली

२०४८ पुस १७ गते रानीबास गा.वि.स. वडा नं. ८ हतुवा बस्ने बर्ष २१ की कान्छी (कमला) दिदीको घरबाट आफ्नो घरतिर आइरहेको बेला अज्ञात व्यक्तिद्वारा बलात्कार गरी हत्या गरेको आशंका गरिएको थियो । र मृतकको लास देवानटार गा.वि.स. पात्ले पानी जङ्गलमा २०४८ माघ ९ गते मात्र सनाखत हुन सकेको थियो ।

२०४८ भदौ २३ गते कोट गा.वि.स. बस्ने ताराबहादुर कटुवालको नागीका रामसिंह राई, सिद्धेश्वरका भोला राई, छिनामखुका ढिल्ली प्रसाद प्रधान, आम्तेकका धनबहादुर श्रेष्ठसंग स्थानीय भोजपुर गा.वि.स. डाँडा गाउँमा राजनैतिक विवाद बढ्दै गएर एक अर्का बीच कुटाकुट भएको भोलिपल्ट भोजपुर जिल्ला अस्पतालमा मृत्यु भएको थियो ।

### १.२ जेल

भोजपुरमा अवस्थित जेल बन्दीहरुको बढ्दो संख्याले साह्रै सानो भएको छ । जेलको भौतिक सुविधाबारे त्यति ठूलो गुनासो नभएको यस जेलमा सीपमूलक उद्योगका नाममा टोपी बुन्ने तान २४ वटा छन् । त्यस्तै प्रौढ शिक्षा, औषधोपचार, शौचालय, दाउरा, बत्ती पानी, आदिको खास कमी महसूस नभएको यस जेलमा बढ्दो महंगीले गर्दा बन्दीहरुको थप भत्ता, उच्च शिक्षा सञ्चालन, शैक्षिक सामग्री (पुस्तक पत्र-पत्रिका) उपलब्ध, जेलरको पदोन्नति हुनुपर्ने आदि माग रहेको देखिन्छ ।

### १.३ गिरफ्तारी / यातना

*देशमा राजनैतिक परिबर्तनपछि फरक मत राखेको आरोपमा २०४८ बैशाख ८ गते बासिखोरा गा.वि.स. वडा नं. ८ आरितामादुङमा अवस्थित जलेश्वरी प्रा.वि.का शिक्षक तथा सिद्धेश्वर गा.वि.स. ४ दावाका पूर्णबहादुर नेपालीलाई सेवाबाट अवकाश दिइएको थियो ।*

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

देशको संविधानले बिना करकाप स्वेच्छाले कुनै पनि धर्म अपनाउन पाउने धार्मिक स्वतन्त्रता प्रदान गरेको छ। सिन्दाङ्ग गा.वि.स. वडा नं. ३ बस्ने नारायण तामाङ्गले स्वेच्छाले हिन्दू धर्म त्यागेर इसाई धर्म अपनाएपछि केही कट्टर हिन्दूहरुले निज तामाङ्गलाई समाजबाट बहिस्कार गरी अछुत प्राय: बनाएका छन्। त्यस्तै रानिवास गा.वि.स. वडा नं. ८ बस्ने दीर्घ भुजेलले आफू खुसी हिन्दू धर्म त्यागेर इसाई धर्म अपनाएपछि केही कट्टर हिन्दूहरुले निजलाई पनि समाजबाट बहिस्कार गरी अछुत बनाएका छन्।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा गत वर्षको स्थानीय निर्वाचन डर, धम्की, त्रास र पैसाको भरमा सम्पन्न भएको देखिन्छ। टक्सार हेलौंछा, च्याङ्गे, सानो दुम्मा आदि गा.वि.स.मा अनियमित, अशान्ति र तनावको वातावरणमा निर्वाचन भएको फलस्वरुप निष्पक्ष, निर्भिक एवं स्वतन्त्रतापूर्वक मतदान गर्न आएका मतदाताहरु मतदान गर्ने अधिकारबाट समेत बञ्चित भएका थिए।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन्।

यस वर्ष भोजपुर जिल्ला अदालतमा विभिन्न अपराधका गरी ५१३ वटा मुद्दा दायर भएका थिए।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन।

## ४. महिला अधिकार

संविधानले महिला हक र हितको यथेष्ट प्रावधान प्रदान गरे तापनि व्यवहारमा महिलाहरु यस जिल्लामा अति नै शोषित र पीडित छन्। नेपाले डाँडा गा.वि.स. वडा नं. ७ बस्ने वर्ष २७ की चम्पा भट्टराईको पति परदेशबाट फर्केपछि उसलाई सासू, ससुरा, जेठानी आदिले तिम्री स्वास्नी बाराजे सार्कीसंग लहसिएकी छे भन्ने कुरा सुनाएपछि निज चम्पा भट्टराईलाई घर र माइती दुबै तर्फबाट बहिस्कार र अपमानित गरिएको थियो।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

साङ्पाङ गा.वि.स. वडा नं. १ गैरीगाउँ बस्ने वर्ष २५ की काली भुजेल जङ्गलमा दाउरा खोज्न जाँदा सोही गाउँ बस्ने वर्ष २३ का ईन्द्र बहादुर राईले विभिन्न प्रलोभन देखाएर बलात्कार गरेका थिए। बलात्कार पश्चात निज काली भुजेलले छोरा जन्माएकी थिइन्। छोराको बुबाको खोजीनिती हुँदा काली भुजेलका परिवारले ईन्द्रबहादुर राईलाई पत्नी र छोरा अपनाउन अनुरोध गर्दा उल्टै राईले पीडितका भाइ वीर बहादुर भुजेललाई कुटपीट गर्नुका साथै परिवारलाई गाली बेइज्जति गरेका थिए।

सिद्धेश्वर गा.वि.स. बस्ने वर्ष २३ की एउटी विवाहित महिला आफ्नो बच्चा सहित राती सुतिरहेका बेला पति नभएको मौका पारी सोही ठाउँका एकजना प्रभावशाली व्यक्तिले विभिन्न डर र त्रास देखाई बलात्कार गरेका थिए भन्ने कुरा ति महिला बताउँछिन्। तर त्रासको कारण कसैले पनि न्याय खोज्ने आँटसम्म पनि गरेनन्।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

जारी प्रथा यस जिल्लामा अद्यावधि कायम छ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन।

### ५.२ अन्य अमानवीय व्यवहार

धामी, झाँक्री, बोक्सी जस्ता प्रथा पनि यहाँ कायम रहेको भेटिन्छ। भोजपुरकोट गा.वि.स. वडा नं. २ बस्ने वीर बहादुर कटुवाललाई गाउँका भैसीले दुध नदिंदा बोक्साको आरोप लगाई गाउँलेहरुले घरमै लाठो-मुग्रोले कुटेका थिए। यस्तो अमानवीय र अप्रमाणित लाञ्छना लगाएको सहन गर्न नसकी बीरबहादुर आफ्नो जायजेथा सस्तोमा बेचबिखन गरी ०४९ मङ्सीरमा मोरङ्गतर्फ बसाई सरे।



# १. पूर्वाञ्चल

## कोशी

# १.१० संखुवासभा

| | | |
|---|---|---|
| जनसंख्या | : | १४१७७१ |
| साक्षरता | : | ४७.६ प्रतिशत |
| महिला साक्षरता | : | ३१.३ प्रतिशत |
| क्षेत्रफल | : | ३४८० वर्ग कि. मी |

कोशी अञ्चलमा पर्ने तथा प्रसिद्ध हिमश्रृंखला मकालुको काखमा अवस्थित संखुवासभामा परापूर्व कालदेखि नै विविध भाषाभाषी र जनजातिहरु बसोबास गर्दै आएका छन् । यो जिल्लामा प्राय: गरेर उत्पीडित जातिहरुको अधिक संख्या भएकाले उनीहरु शोषित र आश्रित रुपमा रहेका छन् । सार्वजनिक अपराध, कर्तव्य ज्यान, बलात्कार, चोट, हत्या, लागु पदार्थ, जुवा आदि यहाँका मूल समस्याहरु हुन् ।

## १. बाँच्न पाउने अधिकार

संविधानले सम्पूर्ण नेपालीहरुलाई समान रुपले बाँच्ने अधिकार प्रदान गरे तापनि अन्धविश्वास, रुढीवाद, अशिक्षा, जनचेतनाको अभाव आदिले गर्दा जनताहरुले आफ्ना अधिकार व्यवहारमा अनुवाद गर्न सकेको पाईदैन ।

### १.१ हत्या / गोली

स्थानीय निर्वाचनको क्रममा २०४९ जेठ १८ पाङमा गा.वि.स.मा दोस्रो चरणको निर्वाचन शान्तिपूर्ण चलिरहेको बेला आँखा वृद्धा नदेख्ने महिलाको मतदानको विषयलाई लिएर भएको विवाद र हुलदङ्गाबाट डिल्लीराम चौहानको मृत्यु भयो । मृत्युको अभियोगमा २ जनालाई पुर्पक्षका लागि थुनामा राखिएको छ र १५ जनालाई तारीखमा छाडिएको छ भने ४ जना फरार छन् ।

### १.२ जेल

यस जिल्लामा एउटै मात्र जेल रहेको छ । त्यो पनि चैनपुरमा अवस्थित जिल्ला अदालतबाट उक्त जेल पुग्न दुई दिन लाग्ने हुनाले जेलको निरीक्षण बराबर हुन अप्ठ्यारो परि रहेको कुरामा जेलसंग सम्बन्धित प्रमुखहरुको एकमत छ । यस जेलमा २८ जना बन्दीहरु छन् जसमा ३ महिला १ नाबालक र २४ पुरुष रहेका छन् ।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा सत्तापक्षीय संघ संस्थासंग अलग रहने अथवा विशेष गरेर कर्मचारी र शिक्षकहरुले बीभत्स मानसिक यातना र समस्या झेल्नु परेको देखिन्छ । गत बर्ष पेशागत माग राखी सञ्चालन भएको कर्मचारी आन्दोलनमा संलग्न भएको बहानामा निमुखा निसहाय २० जनाभन्दा बढी कर्मचारीले जागिरबाट हात धुनु पर्‍यो भने कतिको ग्रेड रोक्का हुनाका साथै घटुवा भई जिल्लाको अपायक ठाउँमा सरुवा हुनु पर्‍यो । त्यस्तै यस जिल्लाका संगठनसंग सम्बद्ध ३०० जना भन्दा बढी शिक्षकहरु मानसिक यातना र आतंकको शिकार हुनु पर्‍यो । जसमा शिक्षक संगठनका अध्यक्षलाई ज्यानमुद्दामा जेलमा कोचिएको छ भने २५ जनालाई अवकास र बाँकी कतिपय शिक्षकलाई जिल्लाको दुर्गम र अपायक क्षेत्रमा ग्रेड रोक्का गर्नुका साथै घटुवा गरी सरुवा गरिएको छ ।

मादक पदार्थ सेवन गरी गाउँघरमा होहल्ला मचाउने, चेलीबेटीलाई कुदृष्टिले हेर्ने, समाज खल्बल्याउने प्रहरीसंग प्रतिकार गर्नेहरुले विभिन्न झुठा मुद्दाको आरोप खेप्नुका साथै हिरासतमा कोचिएर अमानवीय यातना समेत पाउनु पर्छ । यस जिल्लामा प्रहरी आतंक पनि अलि बढी देखिन्छ ।

२०४९ भदौ १६ गते धुपु गा.बि.स. वडा नं. ५ गोठगाउँमा प्रहरी सहायक निरीक्षक भूपाल खड्का र २०४९ मंसीर २८ गते पाथिभरा गा.बि.स. छेदाङ्ना गढीमा प्रहरी हवल्दार इन्द्र बहादुर थापाको आतंक यसका उदाहरणहरु हुन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानले सबै पेशाका व्यक्तिहरुलाई संगठन हुने अधिकार दिएको छ । तर यस जिल्लामा असहमत विचारधारा राख्ने संगठनमाथि बाधा अड्चनहरु देखाई भरसक क्रियाशील हुन नदिने चेष्टा गरेको देखिन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्वतन्त्र निष्पक्ष निर्वाचन राजनैतिक स्वतन्त्रताको एक अङ्ग हो । यस जिल्लामा २०४८ सालको संसदीय निर्वाचन शान्तिपूर्ण रुपले भए तापनि गत वर्षको स्थानीय निर्वाचनमा भने केही धाँधली र अशान्ति भएको देखिन्छ । पाङ्मा गा.वि.स. मा भएको स्थानीय निर्वाचन यसैको उदाहरण हो । कतिपय गा.बि.स.मा मनोनयन पत्र नै दर्ता गरिएन भने थुप्रै बुथहरु सत्तापक्षले कब्जा गरेको जनगुनासो छ ।



०४९ जेठ १८ गते भएको भिडन्तका कारण १९ गते जीवन त्याग गरेका पाङ्माका डिल्लीराज चौहान

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष जिल्ला प्रहरी कार्यालयमा ७६ वटा घटनाहरु दर्ता भएका थिए, जसमा ५९ मुद्दा अदालतमा पेश भए भने १७ जिल्ला प्रशासनमा कारवाहीको लागि पेश भएको थियो ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु बिवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ स्वीकृत प्रचलन भैसकेकोले उल्लेख्य समस्याको रुपमा जनताहरु प्रकट गर्दैनन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

संखुवासभाको उत्तरी भागमा शेर्पा र भोटे जातिहरुको बसोबास छ भने बाँकी भागमा बाहुन, क्षेत्री, नेवार, दमाई, कामी, सार्की, मगर, राई, लिम्बू, गुरुङ, तामाङ, माझी, कुमाल, जोगी, कुसुले आदि बसोबास गर्दछन् ।

यस जिल्लाको सबभन्दा ठूलो बिडम्बना दलित र उत्पीडित जातिमाथिको असमान र अमानवीय व्यवहार हो । परम्परागत रुपमा यहाँका जातिहरुबीच ठूलो, सानो, पानी चल-अचल, धनी गरीब आदि अमानवीय भेदभावको ठूलो खाडल छ । उत्पीडित जातिहरुलाई अमानवीय व्यवहार गरिनुका साथै समाजबाट तिरस्कार गर्ने प्रचलन पनि छ। यस जिल्लामा आँखीभुई, सिभुवा, स्याबुज तथा केही गा.वि.स.हरुमा दलित तथा उत्पीडित जातिहरुलाई ठूला जातिका घरको आँगनसम्म जान पनि प्रतिबन्ध लगाएको अद्यापि देखिन्छ । त्यस्तै उत्पीडित जातिको घरको आँगनमा टेक्दा ठूलाबडा जातका व्यक्तिहरु आफूलाई अपमानित भएको ठान्दछन् । उत्पीडित जातका बाल बच्चाहरु अन्य कुनै जातिको घरमा पसे भने स्वस्ती शान्ति गरी शुद्ध पार्ने गरिन्छ ।

यसरी यस जिल्लामा अधिक संख्यामा रहेका उत्पीडित र दलित जातिहरुको आर्थिक सामाजिक र शैक्षिक अवस्था दयनीय छ । यहाँ ९५ प्रतिशत उत्पीडित जातिहरु गरीबीका रेखामुनि छन् भने ९२ प्रतिशत यी जातिको जनसंख्या शिक्षाको उज्यालो घामबाट बञ्चित छ ।

# १. पूर्वाञ्चल



## सगरमाथा

## १.११ सप्तरी

| | | |
|---|---|---|
| जनसंख्या | : | ४६४५०० |
| साक्षरता | : | ३३.९ प्रतिशत |
| महिला साक्षरता | : | १७.३ प्रतिशत |
| क्षेत्रफल | : | १३६३ वर्ग कि. मी. |

यस जिल्लामा राजनीतिक प्रतिष्ठा विस्तार र प्रतिद्वन्दिताका लागि हुने झगडा, प्रहरीको पुरानो मानसिकता र झै-झगडाको कारण मानव अधिकार हनन हुने गरेको पाइन्छ।

### १ बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

२०४९ साल जेठ १५ र १८ गते भएको स्थानीय निर्वाचनको सिलसिलामा जिल्लाका विभिन्न ठाउँमा गोली चलेको थियो ।

फकिरा गा.वि.सको राष्ट्रिय प्राथमिक विद्यालय फकिरा-७ को मतदान केन्द्रमा सद्भावना पार्टी र कांग्रेस पार्टी बीच जेठ १५ गते १२ बजेतिर विवाद भएको थियो। मतदान केन्द्रभन्दा करीब आधा किलोमिटर दक्षिणमा कांग्रेस र सद्भावना पार्टी बीच भएको यो विवादमा गोली चल्दा फकिरा- २ निवासी ५५ वर्षीय रामप्रसाद सिंहको गोलीबाट मृत्यु भयो। सद्भावना पार्टीसंग सम्बद्ध सिंहलाई छाती र मलद्वारमा गोली लागेको थियो।

जेठ १८ गते मलेठ गा.बि.स.मा मतदानको अन्तिम समयतिर मतदान गर्ने लाइनमा ठेला-ठेल हुनासाथ मतदान अधिकृतले गोली चलाउने आदेश दिए। पहिलोपल्ट प्रहरीले हवाइफायर गऱ्यो। दोश्रोपल्ट चलाएको गोली परबाट रमिता हेरिरहेका मलेठ गा.बि.स.- ७ निवासी ३६ वर्षीय सुनर यादवको देब्रे हातको पाखुरा हुँदै पेटभित्र पस्यो। उनी बेहोस भए। उपचारपछि उनी स्वस्थ भएका छन्।

सकरपुरा गा.बि.स.मा जेठ १८ गते भएको शान्तिपूर्ण निर्वाचनमा मतगणना गर्दा उपाध्यक्ष पदमा कांग्रेसका उमेद्वार विजयी घोषित भएपछि सद्भावना पक्षले पुनः मतगणना गराउने माग गऱ्यो। दोश्रो र तेश्रोपल्ट मतगणना गर्दा सद्भावनाका उमेदवार विजयी भएपछि कांग्रेसका कार्यकर्ताले निर्वाचनका सामग्री खोस्न खोजे । निर्वाचन अधिकृत र प्रहरीहरु गोली चलाउँदै सदरमुकाम राजबिराजतिर लागे पनि करीब ३ किलोमिटर परसम्म स्थानीय जनताले पछ्याइराखे । जेठ १९ गते दिउँसो १ बजेतिर प्रहरीले कोइलाडी गा.वि.स. ७ को मलाह टोल नजिक गोली चलाउँदा सोही गा.वि.स. ७ बस्ने वर्ष ४० को सोतीलाल साहको घटनास्थल मै मृत्यु भएको थियो। उक्त घटनामा ३५ वर्षीय सुखीलाल मलाहको तिघ्रामा गोली लागेको, वर्ष २० का खुसीलाल मलाहको तीघ्राको मासु गोलीले छेडेको र ११ वर्षीय डम्बर साहको खुट्टामा गोली लागेको थियो।

#### १.२ जेल

विक्रम सम्वत १९९८ सालमा निर्मित राजविराज जेलको झ्याल र ढोकामा एउटा पनि खापा छैन। जाडोमा चिसो हावा र गर्मी तथा बर्षामा पानीले बन्दीलाई सताउँछ । राजविराज जेल यतिखेर नेपालका अत्याचार पराकाष्ठामा पुगेका जेलहरु मध्ये अग्रपंक्तिमा पर्दछ। हाल यो जेलमा का.मु. जेलर कामानन्द देव छन् । उनी सीनियर

असिष्टेन्ट हेल्थ वर्कर पनि हुन् । त्रिरामी बन्दीहरुलाई अनाधिकृत कम्पनीहरुद्वारा निर्मित गुणस्तरहीन औषधिहरु वितरण गर्ने गरिएको छ भन्ने कुरा औषधिका खोल र सिसीहरु हेर्दा प्रष्ट हुन्छ ।

कम्तीमा ११० जना र बढीमा १६० जनासम्म राखिने गरेको राजविराज जेलमा हाल १३० जना बन्दीहरु छन् । जेलको भवन दुईतले छ । यहाँको महिला वार्डमा महिला प्रहरीको व्यवस्था छैन र एकजना पागल महिलासंगै अन्य दुई जना महिलाहरु रहेका छन् । सो वार्डमा एउटा खुला इनार छ र त्यहाँ एउटी महिला बन्दीले आत्महत्याको प्रयास पनि गरेकी थिइन् ।

यहाँको जेलभित्र नेल पनि लगाइने गरेको बताइन्छ । जेलभित्र रहेको चौकीदारको पसलमा किनमेल नगरे बन्दीहरुले कुटपीटको शिकार हुनु पर्छ । बन्दीहरुको भेटघाट जेल प्रशासनको तजवीजमा निर्भर रहेको देखिन्छ । बन्दीहरुले गोरखापत्र किन्न खोज्दा १ प्रतिको रु ५ तिरेर किन्नु पर्दछ । खेलकूदको नाममा जेलभित्र २०४२ देखिको एउटा फुत्रे चेसवोर्ड मात्र रहेको पाइयो ।

बेला-बखत नाइकेबाट कुटपिट हुने गरेको, धम्की सहनु परेको र दुःख पाउने गरेको गुनासो बन्दीहरुले गरे । खानामा कहिले भुस समेतको चामल र कहिले पानीमा भिजेको चामल दिने गरेको उनीहरुले गुनासोको स्वरमा बताए ।

सामान खरिद गर्न पियन छैन भन्ने गरेको र पियन सामान किन्न जाँदा कम्तीमा रु २ देखि १० सम्म लिने गरेको बताइयो । बजारमा भन्दा कारागारको पसलमा १० देखि ४० प्रतिशत मूल्य बढी असुल्ने गरेको बन्दीहरुको गुनासो रहेको छ ।

घाउ, खटिरा, ढाड दुख्ने, कम्मर दुख्ने, आँखाको कमजोरी जस्ता रोगबाट अधिकांश बन्दीहरु पीडित छन् । जेलमा डाक्टरको प्रवन्ध छैन । औषधिका लागि बजेट कम छ । सोभीत्तर चौधरी ७८ वर्षको उमेरमा पनि बन्दी जीवन बिताइरहेका छन् तर उनी दुबै आँखा नदेख्ने भइसकेका छन्।

पन्सेराका सातेन ताती १७ महिनादेखि जेल सजाय भोगीरहेका छन् । उनलाई ०३१ सालको १५ वर्षे जेल सजायको आदेश अनुसार थुनिएको छ । तर उनको पक्राउ पूर्जीमा सातेन तत्मा, गा.वि.स. कन्चिरा बनरझूला उल्लेखित छ । सातेन ताती आफुलाई ०२८ देखि ०३२ सालसम्म राजविराज जेलमा र ०३६ सालसम्म काठमाण्डौ सेन्ट्रल जेलमा राखिएको बताउँछन् । यसरी पन्सेराका सातेन ताती "बनरझूलाका सातेन दास तत्माको सट्टा जेल सजाय भोग्दैछु" बताउछन् ।



फोटोः सर्ग पुस्तक

*राजविराज जेल भित्रको एक झलक*

करीब २० फीट लम्बाई र ७ फीट चौडाई भएको हलमा १७ जनालाई लहरै सुताएर राख्ने गरेकाले निदाउँन कहिले पालो पर्खनु पर्ने, नत्र खाँदाखाँद गरेर सुत्नुपर्ने अवस्था देखियो ।

राजविराज जेलको अवस्था दयनीय, जर्जर र अत्यन्त कठीन छ भन्ने कुरा मानव अधिकार संरक्षण मंच, मानव अधिकार संगठन र जिल्लाका राजनीतिक कार्यकर्ताहरु मात्र होइन, प्रमुख जिल्ला अधिकारी समेतले एकै स्वरमा स्वीकार गरेका थिए ।

### १.३ गिरफ्तारी / यातना

यातना र गिरफ्तारीका घटनाहरु उल्लेखनिय रुपमा भएको खासै पाइएन ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

*कर्मचारी आन्दोलनमा सकृय भएका यहाँका धेरै कर्मचारी निलम्बनमा परेका छन् । नेपाल निजामति कर्मचारी संगठनको आह्वानमा भएको कर्मचारी आन्दोलनको सिलसिलामा यस जिल्लामा बिभिन्न १३ वटा कार्यालयका २४ जना स्थायी कर्मचारीलाई निलम्बन गरिएको थियो । निलम्बनमा परेका २४ जनामध्ये ११ जनालाई २०४८ असोज २७ गते निलम्बन फुकुवा गरेको र २ जना कर्मचारीलाई अवकाश दिइएको पाइयो ।*

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

*२०४७ साल पुस ३० गते राष्ट्रिय प्रजातन्त्र पार्टीले आयोजना गरेको आमसभा जनआन्दोलन पछिका महत्वपूर्ण घटनामा पर्दछ । पहिले राज रंगशालामा गर्ने भनेर प्रचार प्रसार गरिएको र पछि राजदेवी मा.वि.को प्राङ्गणमा भएको आमसभामा अखिलले कालो भण्डा प्रदर्शन गरेको थियो भने ने.वि.संघ र स्थानीय जनताको भीडले ढुंगा प्रहार गरेको थियो । राप्रपाका नेताहरुलाई केही नभए पनि सो घटनामा १ ट्रक र मोटर साइकल जलेको, विशाल प्रिंटिंग प्रेसमा तोडफोड भएको, जिल्ला प्रहरी कार्यालयमा ढुंगा-मुढा भएको र प्रहरीले लाठीचार्ज गर्दा १ जना गम्भीर र एक दर्जन सामान्य घाइते भएका थिए ।*

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्वासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■



# १. पूर्वाञ्चल

## सगरमाथा

# १.१२ सिराहा

| | |
|---|---|
| जनसंख्या | : ४६०१२२ |
| साक्षरता | : २९.० प्रतिशत |
| महिला साक्षरता | : १३.३ प्रतिशत |
| क्षेत्रफल | : ११८८ वर्ग कि. मी. |

यस जिल्लामा मानव अधिकार हनन् भएका अधिकांश घटनाहरु राजनीतिक प्रतिद्वन्दिता र प्रतिष्ठा विस्तारको सिलसिलामा भएको पाइन्छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

२०४९ साल जेठ १५ र १८ गते गरी २ चरणमा भएको स्थानीय निर्वाचनको सिलसिलामा यस जिल्लाका ३ वटा गा.वि.स.हरुमा प्रहरीद्वारा गोली चलाइको थियो ।

जेठ १५ गते दिउँसो सुखचैना गा.वि.स.मा १ बजेसम्म शान्तिपूर्ण तरिकाले भैरहेको मतदान केन्द्रमा हो-हल्ला हुँदा-हुँदै नेपाली कांग्रेसका तर्फबाट अध्यक्ष पदका र वडा नं. ५ का सदस्य पदका उम्मेद्वारद्वय क्रमश: सूर्यनारायण यादव र चन्द्रनारायण यादवले पिस्तोल निकाले । वडा नं. ५ को मतदान केन्द्र रा.प्रा. विद्यालयमा प्रहरीले ३६ राउण्ड हवाई फायर गऱ्यो । यही भागदौड र हो-हल्लामा एक भारतीय नगारिकले चलाएको बन्दुकको छर्राले वडा नं. १ निवासी २७ वर्षिय रामचन्द्र यादव घाइते भए । जनकपुर अंचल अस्पतालमा २ दिन उपचार गराएपछि उनी स्वस्थ भएका थिए । सोही दिन, हालका जिल्ला विकास सभापति चन्द्रनारायण यादवले चलाएको पेस्तोलको गोलीबाट वडा नं. ५ निवासी तारकेश्वर यादव घाइते भएका थिए ।

लक्ष्मीपूर गा.वि.स.मा निर्वाचनको सिलसिलामा करीब २:३० बजेतिर भएको झगडामा गोली चल्दा नथुनी महतोको मृत्यु भयो । महतोलाई कस्ले हानेको गोली लाग्यो र उनी मरे भन्ने कुरा हालसम्म यक्किन हुन सकेको छैन । स्थानीय जनताको भनाई अनुसार भारतीय लठैतले चलाएको गोलीबाट नथुनीको मृत्यु भएको हो । प्रहरीले आफ्नो दलले गोली चलाउँदा नथुनीको मृत्यु भएको बताएको छ ।

लँगडीगोठ गा.वि.स.मा दोश्रो चरण (जेठ १८ गते) को निर्वाचनको सिलसिलामा भएको हो-हल्ला र विवादपछि विहान ९ बजेदेखि नै मतदान केन्द्र वरपर गोली चलेको थियो । मतदाताहरुलाई त्रसित गराउने उद्देश्यले त्यसरी गोली चलाइए पछि मतदान केन्द्र वरपर उमेद्वारका प्रतिनिधिहरुले धर्ना दिए । १८ गतेको निर्वाचन रद्द गरियो । पछि सो गा.वि.स मा २५ गते शान्तिपूर्वक मतदान सम्पन्न भएको थियो ।

२०४८ सालको संसदीय निर्वाचनदेखि नै उमेद्वारीको विषयलाई लिएर संयुक्त जन मोर्चाभित्र विष्णुलाल वाइवा र धर्मनाथ शाह बीच चलेको प्रतिस्पर्धा समय बित्दै जादा शत्रुतापूर्ण हुन पुग्यो । स्थानीय निर्वाचनमा धर्मनाथ प्रसाद शाहले जनमोर्चा भित्रको एउटा हिस्सा, अरु वामघटक र अरु राजनीतिक दलहरुसंग मिलेर चुनाव लडे । फलत: विष्णुलाल वाइवा पक्ष र धर्मनाथ प्रसाद शाह पक्षका कार्यकर्ताहरु बीच कुटपिट र भै-झगडा बढ्न थाल्यो ।

२०४९ साउन १० गते विष्णुलाल वाइवाकी भाइ बुहारी (काजीलालकी पत्नी), उनकी छोरी र भतिजीले धर्मनाथ पक्षका लालकुमारकी भाञ्जी र साम्रत मानकी छोरीलाई दुर्व्यवहार र गाली गरे । गाउँमै मिलाउन २ पल्ट बैठक बस्दा काजीलाल वाइवा उपस्थित भएनन् । वाइवालाई भेटे पक्रेर ल्याउने निर्णय भयो ।

साउन २९ गते दुवै पक्षका कार्यकर्ताहरु बीच बडहरामाल गुठीको मेलामा पुन विवाद भयो । ३१ गते काजीलाल गाउँमा आएको थाहा पाएर धर्मनाथ पक्षका मानिस उनलाई पक्रन गए, तर काजी लाललाई नभेटेपछि भरोसी सदासँग मेलामा भएको विवादको कुरा उठ्यो । विवाद बढ्दै गएपछि धर्मनाथ पक्षका कार्यकर्ताले भरोसी सदालाई ४/५ लठ्ठी हाने । छोरो पिटिएको देखिपछि घटनास्थलमा फर्सा लिएर भरोसीका बाबु सीताराम सदा पुगे । उनले फर्सा चलाउँदा बडहरामाल गा.वि.स. का पंचा मुखिया र मुर्रा मनाह घाइते भए । त्यसपछि सीतारामको हातको फर्सा धर्मनाथ पक्षका मानिसले खोसेर उल्टो प्रहार गर्दा ५० वर्षीय सीताराम सदाको मृत्यु भयो ।

यस घटनामा बाइवा पक्षले २९ जनालाई प्रतिवादी बनाएर कर्तव्य ज्यान र डाँका मुद्दाको जाहेरी दिएका थिए । यसै घटनाको सिलसिलामा पक्राउ परेका कल्याणपुर कालावन्जार गा.वि.स.का जीवछ माझी र महेशी यादवलाई विना पूर्जी गिरफ्तार गरिएको थियो ।

## १.२ जेल

कुल ७५ जना बन्दी राख्न सकिने क्षमता भएको सिराहा जेलमा बढीमा २२५ जनासम्म बन्दी राखिएको तथ्य त पुरानो भयो, तर अहिले पनि सो जेलमा १२८ जना बन्दीहरु छन् । अरु जेलको तुलनामा चर्पी र पानीको बन्दोवस्त नराम्रो देखिदैन । तर कारागार ऐन २०२० लाई बदल्नुपर्छ भन्ने कैदीहरुको माग छ ।

सरुवा र दीर्घ रोगीलाई रिहा गर्ने भनिए पनि त्यस्ता रोगी प्रमाण लिएर छुट्ने प्रयास गर्दा पनि जेलबाट मुक्ति नपाएको गुनासो गर्दछन् ।

## १.३ गिरफ्तारी / यातना

यस जिल्लामा विना पूर्जी गिरफ्तार गर्ने गरेको र अन्य जिल्लामा जस्तै प्रहरी कष्टडी भित्र यातना दिने गरेको पाइन्छ ।

# २. मौलिक अधिकार

## २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

## २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्थानीय निर्वाचन २०४९ को पहिलो र दोश्रो चरणमा सिरहा जिल्लाका अधिकांश क्षेत्रमा बल प्रयोग भएको थियो । भारतबाट भाडामा ल्याइएका लठैतहरुले मतदान केन्द्रहरुमा शक्ति प्रदर्शन गरेर जनतालाई मताधिकार गर्ने अवसरबाट बञ्चित गर्ने जस्ता कार्यहरु भएका थिए ।

दक्षिणी भेगमा पर्ने खिरौना गा.वि.स.को निर्वाचनमा नेपाली कांग्रेस पक्षले अरुलाई उमेद्वारी दर्खास्त दिन दिएन । उमेद्वारी दर्खास्त दिने दिन वडा नं. ६ को मतदान केन्द्र (इलाका पशु कार्यालय) मा खटाइएका कर्मचारीलाई कोठाभित्र बन्द गरेर ताला लगाई उमेद्वार हुन चाहने अरुलाई उम्मेदवार हुन नदिएर निर्विरोध निर्वाचन घोषणा गरियो ।

बसविट्टा गा.वि.स.को निर्वाचन दिउँसो २ बजेसम्म शान्त भएकोमा २ बजेपछि २ वटा जीपमा आएका नकाबधारी धनुर्धरहरुले आतंक मच्चाउन गरे । उनीहरुले मतदातालाई लखेटेर मतदान भैसकेको बाकसबाट मतपत्र

निकाली जलाए र बसेर अरु मतपत्रमा छाप लगाए। एकतर्फी मतपत्रले बाकस भरेपछि ३:३० बजेतिर जिल्ला प्रहरी कार्यालयमा मतपेटीका पुऱ्याए पनि सबै पार्टीले मतगणना बहिष्कार गरेपछि नेपाली कांग्रेसका उमेद्वार विजयी भएको घोषणा गरियो ।

माडर गा.वि.स. मा करीव ११:३० बजे वसबिट्टा गा.वि.स. मा जस्तै ३०।४० जना लाठिधारीहरुले मतदातालाई लखेटे। उनीहरुले कर्मचारीबाट मतपत्र खोसेर एकतर्फी छाप लगाएपछि कांग्रेसका उमेद्वारले जितेको घोषणा गरियो । नेपाली कांग्रेसको तर्फबाट विजयी घोषित भएका जगत नारायण गोइतसंग भेट गर्दा गोइतले जनताको प्रतिनिधित्वबाट चुनाव नभएको र नैतिकताको कारणबाट उक्त पदमा नबस्ने भनेर आफूले राजीनामा दिएको कुरा बताए।

गम्हरिया गा.वि.स.मा पनि १८ गते बिहान ९ बजेतिर १०० जना लाठिधारीले मतदान केन्द्र कब्जा गरे। यहाँ पनि एकतर्फी छाप लगाएर नेपाली कांग्रेस विजयी भएको घोषणा गरियो ।

यस बाहेक वडहरामाल, धनगढी, रामपुर बिर्ता, मोडिया, सिर्कैन, कर्जनाहा, मोहनपुर, कमलपुर, औरही, कचनारी, रमौल आदि गा.वि.स.का चुनावमा कुनै ठाउँमा मतदान केन्द्र कब्जा गरिएको, कतै एमालेले जनमोर्चा र जनमोर्चाले एमाले विरुद्ध दोहोरो तेहोरो मतदान गरेका थिए भने कतै नेपाली कांग्रेस, कतै संयुक्त जनमोर्चा र कतै एमालेले चुनावलाई आफ्नो पक्षमा ल्याउन धाँधली र बल प्रयोग गरेका थिए ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

अरु जिल्लामा जस्तै यस जिल्लामा पनि बाल श्रम, महिला उत्पीडन र अरु अमानवीय व्यवहारहरु भएको पाइन्छ ।

# १. पूर्वाञ्चल



## सगरमाथा

# १.१३ उदयपुर

| | | |
|---|---|---|
| जनसंख्या | : | २१८८८९ |
| साक्षरता | : | ३७.८ प्रतिशत |
| महिला साक्षरता | : | २१.१ प्रतिशत |
| क्षेत्रफल | : | २०६३ वर्ग कि. मी. |

सगरमाथा अञ्चलको उदयपुर जिल्लामा मानव अधिकार हनन हुनाका मूल कारणहरु राजनैतिक प्रतिशोध, आगलागी, गाउँघरमा आपसी रिसइवी, प्रतिष्ठाको प्रतिद्वन्दिता, मादक पदार्थ सेवन, कुलो पैनी, मेला जात्राका घटना, तोडफोड कुटपीट आदि हुन् ।

## १. बाँच्न पाउने अधिकार

यस जिल्लामा आगलागी जस्तो दैवी प्रकोपबाट धेरैको मृत्यु हुनाका साथै धनमालको निकै क्षति भएको पाइन्छ। २०४८ फागुन १२ गते स्थानीय ठोक्सीला गा.वि.स. वडा नं. ७ बस्ने प्रजापति घिमिरेको घरमा अचानक आगलागी हुँदा निज घिमिरेको २४ वर्षीय छोरा आनन्द प्रसाद घिमिरेको आगोमा परी मृत्यु भएको थियो भने उक्त आगलागीबाट ठूलो संख्यामा धनमाल नष्ट भएको थियो ।

२०४८ चैत ११ गते हडिया गा.वि.स. वडा नं. १ देवधारमा अगलागी हुँदा भक्तबहादुर मगर लगायत २५ परिवारको घर आगलागीमा परेर नष्ट भएको थियो । सो आगलागीबाट रु. १५ लाखभन्दा बढीको सम्पत्ति डढेर सखाप भएको थियो ।

२०४९ वैशाख ४ गते जोगोदह गा.वि.स. वडा नं. ४,५ र ८ मा आगलागी हुँदा ललकु चौधरी लगायत ४५ परिवारको घर नष्ट भएको थियो । उक्त आगलागीबाट रु. ५ लाखभन्दा बढी धनमाल नष्ट भएको थियो

२०४९ वैशाख २३ गते गाईघाट गा.वि.स. वडा नं. ५ बस्ने नीर बहादुर विश्वकर्माको घरमा आगलागी हुँदा निज विश्वकर्माका दुई छोरा ५ वर्षका मोलराज विश्वकर्मा र ४ महिनाका रञ्जोतको आगलागीमा परी मृत्यु भएको थियो भने ३ वर्षका छोरा सुखराज भाग्न नसकी आगोको लपेटामा परी सारा शरीर डढेको थियो, तर समय मै अस्पताल पुऱ्याउन सकेकोले मृत्युबाट भने बचेका थिए ।

त्यस्तै यस जिल्लामा २ वटा जङ्गली हात्तीहरुले विध्वंश मच्चाएर गाइघाट, देउरी, गोगोदह र हडिया गा.वि.स. का ६ जनालाई मारेको थियो भने अन्य ४ लाई घाइते बनाएको थियो ।

जंगली हात्ति वेलाबखत आसाम (भारत) बाट झापा, मोरङ, सुनसरी, सप्तरी हुदै यहा पस्ने गर्छन र बर्सेनी मानिसको ज्यान लिने गर्छन । तर हात्ति मार्ने स्विकृति सरकारले नदिने हुदा द्यांग्रो ठोक्दै पुन्ठो बाल्दै अर्को जिल्ला कटाउने गरिन्छ। तर व्यवस्थित नीति निर्माण भने अहिले सम्म गरेको पाइदैन ।

### १.१ हत्या / गोली

*२०४८ भदौ १ गते गाईघाट गा.वि.स. वडा नं. १ बस्ने तिलकबहादुर मगरको प्रहरी कार्यालय र जिल्ला प्रशासन कार्यालयबाट करीब ५०० मिटरको दूरीमा मकैबारीमा रहस्यमय तरीकाले लाश फेला परेको थियो। लाश सम्बन्धी छानबीनबाट हालसम्म केही पत्ता लाग्न सकेको*



फोटो: वर्ष पुस्तक

*आमासँगै जेल भित्र रहेकी एक नवजात शिशु*

छैन । गाईघाट गा.वि.स. वडा नं. १ बस्ने वर्ष २ को रवीन भण्डारी भन्ने नावालक खेल्दाखेल्दै घर नजिकका पोखरीमा डुबेर मरेको भन्ने जाहेरी मिति २०४८ चैत २ मा प्रहरी कार्यालयमा दिइएको थियो ।

बराहा गा.वि.स. वडा नं. १ बस्ने ५५ वर्षीय बम बहादुर कार्कीको २०४८ माघ ३ गते सुतेको ठाउँमा अचानक मृत्यु भएको थियो । निज मृतकको गाउँघरमा रिसइवीका कारणले कुनै झैझगडा कलह आदि केही नभएको ज्ञात हुन्छ । तथापी त्यस मृत्युलाई शंकास्पद ठानिएको पाइयो ।

२०४९ कात्तिक ३० गते यस जिल्लाको सिखवानी जंगलमा वन कार्यालयले शिकारी देवीदत्त राईलाई बन्दुक सहित हरिण मारेको फेला पार्‍यो । तर वन कार्यालयले बन्दुक र हरिण बरामद गरी निज शिकारीलाई छोडिदियो । यसैको विरोधमा स्थानीयवासीहरुले वन कार्यालयलाई घेराउ गरे । गाउँलेहरुको आक्रामक मनस्थितिलाई साम्य पार्न र आफ्नो आत्मरक्षाको लागि भन्दै वन कार्यालयका कर्मचारीले ५ राउन्ड गोली चलाएका थिए । स्थानीयवासीहरुले पनि ४ पटक जति भरुवा बन्दुक पड्काएका थिए । तर स्थानीय प्रशासनले भीडन्त छुट्याउन जाने दुर्गा राई लगायत केही व्यक्तिलाई सार्वजनिक अपराधको मुद्दा लगायो ।

## १.२ जेल

२०२८ सालमा जिल्ला सदरमुकाम उदयपुरगढीबाट गाईघाट सरेपछि स्थानीय बोक्सेमा निर्मित यस जेलको बन्दीको क्षमता ४५ जनाको छ । तर हाल यहाँ ३ जना नावालक, ६ जना महिला सहित १०७ जना बन्दीहरु रहेका छन् । वन सम्बन्धी मुद्दामा परेका बन्दीहरुको संख्या अधिक छ । क्षमता भन्दा बढी वन्दीहरु राखिएकाले न्यूनतम भौतिक सेवा पनि यहाँ उपभोग गर्न पाइएको देखिदैन । २०४५ मा राजवन्दी सुबोध प्याकुरेलले छाडेर जानुभएको चाइनीज चेकर र चेस बाहेक यहाँको जेलमा कुनै मनोरंजन र खेलकुदको सुविधा छैन । यहाँको जेलमा ३४ महिनादेखि पूर्पक्षका लागि थुनामा रहेका वन्दी पनि भेट्टाइयो ।

## १.३ गिरफ्तारी / यातना

*२०४६ को जनआन्दोलन पश्चात् अन्तरिम सरकार का समयमा जंगलमा काटिएका काठ दाउराहरुले घर बनाउन नपाउने नियम बनाएपछि स्थानीय जनताले उक्त काठ, दाउरा किनी घर बनाउन लाग्दा डि.एफ.ओ. र प्र.जि.अ. ले प्रहरी लगाई घर बनाउन लाग्दाको काठ दाउरा समेत उखेली टिम्बर कर्पोरेशनलाई ५ प्रतिशत बिक्री गरेको र बाँकी ९५ प्रतिशत रातारात गायब गरेको भनि यस कुराको बिरोध गर्दा स्थानीय देउरी गा.वि.स. का पद्म बहादुर डाँगी र तेज नारायरण चौधरीलाई पक्राउ गरी हिरासतमा लिइएको थियो । उनीहरु अझापी जेलमै छन् ।*

*२०४८ मंसीर ३० गते उदयपुर सिमेण्ट*

*कारखानाका गार्ड तथा देउरी गा.बि.स. वडा ८ बगाहा बस्ने भीम बहादुर थापालाई उदयपुर सिमेण्ट कारखानाबाट रु.१७ लाख बराबरको सामान चोरी गरेको अभियोगमा जिल्लाका प्रहरी नायब उपरीक्षक यादव प्रसाद शर्माले अमानविय यातना दिएर ७ दिनसम्म हिरासतमा राखेका थिए ।*

२०४९ वैशाख २० गते प्रधानमन्त्री गिरिजा प्रसाद कोइरालाले जिल्ला सदरमुकाममा भएको आमसभालाई सम्बोधन गर्नु हुँदा स्थानीय व्यक्तिहरुले सरकारको शिक्षा नीति, चर्को मूल्य बृद्धि, अभाव-असुरक्षा आदिको विरोधमा कालो झण्डा देखाउँदै विरोध जुलुस निकालेका थिए । सोही जुलुसको सिलसिलामामा केही व्यक्तिहरुले लीला दुखी माथि सांघातिक आक्रमण गर्नुका साथै लीला दुखी, जगत बञ्जारा, सुवास राउत, निर्मल रेग्मी, विजेन्द्र कर्ण, शैलेन्द्र खतिवडा माथि सार्वजनिक अपराध मुद्दा लगाइएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / मेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

राजनैतिक स्वतन्त्रताका नाममा यस जिल्लामा केही अनियमितता पनि भएको छ । स्थानीय निर्वाचन क्रममा दोस्रो चरणको निर्वाचनमा गत २०४९ जेठ १८ गते नामेटार गा.बि.स. मा निर्वाचन अधिकृत भएर गएका जिल्ला शिक्षा कार्यालय, प्राथमिक विद्यालय निरीक्षकले केही व्यक्तिहरुसंग मिली ५०० मत पत्र बेपत्ता पारेका थिए । सो सम्बन्धी हल्लाखल्ला भएपछि नपुग मतपत्र छिमेकी जातेका गा.बि.स. बाट मागेर ल्याउँदा ल्याउँदै राति आठ बज्यो र मतदान केन्द्रमा रहेका केही मतदाताहरुलाई बाहिर लखेटी केही व्यक्तिहरुले आफूखुशी ५०० मतपत्रमा छाप लगाएर एक पक्षीय निर्वाचनको परिणाम घोषणा गरिएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लाका सुकुम्बासीहरुमाथि "काम छउञ्जेल भाँडो काम सकिएपछि ठाँडो" भन्ने व्यवहार गरिएको छ । संसदीय निर्वाचन र स्थानीय निर्वाचनमा भोट पाउने उद्देश्यले हडिया, जोगीदह, बेल्टार आदि गा.वि.स. मा रहेका सुकुम्बासीहरुलाई विभिन्न सकारात्मक आश्वासन दिइएको तर स्थानीय निर्वाचन पश्चात् बन संरक्षण गर्ने क्रममा



फोटोः वर्ष पुस्तक

*आमासँगै जेलमा रहेकी एक बालिका*

माथिका सम्पूर्ण गा.वि.स.मा सुकुम्वासी भगाउ आन्दोलन सञ्चालन गरियो । जसको फलस्वरुप सुकुम्वासीका घरबार मात्र भत्काइएन, उनीहरुको धनमाल लुट्ने काम पनि भएको थियो । हाल ४३ परिवार सुकुम्बासी बिजोगसंग सडकको

भैरव विष्टले स्थानीय जाँति बस्ने वर्ष २१ की र वर्ष २० की दुई महिलाहरुलाई २०४८ चैत्र ३० गते मुर्कुची बजारमा जबरजस्ती करणी गरे। तर समाजमा आफ्नो बदनाम हुने त्रास र भविष्यमा कन्या नै बस्नु पर्ने भयले बलात्कृत महिलाहरुले



फोटो: मन पुलक

*उदयपुर जेलको महिला शाखाको एक झलक*

छेउमा छाप्रो बनाइ बसेका छन् । यस्तो नीतिको विरोध गर्दा स्थानीय देउरी गा.वि.स. का पदम बहादुर डाँगीले वन विशेष अदालतको निर्णयद्वारा जेल यातना भोग्नु परेको थियो ।

## ४. महिला अधिकार

संविधानले महिला हक हितको यथेष्ट वकालत गरे पनि व्यवहारमा महिलाहरु कति शोषित छन् भन्ने कुरा महिलामाथि भएको अत्याचारले देखाउँछ । *गाइघाट गा.वि.स. चम्पापुरको मिनी मार्केटमा किराना पसल सञ्चालन गरेर जीविकोपार्जन गरिरहेकी दिव्यकुमारी भट्टराई र भद्रकुमारी मगरका बीच २०४७ मंसीर १४ गते बेलुकी भनाभन हुँदा निज मगरको पति जिल्ला प्रहरी कार्यालयका प्रहरी हर्क बहादुर जर्घा मगरले दिव्य कुमारी भट्टराईलाई मरणासन्न अवस्थामा पुऱ्याई, हिरासतमा राखेका थिए ।*

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

उदयपुर सिमेण्ट उद्योगका चालक नीरबहादुर घिमिरे कार्यालय विशेषको कामले आफू डेरा गरेको घर बाहिर जाँदा निज घिमिरेकी ५ वर्षीया छोरी नवरता घिमिरेलाई गाइघाट गा.वि.स. वडा नं. २ बस्ने घरधनी र घुनाथ भण्डारीका २४ वर्षीय छोरा डिल्ली प्रसाद भण्डारीले २०४८ फागुन ८ गते जबरजस्ती करणी गरी फरार भएका थिए ।

रौता गा.वि.स. वडा नं. ९ बस्ने मोहन कुमार मगर, विष्णु कुमार मगर, धनबहादुर राई र भूमरसुवा बस्ने आफूमाथि बलात्कार नभएको दावी गरेको घटना यहाँ स्मरणीय रहेको छ ।

लेख गाउँ-३ मा बाला चतुर्दशी मेलामा प्रहरीहरुद्वारा एकजना छनमाया गिरी नामकी महिलाको सामुहिक बलात्कार भयो भनि व्यापक विरोध भएको थियो । तर सो विरोध गर्ने एकराज गिरी र हरीकला कार्कीलाई नै सार्वजनिक अपराधको मुद्दा लगाइयो ।

उदयपुर सिमेन्ट कारखानामा कार्यरत विदेशीहरुले स्थानीय महिलाहरुमाथि यौन शोषण गर्ने गरेको चर्चा बारम्वार प्रकाशमा आउने गरेको छ । श्री ५ को सरकारले अहीले सम्म त्यस तर्फ ध्यान दिएको पाइदैन ।

### ४.२ जारी, बहुविवाह, देउकी, वादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# १. पूर्वाञ्चल

## सगरमाथा

# १.१४ खोटाङ्ग

| | | |
|---|---|---|
| जनसंख्या | : | २१६८२० |
| साक्षरता | : | ३९.६ प्रतिशत |
| महिला साक्षरता | : | २२.९ प्रतिशत |
| क्षेत्रफल | : | १५९१ वर्ग कि. मी. |

सगरमाथा अञ्चलका ६ जिल्लाहरुमध्ये खोटाङ्ग जिल्ला सुगम र दुर्गमको बीच रहिआएको छ । विगतका शिक्षक र कर्मचारी आन्दोलन जिल्लाका मानव अधिकार हनन्का मुख्य उदाहरणहरु हुन् ।

### १. बाँच्न पाउने अधिकार

देशको संविधान अनुरुप विना भेदभाव कुनै पनि नागरिक सम्मानित रुपमा बाँच्ने अधिकारको प्रावधान भए तापनि यस जिल्लामा राजनैतिक प्रतिशोधले गर्दा मुख्य गरी शिक्षकहरु शिकार भएका छन् । विचार र मतसंग असहमतिको कारण नै लगभग ५५ जनाभन्दा बढी शिक्षक या त नस्कासित भएका छन् भने या त यस जिल्लाको दुर्गम क्षेत्रमा लखेटिएका छन् ।

#### १.१ हत्या / गोली

*कर्मचारी आन्दोलनको सिलसिलामा नेपाल निजामती कर्मचारी संगठनले आफ्नो माग राख्दै शान्तिपूर्ण रुपले अगाडि बढेको आन्दोलनलाई दबाउने क्रममा प्रहरीद्वारा चलाइएको गोलीले २०४८ साउन १५ गते नेपाल निजामति कर्मचारी संगठन खोटाङ्ग जिल्लाका अध्यक्ष नारायणप्रसाद जोशीका कान्छा छोरा १९ वर्षीय मनोज जोशीको मृत्यु भएको थियो । गोली काण्डपछि स्थानीय प्रशासनद्वारा तीव्र दमन र व्यापक गिरफ्तारीको क्रम शुरु भयो जसबाट विनाकसूर राजनैतिक पूर्वाग्रहको कारण स्थानीय नेता तथा निजामति कर्मचारीहरुलाई सार्वजनिक अपराधको आरोपमा हिरासतमा राखी यातना दिईयो जसमा कतिपयका मुद्दाहरु आजसम्म टुंगो लागेका छैनन् ।*

यस जिल्लाको च्यानडाँडा गा.वि.स. वडा नं. ५ बाझेमा २०४९ कात्तिक २ गते स्थानीय युवाहरुले देखाएको सांस्कृतिक कार्यक्रमलाई राजनैतिक विषय बनाई भएको विवादमा छुरा प्रहारबाट नैनबहादुर खत्रीको मृत्यु भयो । मृत्यु पश्चात् यस विषयलाई लिएर एक आपसमा आरोप प्रत्यारोपको क्रम जारी रहयो । रहस्यमय यस हत्या काण्डमा विभिन्न व्यक्तिहरुलाई थुनामा राखे पनि अन्तत ध्यानप्रसाद राईले सर्वस्वसहित कैदको सजाय पाए भने बाँकी सबै विभिन्न रुपमा सजाय भुक्तान गरी रिहाइ भएका छन् ।

#### १.२ जेल

यस जिल्लाको सदरमुकाम दिक्तेलबाट करीव आधा घण्टा चढाइको उकालोमा अवस्थित यहाँको जेलको स्थापना २०३३ सालमा भएको हो । जेलको क्षमता ३५ जना बन्दीहरुको रहेता पनि यहाँ ३१ प्रतिशतभन्दा बढी बन्दीहरु अर्थात् ४६ जना रहेको देखियो । जसमा ३६ जना पुरुष, ७ जना महिला र ३ जना नाबालक छन् । जेलको वातावरण, सुविधा, सहुलियतमा अन्य जिल्ला जस्तै यस जिल्लामा पनि खस्केको

देखिन्छ । २०४९ भदौ महिनादेखि आफन्तसंग राम्रोसंग कुराकानी गर्न नपाएको गुनासो यहाका बन्दीहरुको रहेको पाइन्छ । यस जेलभित्र सकारात्मक पक्ष भनेको यहाँ टोपी बनाउने उद्योग छ । टोपी बनाउन सक्षम बन्दीहरुले केही आर्जन पनि गरेका छन् ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक पूर्वाग्रहको कारण मुख्य गरी शिक्षक र कर्मचारीहरुले यातना सहेका छन्। स्थानीय गंगोदय नि.मा.वि. दुबेकोलका भू. पू. शिक्षक पुण्यप्रसाद निरौलाले अस्थायी नियुक्ति र आफ्नो म्याद थप नभएको विषयलाई लिएर जिल्ला शिक्षा निरिक्षकसंग भएको भनाभनको निहुँ पारी २०४९ मंसीर २६ गते निज निरौलालाई विनापुर्जी ७२ घण्टाभन्दा बढी हिरासतमा राख्नुका साथै प्रहरी नायब उपरीक्षकले अमानवीय तरीकाले दारी, जुँगा र कपाल खौरि दिएको घटना यहाँ अद्यापि चर्चामा छ। त्यस्तै जुवा खेल्न पैसा नदिएको झोकमा इन्कुमार राई विरुद्ध निजकै मीतबुवाले आफूलाई कुटपीट गरेको र ज्यानको सुरक्षा नभएको भन्ने झूठा उजूरी दिएपछि इन्द्रबहादुर राईलाई जिल्ला प्रहरी कार्यालय दिक्तेलले गैर कानूनी रुपमा मिति २०४९।८।११ देखि २०४९।८।१७ गतेसम्म हिरासतमा राखी यातना दिएको थियो । २०४९ मंसीर ५ गते यस जिल्लाको डुम्रेधारा नजिकै अर्थात् ओखलढुंगाको सिलौरी बजारमा एकादशीको दिन लागेको मेलामा केही अशान्त वातावरण उत्पन्न भएपछि स्थानीय बुद्धिजीवीहरुले सुरक्षाको स्थिति माथि चिन्ता गरी प्रहरी बलमा देखा परेको कमजोरीबारे जानकारी लिन खोज्दा केही राजनैतिक व्यक्तिहरुले आफ्नो राजनैतिक प्रतिशोध साध्ने नियतले स्थानीय धारापानी प्रा.वि.का शिक्षक भीमबहादुर पाण्डे र देउराली मा. वि. डुम्रेकोटका शिक्षक मुक्ति रिजालमाथि चौकीको हातहतियार खरखजानाको लगत तयार गर्न लागेको आरोप लगाई मिति २०४९ मंसीर १० गते जिल्ला प्रहरी कार्यालयले पत्र (च. नं. ८९४) जिल्ला शिक्षा कार्यालयमा पठायो । र जि.शि.का.ले तुरुन्त अर्थात् २०४९ मंसीर १० गते नै निज शिक्षकहरुलाई जिल्ला प्रहरी कार्यालयमा तुरुन्त हाजिर हुनु भन्ने व्यहोराको पत्र, पत्र संख्या ८१८ थमायो । यी शिक्षकहरुलाई जिल्ला प्रहरी नायब उपरीक्षकले विनाकसूर अमानवीय व्यवहार गरी २४ घण्टाभन्दा बढी हिरासतमा राखे ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।



फोटो: वर्ष पुस्तक

खोटाङ जेलको एक दृश्य

२.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

२.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

२.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

जिल्लाको भौगोलिक स्थिति र जनसंख्यालाई दृष्टिगत गर्दा सुकुम्बासी समस्या खास रुपमा नदेखिए तापनि करीब ३०० भन्दा बढी सुकुम्बासी रहेको भने सर्वेक्षण अध्ययनबाट प्राप्त भएको छ ।




खोटाङ जेलको मूख्य द्वार

## ४. महिला अधिकार

देशको संविधान र राजनैतिक प्रणालीले महिला अधिकारको यथेष्ठ व्यवस्था गरेको भए तापनि व्यवहारमा महिलाहरुले अझै असुरक्षित, शोषित र पीडित भएको अनुभव गरेका छन् ।

४.१ महिलाहरुको किनबेच र बलात्कार

*जिल्लामा महिला किनबेच र देह व्यापारको समस्या देखिएको छैन । तर बलात्कारको घटना भने बराबर घटेको पाइन्छ । २०४८ बैशाख ६ गते दिक्तेलमा भएको संसदीय चुनावको आमसभा सिध्याएर घर फर्केका केही महिलाहरुमध्ये बाफ्रे च्यानडाँडा बस्ने २३ वर्षीया कृष्णकुमारी गुरुङलाई दोर्पा चिउरी डाँडा गा.बि.स. वडा नं. ६ दोबेला भन्ने मूलबाटो मुनि लगी केही गुण्डाहरुले सामूहिक बलात्कार गरे । सो घटनामा जिल्ला अदालतले अभियुक्त तोकी निर्मली डाँडा गा.बि.स. का अध्यक्ष देश राज राई तथा दोर्पा च्यूरी डाँडा गा.बि.स. का उपाध्यक्ष नवराज राईलाई थुनामा राख्ने आदेश दिएकोमा निजहरुलाई प्रकाउ पनि गरिएको छैन । बलात्कारीहरु सत्तापक्षका हुन् ।*

*२०४९ कात्तिक महिनामा टेम्मा गा.बि.स. वडा नं. ५ बस्ने श्री कृष्ण मा.बि. का शिक्षक दिनेश बस्नेतले सोही गाउँकै २८ वर्षीय विजया कुमारीलाई जबरजस्ती गर्न खोजेको र महिलाले हल्ला गरेपछि स्थानीय गाउँलेहरुले निज बस्नेतलाई चौकीमा बुझाएका थिए ।*

४.२ जारी, बहु विवाह, वेउकी, बादी प्रथा

शिक्षा, ज्ञान र जनचेतनाको अभावमा शहर बजार मा जारी र बहुविवाह प्रथा हट्दै गए पनि गाउँघरतिर यो समस्या ज्यूँका त्यूँ नै छ । त्यस्तै यो जिल्लामा जातपात, छुवाछुत, धामी झाँक्री जस्ता सामाजिक कुरीति र रुढीग्रस्तता छ । समाजमा जनचेतना, शिक्षा र जनताको आफ्नो मौलिक अधिकार सम्बन्धी ज्ञान घरदैलोमा पुऱ्याउनु पर्ने आवश्यकता अपरिहार्य भएको छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

५.२ अन्य अमानवीय व्यवहार

# १. पूर्वाञ्चल



## सगरमाथा

# १.१५ ओखलढुंगा

| | | |
|---|---|---|
| जनसंख्या | : | १४०४३६ |
| साक्षरता | : | ३६.७ प्रतिशत |
| महिला साक्षरता | : | २१.८ प्रतिशत |
| क्षेत्रफल | : | १०७४ वर्ग कि. मी. |

सगरमाथा अञ्चलमा पर्ने ६ जिल्लाहरुमध्ये ओखलढुंगा जिल्ला प्रजातन्त्र प्राप्तिका लागि भएको संघर्षहरुमा अग्रणी रहिआएको छ । तर देशमा प्रजातन्त्र पुनर्स्थापनापछि पनि यस जिल्लाको मानव अधिकारको स्थिति दयनीय छ। यहाँ विपक्षीमाथि भएको दमन मारपीट, ज्यान सम्बन्धी मुद्दा आदिको पनि कहिलेकाँही स्थानीय प्रशासनले जाहेरीसम्म लिन अस्वीकार गरेको देखिन्छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

ओखलढुंगा जिल्लाको स्थानीय रावादोलु गा.वि.स. बस्ने तथा त्यस भेगका प्रतिष्ठित व्यक्ति ६३ वर्षीय कीर्तिबहादुर बस्नेतको स्थानीय निर्वाचनको क्रममा २०४९ जेठ १५ गते हत्या भयो । हत्या काण्डमा संलग्न कसैलाई पनि हालसम्म स्थानीय प्रशासनले गंभीरताका साथ कारवाही गरेको देखिदैन । मृतक कीर्तिबहादुर बस्नेतका छोरा जगेन्द्रबहादुर बस्नेतले कारवाहीका निम्ति थप प्रमाणसहित पुन: जाहेरी दरखास्त पेश गर्दा स्थानीय प्रहरी कार्यालयले दर्तासम्म गरेन। सो घटनाबारे पहिलो जाहेरवाला मृतकका नाति रमेश कुमार कार्कीलाई अभियुक्तहरु भुपेन्द्र बहादुर बस्नेत, लिला बहादुर बस्नेत, भरत कार्की, कृष्ण गोपाल कार्की, मधु कुमार कार्की र दुर्गा विक्रम कार्कीले बारम्बार ज्यान लिने धम्कीको पत्र पठाउने गरेका छन् । त्यस्तै पोखरे गा.वि.स. वडा नं. ३ बस्ने वर्ष २९ की धनमाया घिमिरेको लाश झुण्डिएको अवस्थामा २०४९ भदौ ३१ गते फेला पऱ्यो। मृतक धनमाया घिमिरेले आफ्नै भतिज पर्नेसंग अनुचित संबन्ध कायम गरी गर्भधारण गरेकी भनिन्छ । यो घटना परिवारभित्र सीमित रहेकोले निजको आत्महत्या रहस्यमय देखिन्छ। हालसम्म सो आत्महत्या सम्बन्धमा कुनै कारवाही भएको छैन ।

२०४९ भदौ १३ गते चीनको स्वशासित क्षेत्र तिब्बतबाट भागेर आएका २२ जना तिब्बती शरणार्थीहरु दलाई लामाकहाँ जाने सिलसिलामा भाग्दै यस जिल्लामा आइपुग्दा र उनीहरुले सानोतिनो हतियार देखाएकोले स्थानीय प्रहरीले रोक्न नसकेपछि ज्यामिरे गा.वि.स. वडा नं. ५ मा अवस्थित श्री कुन्ता नि. मा. वि. नजिकै प्रहरीले बिना चेतावनी चलाएको गोलीबाट नाइके रिञ्जिरको घटनास्थलमै मृत्यु भयो भने वर्ष २१ का लासी र वर्ष २७ का मेमेछुन सख्त घाइते भए। विना चेतावनी वर्बरतापूर्वक अन्धाधुन्ध गोली चलाएको घटनालाई लिएर नेपाल मानव अधिकार संगठन, ओखलढुंगाले तत्कालै गोली काण्डको भर्त्सना गरेको थियो ।

### १.२ जेल

ओखलढुंगा जिल्लाको जेलको स्थिति त्यति दयनीय देखिदैन । यस जेलको क्षमता ५० जना बन्दीहरु सम्मको छ। हाल यस जेलमा २५ पुरुष, ५ महिला र ३ जना नाबालक

गरी ३३ जना बन्दीहरु रहेका छन् । बन्दीहरुमध्ये अधिकांश ज्यान मुद्दामा परेका छन् । बढ्दो महंगी र अभावले गर्दा आफूले पाएको सुविधा र सेवाहरु अपुग भएको विचार बन्दीहरु व्यक्त गर्दछन् ।

१.३ गिरफ्तारी / यातना

प्राय: गरेर यस जिल्लामा नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरु जीवनकुमार नेपाल, तेजप्रसाद फुयाल, पञ्चबहादुर तामाङ, रामप्रसाद दाहाल, होमनाथ दाहाल, विष्णुप्रसाद खनाल, खिलबहादुर अधिकारी, चेतनाथ खतिवडा, दिननाथ दुलाल, डिल्लीबहादुर मगर, सरला धमला, मोहन ढकाल र टुकीराज काफ्लेे दुर्गम तथा अपायक पर्ने



*०४९ जेठ १५ गते रवुवाछेलु गा.वि.स. मा मारिएका किर्ति बहादुर बस्नेत*

ठाँउमा सरुवा भएका छन् भने टंकहरि हाललाई नि.मा.वि. स्तरको शिक्षकबाट प्रा.वि. स्तरमा घटुवा गरिएको छ । त्यस्तै १४ जनाभन्दा बढी शिक्षकहरुलाई जिल्ला शिक्षा शाखामा हाजिर गराइएको छ भने पेशलकुमार दाहाल, मायानाथ दाहाल र रमेश राईलाई अवकाश दिइएको छ ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लाबासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

विगत एक बर्षमा यस जिल्लामा आत्महत्या १२, कर्तव्य गरी ज्यान मारेको ४, केही सार्वजनिक अपराध ५, भवितव्य ज्यान ४, बहुविबाह १, बाल बिबाह १ र जबर जस्ती करणीका अपराधहरु जिल्ला प्रहरी कार्यालयमा दर्ता भएका छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु बिबाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■

# १. पूर्वाञ्चल



## सगरमाथा

# १.१६ सोलुखुम्बु

| | | |
|---|---|---|
| जनसंख्या | : | ९७२५३ |
| साक्षरता | : | ३७.० प्रतिशत |
| महिला साक्षरता | : | २०.९ प्रतिशत |
| क्षेत्रफल | : | ३३१२ वर्ग कि. मी |

सगरमाथा अञ्चलमा ६ जिल्लाहरुमध्ये सोलुखुम्बु जिल्ला उत्तरी भेगमा अवस्थित विश्वको सर्वोच्च शिखर सगरमाथाको काखमा रहेको छ। हिमाली जिल्ला त्यसमा पनि न्यून आबादी भएकोले यहाँ मानव अधिकार हनन सम्बन्धी घटना त्यति विघ्न घटेका छैनन् ।

### १ बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

यस जिल्लाको टापटिङ गा.वि.स. अवस्थित जनप्रिय निम्न माध्यमिक विद्यालयका शिक्षक बुण्डी पराजुलीको लाश २०४९ साउन ६ गते रहस्यमय तरीकाले सोही गा.वि.स. वडा ५ र ६ को बीच पर्ने चैलुङ सानो ठाडो खोला नजीक खोल्सामा फेला परेपछि अघिल्लो दिन विद्यालयमा चलेको परिक्षा समाप्त भएपछि संगै निस्केका उक्त निम्न माध्यमिक विद्यालयका प्रधानाध्यापक बाबुराम कार्की र शिक्षक देवीराम कटुवाललाई हत्याको आरोप लगाई १० वर्ष कैद गरिएको छ । तर यी तीनै शिक्षक एकै शिक्षक संगठनका सदस्य र एउटै विचारधारामा निष्ठा रहेकोले राजनैतिक प्रतिशोधको भावनाले तेस्रो व्यक्तिबाट भएको हो भन्ने धारणा स्थानीय बासीहरुमा रहेको छ ।

### १.२ जेल

सोलुखुम्बुको जेल चारैतिर कोठाहरु र बिचमा चोक भएको घरमा रहेको छ । त्यही चोकबाट ठाडै माथि आकाश हेर्न बाहेक फराकिलोपनको अनुभव बन्दीहरुले गर्न पाउँदैनन् ।

माथिल्लो तल्लामा प्रहरी ब्यारेक, प्रहरी आवास र कारागारको कार्यालय रहेको छ । कूल ३५ बन्दीहरुमध्ये २९ जना पुरुष र ६ जना महिलाहरु छन् ।

१५ x ८ फिटको एउटा कोठा पुरुषहरुका लागि र ८ x ८ फिटको एउटा कोठा महिला बन्दीहरुका लागि छुट्याइएको छ । जाडो ठाउँ भएकोले उपियाँ, जुम्राको बिगबिगी छ । कोठाभित्र चर्पी नभएकोले राती दिसा पिसाब गर्न प्लास्टिकको थैला प्रयोग गर्नु पर्छ ।

कारागार भवन भरीमा एउटा मात्र धारो छ । प्रहरी र उनका परिवारले पानीको आवश्यकता पर्नासाथ माथिबाट पानीको पाइप छुट्याइ दिन्छन् । अर्थात बन्दीहरुको पालो प्रहरी, उनीहरुका परिवार र कार्यालयको प्रयोग पछि उब्रिएमा मात्र आउँछ ।

गन्हाउने मोटो चामल, महँगो भाउ मेसाहा र स्वास्थ्य उपचारको अभावका कारण यहाँका बन्दीहरु पीडित छन् ।

जेलभित्र पढ्ने लेख्ने, शिपमूलक व्यवसाय गर्ने लगायत खेलकूद आदि कुनै कुराको सुविधा छैन । "तर प्रहरीहरुले दया गरेर ताससम्म खेल्न भने हामीलाई दिन्छन्, अरु चिजको लागि त न ठाउँ छ न बजेट ।" - बन्दीहरु भन्छन् ।

कठांग्रिने जाडोमा जेलमा ल्याइने बन्दीले विस्तरा पाउन कम्तिमा २ वर्ष पालो पर्खनै पर्छ ।

जुम्रा, उपियाँ मार्ने, सरसफाई गर्ने, उपचार गर्ने - प्रतिरोधात्मक वा उपचार सबै क्षेत्रमा बेवास्ता छर्लङ्ग देखिन्छ ।

पंचायत कालमा राजबन्दीहरुलाई असीम यातना दिन परेमा पठाइने यो विकट र दुरुह जेलले आफ्नो त्यही पुरानो राक्षसी प्रतिबिम्बलाई कायम राखेको छ ।

आज पनि प्रमुख जिल्ला अधिकारी, पुनरावेदन अदालतका न्यायाधिश, चिकित्शक वा अरु कुनै निकायले नियमित निरीक्षण र चासोको विषय भित्र जेललाई नराखेकोमा बन्दीहरुले गुनासो गरेको पाइन्छ ।

१.३ गिरफ्तारी / यातना

गिरफ्तारी र यातनाका उल्लेखनिय घटना पाइएन ।

२. मौलिक अधिकार

२.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

यस जिल्लामा नेपाल राष्ट्रिय शिक्षक संगठनका सदस्यहरु मानसिक यातनाका शिकार भएका छन् । यस संगठनसंग सम्बद्ध ११२ जना भन्दा बढी शिक्षकहरुलाई जिल्लाको अति दुर्गम र अपायक पर्ने ठाउँमा बदलाको भावना राखी सरुवा गरिएको छ भने संगठनका केन्द्रिय र जिल्ला स्तरका पदाधिकारी ८ जनालाई टाढाका अन्य जिल्लामा सरुवा गरिएको पाइयो ।

२.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

२.३ राजनैतिक स्वतन्त्रता/स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिँदैन । चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

२.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

४. महिला अधिकार

देशको संविधानमा महिला अधिकारको यथेष्ट प्रत्याभूति भए तापनि यस जिल्लामा जिल्लाको शान्ति र सुरक्षाको अभिभारा लिएका प्रशासकबाट महिलाको अस्मिता उपर धावा बोलिएको छ । घटना २०४९ असार ३१ गतेको हो । यस जिल्लाको भूकम्प पीडित क्षेत्र पुनर्निर्माण तथा पुनर्स्थापना आयोजनाद्वारा आयोजित रात्रिभोजमा उक्त जिल्लाको प्रमुख जिल्ला अधिकारी मोदराज डोटेलले मादक पदार्थ सेवन गरी यसै जिल्लाको भूकम्प पीडित क्षेत्र पुनर्निर्माण तथा पुनर्स्थापना आयोजनाकी खरिदार सुश्री पञ्चलक्ष्मी राईलाई बलात्कार गर्न खोजेको र सो कुकृत्यको सोही आयोजनाका प्रमुख इन्जिनीयर नरेश मल्ल लगायत अन्य कर्मचारीहरुले प्रतिरोध गर्न खोज्दा प्र.जि.अ. मोदराज डोटेलले निज इन्जिनीयरलाई "आफ्नो पहुँच माथिसम्म भएकोले गोली हानी अपाङ्ग बनाइ दिने र आयोजनका सबै कर्मचारीहरुलाई खोस्ने अधिकार वर्तमान सरकारले आफूलाई दिएको" भन्ने अभिव्यक्ति यस जिल्लामा आम चर्चाको विषय बनेको छ । यस विषयमा प्र.मं., गृह मन्त्रि र आवास मन्त्रि सबैले कारवाहीको आश्वासन दिएकोमा उल्टो निज डोटेललाई पछि ०४९/७/२८ देखि ०४९/९/९ सम्म सर्लाहीको प्र.जि.अ. बनाएर पुरस्कृत गरियो । यस बारे संसदमा पनि प्रश्न उठेको थियो ।

४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

४.२ झारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा झारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

५.२ अन्य अमानवीय व्यवहार

शिक्षा, जनचेतनाको अभावमा यहाँका बासीहरुले आफ्ना अधिकारलाई व्यवहारमा उपभोग गर्न सकिरहेका छैनन् भने अर्को तर्फ हिजैका मनस्थिति र संस्कारमा रहेका प्रशासन यन्त्रले यिनीहरुलाई संविधान प्रदत्त मानव अधिकार बाट बन्चित गराएका छन् ।



# मध्यमाञ्चल

२.१ धनुषा
२.२ महोत्तरी
२.३ सर्लाही
२.४ सिन्धुली
२.५ रामेछाप
२.६ दोलखा
२.७ रौतहट
२.८ बारा
२.९ पर्सा
२.१० चितवन
२.११ मकवानपुर
२.१२ ललितपुर
२.१३ काभ्रेपलान्चोक
२.१४ भक्तपुर
२.१५ काठमाण्डौ
२.१६ धादिङ्ग
२.१७ सिन्धुपाल्चोक
२.१८ नुवाकोट
२.१९ रसुवा



# २. मध्यमाञ्चल

## जनकपुर

# २.१ धनुषा

| | |
|---|---|
| जनसंख्या | ५४१९७५ |
| साक्षरता | ३०.० प्रतिशत |
| महिला साक्षरता | १५.८ प्रतिशत |
| क्षेत्रफल | ११८० वर्ग कि. मी. |

यस जिल्लामा मानव अधिकार हनन हुनाका प्रमुख कारणहरुमा प्रतिष्ठाको प्रतिद्वन्दिता, आपसी झै-झगडा, कुटपिट, डकैती, हत्या जस्ता घटनाहरु जिम्मेवार देखिन्छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

थोरा कोयलपुर गा.वि.स. वडा नं. ८ स्थित रा.प्रा विद्यालयको बुथमा २०४९ जेठ ४ गते उम्मेदवारी दिन हिंडेका संयुक्त जनमोर्चासंग सम्बद्ध ३५ वर्षीय रामसागर यादवलाई बाटो ढुकेर बसेका व्यक्तिहरुद्धारा गोली हानी मारिएको थियो । वडा नं. ५ निवासी यादवको पाखुरा र पिठ्युँमा गोली लागेको थियो ।

पटेर्वा गा.वि.स.को वडा नं. ४ स्थित रा.प्रा विद्यालयको बुथमा २०४९ जेठ १५ गते स्थानीय निर्वाचनको सिलसिलामा राजनैतिक झडप भई गुमानी मुखियाको मृत्यु भयो । करीब ९ बजे बिहान भएको फर्जि मतको सवालमा विवाद हुँदा उक्त झडप भएको थियो, १० बजे सुरक्षा टोली गएपछि शान्त भयो र पुनः मतदान भयो ।

### १.२ जेल

यस जिल्लामा जेल छैन र थुनामा राख्न पर्नेहरुलाई जलेश्वर जेलमा चलान गर्ने गरिन्छ ।

### १.३ गिरफ्तारी / यातना

जिल्लामा राजनीतिक प्रतिष्ठा विस्तारको लागि नेपाली कांग्रेसका समर्थकहरु र प्रहरीले विपक्षी राजनीतिक दलका कार्यकर्ता र समर्थकहरुलाई विभिन्न मुद्दाहरु लगाउने गिरफ्तार गर्ने र दुःख दिने गरेको बताइन्छ ।

नेकपा (एमाले)संग सम्बद्ध जिल्ला, गाउँ स्तरीय कार्यकर्ताहरु र समर्थकहरु गरी करीब ३ सय मानिसहरुलाई झुठा मुद्दा लगाइएको थियो । राजनीतिक कार्यकर्ताहरुलाई ज्यान मुद्दा, सार्वजनिक अपराध तथा सजाय, ज्यान मार्ने उद्योग, हात-हतियार, खर-खजाना ऐन, डकैती, कुटपिट, अंगभंग, लुटपिट आदि मुद्दाहरु लगाउने गरेको पाइन्छ ।

## २ मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता, भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक

सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्थानीय निर्वाचनको सिलसिलामा यस जिल्लाका विभिन्न मतदान केन्द्रमा प्रतिष्ठाको टक्कर हुँदा धेरै ठाउँहरुमा झगडा र कुटपिट भएको थियो । चुनाव हुनु अघि र चुनावका दिन भएका झगडाको कारण सर्वसाधारण डराएर भागेको र भयका कारण मतदान प्रक्रिया प्रभावित भएको थियो ।

औरही गा.वि.स.को वडा नं. ४ स्थित रा.प्रा. विद्यालयको मतदान केन्द्रमा मतदान प्रतिनिधिहरु बीच विवाद भयो । विवादका बेला बाहिरबाट आएका लाठीधारीहरुले मतदातालाई कुटपिट गरि लखेटेर मतदान केन्द्र कब्जा गरेका थिए ।

बक्कर गा.वि.स. वडा नं. २ मा जेठ १४ गते राती स्थानीय जनता र नेपाली कांग्रेसले बाहिरबाट ल्याएका करीब १०० व्यक्तिहरुका बीच मारपिट भयो । अघिल्लो दिनको झगडाको कारण स्थानीय जनता सो वडाको मतदान केन्द्र शंकर जनता मा.वि.मा गएनन् । गएकालाई पनि कांग्रेसकै चिन्हमा भोट हाल्न बाध्य पारिएको थियो ।

बफै गा.वि.स.मा करीब ११ बजेतिर फरमुद नदाफकी पत्नीले मताधिकार प्रयोग गर्दा एमाले र कांग्रेसबीच विवाद भयो । पोलिंग एजेण्टहरु बीच कुटपिट हुन थालेपछि २ वटा पिस्तोल र २० २२ वटा लाठी बोकेका व्यक्तिहरुको जत्थाले एमाले पक्षधरहरुलाई लखेटेर मतदान केन्द्र कब्जा गरेका थिए ।

लगमा गाठगुठी गा.वि.स.को वडा नं. ३ को मतदान केन्द्र रा.प्रा. विद्यालयमा दिउँसो ३ बजेसम्म शान्तिपूर्वक मतदान भयो । नगडाइन गा.वि.स.बाट आएका करीव १२५ जनाको जत्थाले होहल्ला गरि मारपिट गरेपछि मतदाता भागेकाले कांग्रेसको पक्षमा एकतर्फी मतदान भएको थियो ।

देवपूरा रुपैढा गा.वि.स.को निर्वाचनमा करीव १० बजेतिर फर्जिमतको सवालमा विवाद शुरु भएपछि नेकपा (एमाले), राप्रपा र सद्भावना पार्टीका मानिसले नेपाली कांग्रेस पक्षधर मतदाता र पोलिंग एजेण्टलाई लखेटेर मतदान चालु राखेका थिए ।

बेगा गा.वि.स.को बुथमा प्रतिनिधिहरु बीच विवाद भएपछि प्रहरीले अश्रुग्यास हान्यो । मतदाताहरु भागे । ११ बजेदेखि स्थगित भएको चुनाव रा.प्र.पा.ले दवाब दिएपछि पुनः १ बजे शुरु भयो । राप्रपाले एक्लौटी मतदान गराएपछि सोही अनुरुप निर्वाचन परिणामको घोषणा भएको थियो ।

यसै गरि जिल्लाका लोहना, पोडेश्वर, गोपालपुर, कनकपट्टी, धनुषा गोविन्दपुर, बनैनिया, सपही गा.वि.स.का मतदान केन्द्रमा नेपाली कांग्रेस पक्षले धाँधली गरेको कुरा नेकपा (एमाले) र राप्रपाले बताएका छन् ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४ महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५ मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# २. मध्यमाञ्चल

## जनकपुर

# २.२ महोत्तरी

| | | |
|---|---|---|
| जनसंख्या | : | ४४०७७४ |
| साक्षरता | : | २६.४ प्रतिशत |
| महिला साक्षरता | : | १३.९ प्रतिशत |
| क्षेत्रफल | : | १००२ वर्ग कि. मी. |

राजनीतिक प्रतिष्ठाका निम्ति पटकपटक भैरहने प्रतिद्वन्दिता यस जिल्लामा मानव अधिकार हनन् हुने मूल कारण हो । तल्लो जाति, निम्न वर्ग तथा माथिल्लो वर्ग र जाति बीच बेलाबखत हुने गरेको झै-झगडाको कारणले पनि जिल्लामा मानब अधिकारको हनन् भैरहेको पाइन्छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

रतौली गा.वि.स.मा स्थानीय निर्वाचनको सिलसिलामा २०४९ जेठ १५ गते कुटपिट भएपछि पुन: २२ गते मतदान गराउँदा त्यस दिन पनि गोली चलेको थियो । नेपाली कांग्रेस पक्षका भनिने व्यक्तिहरुले चलाएको गोली मतदान गर्न गएका ३ जनालाई लागेको थियो । मतदान केन्द्रमा भएको सो गोली काण्डमा अहिल्या देवी हजाम, भिखारी यादवकी पत्नी र रामशंकर मण्डल घाइते भएका थिए ।

निर्वाचनकै सिलसिलामा २०४९ जेठ १८ गते इटहरवा कट्टीमा भएको निर्वाचनको विवादमा पहिले कुटपिट र पछि गोली प्रहार भयो । बाहिरबाट जीपमा हात हतियार बोकेर आएका व्यक्तिहरुले चलाएको गोलीबाट वडा नं. ६ निवासी ६० वर्षीय सत्यनारायण ठाकुरको मृत्यु भएको थियो ।

२०४८ सालको संसदीय निर्वाचनको सिलसिलामा वैशाख २९ गते स्थगित भएको र ३१ गते पुन: मतदान भएको एकरहिया गा.वि.स.मा एक पक्षका व्यक्तिहरुले पेस्तोल चलाउँदा ३५ वर्षिय जमीर रायनको घटनास्थलमै मृत्यु भएको थियो । सो दिन चलेको गोलीबाट वर्ष ४६ की देवतादेवी ठकुराइन, वर्ष ३५ का गणेशी महतो र वर्ष ३२ का गणेशी खतवे घाइते भएका थिए ।

*२०४७ साल मंसीर १ गते दैनिक ज्यालादारीको विषयमा साउनदेखि नै शुरु भएको विवादले लोहारपट्टी गा.वि.स.मा उग्र रुप लियो । २०४७ साल साउन २६ गते कृषि मजदूरको ज्याला प्रतिदिन ३ के.जी. बाट ४.५ के.जी. बनाउन स्थानीय कृषि मजदूर, किसान, नेपाली कांग्रेस र एमाले सहमत भएका थिए । ज्याला बढाउन कम्युनिष्ट पार्टीका कार्यकर्ताहरुको दवाव भएकाले स्थानीय धनी किसान र कम्युनिष्ट पार्टीका कार्यकर्ता बीचको मनमुटाव झन् बढ्यो । २०४७ साल असोज २६ गते स्थानीय एक शिक्षकले धारामा विवाद हुँदा एक महिलालाई चुल्ठो समातेर एक थप्पड हिर्काए । विवाद बढ्दै गयो । २०४७ कात्तिक ३० गते राती १४।१५ जनाको समूह शिक्षक र लाल सिंहलाई खोज्दै गाउँ घुम्यो, तर दुबैजना गाउँमा थिएनन् । भोलिपल्ट मंसीर १ गते लोहारपट्टी बजार को चिया पसलमा दुबैथरिको भेट भएपछि पहिले विवाद भयो र विवाद बढेर कुटपिट शुरु भयो । खुकुरी, फिच, लाठी, भाला आदि सहितको दोहोरो झडपमा २२ जना घाइते भए । पहिले जनकपुर अंचल अस्पताल र पछि बीर अस्पतालमा उपचार गराउँदा मखन पासवानको मंसीर ९ गते विहान मृत्यु भयो । यस घटनासंग सम्बद्ध विभिन्न मितिमा परेका जाहेरीले हाल २९ जना प्रतिवादीहरु मुद्दा बोकिरहेका छन् ।*

लोहारपट्टी गा.वि.स.कै वडा नं. ९ मा २०४९ वैशाख १ गते भएको कुटपिटकै एक घटनामा रामबाबु मण्डलको पनि मृत्यु भएको थियो ।

### १.२ जेल

१२५ जना बन्दी अटाउने क्षमता भएको जलेश्वर जेलमा प्रजातन्त्र प्राप्ती पछि सबैभन्दा धेरै २०५ जनासम्मलाई राखिएको थियो । हाल जलेश्वर जेलमा १५७ जना बन्दी छन् ।

जेलमा दाह्री काट्ने हजामको व्यवस्था छैन । ३ महिनादेखि मेहत्तर नआएकाले जेल फोहर र दुर्गन्धयुक्त भएको, ट्यूबवेलको जाली फुटेर पानी नआउनाले खानेपानीको अभाव रहेको, चर्पीको पाइप फुटेर फोहर पानी बाहिर आउनाले जेल दुर्गन्धपूर्ण भएको पाइयो ।

८२ वर्षसम्मका वृद्ध समेत रहेको यस जेलमा चोरी मुद्दामा परेका रामकृपाल पासवानले धरौटी बमोजिमको सजाय काटिसक्दा पनि जेलबाट छुटकारा पाएका छैनन् ।

क्षयरोग लागेका चौकीदार मो. अहिर राइन, महन्थी यादव, जानकी महतो, रसुल अन्सारी र रंगमान लामा समेतको खाने, बस्ने अलग बन्दोबस्त नभएकाले अरुलाई रोग सर्ने संभावना देखिन्छ ।

यस्तै मानसिक रुपले बिरामी रामप्रित मण्डल, जगदीश शाह र योगेश्वर मण्डल तथा पक्षघात भएका रामप्रसाद मण्डललाई पनि सँगै राखेकाले अरु बन्दीहरुले सास्ती सहनु परेको छ ।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा पनि जुनसुकै आरोपमा विना पूर्जी गिरफ्तार गर्ने गरिएको र गिरफ्तार गरिएकाहरुमाथि अमानवीय यातना दिने गरेको स्थानीय वासिन्दाहरु बताउँछन् ।

## २ मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्थानीय निर्वाचन २०४९ को सिलसिलामा यस जिल्लाका विभिन्न मतदान केन्द्रमा झै-झगडा, बाद-विवाद र कुटपिटका घटना भएका थिए । जसले गर्दा स्वतन्त्र रुपले मताधिकार प्रयोग गर्न पाउने नागरिकको संवैधानिक अधिकारको हनन भएको थियो ।

जेठ १५ गते भ्रमरपुरा गा.वि.स.मा ११ बजेदेखि हो-हल्ला र कुटपिट भै १२ बजे मतदान स्थगित भएकोमा मतदान अधिकृतसंग भएको मतपत्र खोसेर नेपाली कांग्रेस पक्षका व्यक्तिहरुले सोही दिन आफू विजयी भएको घोषणा गराएका थिए ।

बबिया बन्चौरी गा.वि.स.मा जेठ १८ गते नेपाली कांग्रेसका २०/२५ जना व्यक्तिले मतदान केन्द्रमा बिहान ८ बजेदेखि नै कुटपिट र हो-हल्ला गर्न थालेपछि ९:३० बजे मतदान स्थगित भयो । पुनः २२ गते मतदान हुँदा बिपक्षी उमेद्वारहरुको घर लुट्ने, कुटपिट गर्ने धम्की दिएर मतदान केन्द्रमा कसैलाई जान नदिएपछि बाध्य भएर एमाले पक्षले समर्पण गर्‍यो र नेपाली कांग्रेस पक्ष बिजयी भएको घोषित गरियो ।

सर्पलो गा.वि.स.को निर्वाचनका सिलसिलामा कांग्रेस पक्षले विरोधीको पोष्टर च्यात्ने, नारा मेट्ने, एमालेका उमेदवारलाई कुटपिट गर्ने जस्ता गैर प्रजातान्त्रिक प्रकृयाहरु अपनाएको थियो । निर्वाचनको दिन फर्जिमतको बिवादमा वडा नं १ का एमाले प्रतिनिधि राजनारायण साहनी माथि कुटपिट

भयो । उनको टाउकोमा चोट लागेपछि मतदाताहरु भागे, त्यसपछि कांग्रेस पक्षले एकतर्फी मतदान गरायो ।

जेठ १५ गते परौल गा.वि.स.मा भएको निर्वाचनमा ९ बजेपछि विवाद शुरु भयो । विवाद भैरहेका बेला एमाले पक्षका २ व्यक्तिले पेस्तोल निकाले । पेस्तोल पक्राउ गर्न प्रहरी बढेपछि उनीहरु फरार भए । त्यसपछि कांग्रेस र एमाले बीच ढुंगा हानाहान भयो । मतदाता भागेपछि कांग्रेस पक्षले मतदान केन्द्र कब्जा गरेर फरार भएका एमालेका उमेद्वार लाई खोजेर ल्याई सहीछाप गराएर आफ्नो विजयको घोषणा गरेको थियो ।

बनौटा गा.वि.स.मा यादवहरुको "गोपाल सेवा समिति" का व्यक्तिहरुले एमाले समर्थक उमेद्वारलाई जातीय दवाब र सामाजिक बहिष्कारको धम्की दिएर, कसैलाई कुटपिट गर्ने गरेर, जवर्जस्ती दवाब दिएर र त्यति गर्दा पनि नमान्ने उमेद्वारको पसलमा तोडफोड र लुटपिट गरि नाम फिर्ता लिन बाध्य पारेर निर्विरोध निर्वाचन गराएका थिए भन्ने गुनासो छ ।

लोहारपट्टी गा.वि.स.मा चुनाव हुनु अगाडि नै एमाले पक्षका उमेद्वारलाई कांग्रेस पक्षले डर, त्रास र धम्की दिने गरेको बताइयो । निर्वाचनको दिन १० बजेपछि करीब १५० जना कांग्रेस पक्षका व्यक्तिहरुले मतदान केन्द्र कब्जा गरि मतदातालाई कांग्रेसको पक्षमा खुल्ला मतदान गर्न बाध्य पारिएको थियो भनिन्छ ।

*निर्वाचनकै सिलसिलामा एमालेको प्रचारमा लागेका धिरापुर गा.वि.स.का पुलकित ठाकुरले अहिलेसम्म मानसिक यन्त्रणा भोगिरहेका छन् । ०४८ सालको संसदीय निर्वाचनमा एमालेको प्रचार गरेकाले पुलकित ठाकुरलाई केटी बेचेको आरोप लगाएर रु २ हजार जरिवाना गर्ने निर्णय उनका विपक्षीहरुले गरेका थिए ।*

*२०४८ भदौ १५ गते यस्तो निर्णय गरेपछि पुलकित ठाकुरले झुठो लान्छनाबाट बंचित गरि पाउन र ज्यू-धनको सुरक्षा पाउन जिल्ला प्रशासन कार्यालयमा निवेदन दिए । ०४८ साल असोज १६ गते जिल्ला प्रशासन कार्यालयमा दुबै थरि को मिलापत्र पनि भयो, तर २४ गते ठाकुरकी पत्नी सुकमरिया देवी र सीताराम ठाकुरमाथि कुटपिट भयो । पुलकित ठाकुरले कुटपिटको मुद्दा दायर गरेपछि मंसीर १ गते पुनः पुलकित ठाकुरकी पत्नी र छोरीलाई कुटपिट गरियो भने त्यसपछि पनि ०४८ साल फागुनमा पुलकित ठाकुरलाई खेतबारीमा कुटपिट गर्ने प्रयास भयो । उनलाई बचाउने प्रयास गर्दा पुलकित ठाकुरकी पत्नी र छोरी घाइते भएकाले वलेश्वर अस्पतालमा ५ दिनसम्म उपचार गराउनु परेको थियो ।*

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस बर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



## २. मध्यमाञ्चल

**जनकपुर**

# २.३ सर्लाही

| | | |
|---|---|---|
| जनसंख्या | : | ४१०३९० |
| साक्षरता | : | २६.३ प्रतिशत |
| महिला साक्षरता | : | १३.५ प्रतिशत |
| क्षेत्रफल | : | १२५९ वर्ग कि. मी. |

सामाजिक रुपमा परम्परादेखि विभिन्न जाति र धर्मका मानिसहरु बसोबास गर्दै आएको यस जिल्लामा सामाजिक सद्भाव र सौहार्द्रतामा आएको ह्रास नै मानव अधिकार हनन हुने मूल कारण देखिएको छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

*२०४७ कार्तिक १५ गते महावीरको झण्डामा मुस्लिम समुदायले पिशाब गर्छन् भन्ने हल्ला भएपछि सो विवादको समाधान गर्न हिन्दू र मुस्लिम समुदायका प्रतिनिधिहरु बीच वार्ता भयो । दोश्रो चरणको वार्ता भैरहेको बेला कात्तिक १७ गते हिन्दूहरुको संख्या बढ्दै गयो । मुस्लिम समुदायका प्रतिनिधिहरुलाई सुरक्षाका लागि गा.वि.स. भवनमा थुनेर बाहिरबाट ताल्चा लगाइयो ।*

*करीब १ बजे प्रहरी र प्रजिअ आएर भिडलाई सम्झ्याएपछि मानिसहरु झन् उत्तेजित भए । उत्तेजित भीडले गा.वि.स. भवन तोडफोड गरेपछि १ व्यक्ति भित्र पसे । त्यसैबेला भित्र पसेका १ हिन्दूलाई मुसलमानले मारेको हल्ला चल्यो । सो हल्लापछि भीड भवनभित्र पस्यो र कुटपिट गऱ्यो । वार्तामा संलग्न ६ जनामध्येका २ जना नूर मोहम्मद र शेख नूर हसन मिस्रीको घटनास्थलमै मृत्यु भयो । बाँकी ४ जनालाई प्रहरीले सुरक्षा प्रदान गरी बँचाएको थियो ।*

*उक्त दिन गा.वि.स. भवन फोडेर भित्र पसेका पदमबहादुर विश्वकर्मा अहिले थुनामा छन् र अदालतमा उनको मुद्दा चलिरहेको छ ।*

*१३ परिवार मुसलमान बस्ती भएको गोडइता गा.वि.स. वडा नं. ४ र ५ मा २०४७ साल साउन २१ गते गाई काटेको हल्ला चल्यो । मुसलमानहरुले त्यस दिन सुन्दरपुर गा.वि.स.बाट पाडाको मासु ल्याएका थिए । सो हल्लाको कारण ४/५ दिनपछि गोडइता गा.वि.स. वडा नं. ६ मा दुबैतर्फका प्रतिनिधिहरु बीच पंचायती भयो । बिहान ८ बजे शुरु भएको छलफलमा १२ बजेदेखि विवाद बढ्न थालेपछि छलफलमा भेला भएका करीब १ हजार ५ सय हिन्दूहरुले मुस्लिम समुदायको घर घरमा आगो लगाउने, तोडफोड गर्ने र लुटपिट गर्ने काम गरेका थिए ।*

### १.२ जेल

करीब ३ कठ्ठा जग्गामा बनेको जिल्लाको सदर मुकाम मलंगवा जेल अहिले जीर्ण अवस्थामा छ । २०४५ सालको भूईचालोपछि जेलका पर्खालहरु ठाउँ ठाउँमा चर्किएका छन् । उत्तर तर्फको १८ इन्चको पर्खाल ढल्ने अवस्थामा पुगेको देखियो ।

करीब ५० जना मात्र अटाउने क्षमता भएको जेलमा १०३ जना बन्दीहरु राखिएको छ । बन्दीहरुको सुत्ने ठाउँ साँघुरो, सुत्ने कोठामा अस्थायी शौचालयबाट र पानीको नालाबाट दुर्गन्ध आउने गरेको पाइयो । जेलभित्र रहेका बन्दीहरुमध्ये अर्जुनबहादुर गोले, पूर्ण बहादुर कार्की, पुनित राय र बीरबहादुर स्याङ्तान क्षयरोगबाट पीडित छन् । फुदिना माझी कुष्ठरोगबाट पीडित अवस्थामा छिन् । यी बिरामी बन्दीहरुलाई एकै ठाउँमा राखिएकोले रोग सर्ने संभावना पनि प्रशस्तै देखियो ।

जेलमा विरामीलाई उपचारको व्यवस्था छैन । बन्दीहरूका लागि पुस्तकालय छैन, बन्दीलाई भेट्न जानेहरूलाई प्रतिक्षालय छैन । सामान खरिद गर्ने पसल र शीपमूलक काम गर्ने व्यवस्था छैन । सीमित बजेट र क्षमताभन्दा बढी बन्दी भएकाले भौतिक सुविधाहरू सीमित भएको कुरा स्वयं जेल प्रशासनसंग सम्बद्ध कर्मचारीहरूले समेत बताए ।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा पनि जुनसुकै आरोपमा विना पूर्जी गिरफ्तार गर्ने गरिएको र गिरफ्तार गरिएकाहरूमाथि अमानवीय यातना दिने गरेको स्थानीय वासिन्दाहरू बताउँछन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुन अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरू ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरू पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

२०४९ साल कार्तिक १७ गते जिल्लाको हरिऔन गा.वि.स.मा हिन्दू र मुस्लिम बीच भीषण दंगा भयो । गा.वि.स. भवनमा मुस्लिम समुदायले परम्परागत रुपमा दाहाको झण्डा राख्ने गरेको थियो । सो ठाउँमा हिन्दू समुदायले महावीरको झण्डा राख्यो ।

बेलाबखत यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी घटना घट्ने गरेको पाइएको छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रूपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरूले उपरोक्त न्यायिक अधिकारहरू उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरूको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरूको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ झारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा झारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



*हिन्दू मुस्लिम दंगाबाट भएको क्षती*



## २. मध्यमाञ्चल

### जनकपुर

# २.४ सिन्धुली

| | | |
|---|---|---|
| जनसंख्या | : | २२२९४६ |
| साक्षरता | : | ३१.६ प्रतिशत |
| महिला साक्षरता | : | १६.८ प्रतिशत |
| क्षेत्रफल | : | २४९१ वर्ग कि.मी. |

जनकपुर अञ्चलको ६ जिल्लामध्ये सिन्धुली जिल्ला एक हो । तराई र भित्री मधेश छोएको यो जिल्लालाई मोटर सबारी पुगेर पनि त्यति सुगम मानिँदैन । देशमा बहुदलीय प्रजातन्त्र पुनर्स्थापना र मानव अधिकारको पूर्ण प्रत्याभूति गरेको भए तापनि जनता अज्ञान, अशिक्षा, अचेतनाको भूमरीमा रुमलिएको हुनाले संविधान र प्रजातन्त्रको कुनै पनि पक्षबाट आदर्श र मर्म अनुरुप पालन हुन सकेको छैन । यसै परिवेशबाट सिन्धुली जिल्ला पनि पृथक रहन सकेको छैन ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

सामाजिक प्रतिष्ठाको अहंता, बैमनस्यता आदि पनि कहिलेकाँहि बढ्दै गएर राजनैतिक रुप लिइदिन्छ। यसै प्रसंगमा आपसी बैमनस्यता र व्यक्तिगत प्रभावले पछि गएर हत्याको श्रृङ्खला शुरु गरिन्छ । घटना २०४९ कात्तिक ११ गते सिन्धुली जिल्लाको भिमान गा.बि.स. हर्दिया गाउँको हो । रत्नबहादुर सार्कीकी तरुनी बहिनीको विषयलाई लिएर भएको झडपका कारण नेपाली कांग्रेस समर्थक २२ वर्षीय धुवराज डोटेल र १७ वर्षीय रेखबहादुर ठकुरीको हत्या हुन पुग्यो । हत्याले पछि गएर राजनैतिक रुप लियो । जसको परिणाम स्वरुप धेरै व्यक्ति यसको शिकार हुन पुगे । यस हत्याकाण्डमा रत्नबहादुर सार्की, शमशेरबहादुर सार्की, भरतबहादुर विसंखे, छौटुप लामा, पन्चमाया सर्किनी, बद्रिनाथ देवकोटा, रुद्रबहादुर सार्की, ज्ञानबहादुर भुजेल, दुर्गा श्रेष्ठ र सुब्बा कार्की गरी १० जना मुछिए। तीमध्ये बद्रिनाथ देवकोटा र सुब्वा कार्की तारीखमा रिहा भए भने रत्नबहादुर सार्की र शमशेरबहादुर सार्की हत्याकाण्ड पश्चात् फरार भएका छन् ।

यस अघि पनि सोही जिल्लामा प्रतिनिधि सभा तथा स्थानीय निर्वाचन ताका समेत केही राजनैतिक दलहरु बीच झडप र मुठभेडहरु भएका थिए। जसको फलस्वरुप २०४८ जेठ २० गते बेखाटाँडी बाल लहरी प्राथमिक विद्यालय भंज्याङका शिक्षक अर्थात तीनकन्या गा.बि.स. वडा नं. २ का निवासी शिवबहादुर ठकुरीलाई उक्त विद्यालयका प्रधानाध्यापक पुनरन्जन प्रसाद दंगाल सहितका लठैतहरुले हत्या गरे। मृतक शिवबहादुर ठकुरी नेपाल कम्युनिष्ट पार्टी (एमाले) का समर्थक थिए। पुनरन्जन प्रसाद दंगाल सहित ६ जना उपर मुद्दा चलाइए तापनि राजनैतिक दवाब र अन्य कारणले गर्दा नगेन्द्र बहादुर ठकुरीलाई अपराधी घोषित गरी बाँकी ५ जनालाई निर्दोष प्रमाणित गरिएको थियो ।

स्थानिय निर्वाचन ताका सोही जिल्लाको दुधौली गा.बि.स. का विभिन्न पदमा २०४९ जेठ १ गते नामांकन-पत्र भर्न आएका नेपाली कांग्रेस र नेकपा (एमाले) का कार्यकर्ता बीच उक्त विषयमा लिएर मुठभेड र हानथाप भयो । जसमा नेकपा (एमाले)का सक्रिय कार्यकर्ता पुष्पाकुमार दनुवारको हत्या भयो । हत्याको सिलसिलामा जीतनारायण धामी, रामनारायण धामी, माहिलाकुमार दनुवार, तुक्तबहादुर कार्की आदिमाथि अदालती कारवाही भए तापनि हाल यी सबै अभियुक्तहरु तारेखमा छुटेका छन् । यसैगरी सिन्धुली जिल्ला

विकास समितिका सभापति नरेन्द्रजङ्ग थापाले २०४९ साउन २५ गते मादक पदार्थ सेवन गरी सिन्धुलीमाडीमा एक महिला माथि हातपात गर्न जाँदा प्रहरी हवल्दार रामबहादुर रायमाझीले विनम्रतापूर्वक रोक्न खोज्दा सभापति श्री थापाले प्रहरी हवल्दारलाई सांघातिक हमला गरे र उक्त कुटपिटले गर्दा घाइते प्रहरीको २८ गते मृत्यु भयो । तर सत्तापक्षको प्रशासनिक तथा राजनैतिक दवावले गर्दा हत्याको बारेमा अझसम्म कारवाही हुन सकेको छैन ।

## १.२ जेल

सिन्धुली जिल्लाको जेलको निर्माण २०२६ सालमा भएको थियो । २०३० साल असोज महिनादेखि यस जेलले आफ्नो काम शुरु गर्‍यो । यो भन्दा पहिले यहांको जेल सिन्धुलीगढीमा थियो । २५ जनाको क्षमता भएको यस जेलमा ६८ जनालाई कोचाकोच गरेर राखिएको छ, जसमा ६५ जना पुरुष र ३ जना महिलाहरु छन् । जेल भौतिक सुविधाले त्यति सम्पन्न नभए पनि देशका अन्य जेलहरुका तुलनामा यो जेल त्यति नाजुक स्थितिमा भने छैन । तर पनि घामको प्रकाश नछिर्ने यो जेल दुर्गन्धबाट भने मुक्त रहन सकेको छैन । विभिन्न अपराध तथा अन्य सजाय भोगिरहेका बन्दीहरुले जेलका कर्मचारीहरुबारे मिश्रित प्रतिक्रिया व्यक्त गरेको पाईयो । अधिकांश बन्दीहरुले आफूलाई निर्दोष बताए र षडयन्त्र गरी फसाएको कुरा जाहेर गरे । कतिपय व्यक्तिहरुले आफूलाई राजनैतिक प्रतिशोधको भावनाले जेलमा थन्काएको विचार व्यक्त गरेका थिए । यस्ता व्यक्तिहरुलाई राजनैतिक प्रतिशोधका कारण यातना दिन नपाइने संवैधानिक प्रावधान भए पनि व्यवहारमा आफूले भयावह र वीभत्स पीडा तथा यातना सहनु परेको धारणा अभिव्यक्त गरेका थिए ।

## १.३ गिरफ्तारी / यातना

विगत पञ्चायत कालमा आफ्नो चुनावी प्रतिस्पर्धी देखेर तत्कालिन पंचद्वारा विभिन्न झुठा आरोप लगाई जलेश्वर कारागारमा थुनिएका भिमान गा.वि.स. का खगेन्द्र प्रसाद घिमिरे देशमा राजनैतिक परिवर्तनपछि पनि छुटेका छैनन् । त्यस्तै मुद्दामा फसाइएका दोभान गाउँका रसबहादुर कार्कीको पनि कपोलकल्पित मुद्दा आजसम्म खारेज गरिएको छैन ।

# २. मौलिक अधिकार

## २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानले दिएको स्वतन्त्र अभिव्यक्तिको अधिकार, भेला हुने अधिकार र संगठित हुने अधिकारलाई कार्यान्वयन गर्न यस जिल्लामा आफ्नो बाहुल्य र प्रभाव भएको राजनैतिक दलले अन्य दलहरुलाई बन्चित गरेको देखिन्छ । भनाईको तात्पर्य संसदीय निर्वाचन र स्थानीय निर्वाचनमा राजनैतिक दलहरु बीच भएको मुठभेड र कतिपय आफ्ना प्रभाव भएका गा.वि.स.हरुमा अन्य राजनैतिक दलहरुलाई नामाङ्कन-पत्र दर्ता गर्न नदिनु, मतदाताको नामावली गायब गर्नु यसका उदाहरणहरु हुन् ।

## २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा अधिकांश हिन्दू धर्मावलम्वीहरु बसोबास गर्ने हुनाले धार्मिक मतभेद, विभाजन, कलह र झै झगडा भने छैन । तर पनि जातपात, छुवाछुत र अन्य कुसंस्कारहरु यहां व्यापक रुपमा रहेको पाईन्छ । भिमान गा.वि.स. वडा नं. २ बस्ने २३ वर्षीय शिक्षक बीरबल विश्वकर्मा र सोही स्थान बस्ने सावित्री सुनुवारको बीचमा प्रेमालाप भई सामाजिक रुढीवादी र कुरीतिलाई नाघेर विवाह गर्ने निचोडमा पुगेपछि दुवै जनाले एक आपसमा सिन्दूर पोते र माला लगाए । तर उक्त विवाह केटी पक्षकालाई असह्य भयो । प्रशासन र प्रहरीको सहयोगले केटीपक्षले सो चुरापोते खोसे र प्रहरीले केटालाई विनाकारण हिरासतमा राखी यातना र पीडा दियो ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

देशमा बहुदलीय व्यवस्थाको स्थापना र प्रजातान्त्रिक संविधान लागु भएर स्वतन्त्र वातावरणको सिर्जना भए तापनि व्यवहारमा भने अझै एक दलीय व्यवस्था गुज्रिरहेको पाइन्छ । भनाईको तात्पर्य स्वतन्त्र निर्वाचन पद्धतिको अभाव यस जिल्लामा रहेको देखिन्छ । नेपाली कांग्रेसको बाहुल्य र आधिपत्य भएका दुम्जा, टांडी, लदाभीर, तोश्राम खोला, झाँगाझोली, रातामाटा, अमले तामाजोर आदि गा.वि.स.हरुमा नेपाली कांग्रेसकै सांसदको अगुवाइमा सांघातिक हात-हतियारको प्रदर्शन गरी विपक्षीहरुलाई नामाङ्कन भर्न नदिई

सम्पूर्ण पदहरुमा नेपाली कांग्रेस निर्वाचित भएको घोषणा गरा-इयो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

देशमा बहुदलीय प्रजातन्त्र प्रार्दुभाव भएपछि राजनैतिक रुपमा जनताहरु अधिकार सम्पन्न भए तापनि व्यवहारमा राजनैतिक दलहरु बीच झडप, मुठभेड, प्रतिशोध आदिले गर्दा सबै क्षेत्रमा निष्पक्ष जांचको आवश्यकता देखिन्छ । साथै यस जिल्लामा महिला र पुरुष बीच ठूलो असमानता छ । महिला शोषण, चेलीवेटी व्यापार, जारी प्रथा, बहुविवाह आदि यस जिल्लाका प्रमुख समस्याहरु हुन् ।

सिन्धुली जिल्लामा मानव अधिकार हनन् सम्बन्धी ६५ वटा घटनाहरु घटे जसमा ४८ घटनाका बारेमा कार-वाही चलिरहेको छ ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा सुकुम्वासी समस्या त्यति विकराल रुपमा देखिएको छैन । तर राजनैतिक र सामाजिक प्रतिशोधका कारणले टांडी गा.वि.स. पत्रिङगाका नेकपा (एमाले) समर्थक टेकवहादुर कार्कीलाई उसले विगत ९ वर्षदेखि प्रयोग गर्दै आएको कुलोबाट खेतमा पानी लगाउन दिएनन् । साथै स्थानीयवासीहरुले त्यस जिल्लामा नागरिकता प्राप्त गर्न कठिन भएको बेला हिजोआज फाट्फुट् भारतीय नागरिकहरुले नागरिकता पाएको देखिन आएको छ ।

## ४. महिला अधिकार

कागजी रुपमा महिलाहरु पुरुषसरहको समान अधिकारले परिपूर्ण भए पनि व्यवहारमा यो भिन्दै छ । यस जिल्लामा आफ्ना विचार र कुराहरुसंग असहमत भएमा बोक्सीको आरोप लगाइन्छ र बोक्सी प्रथाको केही अंश यस जिल्लामा अझ कायम छ । कमलाखोंच, मणिखोला तथा अन्य केही गाउँहरुमा धामी र बोक्सीको अन्ध धारणा अद्यावधि तीव्र छ । यी भेगहरुमा कोही विरामी भएको खण्डमा धामी झाँक्रीलाई देखाउंछन् । वास्तवमा त्यस्ता विरामीहरु साधारण औषधिले निको हुने भए तापनि धामी झाँक्रीले मौका यही हो भनेर विभिन्न माग राख्दै विरामी र उसका परिवार उपर शोषण गर्दछन् । त्यस्तै महिलामाथिको शोषण यहाँ व्यापक छ । हरेक राजनैतिक दलले निर्वाचनमा ५ प्रतिशत महिला उठाउनु पर्ने, महिला विद्यार्थीलाई १० कक्षासम्म निशुल्क पढाउनु पर्ने आदि महिला हितको कुरा गरे पनि



मृतक ध्रुव राज डोटेल

व्यवहारमा यो लागू गर्ने तर्फ ध्यान नदिएको कुरामा स्थानिय महिला नेतृहरुले असन्तोष व्यक्त गरेका छन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

सिन्धुली जिल्लामा महिला किनबेच र बलात्कारका घटनाहरु बराबर दोहोरी रहेका छन् । यसै जिल्लाका सांसद समेत महिला अस्मिता र किनबेचका मामलामा बराबर चर्चामा आएका छन् । यसै प्रसंगमा महाबौद्धस्थित गलैंचा कारखानामा कार्यरत दुई महिलाहरुलाई भारततिर बेच्न लगिरहेको अवस्थामा वीरगञ्जस्थित प्रहरीले समात्न खोज्दा उक्त व्यक्ति फरार भएको थियो । कमलाखोंचमा आई ती दुई महिलाहरुले आफूलाई विदेश लाने व्यक्ति सांसद कै आफन्त भएको बताए । साथै बलात्कारको प्रसंगमा रत्नबहादुर सार्की कै बहिनीको विषयलाई लिएर दुई व्यक्तिको हत्या समेत भएको माथि नै उल्लेख गरियो ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

सिन्धुली जिल्लामा बादी र देउकी प्रथा चलनचल्तीमा छैन् । तर जारी र बहु-विवाह प्रथाले यहाँ यथेष्ट मात्रामा जरा गाडिसकेको पाइन्छ । ऐन कानूनमा जारी र बहु-विवाह सम्बन्धी जे जस्तो उल्लेख भए पनि यहाँ महिलाहरुलाई पशु सरह व्यवहार गरिएको देखिन्छ । यस जिल्लामा रु० एक हजार देखि चार हजारसम्म जारी लिएको भेटिन्छ । जारी उठाउँदा पैसा छैन भने पशु तथा अन्य सरसामानमा पनि सौदा गरिन्छ । साथै महिलाहरुलाई बिभिन्न दोष देखाएर बहु-विवाह गरिन्छ । जिल्लामा यस्तो बहु-विवाह ठूला ठालु, नेता आदिले पनि गरेको भेटियो । उदाहरणको रुपमा भद्रकाली गा.वि.स. निकुटारका विष्णु बहादुर कार्कीले पाँच औटी श्रीमती घर भित्र्याई सकेका छन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

देशमा बहुदलीय व्यवस्था लागु भएपछि व्यापक रुपमा यस जिल्लामा वन फडानी भैरहेको छ । यस कार्यमा जिल्ला स्तरीय सम्वन्धित निकाय र राजनैतिक पार्टीहरुको अप्रत्यक्ष रुपमा हात रहेको बोध हुन्छ । जसको फलस्वरुप तत्कालीन प्रमुख जिल्ला अधिकारी चन्द्रबहादुर कार्कीले २०४९ कार्तिक ९ गते अवैधानिक रुपमा आफ्नो घर विराटनगर काठ लिएर गएको गाडी दुर्घटना भयो । प्रजिअको सुरक्षागार्ड प्रहरी हवल्दारको घटनास्थलमा मृत्यु भएको कुरा विदितै छ ।

त्यस्तै यस जिल्लामा ठूला कलकारखाना नभए पनि जीविकोपार्जनका लागि कमैया प्रथा पनि विविध नाम र प्रचलनमा एउटा समस्याको रुपमा देखापर्न थालेको छ । यस कार्यमा महिला पुरुष दुवै संलग्न छन् । यहां अधियाको प्रचलन भन्दा हलीहरुलाई १/३ अथवा १/४ दिने चलन व्यापक रुपमा देखिन्छ । यस जिल्लामा कृषि मजदूरहरुको ज्याला अन्तर्गत पुरुषलाई प्रतिदिन रु० ५०।- र महिलालाई रु० ३०।- सम्म मजदूरी ज्याला दिइन्छ ।

■



# २. मध्यमाञ्चल

## जनकपुर

# २.५ रामेछाप

| | | |
|---|---|---|
| जनसंख्या | : | १८८८१४ |
| साक्षरता | : | २९.५ प्रतिशत |
| महिला साक्षरता | : | १२.७ प्रतिशत |
| क्षेत्रफल | : | १५४६ वर्ग कि. मी. |

रामेछाप जनकपुर अञ्चलको मोटर सवारी नपुग्ने एकमात्र जिल्ला हो । स्थानीय प्रशासक तथा बुद्धिजीवीहरुका दृष्टिमा यस जिल्लामा संविधान प्रदत्त अधिकारहरु मौलिक अधिकार, मानव अधिकार, शिक्षा, रोजगार आदिबारे यहाँका बासिन्दाहरुले चिन्तन मनन गर्ने समय खानेपानी बोक्दाबोक्दै बिर्सिसकेका हुन्छन् भन्ने रहेको छ । साथै भौगोलिक विकटता, कम उब्जाउ, अनावृष्टि, बन-जंगल ह्रास आदि प्राकृतिक दुर्भाग्यबाट यो जिल्ला गुज्रिरहेको देखिन्छ । अर्थात् जिल्लाबासीहरुलाई खानेपानी समस्या मात्र पूर्ति गर्न सकेको खण्डमा जिल्लाको आधा समस्या त्यसै हल हुने धारणा रहेको पाइन्छ । खानेपानीको सन्दर्भमा अचम्मको कुरा के छ भने बाटो हिंड्ने बटुवाहरुले पानी खान मागेमा छोरीको पेवा भनी अल्याङ टल्याङ गर्ने प्रचलन यहाँ देखिन्छ ।

यो जिल्ला भौगोलिक बनावटले मात्र पिछडिएको छैन, राजनैतिक, सामाजिक, प्रशासनिक यन्त्रको अझ ठूलो मारमा परेको छ । यहाँ हरेक क्षेत्रमा राजनीतिकरण गरेको देखिन्छ ।

गत स्थानीय निर्वाचनका क्रममा यस जिल्लामा भएको आतंक र हताहतको चर्चा देशभरि नै व्यापक रहेको थियो ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

संविधानले सबै नेपालीलाई सम्मानपूर्वक बाँच्ने अधिकार प्रदान गरेको छ । र यस जिल्लामा प्रायः सबै राजनैतिक शक्तिहरुको अस्तित्व स्थापित भएको हुनाले एक आपसमा भय, सन्त्रास र राजनैतिक प्रतिशोधको वातावरणबाट जिल्लाबासीहरु मुक्त भएका छैनन् ।

२०४९ जेठ १० गते स्थानीय निर्वाचनका क्रममा दोरम्बा गा.बि.स. वडा नं. ८ ढोइगाउँ बस्ने राजनैतिक कार्यकर्ता भुवनलाल थापा मगरलाई डडुवा गा.बि.स. मंसिरे मिल असारे भन्ने ठाँउबाट गुण्डाहरुले अपहरण गरी बेपत्ता पारेका थिए । हालसम्म पत्ता नलागेका निजभुवनलाल थापा मगर मरिसकेको आशंका जिल्लाभरि व्यापक रहेको देखिन्छ ।

### १.२ जेल

यस जिल्लाको जेल निर्माण २०२७ सालमा भएको हो । जेलमा २९ जना बन्दीहरु छन् जसमा २३ पुरुष, ५ महिला र १ नावालक छन् । जेलको भौतिक रुप त्यति मजबुत देखिदैन । साथै यहाँ बन्दीहरुलाई दिएको अन्य सुविधाहरु पनि त्यति सन्तोषजनक छैन । मुख्य कुरा यस जेलमा खानेपानीको साह्रै अभाव रहेको छ । जेलभित्र टोपी, स्वीटर, मुढा आदि घरेलु उद्योगको सुविधाहरु देखिए तापनि ती बस्तुका बजार को अभावमा बिक्री भने कमै हुने कुरा बन्दीहरु बताउँदछन् ।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा मुख्य गरेर गत स्थानीय निर्वाचनमा एक प्रकारले आतंक नै मच्चिएको थियो । सोही बेला

राजनैतिक शक्तिहरु बीचको भीडन्तले गर्दा जिल्लाका सांसद लगायत ५ सय व्यक्तिहरु जिल्ला छोडी अन्यत्र लागेका थिए। त्यस्तै यस जिल्लामा प्रहरी हिरासतमा अमानवीय यातना दिने गरेको देखिन्छ। उदाहरणको लागि स्थानीय निर्वाचनमा पक्राउ परेका बेयान गा.बि.स. वडा नं. २ बस्ने भुवन घिमिरेलाई प्रहरीले जघन्य र निर्मम यातना मात्र दिएन, जेलभित्र साङ्लो पनि लगाएको थियो । यस जिल्लामा शिक्षकहरु माथि पनि मानसिक यातना दिएको पाइन्छ । स्थानीय निर्वाचनको क्रममा फरक मत राख्ने शिक्षकहरु धनबहादुर कार्की, युवराज पाखिन, तारानिधि सुवेदी आदिलाई मत दिनबाट बन्चित गर्ने उद्देश्यले बिना पूर्जी जिल्ला शिक्षा कार्यालय मन्थलीमा राखिएको थियो। त्यस्तै नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरुलाई अपायक तथा दुर्गम क्षेत्रमा सरुवा, स्थायीका लागि अवरोध तथा विभिन्न मानसिक तनावहरु दिइएको थियो।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानद्वारा उपरोक्त स्वतन्त्रताहरु प्राप्त गरे तापनि यस जिल्लामा सम्पूर्ण सामाजिक संघ-संस्थाहरुलाई राजनीतिकरण गरीएको छ।

### २.२ धार्मिक स्वतन्त्रता

बहुभाषी बहुजाति र बहुधर्म सम्प्रदायीहरु बसोबास गरेको यस जिल्लामा धार्मिक सहिष्णुता रहेको देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा संसदीय निर्वाचन होस् वा स्थानीय कुनै पनि शान्तिपूर्वक र निष्पक्ष भएको देखिदैन। अझ त्यसमाथि यहाँको स्थानीय निर्वाचन त देशभरि नै चर्चाको विषय बनेको थियो। गत स्थानीय निर्वाचनको क्रममा उत्पन्न भएको विवाद र आतंक अद्यापि कायम नै छ।

२०४९ जेठ १५ गते प्रथम चरण अन्तर्गत मजुवा गा.बि.स.मा भएको निर्वाचनमा अन्य पक्षका उमेदवारलाई मनोनयन-पत्र दर्ता गर्न नदिएर एक पक्षीय रुपमा सबै निर्वाचित उम्मेदवारहरुको नामावली घोषणा गरिएको थियो ।

पकरबास गा.बि.स.का विपक्षी दलका चर्चित उपाध्यक्ष उम्मेदवार कैलाश डुंगेललाई हराउन सत्तापक्षीय दलले स्थानीय प्रशासनको मिलोमतोमा निर्वाचन तिथिभन्दा केही दिन अगाडि देखि नै वैधानिक मतपत्र बाँडेको थियो ।

त्यस्तै चनखु गा.बि.स.को निर्वाचनमा स्थानीय प्रशासकको आडमा निर्विरोध निर्वाचित भई निर्वाचित प्रमाण पत्र प्राप्त गरेका स्वतन्त्र उम्मेदवारलाई समेत धुनछेक गरी पुन: निर्वाचन गराई एक पक्षीय रुपमा सत्तापक्षीय उम्मेदवारहरुलाई निर्वाचित भएको घोषणा गरिएको थियो।

राकाथुम गा.बि.स.को निर्वाचन क्रममा राजनैतिक शक्तिहरु बीच भएको मुठभेडमा सार्वजनिक सम्पत्तिहरु क्षति हुनुका साथै निर्वाचनको परिणामलाई राजनैतिक दवावमा रद्ध गरी पुन: निर्वाचन गराई सम्पूर्ण पदहरु आफ्नो पक्षमा घोषणा गराइएको थियो। पछि निर्वाचन बिथोलेको र धनमाल क्षति पुऱ्याएको बहाना बनाई ४७ जनामाथि सार्वजनिक अपराधको साथै १४ वटा मुद्दा अदालतमा चलाइएको थियो । जसमा केही व्यक्तिहरु उपर घरमा हातहतियार फेला परेको भन्ने कथित मुचुल्का पनि तयार पारिएको थियो।

पिंखुरी माकादुम, खाँडा देवी, हिलेदेवी, दोरम्बा, गुन्सी लखनपुर, दिमी पोखरी गा.बि.स.हरुमा फरक बिचार-धाराका राजनैतिक दलहरुले जिते पनि कतिपय गा.बि.स.मा निर्वाचनमा धाँधली तथा अनियमित गरेको आरोप लगाई निर्वाचन रद्ध गरी पुन: निर्वाचन गराएर सम्पूर्ण पदहरु आफ्नो पक्षमा गराइएको थियो।

यस जिल्लामा राजनैतिक स्वतन्त्रताको उपहास गरेको पाइन्छ । फरक विचारधारा राख्ने व्यक्तिहरुलाई विभिन्न लोभ-लालचाका साथसाथै भय, धम्की र त्रास देखाई आफ्नो पक्षमा आएको भनेर जवरजस्ती प्रचार गराएको देखिन्छ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहुबिबाह, देउकी, बादी प्रथा

बहुविवाह सामाजिक प्रचलनका रुपमा रहेको यस जिल्लामा अन्तरजातीय विवाहलाई भने स्वीकार गर्न सकेको पाईदैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

व्याप्त गरीबीले गर्दा जीवन धान्नका लागि यस जिल्लामा विद्यालय जाने बालबालिका, बुढाबुढी, गर्भवती महिला आदि सबै भारी बोक्ने गर्दछन् । त्यसैले यहाँ १२ बर्षको बच्चाले झण्डै ५० केजीसम्म भारी बोक्छ भने कतिपय गर्भवती महिलाहरु भारी बोक्दा बोक्दै बाटैमा सुत्केरी हुने गरेको पनि बताइन्छ ।

यस जिल्लामा लामो समयदेखि सदरमुकामको विषयमा भएको विवाद अहिलेसम्म टुंगो लाग्न सकेको छैन ।



# २. मध्यमाञ्चल

## जनकपुर

## २.६ दोलखा

| | | |
|---|---|---|
| जनसंख्या | : | १७३८३६ |
| साक्षरता | : | ३७.८ प्रतिशत |
| महिला साक्षरता | : | २१.५ प्रतिशत |
| क्षेत्रफल | : | २१९१ वर्ग कि.मी. |

गौरीशंकर हिमालको काखमा रहेको जनकपुर अञ्चलमा पर्ने दोलखा जिल्लामा विविध जाति, धर्म र वेशभूषाका जनजातिहरु बस्दछन् ।

### १. बाँच्न पाउने अधिकार

देशको वर्तमान संविधानले प्रत्येक नेपालीलाई सम्मानपूर्वक बाँच्ने नैसर्गिक अधिकार प्रदान गरेको छ । तर यस जिल्लामा ठूलाठालु उच्च जातका व्यक्तिहरुको शोषण र दमनले पिछडिएका जनजातिहरु थामी, कामी, सार्की, दमाई, जिरेल, घर्ती, बादी, माझी, तामाङ आदि मौलिक अधिकारबाट बञ्चित भएको प्रतीत हुन्छ ।

### १.१ हत्या / गोली

*पवटी गा.वि.स. बस्ने जगन्नाथ उप्रेतीका परिवारको सोही स्थान बस्ने पिछडिएका जनजाति दमाई, सार्की आदिसंग पहिलेदेखि नै झगडा, मनमुटाव रही आएको थियो । र देशमा राजनैतिक परिवर्तनपछि पिछडिएको एवं दलित जातिहरुमा मनोबल बढेको देखेर निज जगन्नाथकी पत्नी महाकाली उप्रेतीलाई असहय भएको थियो । यसै रिसको झोकमा महाकाली उप्रेतीले छिमेकी कृष्ण बहादुर कटुवालले आफूसंग रु. ५ सय सापटी लिएकोमा सो रुपियाँ लिन आफू सहित छोरा कुमार उप्रेती र बुहारी लिएर कृष्णबहादुर कटुवालको घरमा घुसी तामाको खड्कुलो, भाँडाकुँडा, बाखा आदि लिएर जाने बेलामा निज कटुवालकी पत्नी आएर मेरो घरमा चोर जस्तो किन पस्नु भएको, तपाईको पैसा हामी तिरिहाल्छौं नि भनिन् । "ए मलाई चोर्न आएको भन्ने आरोप लगाउने, तँलाई नमारी छाड्दिन" भनेर महाकाली उप्रेतीले झोक्किएपछि किटुवालकी पत्नी भागेर दुर्गाबहादुर नेपालीको घरमा गइन् । र कृष्ण बहादुर कटुवाल पनि त्यहीं आइपुगेपछि भएको सरसल्लाह पश्चात् भोलि पल्ट अर्थात् २०४८ असार १९ गते आफ्नो सामान फिर्ता लिन सामान्य हातहतियार सहित जगन्नाथ उप्रेतीको घरमा एक हुल गए । हुल देख्ने बित्तिकै महाकाली उप्रेती लगायत, जगन्नाथ कुमार, काला उप्रेती हातमा खुकुरी लिएर हुलमाथि जाइलागे । दुई समूहबीचको भीडन्तमा काला उप्रेतीको मृत्यु भयो भने जगन्नाथ उप्रेतीलाई बढी चोट लाग्यो । यस घटना पछि सो काण्डलाई राजनीतिकरण गरियो । जसबाट २५ जना माथि ज्यान सम्बन्धी मुद्दा लगाइयो । ती मध्ये हाल १५ जनालाई पुर्पक्षका लागि थुनामा राखी कारवाही गरिएको छ, ९ जना तारेखमा छुटेका छन् र एक जना फरार भएका छन् ।*

फस्कु गा.बि.स. वडा नं. २ निवासीहरु मानबहादुर बस्नेत र फौजसिंह खड्काको बारीको साँध र कुलोको विषयलाई लिएर झगडा भई एक आपसमा रिसइबी कायम भएको थियो । २०४९ कात्तिक ३ गते मान बहादुर बस्नेतका बर्ष १६ का छोरा भुवन बहादुर बस्नेत दाउरा लिन बन गएको र त्यसैबेला फौजसिंह खड्काका ३४ बर्षीय छोरा रामचन्द्र खड्का र मुक्तिबहादुर खड्का पनि घाँस काट्न सोही बन गएकोले ती दुईबीच बाटामा मुठभेड भयो र रामचन्द्र खड्का र मुक्तिबहादुर खड्काले बन्चरो प्रहार गरी भुवनबहादुर बस्नेतको हत्या गरे । हत्या पश्चात् अभियुक्तहरुका

अतिरिक्त फौज सिंहकी ५७ वर्षीया श्रीमती खड्ग कुमारी र २२ वर्षीया छोरी सुश्री डम्बर कुमारी खड्कालाई विभिन्न मानसिक यातना दिइएको थियो। यस्तो यातना र चोट सहन नसकी श्रीमती खड्ग कुमारी खड्का र सुश्री डम्बर कुमारी खड्काले कात्तिक १२ गते चरिकोट जिल्ला प्रहरी कार्यालयमा हाजिर भई पुन: १३ गते हाजिर हुने सर्तमा फर्कदा राति फस्कु र खाटी गा.वि.स. बीचमा पर्ने चर्णवती खोलामा हामफालेर आत्महत्या गरेका थिए ।

### १.२ जेल

वि.स. १९६६ मा निर्माण भएको यहाँको जेल भवनको स्थिति साह्रै दयनीय अवस्थामा रहेको छ। त्यस्तै जेलबाट प्राप्त सुविधाहरु पनि अत्यन्त कम रहेको यहाँका बन्दीहरु बताउँछन्। खानेपानी, शौचालय, मनोरञ्जनका साधनहरुको अभाव रहेको यस जेलमा ३८ जना पुरुष, ६ जना महिला र १ नाबालक गरी ४५ जना बन्दीहरु छन्। सीपमूलक उद्योगको कुनै व्यवस्था नभएको यहाँको जेलमा दमाई बन्दीहरु भने घर बाट मेसिन झिकाई कपडा सिउने गर्दछन्।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा मुख्य गरी राजनैतिक प्रतिशोधका कारण विनाकसूर राजनैतिक कार्यकर्ता, शिक्षक तथा कर्मचारी मानसिक तथा शारीरिक यातनाको शिकार हुनु परेका देखिन्छ ।

सुस्पा क्षेमावती गा.वि.स. वडा नं. ७ बस्ने गा.वि.स. का अध्यक्ष गोपाल अधिकारी २०४९ जेठ १९ गते जिल्ला सदर मुकाम चरिकोटबाट घर फर्किरहेको बेला एक हुल अज्ञात व्यक्तिहरुले आई कुटपीट गरी हात भाँचिदिएका थिए।

२०४९ भदौ २३ गते जिरी गा.वि.स. वडा नं. ७ बस्ने वर्ष ४० का नेत्रबहादुर खड्काको सोही गा.वि.स. बस्ने देण्डी शेर्पा र दानबहादुर जिरेलसंग सामान्य वाद-विवाद भएपछि इलाका प्रहरी कार्यालयका प्रहरी नायब निरीक्षकले विनापूर्जी नेत्रबहादुर खड्कालाई पक्री निर्मम यातना दिएका थिए।

२०४९ साउन ३० गते गाईजात्रा पर्वको उपलक्ष्यमा दोलखा गा.वि.स. का केही उत्साही युवाले गाईजात्रा अंक अर्थात् कार्टुन चित्र पत्रिका प्रकाशित गरेका थिए। सो कार्टुन चित्रप्रति असहमति जनाई पत्रिकामाथि सोही गा.वि.स. बस्ने मन्दिरा श्रेष्ठले सार्वजनिक अपराध मुद्दा दर्ता गरिन्। जसको फलस्वरुप जिल्ला प्रहरीले १९ वर्षीय मणि कुमार श्रेष्ठ, १८ वर्षीय भरत प्रधान, २५ वर्षीय जीवन चाकुबजिय, १८ वर्षीय चन्द्रभुवन श्रेष्ठ र २० वर्षीय कृष्णनारायण श्रेष्ठलाई विना पूर्जी पक्राउ गरी यातना दिएको थियो।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

२०४८ चैत २४ गते "नेपाल बन्द" को बेला निहत्था व्यक्तिहरुको मृत्यु भएको विरोधमा जिरी प्राविधिक शिक्षालयका विद्यार्थीहरुले २०४९ वैशाख १ गते गृह मन्त्रीको पुत्ला जलाउनुका साथै विरोध कार्यक्रम गरेको मौका पारी स्थानीय मोहन के.सी., जयबहादुर बाङ, कुमार बाडा लगायत ३० जनाले लाठी, खुकुरी सहित उक्त कार्यक्रममा सांघातिक आक्रमण गरेका थिए। जसबाट उक्त शिक्षालयका रामप्रसाद दाहाल, केदार पराजुली लगायत केही विद्यार्थी सख्त घाइते भएका थिए।

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

संविधानले प्रत्येक व्यक्तिको राजनैतिक स्वतन्त्रताको ग्यारेण्टी गरे पनि गत स्थानीय निर्वाचनमा यस जिल्लामा भएको अनियमितता र बलमिच्चाईले गर्दा जनताको मत दिने राजनैतिक स्वतन्त्रतामा दखल परेको अनुभव हुन्छ । गत स्थानीय निर्वाचनमा कालिन्चोक गा.वि.स. का विभिन्न पदका लागि अन्य पक्षहरुलाई उम्मेदवारी मनोनयन पत्र भर्न नदिई एक पक्षीय रुपमा प्राय: सबै पदहरुमा निर्विरोध घोषणा गरिएको थियो ।

जुगु गा.वि.स. को निर्वाचन परिणाम विपक्षीहरुका पक्षमा गएकोले सत्ता पक्षीय उम्मेदवारहरुले चुनावमा धाँधली भयो भन्ने उजूर गरेर पुन: निर्वाचन गर्न दबाब दिए । जसको फलस्वरुप विपक्षका उम्मेदवारहरुलाई बारेण्ट जारी गरी जेठ २२ गते सम्पन्न उक्त गा.वि.स. को निर्वाचनको सम्पूर्ण पदको परिणाम एक पक्षीय रुपमा भएको घोषणा गरिएको थियो ।

हावा गा.वि.स. मा भएको निर्वाचनमा आँखा नदेख्ने वृद्धाले आफ्नो इच्छा अनुसारको चिन्हमा मतदात गर्न अनुरोध गर्दा मतदान अधिकृत जिल्ला खानेपानी कार्यालयका इञ्जिनियर ढुण्डिराज दाहालले विपरीत चिन्हमा मतदान गरेपछि उत्पन्न विवादलाई राजनीतिकरण गरी विपक्षीहरुले मतपेटिका फाले भन्ने उजूर गरेपछि विपक्षका ५ जना राजनैतिक कार्यकर्तामाथि निर्वाचन अपराध र सजाय ऐन बमोजिम कारबाही गरिएको थियो ।

२०४९ असार १९ गते भएको जिल्ला विकास समितिको निर्वाचनमा नेपाल मानव अधिकार संगठनबाट निर्वाचन पर्यवेक्षणका रुपमा गएका रत्ननिधि रेग्मीलाई निर्वाचन अधिकृत तथा प्रहरी नायब उपरीक्षकले घोक्र्याएर निर्वाचन भवनबाट बाहिर निकालेका थिए ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी, पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

महिला अधिकारका नाममा यस जिल्लामा जारी प्रथा, बहुविवाह यथावत रहिआएको छ । सन्द्रावती गा.वि.स. वडा नं. ५ बस्ने शम्भुबहादुर खड्काले आफ्नो श्रीमतिले २०४९ कात्तिक १२ गते सोही गाउँकै शाही ठकुरीसंग पुन: विवाह गरी गएकोमा दोलखा जिल्ला अदालतमा धनमाल मुद्दा दायर गरेका छन् ।

बालकृष्ण शर्माले घरमा स्वास्नी र छोरा हुँदाहुँदै २०४९ मंसीर ३० गते कल्याणी भन्नेसंग बहुविवाह गरेका छन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा पछौटेपन र व्याप्त गरिबीले प्राय: पिछडिएका जातिहरु आर्थिक शोषणका शिकार भएका छन् । उदाहरणार्थ सुस्पा क्षेमावती गा.वि.स. मा कमैयाका रुपमा काम गरेका थामीहरुलाई दिनभरि काम गरेको ज्याला ६ माना कोदो दिइन्छ । त्यस्तै कतिपय स्थानहरुमा कृषि विकास बैंक र वाणिज्य बैंकका अभावमा गाउँका धनीमानीहरुले २५ प्रतिशतसम्म ब्याजमा ऋण दिएको पाइन्छ ।

सुस्पा क्षेमावती गा.वि.स. वडा नं. २ बस्ने जलहरि शिवाकोटीको पवटी गा.वि.स. वडा २ बस्ने गोमा शिवाकोटीसंग १०-१२ वर्ष पहिले विवाह भैसकेको थियो । तर सामान्य घरायसी मनमुटावले गर्दा श्रीमति गोमा शिवाकोटी घर छोडी माइती गएर बसिन् । निज गोमा शिवाकोटीले हालसम्म पनि श्रीमानसंग सम्बन्ध विच्छेद नगरेको, घरमा पनि नगएको र श्रीमानलाई अर्को विवाह गर्ने अनुमति पनि नदिएको भन्ने गुनासो निजका पति जलहरी सिवाकोटीको छ ।

## २. मध्यमाञ्चल

## नारायणी



# २.७ रौतहट

| | | |
|---|---|---|
| जनसंख्या | : | ४१२९२१ |
| साक्षरता | : | २४.९ प्रतिशत |
| महिला साक्षरता | : | १३.१ प्रतिशत |
| क्षेत्रफल | : | ११२६ वर्ग कि.मी. |

नारायणी अञ्चलमा पर्ने रौतहट जिल्लाको दक्षिणी भूभागको सीमाना खुला भएकोले मुख्य गरी यहाँ डकैती, लागु पदार्थ तथा तस्करीका साथै हत्या, चोरी, कर्तव्य ज्यान आदिका घटनाहरु अधिक भएको पाइन्छ ।

## १. बाँच्न पाउने अधिकार

देशको संविधान तथा राजनैतिक प्रणालीले प्रत्याभूत गरेको मौलिक अधिकारलाई व्याप्त गरीवी, पछौटेपन, अन्धविश्वास, जनचेतनाको अभाव आदिले गर्दा व्यवहारमा उतार्न सकिएको छैन ।यस जिल्लामा ठूला बडाको कमजोर तथा पिछडिएका वर्ग माथिको शोषण तथा दमनले गर्दा यी दुई बीचको खाडल गहिरो देखिन्छ ।

### १.१ हत्या / गोली

२०४८ माघ ७ गते सन्तपुर गा.वि.स. वडा नं. ६ बस्ने वर्ष १४ का जयदरश चौधरीको बनमा दाउरा लिन गएको बेला वनमा हिंसक जन्तु आयो भन्ने ठानी बनपाले कृष्णप्रसाद सापकोटाले गोली चलाउँदा मृत्यु भएको थियो ।

गत स्थानीय निर्वाचनको क्रममा प्रतापपुर पलटुआ गा.वि.स. लगायत अन्य गा.वि.स.मा गरी ७ जना भन्दा बढीको हत्या भएको थियो ।

गत स्थानीय निर्वाचनको क्रममा संखुवा गा.वि.स.मा बम प्रहार हुँदा घटना स्थलमै एक जनाको मृत्यु भएको थियो ।

२०४९ असार ७ गते राजनैतिक कार्यकर्ता एवं हथियाही गा.वि.स.का अध्यक्ष ब्रम्हदेव शाह तथा सोही गाउँका जि.वि.स. इलाका नं. १२ का सदस्य उम्मेदवार सचिन्द्र गिरीको विपक्षी राजनैतिक कार्यकर्ता गेनालाल महतो, नरेश महतो, राजदेव महतो, शेष जियाउल्लाह बीचको झडप तथा राजनैतिक प्रतिशोधले गर्दा गोलीद्वारा हत्या भएको थियो ।

२०४९ असार ७ गते सखुआ धर्मारा गा.वि.स.को रुप नेपाली पाल मा.वि.मा अर्ध वार्षिक परीक्षा चलिरहेको बेला कक्षा ४ र ५ को प्रश्नपत्र आउट भयो भन्ने विषयमा रघुनाथपुर गा.वि.स.का धर्मेन्द्र र सोही गा.वि.स. बस्ने र घुनाथ बीच भनाभन हुँदाहुँदै निज धर्मेन्द्रका बाबु अच्छेलालले बन्दुक हान्दा सोही गा.वि.स. वडा नं. ७ बस्ने सतलालको घटनास्थलमा मृत्यु भएको थियो । मृत्यु पश्चात् उत्तेजित भीडले सांघातिक हतियार प्रयोग गरी अच्छेलाललाई घटनास्थलमै मारेका थिए । यस हत्याकाण्डमा १२ जनामाथि कारवाही गरिएकोमा ४ जना तारेखमा छुटेका छन् भने बाँकी ८ जना जेल सजाय भोगिरहेका छन् ।

### १.२ जेल

वि. स. १९९३ मा स्थापना भएको यहाको जेलको क्षमता ७० जना बन्दीहरुको छ । तर यहाँ हाल महिला र पुरुष गरी १०२ बन्दीहरु छन् । भौतिक रुपले त्यति सक्षम नभएको यस जेलको मर्मत तथा सम्भार गर्नु पर्ने अति आवश्यक भएको देखिन्छ । साथै जेलका बन्दीहरुले अध्ययन मनन तथा मनोरन्जनका सुविधा पाएका देखिदैन । यहाँ भित्र यति व्यापक संख्यामा रहेका बन्दीहरुको सीप र अर्थोपार्जनको सहयोगको लागि घरेलु तथा कुटिर उद्योग स्थापना हुनु नितान्त जरुरी देखिन्छ ।

जेलमा रहेका अधिकांश बन्दीहरु आफू निर्दोष भएको र राजनैतिक प्रतिशोध तथा व्यक्तिगत रिसइबीले फसाएको बताउँछन् ।

१.३ गिरफ्तारी / यातना

अन्य जिल्लाको जस्तै यस जिल्लामा प्रहरीले हिरासतमा लिएका व्यक्तिहरुलाई अमानवीय यातनाहरु दिएको पाइन्छ। विभिन्न कसूरमा गिरफ्तार गरिएकालाई यहाँ साविती गराउन प्रहरीले अनेकौं बीभत्स यातनाहरु दिने गरेको देखिन्छ। उदाहरणको लागि लक्ष्मिनिया गा.वि.स. भैसहीका ब्रम्हनारायण र उनका व्यक्तिहरु, त्यस्तै करुणिया गा.वि.स. बस्ने लालबाबु मिया र उनका अनुयायीहरुमाथि भएको कुटपीट र यातना बिर्सिनसक्नु देखिन्छ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानले मानव अधिकार, स्वतन्त्र अभिव्यक्ति र सुसूचित हुने अधिकारको ग्यारेण्टी गरे तापनि व्यवहारमा यसको उपहास गरेको देखिन्छ। गौर नगरपालिकामा भएको आर्थिक अनियमितता र ढिलासुस्तीका सम्बन्धमा समाचार प्रकाशन गरेको झोकमा रौतहट आवाज नामक पत्रिकाका पुरुषोत्तम भट्टराईलाई २०४९ मंसीर १७ गते कालो मोसो दलिएको थियो। निज पत्रकारमाथि गौर नगरपालिकाका प्रमुख र उपप्रमुखलाई चोखो बनाई सदस्यहरुमाथि मात्र हिलो छ्याप्ने नियत गरेको भन्ने आरोप लगाईको थियो।

### २.२ धार्मिक स्वतन्त्रता

हिन्दू र मुसलमानहरुको आबादी भएको यस जिल्लामा साम्प्रदायिक दंगा नभए पनि केही क्षेत्रमा एक आपसमा तनाव र शंकाको दृष्टिले हेर्ने गरेको पाइन्छ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लाका स्थानीय निर्वाचन त्यति शान्तिपूर्ण निष्पक्ष र स्वतन्त्र रुपमा भएको पाइदैन। २०४९ जेठ १ गते गौर नगरपालिकाका १, २, ३, ४ र ५ वडाको निर्वाचनमा व्यापक धाँधली, बम विस्फोट, हातहतियारको प्रयोग, पैसाको अथाह खोलो बगेको थियो। यसै निर्वाचनमा बम विस्फोट हुँदा काँको बेचेर जीविकोपार्जन गर्ने एकजनाको कानै उड्यो भने सुरेश शाहको दाहिने हातको बुढी औंला नै उडेको थियो। पिपरिया गा.वि.स. वडा नं. ६ भीमबढारमा भएको स्थानीय निर्वाचनमा पार्टीको टिकट वितरणको विषयलाई लिएर केही कार्यकर्ताले स्वतन्त्र उमेदवारी दिएको र निर्वाचनको परि-णामको दुई दिनपछि निर्वाचनमा हारेका रामअधार यादव पक्षधरले गोली चलाए तर गोली कसैलाई लागेन। पछि यो झगडा पार्टी तहबाट सामसुम पारिएको कुरा यहाँ चर्चाको विषय बनेको थियो।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

व्याप्त गरिबी, पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन्।

यस वर्ष यहाँको जिल्ला प्रहरी कार्यालयमा डकैती, हत्या, चोरी लगायत विभिन्न अपराधका ११५ मुद्दाहरु दर्ता भएका थिए।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा रहेका बन जंगल फँडानी गरी बसोबास गर्ने सुकुम्बासीहरुको संख्या दिन प्रतिदिन बढ्दै गैर–हेको छ। यस्ता सुकुम्बासीहरु नेपालको उत्तरी भेग र भार–तको दार्जलिङ, सिक्किम, मेघालय, र गुहाटीबाट आएका हुन्

भन्ने एक थरीको भनाई छ । साथै यहाँका आदिवासी १२० वर्षदेखि सुकुम्बासीको जीवन बिताइरहेका छन् । यस जिल्लामा बकैया र बागमतीमा आएको बाढीले खेतीयोग्य भूमि कटान गरी कतिपय किसानहरुलाई घरबार विहीन र भूमिहीन बनाएको देखिन्छ ।

## ४. महिला अधिकार

शिक्षा र ज्ञानको अभावमा यहाँका महिलाहरु शोषित र पीडित अवस्थामा छन् र उनीहरुले एक प्रकारले पर्दाभित्रको जीवन बिताइरहेका छन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लामा बलात्कारका घटनाहरु घटे पनि जिल्लाको सामाजिक संस्कारको बनोटले गर्दा महिला किनबेच समस्या देखिएको छैन । वेश्यावृति भने यस जिल्लाको उत्तरी भागमा फाटफुट रुपमा देखा पर्न थालेको देखिन्छ ।

डाँकाहरुले ०४९ कार्तिक १७ गते पिपरा गा.वि.स. वडा नं. ८ बस्ने स्व. मोती शाह कलवारको घरमा डकैती गरी रु ८ हजारको धनमाल लुट्नुका साथै स्व. कलवारकी विधवामाथि बलात्कार गर्ने घृणित कार्यसम्म भएको थियो ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

जिल्लाको गाउँ घरतिर बहु-विवाह भने यथेष्ट मात्रामा रहेको पाइन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा मुख्य गरी दाइजो प्रथा डरलाग्दो रुपमा देखिएको छ । साथै नागरिकता समस्या पनि त्यत्तिकै विकराल छ । यस सम्बन्धमा एक थरीको भनाई अनुसार भेदभाव गरिन्छ भन्ने छ । न्यून ज्यालाको समस्या यहाँ कायम छ । दिनको रु २५ देखि रु ३० सम्म दिएर कृषि मजदूरहरुलाई काम लगाएको पाइन्छ ।

खुला सीमानाका कारण डकैती र चोरी बढी भएको यस जिल्लामा डकैतीका विभिन्न घटनाहरु घटेका छन् । २०४९ असार २२ गते गौर नगरपालिका वडा नं. ८ वाल्मिकी नगर बस्ने मोहनकुमार श्रीवास्तवको घरमा राती १२ बजे १२ जना डाँकाको दलबल सहितको जत्थाले डकैती गर्ने प्रयास गरेको थियो ।

२०४९ कात्तिक १७ गते पिपरा गा.वि.स. वडा नं. ६ बस्ने राम आशिष यादवको घरमा डकैती भयो, जसमा निज यादवका महिला परिवारमाथि हातपात हुनाका साथै रु २३ हजारको सामान लुटपाट गरेका थिए ।

०४९ कार्तिक १७ गते गंगापिपड़ा वडा नं. ८ बस्ने राजाराम बैठा (धोबी) को घरमा डकैती गरी रु.२० हजार को धनमाल लुट्नुका साथै डाँकाहरुले निज बैठाको टाउकोमा फर्सा (हतियार) ले हानी सख्त घाइते पारेका थिए । डकैती गर्ने अभियोगमा सोही गाउँका योगी शाह कलवार, लालबाबु शाह कलवार र अनौठा शाह कलवारका अतिरिक्त गाउँ बाहिरका अन्य व्यक्तिहरु माथि कारवाही चलिरहेको छ ।

■



# २. मध्यमाञ्चल

## नारायणी

# २.८ बारा

| | | |
|---|---|---|
| जनसंख्या | : | ४१३२९४ |
| साक्षरता | : | ३०.३ प्रतिशत |
| महिला साक्षरता | : | १६.० प्रतिशत |
| क्षेत्रफल | : | ११९० वर्ग कि.मी. |

ऐतिहासिक सिम्रौनगढ रहेको यो जिल्लामा अहिले आदिवासीहरु, पहाडबाट बसाई-सरेर आएका नेपालीहरु तथा भारतबाट पसेका आप्रवासीहरु एक-आपसमा मिलेर बसिरहेका छन् । यो जिल्लामा पनि मानव अधिकार को स्थिति देशको अन्य जिल्लाहरुको भन्दा खासै भिन्न छैन ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

यस जिल्लामा यो वर्ष प्रहरीको गोलीबाट एक व्यक्तिले अनाहकमा ज्यान गुमाउनु पर्‍यो भने एक व्यक्ति सख्त घाइते भए । यो वर्ष सवारी दुर्घटनामा १९ र भवितव्यमा १ व्यक्तिको ज्यान गुमेको छ । ४ वटा गर्भपतन गरिएका, ७ वटा आत्महत्या गरिएका तथा १० जनाको कर्तव्य गरी हत्या गरि एका घटना पनि जिल्ला अदालतमा दर्ता भएका थिए ।

२०४८ साल माघ ९ गते राती करीब ९ बजेतिर फत्तेपुर प्रहरी चौकीबाट गएको गस्ती प्रहरीले कुम्भरखाना गा.वि.स.- ८ राजघट्टका २५ वर्षीय लक्ष्मी चौधरीलाई उनकै घरमा आई गोली प्रहार गर्दा घटनास्थलमै उनको मृत्यु भयो । र उनका भाइ भरत चौधरी पनि प्रहरीको गोलीबाट सख्त घाइते हुन पुगेका थिए । त्यस दिन लक्ष्मी चौधरीको घर मा दाजुका छोरी र ज्वाई पाहुना आएका थिए । चारजना राइफलधारी गस्ती प्रहरी चौधरीको आगनमा पसेर घरभित्र टर्च बालेपछि भरत र प्रहरी बीच भनाभन भयो । त्यसैबखत झगडा छुट्याउन आइपुगेका लक्ष्मी चौधरीलाई प्रहरीले छातीमा गोली प्रहार गर्दा उनको मृत्यु हुन पुग्यो । रक्सीले टन्न मातेका प्रहरीले पछि भरत चौधरीलाई पनि गोली हाने, तर त्यो कम्मरमा लागेकोले उनी सख्त घाइते मात्र भए । मृतककी पत्नी रमली चौधरीलाई जिल्ला प्रशासन कार्यालय बाराले क्षतिपूर्ति स्वरुप रु. २५ हजार उपलब्ध गराएका थियो । तर भरतलाई उपचार खर्च पनि दिइएन । उता अनावश्यक गोली चलाएर निर्दोष नागरिकको हत्या गर्ने प्रहरीमाथि अफैसम्म पनि कुनै कारवाही गरिएको छैन ।

इटीयाही गा.वि.स.- ७ मा २०४९ असार २५ गते राती एउटै परिवारका ६ जना व्यक्तिको निर्मम हत्या गरिएको थियो । अत्यन्तै सुनियोजित किसिमले गरिएको सो हत्याको कारण भने आपसी झै-झगडा मानिन्छ । सो रात करीब ६५ वर्षीय रामरतन साह सोनार, निजकी पत्नी अन्दाजी ५८ वर्षकी मरछिया देवी सोनार, रामरतनका साइला छोरा ३८ वर्षका किशोरी साह सोनार, किशोरीकी ३३ वर्षीया पत्नी गिर–जादेवी साह सोनार तथा किशोर र गिरजादेवीका १५ र १० वर्षीय छोराहरु विनोद साह सोनार र गोपाल साह सोनारको घाँटी काटेर हत्या गरिएको थियो । रामरतन साह सोनारको सोही गाउँका समा साह सोनार, बम्हा साह सोनारसंग वैर भाव रहँदै आएको थियो । हत्या हुनु केही दिन अघि समेत रामरतनले जिल्ला प्रशासन कार्यालय (उजुरी फाँट दर्ता नं. ८४२/२०४८ चैत) मा जीउधनको सुरक्षाको माग गर्दै निवेदन दिएका थिए । प्रमुख जिल्ला अधिकारीले मठियाना प्रहरी चौकीलाई सुरक्षाका लागि आदेश पनि दिएका थिए । तर चौकी प्रमुख गोपाल साह तेली रामरतनका विपक्षी

भैदिएकाले रामरतनको परिवारले प्रहरीबाट कुनै सुरक्षा पाउन सकेन भनिन्छ । उल्टो प्रहरीले रामरतन कै छोरा सुरुज साह सोनार र नीजकी पत्नीलाई हत्याकाण्डको सिलसिलामा ७ दिन हिरासतमा राखेको थियो। अहिले समा साह सोनार, पर्मा साह सोनार र सर्लाहीका मुन्ना भन्ने देवेन्द्र सिंह, कामदेव साह तथा गणेशकुमार श्रीवास्तवलाई पुर्पक्षका निमित्त थुनामा राखिएको छ भने पर्मा साह सोनार तारेखमा छुटेका छन्।

### १.२ जेल

यस जिल्लामा जेल छैन । यहाँ पुर्पक्षका लागि गिरफ्तार गरिएका र कैद सजाय सुनाइएका व्यक्तिहरुलाई वीरगंज कारागारमा पठाइन्छ ।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा गिरफ्तार भएका व्यक्तिलाई जिल्ला प्रहरी कार्यालयले यातना नदिने गरेको दावी गरे पनि यातना भने दिने गरेको पाइयो ।

कलैया नगरपालिका-४ रामदेवी टोलका विकास गुरागाईलाई आफ्नै बाबुले प्रहरी लगाएर २०४९ मंसीर महिनामा गिरफ्तार गराएका थिए । घरायसी झगडाका कारण गिरफ्तारीमा परेका गुरागाईलाई विना पूर्जी गिरफ्तार त गरियो नै, दिशा पिशाव गर्न लैजादा कठ्बाँसका लठ्ठीले प्रहरीले पिटेको, प्रहरी सुत्ने कोठा, हिरासत कोठा सफा गर्न लगाएको र सो गर्न नमान्दा निर्ममताका साथ पिटेको, सात दिनसम्म हिरासतमा राखेको कुरा पीडितले बताए ।

रामपुर गा.वि.स. मुसहरी टोलका जगदीश महतो खुल्वटलाई पनि यस्तै कुटपिट र यातना दिइएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

यस जिल्लामा वैचारिक कारणले नै शिक्षकहरुलाई अपायक ठाउँमा सरुवा गर्ने, स्थायी हुनबाट वंचित गर्ने, तालिमहरुमा समावेश नगराइने, मजदूरहरुलाई कारखानाबाट निष्कासन गरिने घटना भएका छन् । पंचायती कालमै इटियाही निम्न माध्यमिक विद्यालयबाट सिंगौल सरुवा गरिएका नेपाल राष्ट्रिय शिक्षक संगठन समर्थक शिक्षक अच्छेलाल साहलाई अझ पनि पायक पर्ने स्थानमा फर्काइएको छैन। संगठन समर्थक भएकै कारण रामपुर टोकनी माध्यमिक विद्यालयका शिक्षकहरु किशोरीलाल प्रसाद साह र जगतनारायण महतो, इटियाहीका शिक्षक शिवप्रसाद गुप्ता, वरेवाका माध्यमिक शिक्षक श्रीलालप्रसाद साह लगायतका शिक्षकहरुलाई स्थायी हुने प्रकृयाबाट बंचित गराइएको छ। अशोक स्टील इण्डस्ट्रीज, अन्नपूर्ण टेक्सटायल, इस्टर्न टेक्सटायल लगायतका कारखानाहरुबाट वैचारिक कारणले नै धेरै मजदूरहरुलाई यो वर्ष निस्कासन गरियो ।





*इटीहाड गा.वि.स. ७ मा ०४९, असार २५ गते मारिएका एउटै परिवारका छ जना मध्ये राम रतन सोनार र उनका नाती गोपाल शाहा*

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

गत स्थानीय निर्वाचनमा यस जिल्लाका कतिपय बुथमा धाँधली भयो । हरिहरपुरमा पहिले बुथ नयाँ टोल र गंगा नगरको बीचमा राखिन्थ्यो, तर यसपटक त्यो बुथ हरिहरपुरमा सारियो र त्यहाँ व्यापक धाँधलीपूर्ण मतदान भयो । धर्मनगर, पन्तहरी, पिपराही, मफरिया, बडनी फूलवरिया गाउँ विकास समितिहरुमा निश्चित उम्मेदवारलाई जिताउन विनाकारण नै चुनाव स्थगित गराइएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

रतनपुरी गा.वि.स.का अध्यक्ष बुद्धिबहादुर लामा सत्तापक्षका कार्यकर्ता भएका कारण सोही गाउँको वडा नं. ४ का सदस्यकी श्रीमतीलाई बलात्कार गरेकोमा कार्वाहीका निम्ति निजगढ प्रहरी चौकीमा निवेदन दिंदा पनि कुनै कारवाही भएन । बरु, बलात्कृत भएकी महिलालाई प्रहरीले अनेकौं धाकधम्की देखाएर फर्काएको थियो ।

निर्वाचन क्षेत्र नं. ४ बाट प्रतिनिधि सभामा निर्वाचित हुनुभएका एमाले का सांसद सलिम मिया अन्सारीलाई कात्तिक २३ गते राती ९ बजेतिर गोली प्रहार गरिएको थियो । उहाँले अभियुक्तको नाम नै किटेर जोहरी दिंदा पनि प्रहरी/प्रशासनले कुनै कारबाही गरेको छैन ।

यो वर्ष यहाँको जिल्ला अदालतमा कूल ७७ वटा मुद्दा दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा सुकुम्वासी समस्या व्यापक र जटिल छ । जंगल र राजमार्ग किनारमा छाप्रा हालेर बस्ने तथा बगैंचाका रुखमुनी जीवन गुजारा गर्ने सुकुम्वासी प्रशस्तै छन् । हावा-हुरीको समय र वर्षायाम त्यस्ता सुकुम्वासीहरुका लागि अत्यन्तै कठिन हुने गरेको पाइन्छ ।

विभिन्न पहाडी जिल्लाबाट आएका सुकुम्बासीहरु वन अतिक्रमण गरेर बसेका छन् । बेला-बखत प्रशासनले तिनीहरुलाई उठिबास गराएको पाइन्छ । त्यस्तै, साहु लागेर तथा नदी कटानबाट साना किसानहरु पनि सुकुम्वासीमा परिणत भइरहेका छन् ।

## ४. महिला अधिकार

पर्दा प्रथा, दाइजो प्रथा र बोक्सीको आरोपबाट यहाँका महिलाहरु, विशेष सताइएका छन् । देशका अन्य भागमा भैं यहाँ पनि गरीब र दु:ख पाएकी महिलालाई बोक्सीको आरोप लगाई उपेक्षा र अपमान गर्ने चलन छ । बोक्सीकै विषयलाई लिएर खुट्वा गाउँमा झगडा समेत परेको थियो ।

यो जिल्लामा अझै कतिपय जातिमा पर्दा प्रथा कायमै छ । तर अशिक्षा र परम्परागत रुढीका कारण महिलाहरुले भने मुख छोपेर तथा घरभित्र गुम्सिएर बस्नु नै आफ्नो नियति र कर्तव्य ठान्ने गरेको पनि पाइयो ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

महिलाको जीउ मास्ने बेच्ने अभियोगको निवेदन जिल्ला प्रहरी कार्यालयमा २०४९ साल वैशाख २९ गते दर्ता भएको पाइन्छ भने २०४९ साल असार २१ गते जिल्ला अदालतमा दायर भएको जवर्जस्ती करणी सम्बन्धी मुद्दा अझै चलिरहेको छ ।

### ४.२ जारी, बहु बिबाह, देउकी, बादी प्रथा

२०४८ साल चैत ३ गते र २०४९ असोज ४ गते बहुविवाह सम्बन्धी मुद्दा जिल्ला अदालतमा दायर भएका थिए । अदालतमा यी दुई मात्र बहुविवाह सम्बन्धी मुद्दा परेका थिए । तर त्यसै आधारमा यहाँ बहु बिबाह जटिल समस्या होइन भन्नु तथ्यसंगत ठहर्दैन ।

यस जिल्लामा दाइजो प्रथा व्यापक रहेको छ र यो नै बहु बिबाह र महिला उत्पीडनको प्रमुख कारण बनेको छ । दाइजोका लोभमा परि केटा पक्षका अभिभावकहरु अनमेल विवाह गराउन पनि राजी भएको पाइन्छ । बालक कालमै विवाह भएका केटाहरुले हुर्केपछि अर्को विवाह गर्ने प्रचलन जिल्लामा आम छ । अझ पढेलेखेका युवकहरुमा यो प्रवृत्ति बढी छ । अर्कोतर्फ, भनेको जति दाइजो ल्याउन नसक्ने महिलाले घरमा सधैं पारिबारिक टोकसो सहनु पर्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व बिरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लाका कतिपय व्यक्तिहरुले मातृभाषा नेपाली नभएको तथा कालो छाला भएकै कारणले नागरिकताको प्रमाण-पत्र समेत नपाएको बताइन्छ ।



# २. मध्यमाञ्चल

## नारायणी

## २.९ पर्सा

| | |
|---|---|
| जनसंख्या | : ३७१५३३ |
| साक्षरता | : ३३.४ प्रतिशत |
| महिला साक्षरता | : १८.१ प्रतिशत |
| क्षेत्रफल | : १३५३ वर्ग कि.मी. |

नारायणी अञ्चलमा पर्ने पर्सा जिल्ला स्थल मार्गको दृष्टिले नेपालको द्वार मानिन्छ । सिमावर्ती जिल्ला र नेपाल भित्रिने सामानहरुको मूलद्वार भएकोले ओसार पसार, लेनदेन, किनबेच आदि मौद्रिक कार्यहरुले गर्दा यस जिल्लामा कमिशनतन्त्र तथा भ्रष्टाचारले जरा गाडिसकेको प्रतीत हुन्छ । खुल्ला सिमानाकै कारण यस जिल्लामा चोरी, डकैती र हत्याका घटनाहरु अधिक हुने गरेको देखिन्छ भने नागरिकता सम्बन्धी समस्या त्यत्तिकै ज्वलन्त रहेको छ । यस जिल्लामा मानव अधिकार उल्लंघन सम्बन्धी प्रश्नमा राजनैतिक प्रतिशोध, जिल्लामा निष्पक्ष र निर्भीक न्याय दिने स्थानीय प्रशासन र प्रहरी निकायहरु सत्तापक्षीय राजनैतिक पार्टीको आज्ञा पालक हुनुले पनि मानव अधिकार को औचित्य माथि प्रश्नवाचक चिन्ह तेर्सिएको देखिन्छ ।

### १. बाँच्न पाउने अधिकार

देशको संविधानले सबै नेपालीलाई विना पूर्वाग्रह सम्मानपूर्वक बाँच्न पाउने अधिकार प्रदान गरे तापनि व्यवहारमा यी अधिकारहरु कुन हदसम्म लागू भएका छन्, त्यो विचारणीय पक्ष हो ।

#### १.१ हत्या / गोली

गत स्थानीय निर्वाचन ताक लखनपुर गा.वि.स. का राजनैतिक कार्यकर्ता फुलचन तेलीलाई राजनैतिक आक्रोश र द्वेषको भावनाले गोली हानी हत्या गरिएको थियो ।

मनियारी गा.बि.स. जगन्नाथपुरमा डाकासंग भएको मुठभेडमा सत्तापक्षीय कार्यकर्ता मरेको प्रतिशोधमा बैचनाथ महतो, सुनरकाजी श्रेष्ठ, सुनर शाह तेली, मङ्गल राउत कुर्मीलाई विना कसूर डाका काण्डमा फसाइएको थियो ।

त्यस्तै जगन्नाथपुर गा.वि.स. सिरा क्षेत्र नं. ४ मा केही राजनैतिक कार्यकर्ताहरुले एक जना मुसलमान सम्प्रदायका व्यक्तिलाई गोली हानी मारेका थिए । सो मृतक बारे हालसम्म सम्बन्धित निकायबाट छानबीन र कारवाही भएको देखिदैन ।

धोरे गा.वि.स.को नदी छेउमा पनि गोलीद्वारा हत्या भएको व्यक्तिको बारेमा कुनै कारवाही र अनुसन्धान हुन सकेको देखिदैन ।

यसरी स्थानीय निर्वाचनका क्रममा यस जिल्लामा ११ जना व्यक्तिको मृत्यु भएको देखिन्छ ।

२०४९ पुस महिनामा मिर्जापुर गा.बि.स. का सुवेदार राउत अहिरको प्रहरीको गोलीद्वारा मृत्यु भएको थियो । सो घटना बारे प्रहरीसंग जिज्ञासा राख्दा प्रहरीसंग भएको मुठभेडमा सुरक्षाका लागि गोली चलाउँदा निज सुवेदार राउत अहिरको मृत्यु भएको भनी बताइयो ।

#### १.२ जेल

पर्सा जिल्लाको जेल (कारागार) को निर्माण वि.स. १९९३ मा अर्थात् राणाकालीन समयमा भएको थियो । यस जेलको क्षमता १५ सय बन्दीहरुको भनिए तापनि जेलको भवन तथा भौतिक स्थिति हेर्दा त्यो संभव देखिदैन । हाल यस जेलमा ५१५ पुरुष र १० महिला गरी ५२५ जना बन्दीहरु छन् ।

बन्दीहरुको सुविधाको हकमा सुविधाहरु नियमानुसार उपलब्ध गराइएको छ भन्ने जेलर विश्वनाथ उप्रेतीले दावी गरे तापनि बन्दीहरुका अनुसार श्री ५ को सरकारको नियमानुसार पनि सुविधाहरु नपाएका गुनासाहरु सुनिन्छन् ।

जेल भवन पुरानो भएकोले अति जीर्ण अवस्थामा रहेको छ । जेल भवन कुनै पनि बेला भग्नावशेषमा परिणत हुन सक्दछ र यसो भएमा कुनै पनि बन्दीहरु जीवित अवस्थामा फेला पर्न नसक्ने देखिन्छ । जेलभित्र मनोरञ्जन र खेलकूदका नाममा खास केही उपलब्ध छैन । बन्दीहरुले आफ्नै जोहोले रङ्गीन टि.भि. र अन्य सामग्रीहरु उपलब्ध गराएका छन् । साथै स्वास्थ्य उपचारको उचित सुविधा नभएको यस जेलमा क्षयरोग (टिवी) र कुष्ठरोग जस्ता घातक रोगका शिकार भएका बन्दीहरुलाई एकै ठाउँमा राखिएको छ । जेलमा सीपमूलक उद्योगको कुनै व्यवस्था नभए पनि बन्दीहरु आफ्नै जांगर, मेहनत र परिश्रमले त्यस्तो व्यवसाय तर्फ लागेको देखिन्छ । उचित शौचालय र ढल निकासको अभावले वातावरण नै प्रदूषण भएको यहाँको जेलमा जेलसंग सम्बन्धित कुनै पनि निकायबाट समय समयमा निरीक्षण भएको पाईदैन ।

### १.२ गिरफ्तारी / यातना

यस जिल्लामा प्रहरीले हिरासतमा लिएकाहरुलाई साविती गराउन यदाकदा यातना दिएको पाइन्छ । यहाँ विशेष गरेर राजनैतिक प्रतिशोधका भावनाले गैर कानूनी रुपमा गिरफ्तार गरिएको देखिन्छ । जसको कुनै प्रमाण नभएकोले केवल उनीहरुको राजनैतिक क्रियाकलापहरुलाई दुरुत्साहित पार्न खोजेको देखिन्छ ।

नेपाल सद्भावना पार्टीले हालै बीरगञ्जमा जिल्लावासीका जल्दाबल्दा समस्यालाई लिएर गरेको शान्तिपूर्ण विरोध प्रदर्शनमा प्रहरीले नेपाल सद्भावना पार्टीका कार्यकर्ता सुरेश शर्मामाथि जथाभावी बुटले प्रहार गरी किडनीमा चोट पुऱ्याएको कुरा यहाँ चर्चाको विषय बनेको छ ।

नागरिकताको विषयलाई लिएर विना पूर्जी गैर कानूनी रुपमा प्रहरीद्वारा सिवर्वा निवासी अरुण कुमार कर्णलाई ६ महिनासम्म बेपत्ता पारिएको थियो ।

## २. मौलिक अधिकार

देशको संविधानले प्रदत्त प्रत्येक नेपालीको मौलिक अधिकार ग्यारेण्टी गरे तापनि जिल्लाको वस्तुस्थिति हेर्दा यो केवल संविधानमा मात्र सीमित रहेको प्रतीत हुन्छ ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा तराईबासी समुदाय र पहाडी समुदाय बसोबास गर्दछन् । तराईबासी समुदायमा पनि हिन्दू र मुसलमान समुदायहरु भाइचारा र सद्भाव पूर्ण रुपमा रहेका छन् । तर यहाँ पहाडी र तराईबासी बीच भने अलि ठूलो खाडल देखिन्छ । र तराईबासीहरु पहाडीहरुले आफूलाई अपमान र अपहेलना गरेको ठान्दछन् ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा संविधानले ग्यारेण्टी गरेको प्रत्येक नेपालीको राजनैतिक स्वतन्त्रता अपहरण गरेको अनुभूत हुन्छ । यहाँ फरक मत राख्नेहरुले दिएको जाहेरी स्थानीय प्रशासन र प्रहरीले दर्ता गर्दैनन् भन्ने ठूलो गुनासो रहेको पाइन्छ ।

गत स्थानीय निर्वाचनताक यहाँ भएको निर्वाचनले स्वतन्त्र, निष्पक्ष र शान्तिपूर्ण निर्वाचन पद्धतिलाई उपहास गरेको पाइन्छ । उदाहरणको लागि स्थानीय निर्वाचनमा बीरगञ्ज नगरपालिका वडा नं. १ मा बम बिस्फोटन भएको थियो । त्यस्तै यसैताका लखनपुर गा.वि.स.मा गोली काण्ड, सुर्जाहामा गोली काण्ड भएका थिए भने जिल्ला विकासको निर्वाचनमा जिल्लाका सांसदले बुथमा पसी एक पक्षीय छाप लगाउन जबरजस्ती गरेका थिए ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा न्यायिक निकायहरुबाट भएको निर्णयमा खोट लगाउने आधारहरु देखिएका छैनन्, यद्यपि न्यायाधीशहरुका संस्कार, कार्यपद्धतिमा भने परिवर्तन गर्नु पर्ने आवश्यकता देखिएको छ भनी स्थानिय बुद्धिजीवीहरु भन्दछन् । त्यस्तै अर्ध न्यायिक निकायहरुबाट भएका निर्णयहरुमा भने राजनैतिक प्रतिशोध, सत्तापक्षीय दवावका यथेष्ट प्रमाणहरु भेटिएका छन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा देवानीतर्फ मात्र १५१६ मुद्दाहरु दर्ता भएका थिए । जसमा सबभन्दा बढी जग्गा सम्बन्धी थिए । प्रहरीबाट ९४ वटा मुद्दाहरु दर्ता भएका

थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

पर्सा जिल्लामा सुकुम्बासी समस्या विकराल रुपमा देखिएको छ । सरकारले जंगल फडानी गरेर निस्केको जमिन पहाड र पूर्वाञ्चल भारतबाट आएका व्यक्तिहरुलाई वितरण गरेको छ । र यहाँका आदिबासी मुसहर र चमारहरु हालसम्म भूमिहीन भएर नै बस्नु परेको कुरा जिल्लाबासीहरु बताउँछन् । यसरी सरकारले मधेशमा पनि तराईबासीहरुलाई अल्पमतमा पार्ने चेष्टा गरिरहेको गुनासो सोही जिल्लाबासीहरुमध्ये पुराना बासिन्दाहरुको रहेको छ । साथै पर्सा जिल्लामा रहेका नदीमा आएको बाढीले भूमि कटानी गरी जिल्लाका केही पुराना रैथानेहरु सुकुम्बासी भएका छन् । त्यस्ता वास्तविक सुकुम्बासीहरु प्रति कुनै मूल्याङ्कन भएको देखिदैन ।

## ४. महिला अधिकार

देशको संविधानले महिला हक हितको यथेष्ट प्रावधान गरेको भएता पनि व्यवहारमा यस जिल्लाका महिलाहरु अधिकारबाट बञ्चित भएका छन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

पर्सा जिल्ला तराई जिल्लामा पर्ने हुनाले यहाँ महिला किनबेचको प्रचलन छैन । तर महिलामाथि हुने बलात्कार भने यहाँ पनि यदाकदा हुने गर्दछ ।

वीरगञ्ज नगरपालिका वडा नं. १३ बस्ने शिबप्रसाद शाहले २०४८ चैत महिनामा आफ्नै घरमा काम गर्ने गौमती गुरुङलाई बलात्कार गर्ने प्रयास गरेका थिए, तर प्रहरी अनुसन्धान र तहकिकातपछि निज शाह निर्दोष सावित भएका थिए ।

त्यस्तै वीरगञ्ज, घण्टाघरको बम्बई होटलमा रहेकी दूधकुमारी कुँवरलाई बिजयकुमार लामा भन्ने व्यक्तिले बलात्कार गर्ने प्रयास गरेका थिए ।

### ४.२ जारी, बहुबिबाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी, बादी प्रथाको प्रचलन देखिदैन । तर बहु बिवाह भने व्यापक रुपमा रहेको छ । पर्सा जिल्ला तराईबासीहरुको बाहुल्य रहेको जिल्ला हो, तराईबासी समुदायमा सानै उमेरमा बिबाह गर्ने प्रचलन हुन्छ । र पछि केटाहरु ठूला भई जान्ने बुझ्ने भएपछि आफू खुसी विवाह गर्दछन् । यसरी पनि यहाँ बहु बिवाह व्यापक भएको देखिन्छ ।

यस जिल्लामा वेश्यावृत्तिको हकमा उत्तरी भेगतिर फाटफुट भएको ज्ञात हुन आउँछ भने हालै मात्र वीरगञ्जको जेलका एकजना गार्ड र व्यापारी वेश्यावृत्तिमा संलग्न भएको अवस्थामा पक्राउ परेका थिए ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा कृषि मजदूरहरुले कमैया सरहको दुख:पूर्ण र शोषित जीवन जिउनु परिरहेको छ । उनीहरुलाई काम गरे बापत उचित ज्याला दिएको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

खुला सीमाना र देशको स्थल मार्गको मूल प्रवेशद्वार भएको कारणले सामान ओसार पसार, लेनदेन, किनबेच आदिले गर्दा अन्य जिल्लाको तुलनामा पर्सा जिल्लामा भ्रष्टाचारले जरा गाडिसकेको अनुभूत हुन्छ । साथै यस जिल्लामा नागरिकता सम्बन्धी समस्या पनि त्यत्तिकै टड्कारो रुपमा देखिएको छ । नागरिकता किनबेच हुने यस जिल्लामा राजनैतिक प्रतिशोधका कारणले पनि कतिपय व्यक्तिहरु नागरिकता प्राप्त गर्न बञ्चित भएका छन् भने सीमाना पारिका व्यक्तिहरु पनि जिल्ला प्रशासन कार्यालयका कर्मचारीसंगको साँठगाँठमा रातारात नागरिकता पाउन सफल भएका घटनाहरु पनि यहाँ हुने गर्दछन् ।

■



# २. मध्यमाञ्चल

## नारायणी

# २.१० चितवन

| | | |
|---|---|---|
| जनसंख्या | : | ३५५२९८ |
| साक्षरता | : | ५५.७ प्रतिशत |
| महिला साक्षरता | : | ४३.० प्रतिशत |
| क्षेत्रफल | : | २२१८ वर्ग कि.मी. |

यदाकदा देशको ७६ औं जिल्ला पनि भनिने चितवन जिल्ला राजनीतिक रुपले सचेत छ र पनि राजनीतिक दलहरुका बीच अस्वस्थ प्रतिस्पर्धा भएको पाइन्छ । खासगरी निर्वाचनका बेला आफ्नो पकड भएका ठाउँमा अन्य राजनीतिक दलका समर्थकहरुलाई मतदान अवसरबाट समेत बंचित गर्ने जस्ता अवान्छित कार्यहरु भएका थिए ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

यस बर्ष यो जिल्लामा प्रहरी/प्रशासनले गोली चलाई या अन्य विधिद्वारा नागरिकको हत्या गरेको पाइएन । आपसी रीस-इवी, बैमनस्यता र बिविध कारणले चारजना व्यक्तिको भने यो बर्ष हत्या भयो ।

ती हत्या मध्ये सर्बाधिक चर्चित हत्या साउन १, २०४९ मा मेघौली २ सिसाबासमा भएको थियो । उक्त हत्या प्रत्यक्ष रुपले राजनीतिक हत्या नभए पनि मृतक किसानबहादुर कुमाल नेपाली कांग्रेसका सक्रिय सदस्य रहेका तथा अभियुक्त कृष्णबहादुर कुमाल नेपाल कम्युनिष्ट पार्टी (एमाले) समर्थक रहेका छन् । उक्त दिन साँझ करीब ७ बजेतिर किसानबहादुर लाई कृष्णबहादुरले गलले प्रहार गरी बाटामानै मारेका थिए । किसानबहादुरले धेरै कुमालहरुलाई नेपाल कम्युनिष्ट पार्टी (एमाले) बाट कांग्रेसमा ल्याई २०४९ साल बैशाखमा भएको स्थानीय निर्वाचनमा एमाले उम्मेदवार जयमंगल कुमाललाई पराजित गराउन महत्वपूर्ण भूमिका खेलेको रीस-इवी साध्न जयमंगलको निर्देशन अनुरुप कृष्णबहादुरले किसानबहादुरको हत्या गरेको हो भन्ने नेपाली कांग्रेस चितवनको दावी छ । नेपाल कम्युनिष्ट पार्टी (एमाले) भने यो कुरा अस्वीकार गर्दै जयमंगल घटना घट्दा आफ्नी बिरामी आमालाई कुरेर बसीरहेको तथा त्यस्तो निर्देशन नदिएको बताउँछ । यो हत्याको सिलसिलामा जयमंगल कुमाल समेत १३ जना गिरफ्तार भएकोमा अहिले कृष्णबहादुर कुमाल मात्र जेलमा छन् । उनी आफ्नो प्रहारबाट किसानबहादुरको हत्या भएको कुरामा साबिती समेत भएका थिए भने बाँकीलाई जिल्ला अदालतले धरौटीमा रिहा गरेको छ । तर मुद्दा पुनरावेदन अदालतमा समेत परेको छ ।

### १.२ जेल

२०२५ सालमा निर्मित यहाँको जेल आधुनिक तथा वैज्ञानिक ढंगको त छैननै, साह्रै साँघुरो, फोहर र दुर्गन्धित पनि छ । १ विगाह १२ कठ्ठा क्षेत्रफलमा रहेको कारागार भित्र ३ कठ्ठा जमिनमा कारागार भवन रहेको छ । यो जेलको क्षमता ७० जना मात्र अटाउने छ । तर अहिले यहाँ ८९ पुरुष, १३ जना महिला र थुनुवा महिलाका २ बालक गरी कुल १ सय ४ जना राखिएका छन् । क्षमता भन्दा बढी मानिस राखिएकाले जेलको वातावरण अस्वस्थ र उकुसमुकुसपूर्ण छ । शौचालयको उचित व्यवस्था नभएकोले दुर्गन्धित छ भने त्यसैको नजिक खाना पकाएर खानु पर्दछ । यहाँको जेललाई मानिस थुनिने घर भन्न नै नसुहाउने छ । जेलर कुलप्रसाद शर्माका अनुसार सिकिस्त बिरामी पर्दा मात्र कैदी र थुनुवालाई बाहिर लगेर उपचार गरिन्छ । बस्ने, सुत्ने ठाउँको उचित व्यवस्था नभएको गुनासो यहाँका सुरक्षाकर्मीहरुको समेत रहेको छ । प्रमुख जिल्ला अधिकारी पदमराज रेग्मी र वरिष्ठ प्रशासकीय अधिकृत ऋषिकेश पौडेल स्वयम् पनि

यहाँको कारागारसंग सन्तुष्ट हुनुहुन्न । कारागारको यो अस्तव्यस्त स्थितिको जानकारी बारम्बार गृह मन्त्रालयमा गराउँदा पनि केही सुधार नभएको बुझिन्छ ।

## १.३ गिरफ्तारी / यातना

प्रमुख जिल्ला अधिकारी प्रजातन्त्र पश्चात प्रहरीले यातना दिने काम भएको छैन भन्न त सकिदैन तर धेरै कम भएको छ भन्नु हुन्छ । जिल्ला न्यायधिस प्रेमप्रसाद कुंवर प्रहरीले यातना दिएर अभियुक्तहरुलाई सावित गराइएको घटनाका सम्बन्धमा भन्नुहुन्छ- प्रहरीले ल्याएका सबै अभियुक्तहरु प्रहरीले कुटपिट गऱ्यो, यातना दियो भन्दछन् । तर प्रमाणित गर्न सक्दैनन् । प्रहरीले यातना दिए पनि र नदिए पनि कतिपय अभियुक्तहरु आफूलाई निर्दोष सावित गराउन पनि त्यसो भन्दछन् ।

# २. मौलिक अधिकार

## २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

## २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

२०४९ सालको वैशाख १५ र १८ गते सम्पन्न भएका स्थानीय निर्वाचनमा आ-आफ्नो पकड भएका ठाउँमा नेपाली कांग्रेस, नेपाल कम्युनिष्ट पार्टी (एमाले) र संयुक्त जनमोर्चा नेपालले शक्ति प्रदर्शन गरी अर्को राजनीतिक दलका समर्थकलाई मतदान गर्न नदिने, मतदाताहरुलाई आतंकित पार्ने काम गरेका थिए । यो जिल्लामा सोही तीन राजनीतिक दलको मात्र सक्रिय अस्तित्व रहेको छ । माडी कल्याणपुरमा नेपाली कांग्रेसबाट गाउँ विकास समितिमा अध्यक्ष उमेद्‌वार बनाइएका नारायण दाहाललाई संयुक्त जनमोर्चा नेपालले मतगणना भइरहेको बेला अपहरण गरी ३ घण्टा थुनेकोमा सेनाले छुटाउनु परेको थियो । भरतपुर नगरपालिका वडा नं. ११ मा नेपाली कांग्रेस समर्थकहरु लु.अ.ख. १३ नं.को जीपमा हातहतियार सहित आएर आक्रमण गर्दा एमाले र संयुक्त जनमोर्चाका कार्यकर्ताहरु घाइते भएका थिए । पछि कांग्रेसका नगर प्रमुख उमेदवार मुक्तिलाल चुकेलाई एमाले र संयुक्त जनमोर्चाका कार्यकर्ताहरुले घेरा हाली सो बुथमा निर्वाचन निष्पक्ष भएको छ भनी कागज गर्न लगाएका थिए । तर कांग्रेस पक्षबाट भएको आक्रमणको भने कुनै खोजीनीति भएन, एमाले र सजमोका ४ जनालाई भने सार्वजनिक अपराध मुद्दा लगाइयो ।

त्यस्तै वडा नं. १४ मा एमाले कार्यकर्ता राजकुमार श्रेष्ठलाई सख्त घाइते तुल्याइएको थियो । भरतपुर नगर पालिका कै वडा नं. १० मा नेकपा (मसाल) का उम्मेदवार तुलसी चापागाईलाई चुनाव प्रचार प्रसारको क्रममा कांग्रेसका उम्मेदवार मनोहरि कोइरालाका छोराले कुटेको र यस विषयको निवेदन प्रहरीमा दिन जाँदा प्रहरीले नलिएको तर पछि उल्टै चापागाईलाई ज्यान मार्ने उद्योग गरेको मुद्दा लगाइयो । दिव्यनगर गाउँ विकास समितिमा नेपाली कांग्रेस समर्थकहरुले संयुक्त जनमोर्चाका अध्यक्ष उम्मेद्‌वार रमाकान्त भण्डारी, खेमलाल भण्डारी, विष्णुहरी तिवारीलाई कुटपिट गरि घाइते बनाएका थिए । यसैगरी वैशाख १५ गते नै गीतानगरमा नेकपा (एमाले) र नेपाली कांग्रेस समर्थक बीच झडप हुँदा एमालेका कार्यकर्ता शोभाकर सुवेदी र बालकृष्ण पौडेल घाइते भएका थिए ।

१५ गते चैनपुर पिठुवा गाउँ विकास समितिमा हातहतियारले सुसज्जित कांग्रेसीहरुले एमाले र संजमोका ७ व्यक्तिलाई आक्रमण गरी घाइते बनाए । तर पछि एमाले र संजमोका गरी पिठुवामा ६ जना र चैनपुरमा १३ जना गरी १९ जनालाई कांग्रेस पक्षले सार्वजनिक अपराध मुद्दा लगायो । ती व्यक्ति धरौटीमा छुटे पनि तारिख भने अझै खेप्दै छन् ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यो वर्ष चितवन जिल्ला अदालतमा जबर्जस्ती करणी २, भवितव्य ज्यान ३, कर्तव्य ज्यान ४, जीउ मास्ने बेच्ने ६, सवारी दुर्घटनाबाट ज्यान गएको ४१, चोरी १८ र ज्यान मार्ने उद्योग गरेका ६ वटा लगायत कुल ९६ वटा फौजदारी मुद्दा दर्ता भएका छन् । ९० प्रतिशत जति फौजदारी मुद्दा प्रहरी

मार्फत आउने कुरा जिल्ला न्यायधिस प्रेमप्रसाद कुंवर बताउनु हुन्छ । उहाँले अंशबण्डा, जग्गा सम्बन्धी र सम्पत्ति सम्बन्धीका देवानी मुद्दाहरु मासिक सरदर २० वटा दर्ता हुने गरेको जानकारी पनि दिनु भयो । यो वर्ष जिल्ला प्रशासन कार्यालय चितवनमा १०१ मुद्दा दर्ता भएका छन् । प्रमुख जिल्ला अधिकारीले सार्वजनिक अपराध र सवारी गल्ती सम्वन्धमा सबैभन्दा बढी मुद्दा दायर भएको जानकारी दिनु भयो । जिल्ला प्रहरी कार्यालयका डि.एस.पी. नविन अधिकारीका अनुसार, सो कार्यालयमा यो वर्ष सवारी दुर्घटना, सार्वजनिक अपराध, कुटपिट, चोरी, हत्या र जीउ मास्ने लगायतका १८१ वटा मुद्दा दायर भएका थिए । यस जिल्लामा आपसी रीस-इवी साध्न बिपक्षीलाई सार्वजनिक अपराध सम्बन्धी मुद्दा लगाइने चलन आम रुपमै छ । प्रमुख जिल्ला अधिकारी पदमराज रेग्मी स्वयं सार्वजनिक अपराध सम्बन्धी मुद्दामा चुनावको बेला घटेका घटनाहरु, राजनीतिक प्रतिशोधका कारण पनि दर्ता भएको बताउनु हुन्छ । २०४९ साल असार १७ गते प्रकाश कडेंलले इन्द्रप्रसाद रेग्मी र विश्वनाथ पोखरेलले हिकमत गुरुङलाई तथा असार २१ गते मायादेवी खनाललाई देवीप्रसाद न्यौपानेले र सुश्री सीता अधिकारीलाई नारायण दाहालले चुनावी प्रतिशोध साध्न दिइएको मुद्दा जिल्ला प्रशासन कार्यालयबाट अझैं छिनिएको छैन । तर चितवन जिल्ला विकास समितिका सभापति कृष्णलाल सापकोटा भने ठाउँ ठाउँमा भएका गुण्डागर्दीका घटनाले प्रोत्साहन नपाउन् भनी सार्वजनिक अपराध मुद्दा दिइएको हो , राजनीतिक प्रतिशोधका कारण होइन भन्नुहुन्छ ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

भरतपुर नगरपालिकामा नै करिव ७ हजार सुकुम्वासी छन् । तर यो बर्ष तिनीहरुलाई प्रहरी प्रशासनले दु:ख दिएको छैन । उनीहरुको जिन्दगीको दिनचर्या भने दु:खद नै छ ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

*भांगाटार गा.वि.स. वडा नं. ७ बरुवा बजारकी १३ वर्षीया सीता कार्की र १५ वर्षीया माया कार्कीलाई सोही गा.वि.स.को सितलपुरका पार्वती सार्की र तारा सार्कीले फकाई बिक्रि गर्ने उद्देश्यले २०४८ पुस ४ गते कलकत्तातर्फ भगाई लगेका थिए । कलकत्तामा ती युवतीहरु वेश्यालयमा बेचिनु अघिनै एक ट्याक्सी ड्राइभरको सहायताले नेपाल कम्युनिष्ट पार्टी (एमाले) मध्यपूर्व क्षेत्रिय कमिटी कलकत्तामा पुगेको तथा उक्त कमिटी र शाही नेपाली महावाणिज्यदुतावास कलकत्ताको संयुक्त सहयोगमा घर फर्किएका थिए । यो बाहेक ५ वटा जीउ मास्ने बेच्ने मुद्दा जिल्ला अदालतमा दर्ता भएका छन् ।*

यो जिल्लामा बलात्कारका वास्तविक घटना कति भए भन्ने ज्ञात नभए पनि दुइटा घटना जिल्ला प्रहरी कार्यालयमा पुगेको र त्यसमध्ये चर्चित बालकुमारी क्याम्पस नजिकको बलात्कार काण्डका अभियुक्त राजकुमार श्रेष्ठलाई पुर्पक्षका लागि कारागारमा थुनामा राखिएको छ । अभियुक्त श्रेष्ठले २०४९ साल साउन २४ गते साँझ भरतपुरकी आशाकुमारी थापा मगरलाई ३-४ जना सहयोगी सहित बलात्कार गर्ने दुष्प्रयास गरेको थियो । उक्त घटनामा आशा कुमारीको लुगा च्यातिएको, ओठ टोकिएको र अनुहारमा घाउ नै घाउ बनाइएको थियो । उनलाई केहि दिन अस्पतालमा उपचार समेत गराइएको थियो ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■



# २. मध्यमाञ्चल

## नारायणी

# २.११ मकवानपुर

| | | |
|---|---|---|
| जनसंख्या | : | ३१४४८८ |
| साक्षरता | : | ३७.१ प्रतिशत |
| महिला साक्षरता | : | २३.० प्रतिशत |
| क्षेत्रफल | : | २४२६ वर्ग कि.मी. |

नारायणी अंचल अन्तरगतका विभिन्न जिल्लाहरु मध्ये मकवानपुर जिल्ला पनि राजनीतिक चहलपहलका निम्ति केही कहलिएकै जिल्ला मानिन्छ । यस जिल्लामा प्रशासनबाट विगतमा मानव अधिकारको उल्लंघन अधिक हुने गर्दथ्यो । त्यो क्रममा आज पनि कुनै कमी आएको महशूस हुन्न ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

यस जिल्लामा ०४८ पुष देखि ०४९ पुषसम्म कूल ११ वटा ज्यान मार्ने अभियोग गरेका मुद्दाहरु दर्ता गरिए । स्थानीय राजनीतिक कार्यकर्ताहरुलाई जिल्लामा घटेका हत्या सम्बन्धी घटनाहरुका बारेमा सोध्दा उनीहरु ०४९, असोजमा फापरबारी, कांगडा र सिस्नेरीमा भएका हत्याकाण्डहरुका बारेमा उल्लेख गर्दछन् । उनीहरु ०४९ मंसीरमा कोगते गा.बि.स.मा भएको हत्याकाण्डलाई पनि सम्झिने गर्दछन् । ०४९ असोजमा सिस्नेरी गा.बि.स.मा कृष्ण बहादुर ठकुरीको हत्या पनि भएको थियो ।

### १.२ जेल

भीमफेदीमा अवस्थित मकवानपुर जेलको स्थिति दयनीय रहेको छ । सामान्यत: ३० देखि ५० जनासम्म राख्न सकिने क्षमता भएको उक्त जेलमा कारागार ऐन तथा नियमावली बमोजिमका सुविधाहरु पनि नभएको गुनासो स्थानीय राजनीतिक कार्यकर्ताहरु र बन्दीहरु बताउँछन् । यो जेल पहिले ट्रक, जीप राख्ने ग्यारेजका रुपमा रहेको थियो । जेलमा महिलाका लागि एक र पुरुषका लागि एक गरी जम्मा दुई कोठाहरु मात्र रहेका छन् । तर दुबै कोठाको बरण्डा र बगैंचा भने एउटै रहेको छ ।

### १.३ गिरफ्तारी / यातना

जिल्ला प्रहरी निरीक्षकका अनुसार ०४८ पुष देखि ०४९ पुषसम्म यस जिल्लामा कोही, कसैलाई अनावश्यक हैरानी र यातना दिइएको छैन । तर प्रतिपक्षका स्थानीय राजनीतिक कार्यकर्ताहरु उपरोक्त कुरो मान्न तयार छैनन् ।

०४९ भदौमा अनियमित तरिकाले वन फडानी गरेको अभियोगमा पक्राउ परेका कपिलदेव कट्टेललाई जिल्ला प्रहरी कार्यालय मकवानपुरमा दिइएको यातना विशेष उल्लेख्य रहेको थियो । जिल्ला वन कार्यालय मकवानपुरका तत्कालिन रेन्जर कपिलदेव प्रसाद कट्टेललाई उनको ससुराली कलैयाबाट विशेष प्रहरीले बिना पूर्जी पक्राउ गरेको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

स्थानीय बार एशोसिएसनका एकजना पदाधिकारीका अनुसार यस जिल्लामा फरक मत राख्ने कतिपय व्यक्तिलाई सार्वजनिक अपराध ऐन, ०४९ लगाई प्रजिअबाट दु:ख दिने काम पनि हुने गरेको छ । जिल्ला प्रशासन कार्यालय पनि

जिल्लामा घट्ने प्राय: सार्वजनिक किसिमका घटना राजनीतिक कारणबाट घट्ने गरेको बताउँछ । तर उक्त कार्यालय आफ्नो सबै काम जनताको पक्षमा र नियम कानून अनुकूल रहेको दावी गर्दछ ।

जनचेतनाका कमीका कारण जनस्तरबाट पनि मानव अधिकारको उल्लंघन हुने गरेको कुरा यहाँका सबै पक्षका राजनीतिक कार्यकर्ताहरु स्वीकार गर्दछन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा हिन्दू, बौद्ध, मुस्लीम र पछि धर्म परिवर्तन गरी क्रिश्चियन बनेका समेत सबै किसिमका मानिसहरु रहेका छन् । तर धर्म सम्बन्धी झै झगडा भएको भने पाइदैन । पञ्चायतकालमा क्रिश्चियन धर्मावलम्बीहरुलाई प्रशासनिक दवाब पर्ने गरेको भए पनि हाल त्यस्ता घटनाहरु सुन्नमा नआएको कुरा स्थानीय बासिन्दा बताउँछन् ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा गत ०४९ जेठ-असारमा सम्पन्न स्थानीय चुनाव सामान्य ढंगले सम्पन्न भएको कुरामा प्राय: सबै पार्टीहरु एकमत देखिन्छन् । तर पक्ष-प्रतिपक्ष राजनीतिक पार्टीहरु एकले अर्कालाई केही धाँधली गरेको आरोप पनि लगाउँछन् ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

जिल्लामा न्याय सम्पादनको क्रममा अहिलेसम्म कुनै पक्षको अनुचित दवाब नपरेको भनाई जिल्ला अदालतको रहेको छ । तर न्यायालयका निर्णय प्रति कतिपय प्रतिपक्षीको असहमति रहेको छ । न्यायालयमा ढिलासुस्ती भएको बताउने राजनीतिक पार्टी पनि यहाँ रहेको छ । तर केही राजनीतिक कार्यकर्ता जिल्ला बन कार्यालय, जिल्ला प्रशासन आदि जस्ता अर्ध न्यायिक निकायहरुमा सरकारी दवाब पर्ने गरेको दाबी गर्दछन् ।

जिल्लामा मानव अधिकारको उल्लंघन गर्ने अपराधीलाई कानूनबाट बचाउन प्रशासन समक्ष दवाब हुने गरेको पाइयो । सबै राजनीतिक पार्टी एक अर्कालाई सोही आरोप लगाउने गर्दछन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा सुकुम्वासी समस्या पनि केही हदसम्म रहेको देखिन्छ । तर बन फडानीको समस्या सुकुम्वासीहरुसंग भन्दा बन कर्मचारी र गिरोहहरुसंग सम्बन्धित रहेको देखिन्छ । वज्रवाराही, नामटार, भैंसे, आमभज्याङ, ज्यामिरे, मनहरी, पद्म पोखरी आदि ठाउँमा यदाकदा बन फडानीमा सुरक्षाकर्मीहरुको संलग्नता रहने गरेको कुरा संयुक्त जनमोर्चा मकवानपुर बताउँछ ।

## ४. महिला अधिकार

### ४.१ महिला किनबेच र बलात्कार

जिल्ला प्रहरी कार्यालय, मकवानपुरका अनुसार ०४८ पुष देखि ०४९ पुषसम्म यस जिल्लामा ३ वटा बलात्कार, ७ वटा बिउ मास्ने, बेच्ने र एउटा बहुविवाहको मुद्दा दर्ता भएका थिए । जिल्लामा वेश्यावृत्ति समस्या रहेको कुरा स्थानीय बासिन्दाहरु पनि बताउँछन् ।

महिलाहरुको किनबेच र भारततर्फ लैजाने कुरोमा पनि यस जिल्लाको नाम आउने गर्दछ । स्थानीय पद्मपोखरी, दुतिबाना, चुरियामाई, बसामाडी र हाँडीखोला गा.वि.स.मा चेलबेटी बेचबिखन गर्ने गिरोह सक्रिय रहेको बताइन्छ । भारतको कलकत्ता, दिल्ली बम्बई लगायत केही शहरका वेश्यालयहरुमा मात्र होइन, सर्कसहरुमा समेत यहाँका महिलाहरुको बेचबिखन हुने गरेको देखिन्छ ।

### ४.२ जारी, बहु बिबाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु बिबाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन । तर गत बर्ष जिल्ला अदालतमा एक जना एमालेका सांसद बिरोध खतिवडा उपर बहु बिबाह संबन्धी मुद्दा दर्ता भएको थियो ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व बिरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

जिल्लामा खेती मजदूरहरुलाई दिइने ज्यालामा एकरुपता छैन । ग्रामीण इलाकामा साहूहरुले ऋणको व्याजदर बार्षिक ३६ देखि ६० प्रतिशतसम्म लिने गरेका छन् । ग्रामीण बासिन्दाहरु पढे लेखेका ठालूहरुबाट ठगिने गरेको पनि बताइन्छ ।



# २. मध्यमाञ्चल

## वाग्मती

# २.१२ ललितपुर

| | | |
|---|---|---|
| जनसंख्या | : | २५८४७४ |
| साक्षरता | : | ६३.८ प्रतिशत |
| महिला साक्षरता | : | ४९.१ प्रतिशत |
| क्षेत्रफल | : | ३८५ वर्ग कि.मी. |

उपत्यकाका तीन जिल्लाहरुमा ललितपुर सबभन्दा विकट र दुर्गम जिल्लाका रुपमा चिनिन्छ। ठूला दुर्लुङ, कालेख, आसराङ, गिम्दी, चन्दनपुर जस्ता विकट, अनकन्टार र पिछडिएका गा.वि.स.हरु रहेका यस जिल्लामा मुख्य गरेर सार्वजनिक अपराधका घटनाहरु हुने गर्दछन्। र त्यसमा पनि विशेष गरेर हुने कुटपीट र भैंभगडाका घटनाहरुले अन्ततः राजनैतिक रुप लिने हुनाले, सर्वप्रथम यस्ता सार्वजनिक अपराधका घटनाहरुलाई दुरुत्साहित गर्न सबै राजनैतिक शक्तिहरु चिन्तनशील र एकमत हुनुपर्ने कुरामा जिल्लाका बुद्धिजीवी, प्रशासक र राजनैतिक कार्यकर्ताहरुको समान धारणा रहेको पाइन्छ।

## १. बाँच्न पाउने अधिकार

ललितपुर जिल्ला राजधानीको छिमेकी जिल्ला र उपत्यकामा पर्ने हुनाले प्रत्यक्ष रुपमा हेर्दा यहाँका तमाम जिल्लावासीहरुले संविधान प्रदत्त अधिकारहरु निर्वाध उपभोग गर्न पाएका छन् भन्ने सोचाइ सबैमा भए तापनि जिल्लामा रहेका विकट क्षेत्रहरुलाई आत्मसात् गर्ने हो भने संविधान प्रदत्त अधिकारहरु केवल शहरी क्षेत्रमा मात्र सीमित रहेको प्रतीत हुन्छ।

### १.१ हत्या / गोली

२०४८ चैत्र २४ गते "नेपाल बन्द" को सिलसिलामा यस जिल्लामा सरकारी क्षेत्रबाट जघन्य र निर्मम घटनाहरु भएका थिए । यसै क्रममा पुलचोकमा भएको गोली काण्डमा प्रहरीको गोलीद्वारा ललितपुर नगरपालिका कायगुननी निवासी वर्ष १८ का अखिल नेपाल जनवादी युवा लीगका सदस्य राजीव रघुवंशीको मृत्यु भएको थियो भने धादिङ, धुवाकोट गा.वि.स. घर भई ललितपुर बस्ने वर्ष २१ का नेकपा (एकता केन्द्र) का सदस्य लोकनारायण श्रेष्ठको पनि प्रहरीकै गोलीद्वारा घाइते भएपछि पाटन अस्पतालमा उपचार गराउँदा गराउँदै सोही दिन मृत्यु भएको थियो।

यसैगरी २०४८ चैत २४ गते "नेपाल बन्द" कै क्रममा पुलचोकमा प्रहरीले लाठी चार्ज, अश्रुग्यास र अन्धाधुन्ध गोली चलाउँदा १९ जना सख्त घाइते भएका थिए। १९ जनामध्ये ११ जना गोलीद्वारा घाइते भएका थिए र ती ११ जना घाइतेमध्ये पनि ९ जनालाई घुँडामाथि र २ जनालाई घुँडामुनि गोली लागेको थियो। यसरी "नेपाल बन्द" को सिलसिलामा थुप्रै व्यक्तिहरुले घाइते भई पाटन अस्पतालमा उपचार गराएका थिए। घाइते हुनेहरुमा ल.पु.न.पा. गावहाल बस्ने वर्ष ३० का परशुराम थापा, ल.पु.न.पा. नागबहाल इखाके बस्ने वर्ष २९ का ज्ञानबहादुर शाक्य, ल.पु.न.पा. गावहाल बस्ने वर्ष २५ का भरतमान शाक्य, ल.पु.न.पा. पिन्छेटोल बस्ने वर्ष २२ का प्रेमबहादुर महर्जन, ल.पु. ठेचो बस्ने वर्ष २० का चन्द्र गोविन्द महर्जन, ल.पु.न.पा. च्यासल बस्ने वर्ष २० का राजेश लामा, ल.पु.न.पा. जिन्छे बस्ने वर्ष १८ का हरिबहादुर खतिवडा, धादिङ घर भई ल.पु.न.पा. बस्ने वर्ष २१ का लोकनारायण श्रेष्ठ, ल.पु.न.पा. महालक्ष्मी स्थान बस्ने वर्ष २६ का अलाउद्दीन मुस्लिम, सुरज महर्जन, लेले बस्ने वर्ष १५ का मदनकुमार सिलवाल, दाप्चा बस्ने वर्ष १२ का गोविन्द अधिकारी, चितवन घर भई ललितपुर नगरपालिका बस्ने वर्ष १९ का बोधप्रसाद त्रिपाठी, पाटनढोका बस्ने वर्ष २० का सुवीत माझी, काठमाडौं ओमबहाल बस्ने वर्ष १४ का महेशकुमार राना, ललितपुर भोलाछे बस्ने वर्ष ३८ का मङ्गल अवाले, मकवानपुर घर भई ल.पु.न.पा. बस्ने वर्ष १८ का

सुरेश लामा, लगनखेल बस्ने वर्ष २५ का श्याम श्रेष्ठ र ओमबहाल बस्ने वर्ष ३२ का आशाकाजी महर्जन हुन् ।

## १२ जेल

यस जिल्लामा देशभरि नै प्रसिद्ध रहेको नक्खु जेल छ । राणाकालीन समयमा खास गरेर राजनैतिक बन्दीहरुलाई थुन्ने दृष्टिले निर्माण भएको यस जेलको स्वरुप अन्य जेलसंग तुलना गर्न अलि सकिँदैन । १५० जना बन्दीहरुको क्षमता भएको यस जेलमा हाल १६७ जना बन्दीहरु छन् । जेलको भौतिक सुविधा र आवासीय स्थिति हेर्दा एकजना बन्दीलाई रहन, बस्न र अन्य सुविधाको आवश्यकता के कति मात्रामा चाहिन्छ त्यसको क्षमताबारे मापदण्ड गर्ने स्पष्ट नीति नभएकोले यहाँ यो क्षमताको परिभाषा कसरी गर्ने भन्ने प्रश्न उल्टै नक्खु जेलका जेलर उद्धव पनेरु राख्दछन् ।

पहिले पनि यस जेलमा मुख्य गरेर राजनैतिक बन्दीहरु राख्ने गरिएको र हिजोआज राजनैतिक बन्दीहरु नभए तापनि यस जेलमा सुविधाहरु अन्य जेलको तुलनामा पर्याप्त रहेको छ । बन्दीहरुलाई मनोरञ्जनका लागि टेलिभिजन लगायत खेलकूदका सामग्री र पत्र-पत्रिकाहरु निर्बाध रुपमा उपलब्ध गराइएको छ । जेलरका अनुसार बन्दीलाई जेलबाट उपलब्ध गराउने सुविधाहरुमा कुनै कमी कमजोरी नभएको देखिन्छ । तर जेल भवनको हकमा भने साह्रै पुरानो र जीर्ण अवस्थामा रहेको यो भवन मरम्मत गर्नुपर्ने आवश्यकता रहेको छ, सो कार्य आफ्नो अधिकार क्षेत्रभन्दा बहिर रहेको धारणा पनि नक्खु जेलका जेलर राख्तछन् ।

महिला संख्या एकजना पनि नभएको यस जेलमा अधिकांश बन्दीहरु चोरीको अभियोग लागेका र लागू औषध मुद्दामा परेका छन् । जेल प्रशासनका अनुसार सानातिना चोरीको अभियोगमा थुनिएका अधिकांश बन्दीहरुमा खातेहरु छन् र भोलि उनीहरु छुटेपछि पनि पेट पाल्न पुनः चोरी मै लाग्दछन् । तसर्थ यस्ता केटाहरुलाई भविष्यमा नैतिकवान्, चरित्रवान् बनाउनका लागि जेलभित्र सो सम्बन्धी आवश्यक शिक्षा तथा तालिमको आवश्यकता देखिएको छ ।

## १३ गिरफ्तारी / यातना

यस जिल्लामा प्रायः गरेर राजनैतिक प्रतिशोधको भावनाले फरक विचारधारा राख्ने व्यक्तिहरुलाई झुठा मुद्दा लगाउने गरेको देखिन्छ । साथै यस जिल्लाको समग्र अध्ययनबाट के स्पष्ट हुन्छ भने जिल्लाका आम बुद्धिजीवी तथा प्रबुद्ध वर्गका दृष्टिमा जिल्लामा निष्पक्ष न्याय, शान्ति सुरक्षाका जिम्मा लिएका प्रशासकहरु कुनै एउटा राजनैतिक पार्टीका कार्यकर्ता जस्तै रहेको देखिएको छ ।

२०४८ चैत २४ गते "नेपाल बन्द" को क्रममा सरकारले निहत्था जनतामाथि नृशंस हत्या गरेको विरोधमा घोषित २०४९ बैशाख २१ गते "नेपाल बन्द" कार्यक्रम हुनु अगावै सांसद लीलामणि पोखरेल, संयुक्त जनमोर्चा ललितपुर का अध्यक्ष दिल बहादुर श्रेष्ठ लगायत सयौं व्यक्तिहरुलाई सामूहिक गिरफ्तार गरिएको थियो ।

वामदेव गोकर्ण टेक्सटायल प्रा.लि.मा कार्यरत मजदूर नारायण प्रसाद पोखरेललाई फरक मत राखेको अभियोगमा कामबाट बञ्चित गरिएको थियो । निज पोखरेललाई पुनः काममा लगाउन मजदूरहरुले दबाब दिएपछि ५ जना मजदूरलाई गैर कानूनी रुपमा थुनामा राखी सार्वजनिक अपराध तथा सजाय ऐन अन्तर्गत झुठा मुद्दा लगाइएको थियो ।

विपक्षीहरुको अस्तित्व निमिट्यान्न पार्ने उद्देश्यले प्युटार गा.वि.स.का राजनैतिक कार्यकर्ताहरु शेरबहादुर विश्वकर्मा, विसम बहादुर लामा, उत्तम लामा र रामजी नेउपानेलाई सार्वजनिक अपराध सम्बन्धी झुठा मुद्दा लगाइएको थियो ।

देशमा आएको राजनैतिक परिवर्तन पश्चात् हिरासतमा लिएका कुनै पनि व्यक्तिलाई यातना दिने गरेको छैन र यसरी यातना बिना साबिती गराउने हामीकहाँ कुनै आधुनिक प्रविधि नहुनाले समाजमा अपराधका घटनाहरु बढ्नु स्वाभाविक हो भन्ने विचार जिल्लाका वरिष्ठ प्रहरी अधिकृत बताउँछन् । उनका अनुसार यदि कुनै सामाजिक अपराधका व्यक्तिलाई साबिती गराउन एक थप्पड हिर्काएमा पनि सोको खबर सर्वत्र फैलिने हुनाले आफू बदनाम हुने किसिमको उक्त जोखिम किन उठाउने भन्ने धारणा प्रहरीले राख्ने गरेको पाइन्छ । साथै यसबाट बढ्दो सामाजिक अपराधको प्रोत्साहनको जोखिम समाजले बेहोर्नु पर्ने विचार पनि उक्त अधिकृत व्यक्त गर्दछन् ।

# २. मौलिक अधिकार

संविधानले सम्पूर्ण नेपालीको मौलिक अधिकारको ग्यारेण्टी गरे तापनि व्यवहारमा स्थानीय प्रशासनले जिल्लामा घटेका घटनाहरुबारे जाहेरी लिंदा सत्ता पक्षको लिने र विपक्षीको नलिने गरेको गुनासो व्यापक छ ।

## २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त कुराहरुको प्रत्याभूति गरेको छ । यस जिल्लामा फरक विचारधाराका राजनैतिक संघ संस्थाहरुले अन्य जिल्लाका तुलनामा आफ्ना क्रियाकलापहरु निर्बाध रुपले सञ्चालन गर्न पाएका छन् ।

## २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा खास गरेर हिन्दू र बौद्ध धर्मावलम्बीहरु बसोबास गर्दछन्। हालसम्म यी धर्मावलम्बीहरुबीच धार्मिक सहिष्णुता प्रसंशनीय रुपमा देखिएको छ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

संविधानले प्रत्येक नेपालीलाई समान रुपमा राजनैतिक स्वतन्त्रताको अधिकार प्रदान गरेको छ। तर विडम्बना जुन क्षेत्रमा जसको बाहुल्य र पकड छ, त्यहाँ उसले (स्थानीय निर्वाचन होस् वा संसदीय निर्वाचन) प्रजातान्त्रिक आचरण विपरित निर्वाचन शैलीहरु अपनाएको देखिन्छ। यसैको उदाहरणस्वरुप यस जिल्लाका नगरपालिकाका वडा नं. ७, ८, १२, १६, १८ का निर्वाचनमा धाँधली र अनियमितता भएको थियो भने स्थानीय निर्वाचनको क्रममा आसराङ, देवीचौर आदि पहाडी भेगका गा.वि.स.हरुमा विभिन्न पक्षले अधिक मादक पदार्थ सेवन गराउनुका साथै लोभ लालच देखाई निर्वाचन अनियमित, अशान्त र अप्रजातान्त्रिक वातावरणमा गराइएको थियो।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

देशमा आएको राजनैतिक परिवर्तन पछि न्यायिक निकायबाट भएका निर्णयहरुमा खोट लगाउने ठाउँ देखिएको छैन भने अर्ध न्यायिक निकायबाट हुने कार्यहरुमा अद्यापि कमी कमजोरी देखिएको छ। मूलरुपमा यी अर्ध न्यायिक निकायहरुले राजनैतिक र प्रशासनिक दवाबबाट निर्णयहरु गर्ने गरेको देखिन्छ।

यहाँको जिल्ला अदालतमा २०४९ साउनदेखि २०४९ फागुन मसान्तसम्म देवानीतर्फ २९६, फौजदारी तर्फ १८० गरी ४७६ मुद्दाहरु दर्ता भएका थिए। त्यस्तै २०४९ साउन १ गतेदेखि २०५० वैशाख १९ गतेसम्म यहाँको जिल्ला प्रहरी कार्यालयमा मुख्य गरेर भवितव्य ज्यान, चोरी, आत्महत्या, विष सेवन, लागू औषध सेवन, सार्वजनिक अपराधका घटना गरी १७५ मुद्दाहरु दर्ता भएका थिए।

# ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या ठप्पै नभएका हुँदै होइनन् तर विकराल रुपमा पनि छैनन्।

# ४. महिला अधिकार

ललितपुर जिल्ला उपत्यकाका विकट जिल्लामा पर्दछ। अधिकांश विकट र दुर्गम गा.वि.स.हरुले घेरेको यस जिल्लामा महिला अधिकारको स्थिति के छ स्वत: स्पष्ट हुन्छ। मुख्य गरेर यस जिल्लामा राजनैतिक नेताहरुले नै महिलाका हक र अधिकार उल्लंघन गरेका विभिन्न घटनाहरुले देखाउँछ।

## ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लामा शहर बजारमा नभए पनि पहाडी भेगका गाउँहरुमा महिला किनबेचका घटनाहरु यदाकदा सुनिनमा आएको छ। बलात्कारका घटनाहरु पनि यहाँ त्यति देखिएको छैन।

## ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

देउकी र बादी प्रथा नभएको यस जिल्लामा जारी प्रथा पनि त्यति सुन्नमा आएको छैन। तर बहु विवाह भने यस जिल्लाका गाउँघरतिर अझ व्यापक रुपमा रहेको देखिन्छ।

# ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

## ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन।

## ५.२ अन्य अमानवीय व्यवहार

मुख्य गरेर यस जिल्लामा रहेका ठूला ठूला ढुंगा खानीहरुमा हुने ब्लास्टिङ्ले एकातिर जिल्लावासीलाई आतंकित पारेको छ भने अर्कोतिर वातावरणलाई नै प्रदूषित तुल्याएको छ। जनताका यस सम्बन्धी आग्रहलाई ध्यानमा राखेर सरकारले आयोग गठन गरेर प्रतिवेदन प्रस्तुत गर्दा पनि खास कुनै सकारात्मक कार्यान्वयन हुन नसकेको कुरा ढुंगाखानी नजिकका गाउँलेहरु बताउँदछन्। साथै यहाँ रहेका ठूला ठूला गलैंचा उद्योगहरुमा जिल्लाका गाउँघरतिरबाट आएका बाल बालिका काममा लगाएको पाइन्छ। यसरी गलैंचा उद्योगहरुले बाल अधिकार हनन गरेको देखिन्छ।

यस जिल्लाका अति दुर्गम क्षेत्रहरुमा मुख्य गरेर दूध र खुवा उत्पादन अधिक हुने गरेको देखिन्छ। तर यातायात र बजारको अभावमा खुवा उत्पादकहरुले खुवाको उचित मूल्य पाउने गरेको देखिँदैन। साथै त्यस भेगबाट बोकेर ल्याएको खुवा बजारका साहु महाजनहरुले सस्तो मूल्यमा लिएर खुवा उत्पादकहरुलाई शोषण गरेको पाइन्छ।

देशको मुख्य दु:खद घटनाहरुमा गत २०४९ असोज १३ गते यस जिल्लाको भट्टेडाँडा गा.वि.स. वडा नं. ३ भैरे भन्ने ठाउँमा पाकिस्तान इन्टरनेशनल एयरलाइन्स उडान नं पी.के. २६८ करॉचीबाट काठमाडौंका लागि उडेको विमान दुर्घटना हुँदा विमानमा रहेका १६७ जना यात्रुहरुको मृत्यु भएको थियो। ■



# २. मध्यमाञ्चल

## वागमती

## २.१३ काभ्रे

| | |
|---|---|
| जनसंख्या | : ३२४८१९ |
| साक्षरता | : ३८.५ प्रतिशत |
| महिला साक्षरता | : २२.७ प्रतिशत |
| क्षेत्रफल | : १३९६ वर्ग कि.मी. |

वागमती अञ्चलका ८ जिल्लाहरुमा काभ्रे जिल्ला पनि पिछडिएको जिल्लाको रुपमा चिनिन्छ। गरीवी, पछौटेपन, अशिक्षा आदिका कारणले यस जिल्लामा राजनैतिक अस्थिरता, जिउ मास्ने बेच्ने, आत्महत्या, चोरी, बलात्कार आदि प्रमुख समस्याका रुपमा रहेका छन्।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

*२०४७ मंसीर २७ गते राष्ट्रिय प्रजातन्त्र पार्टी (थापा) ले बनेपामा आयोजना गरेको आमसभामा भएको हुलदंगा र भीडन्तमा बनेपा निवासी कक्षा ९ मा पढ्ने १७ वर्षीय वासुदेव मुस्याजुको प्रहरीको गोलीबाट मृत्यु भएको थियो।*

स्थानीय निर्वाचनको क्रममा फलामेटार वडा नं. १ बस्ने सूर्यमान पाखिनलाई सोही गा.बि.स. वडा नं. ७ बस्ने नेपाली कांग्रेसका उम्मेदवार मानदेव ब्लोनले बन्चरोले प्रहार गरी हत्या गरे। हाल निज ब्लोन जेल सजाय भोगि रहेका छन्।

#### १.२ जेल

विगत पञ्चायत कालमा दयनीय स्थितिमा रहेको यहाँको जेलका बन्दीहरुलाई दिइ आएको सेवा सहुलियत र सुबिधामा थप केही बृद्धि गरिएको छ। तर यस जेलको आवासगृह र भौतिक आवश्यकताहरुको भने सुधार गर्नु पर्ने नितान्त आवश्यक देखिन्छ। हालसम्म यस जेलमा मनस्थिति बिग्रेका ६१ जना र अन्य अपराध सम्बन्धी १६ जना गरी ७७ जना बन्दीहरु छन्। मनस्थिति बिग्रेका र अन्य बन्दीहरु एकै ठाँउमा राखिएकोले यहाँका बन्दीहरु असन्तोष व्यक्त गर्दछन्।

यस जेलमा मानसिक रोग नलागेकालाई पनि मानसिक रोगी भनि आफन्तले ल्याएर राखि यातना दिन्छन्। यो जेल मानसिक रोगको उपचार गर्ने थलोको रुपमा हुनु पर्नेमा यातना गृह जस्तो छ। साथै प्रहरि, अन्य अपराधी र मानसिक रोगीहरु सबै एकै ठाउँमा बस्ने गर्छन् किनभने प्रहरीको बेग्लै गारद छैन।

#### १.३ गिरफ्तारी / यातना

यहाँको जेलका अधिकांश बन्दीहरु आफूलाई झुठा मुद्धामा फसाइएको कुरा व्यक्त गर्दछन्। र प्रहरी हिरासतमा निकै जघन्य यातनाहरु भोग्नु परेको कुरा बताउँछन्। तर जेलमा भने त्यस्तो कुनै यातना नदिइएको ब्यहोरा जनाउँदछन्।

साथै यस जिल्लामा जहाँ जसको प्रभाव छ, त्यहाँ उसले नियम, कानूनको परिधिलाई नाघेको देखिन्छ, चाहे त्यो नेपाली कांग्रेस होस् अथवा एमाले, संयुक्त जनमोर्चा या राष्ट्रिय प्रजातन्त्र पार्टी। यसै अनुरुप संयुक्त जनमोर्चाले आफ्ना ४४ जना कार्यकर्ता, एमालेले १७ जना, रा.प्र.पा. ले ७ जना र नेपाली कांग्रेसले ५ जना कार्यकर्तालाई सार्वजनिक अपराध सम्बन्धी झुठा मुद्धा लगाइएको बताउँदछन्।

त्यस्तै, स्थानीय निर्वाचनताका खरेलथोक गा.बि.स.का पराजित उम्मेदवार गोविन्दप्रसाद खकुरेल मतगणना कार्यपछि राती घर फर्कदा बाटो बिराई भीरबाट लडेको घटनालाई

आफ्ना विरोधीलाई प्रतिशोध लिने निहुँमा आफ्नै गाँउका बर्ष १८ का लक्ष्मीप्रसाद खकुरेल, वर्ष १५ का नारायणप्रसाद खकुरेललाई ज्यान मार्ने उद्योग गरेको भनी झुठा मुद्धा लगाएकोले निज युवाहरुलाई प्रहरीले २०४९ असार ११ गते देखि साउन ६ गतेसम्म हिरासतमा राखेको घटना त्यस गा.वि.स.मा चर्चाको विषय बनेको थियो ।

## २. मौलिक अधिकार

देशको राजनैतिक पद्धति अनुरुप प्रत्येक नेपालीको मौलिक अधिकारको ग्यारेण्टी गरे तापनि व्यापक गरिबी, अशिक्षा, जनचेतना आदिको अभावले सहीरुपमा आफ्नो अधिकारको उपभोग गर्न सकिरहेका छैनन् ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् । हाल शिक्षकहरुलाई ने. रा.शि.सं.मा संगठित भएका कारण स्पष्टिकरण, सरुवा आदिका साथ मानसिक यातना दिइ आस्था परिवर्तन गर्न लगाउने गरेको कुरा ने.रा.शि.सं. काभ्रेले जनाएको छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । विगतको संसदीय निर्वाचन होस् या स्थानीय निर्वाचन जसको जहाँ पकड छ, त्यहाँ उसले नियम, कानूनलाई नाघेर जनतालाई आफ्नो मौलिक अधिकारबाट समेत बञ्चित गराएका थुप्रै घटनाहरु ताजै छन् ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस बर्ष मात्र यहाँको जिल्ला अदालतमा देवानी ३०३, सरकारवादी फौजदारी ४३, दुनियावादी फौजदारी र विविध १२३ गरी ४६९ मुद्धाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

महिला किनबेच र चेलीबेटी व्यापारमा यो जिल्लाले निकै बदनामी कमाएको छ । विद्यमान समाजमा देखा परेको व्याप्त गरीबी, पछौटेपन, नारी माथि हेयको दृष्टि, असहाय, कथित जातपात र छुवाछुतको अमानवीय भावना आदिले चेलीबेटी व्यापारमा प्रोत्साहन दिईरहेको पाइन्छ । आफ्नो जीवनमा नाटकीय परिवर्तन आउने रङ्गीन सपना देख्ने तथा आफू सुख र वैभवको कल्पनाभित्र डुब्ने अबोध मनस्थिति नै चेलीबेटी बेचबिखनको जड बन्न पुगेको छ । आफ्नै नातेदार र गाउँघरका दाजुभाइहरुबाट अधिकांश चेलीबेटीहरु बेचिएका छन् । पहिले पहिले दमाई, कामी , सार्की र तामाङ जस्ता पिछडिएका जाति मात्र यस व्यवसायको शिकार भएकोमा हाल आएर यसको क्षेत्र र आकर्षणमा बृद्धि भएर बाहुन क्षेत्रीका चेलीबेटी पनि बेचिन थालेका छन् ।

चेलीबेटी व्यापार मात्र होइन बलात्कारले पनि यस जिल्लामा व्यापक रुप लिन थालेको छ । २०४८ माघ २३ गते स्थानीय उग्रतारा जनागाल बस्ने ५८ वर्षीय कृष्णबहादुर बञ्जाराले आफ्नै घरमा काम गरी बस्ने वर्ष १२ की मालती मानन्धरलाई बलात्कार गरेको र सो पश्चात् मालती मानन्धर बनेपाको मिशन अस्पतालमा भर्ना भएकी थिइन् ।

त्यस्तै २०४९ साउन ८ गते पाँचखाल दूध चिस्यान केन्द्र तामाघाट बस्ने कालु उर्फ दिलीपकुमार श्रेष्ठले सोही स्थान बस्ने ४ वर्ष ६ महिनाकी मिथिला गिरी भन्ने बालिकालाई बलात्कार गरेको जानकारी नेपाल बार एसोसिएशन काभ्रेले जनाएको छ ।

### ४.२ जारी, बहु बिवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# २. मध्यमाञ्चल

## बागमती

# २.१४ भक्तपुर

| | | |
|---|---|---|
| जनसंख्या | : | १७३०९७ |
| साक्षरता | : | ६०.३ प्रतिशत |
| महिला साक्षरता | : | ४३.५ प्रतिशत |
| क्षेत्रफल | : | ११९ वर्ग कि.मी. |

बागमती अंचलको भक्तपुर जिल्ला अन्तर्गत एउटा पुरातन शहर भक्तपुर पनि पर्दछ । यही जिल्लामा प्रजातन्त्रको पुनर्बहाली र मानव अधिकारको ग्यारेन्टीका लागि २०४६ साल फाल्गुन ७ गते देखि संयुक्त जनआन्दोलन शुरु भएको भोलिपल्टै कृष्णराम दुवाल, राजकुमार सुवाल, हरिकृष्ण भुजु र निर्मलकुमार शाक्यले शहादत प्राप्त गरेका थिए । चैत्र २६ गते राती निर्दलीय पंचायती व्यवस्थाको अन्त्य भएको घोषणा हुनासाथ खुशी हुँदै प्रजातन्त्र जिन्दावादको नारा लगाउँदै निस्केका पुष्परत्न शाक्यले पनि सेनाको गोलीको शिकार भई आफूलाई शहीदको पंक्तिमा उभ्याएका थिए ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

२०४९ साउन १८ गते राती १० बजे भक्तपुर नगर पालिका वडा नं. १७ स्थित नवदुर्गा सिनेमा हल नजिकै गुह्य पोखरी अगाडि सडकमा २२ वर्षीय युवक पुष्परत्न बुद्धाचार्यलाई छुरी हानिएको थियो । उनलाई तत्काले भक्तपुर जिल्ला अस्पताल पुन्याइएको भए तापनि उनी बाँच्न भने सकेनन् । उक्त घटना घट्नु भन्दा केही दिन पहिले उनको हत्या गर्ने अपराधीहरुले स्थानिय स्कूलमा एक छात्रालाई अभद्र व्यवहार गरेका थिए । त्यस किसिमका व्यवहार नगर्न सल्लाह दिने मृतकका भाइसंग उनीहरु बदला लिने दाउमा थिए । १८ गते राती उमेश श्रेष्ठ लगायतका व्यक्तिहरुको समूहले घरबाट निकालेर पुष्परत्नका भाइलाई कुट्न थाले, त्यसो नगर्न सल्लाह दिइरहेका पुष्परत्न बुद्धाचार्यलाई २-३ जनाले पक्डेर अलिक पर लगे र छातीमा छुरी हाने । उनी घाइते भइ लडेपछि अभियुक्तहरुले त्यस घटनाको प्रत्यक्षदर्शी नजिकैको फलफूल पसलेलाई समेत लछार-पछार गरेका थिए ।

त्यस हत्यामा संलग्न भक्तपुर नगरपालिका वडा नं.८ बस्ने उमेश श्रेष्ठ, वडा नं.१७ बस्ने श्याम सिल्पकार, वडा नं.१६ बस्ने कमल सिल्पकार, वडा नं.१४ बस्ने नीलम जोशी, वडा नं. १४ बस्ने मनेश जोशी, वडा नं.१७ बस्ने राजेन्द्र जोशी, वडा नं. १४ बस्ने बिदुर के.सी.लाई हत्या भएको केही दिन भित्रै पक्राउ गरी ०४९ भदौ १२ गते जिल्ला प्रहरी कार्यालय भक्तपुरले अदालतमा पेश गरेको थियो । सोही घटनामा संलग्न अन्य व्यक्तिहरु वडा नं. १४ बस्ने रत्नप्रसाद, वडा नं. १४ बस्ने रामहरी कर्माचार्य र सोही वडा बस्ने प्रकाश भुजु, वडा नं. १४ मै बस्ने नरेन्द्र र सिपाडोल गा.बि.स. २ बस्ने बालकृष्ण लोहला फरार भएका छन् ।

भक्तपुर जिल्ला दुवाकोट गा.बि.स. वडा नं. ९ सरस्वती खेल बस्ने विधुवा आइमाई जानुकी थापाले पर पुरुषसंगको संसर्गबाट गर्भधारण गरेकी र २०४९ साउन ५ गते बच्चा जन्माएर मारिन् । मरेको बच्चालाई प्लाष्टिकमा हाली फाल्न लैजाँदा निजको देवर बच्चुराम थापाले देखि प्रहरीमा खबर गरेका थिए । प्रहरीले पक्राउ गरी २०४९ साउन १५ गते जिल्ला अदालत भक्तपुरमा पेश गरेको थियो । र अभियुक्तलाई पुर्पक्षका लागि जेल चलान गरियो ।

छालिङ गा.वि.स. वडा नं. १ वनगाउँ बस्ने मोहन प्रसादको भाइको श्रीमती जो अलग बसिरहेकी थिइन्, उनी गर्भवती भएर बच्चा जन्माए पछि मरेकी थिइन् । मृतक मरेको नभई मारिएको आशंकाले उनका माईतिहरुले लाश अस्वीकार गरेका थिए । गा.वि.स. अध्यक्ष प्रवीण वन र मोहनप्रसाद बनले लाश पोष्टमार्टम नगरी जलाउन खोजेका थिए । पछि प्रहरीले लाश मुचुल्का गरेको ५-६ दिन पछिमात्र मृतकको दाह संस्कार गरिएको थियो । स्मरणीय के छ भने मृतकको शरीरमा पिटेका नीलडामहरु स्पष्टै देखिन्थे ।

### १२ जेल

भक्तपुर जिल्लामा जेल छैन । यहाँको जिल्ला अदालतले कुनै अभियोगमा जेलको सजाय सुनाए वा पुर्पक्षका लागि बन्दी बनाउने आदेश दिएमा त्यस्ता अभियुक्तहरुलाई सदरखोर डिल्ली बजार काठमाडौंमा लगिन्छ । सो जेलमा १५० जनालाई राख्न सकिने व्यवस्था छ तर त्यहाँ २२९ जना वा सो भन्दा बढी बन्दीहरु राखिने गरिएको पाइन्छ ।

### १.३ गिरफ्तारी / यातना

बढ्दो महंगी, बेरोजगारी समस्या, कांग्रेसीकरण र राष्ट्रघातको विरुद्ध ने.क.पा. एकता केन्द्रको आव्हान र एमाले, मसाल, नेमकिपा लगायतका पार्टीहरुको समर्थनमा २०४८ चैत २४ गते भएको "नेपाल बन्द" को सिलसिलामा चैत २३ गते निस्केको मसाल जुलुस माथि नासमना टोलको वाराही मन्दिर नजिकै घरको झ्यालबाट मट्टितेल खन्याउने काम भएको थियो ।

सोही दिन राती आन्दोलनकारीलाई फसाउन केही व्यक्तिहरुले नेपाल बैंक लिमिटेडको शाखा कार्यालयमा तोडफोड गरी आगो लगाउने प्रयास गरेका थिए । उक्त घटनामा गोबिन्द श्रेष्ठ, गणेशमान, भूपर्ण कुमार भन्ने सिद्धार्थ कुमार के.सी. र बिरबराज भण्डारी पक्राउ परेका थिए । ती पक्राउ पर्ने व्यक्तिहरुको "बन्द" कार्यक्रमका आयोजक वा समर्थक कुनैसंग सम्बन्ध थिएन ।

नेपाल बन्दको सिलसिलामा १४ जनालाई पक्राउ गरी सार्वजनिक मुद्दा लगाइएको थियो । संयुक्त जनमोर्चाले स्थानीय चुनावको क्रममा मुद्दा फिर्ता नलिएसम्म उम्मेदवारी नदिने बताए पछि मुद्दा फिर्ता लिइएको थियो ।

२०४९ वैशाख २१ गतेको नेपाल बन्दको दिन सूर्यविनायकमा एकत्रित हुँदै गरेको जनसमुदायलाई तितर-बितर गर्न प्रहरीले हवाइफायर गरेको थियो । पछि उत्तेजित भई जनसमूहले केही तोडफोड समेत गरेका थिए । त्यस घटनाको सिलसिलामा ४ जनालाई प्रहरीले गिरफ्तार गरेको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

२०४९ जेठ १५ र १८ गते दुई चरणमा सम्पन्न स्थानीय निकायको चुनावमा सत्ता पक्षले सत्ताको आडमा र त्यस जिल्लामा बलियो पकड भएको नेमकिपाले पनि आफ्नो शक्तिको आडमा तथा राप्रपाले पनि आफ्नो पुरानो बर्चस्वको भरमा आ-आफ्ना पक्षमा मतदाता प्रभावित पार्ने विभिन्न किसिमका क्रियाकलापहरु भए गरेको पाइयो ।

चपाचो गा.वि.स.मा मतदान भइरहेको बेला फर्जी मत खसाल्न खोज्ने कांग्रेस पक्षको विरोध भएपछि विवाद उत्पन्न भइ ने.म.कि.पा.का तर्फबाट गा.वि.स.को अध्यक्ष पदमा उम्मेदवार भएका प्रेम कृष्ण प्रजापतिलाई कांग्रेसी कार्यकर्ताहरुले कुटपिट गरी हेल्थ पोष्ट (बुथ रहेको स्थान) को छतबाट खसाल्ने प्रयास गरेका थिए । पछि सो कुराको खबर पाएर नेमकिपाको ठूलो जत्था शहरबाट उक्त स्थानमा पुगेर पुन: झडप हुन थालेपछि शान्ति सुरक्षा कायम गर्न प्रहरीले हवाइ फायर गरेको थियो ।

नगरकोट गा.वि.स.को वडा नं. ८ र ९ बाट एमालेको तर्फबाट सदस्य पदमा उम्मेदवारी दिएकालाई पूर्व सभापति तथा राप्रपाका नेता सुरेन्द्र प्रताप शाहले विभिन्न प्रलोभन देखाइ जाँड खुवाइ उम्मेदवारी फिर्ता गर्न लगाएको देखिन्छ ।

सिपाडोल गा.वि.स.मा मतदान भइरहेको बेला कांग्रेस र नेमकिपाका कार्यकर्ता बीच झै-झगडा तथा विवाद हुँदा केहीबेर मतदान स्थगित गर्नु पर्ने स्थिति आएकोले कति

मतदाता डरले गर्दा मतदान गर्नबाट समेत बञ्चित भएका थिए ।

सत्तापक्षले चुनावको मुखैमा आएर ग्रामीण स्वावलम्बन कोषको पैसा एक गा.वि.स.लाई दश हजारको दरले वितरण गरी मतदातालाई प्रभावित गर्न खोज्नुका साथै पैसा र प्रलोभन देखाइ चाँगु गा.वि.स., भौखेल गा.वि.स. आदिमा मतदातालाई प्रभावित पार्ने काम पनि भएको थियो ।

दुवाकोट गा.वि.स. सरस्वती खेलका कांग्रेस कार्यकर्ता गौरीमान थापाको भतिजा किशोर थापा लगायतका व्यक्तिहरुले कांग्रेसलाई भोट नदिएको रिसइवीले अवाल परिवारका ३-४ जनालाई कुटपिट गरी घरको ढोका समेत फोडेका थिए। पछि प्रहरीले पक्राउ गरेकोमा छुटाउन सत्ता पक्षबाट दबाब दिइएको थियो ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लाबासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

भक्तपुर जिल्ला अदालतमा यस वर्ष १०२९ वटा मुद्दा दर्ता भएकोमा सबैभन्दा बढी देवानी मुद्दा थिए । कुल मुद्दा संख्यामा २९ वटा प्रहरीबाट आएका थिए भने ३७५ वटा त्यस अवधिमा फछ्र्यौट भएका थिए ।

## ३.भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

संविधानमा महिला हक हितको यथेष्ट प्रत्याभूति गरिएको भएता पनि व्यवहारमा त्यसो हुन सकिरहेको छैन । समान कार्यको लागि श्रम गर्ने पुरुषले रु ४० पाउँछन् भने महिलाले २०-२५ रुपैया मै चित्त बुझाउनु पर्छ। यस जिल्लामा घुम्री सैनिक ब्यारेकहरु भएकोले ती क्षेत्रमा केही वर्ष अघि घटेका सामुहिक बलात्कारका घटनाहरुले महिलाहरु अहिले पनि आफूलाई सुरक्षित महशुस गर्न सकिरहेका छैनन्। र ती क्षेत्रका नजिकको बन जंगलमा दिउँसै पनि एक्लै हिंडडुल गर्न उनीहरु डराउँछन् ।

बहुविवाह पनि छिटपुट रुपले हुने गरेको पाइयो । भक्तपुर नगर पालिका वडा नं. ९ बस्ने जितेन्द्र दुवालले घर मा पत्नी हरि लक्ष्मी दुवाल हुँदा हुँदै २०४९ भदौ २९ गते कान्छी पत्नी ल्याएका थिए ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

२०४९ असोज महिनामा नवरात स्नान गर्न जान लागेकी एक महिलालाई भक्तपुर दरबार स्क्वायरबाट टौमढी जाने बाटोमा पर्ने क्यूरीयो पसल अगाडि बलात्कार गरिएको थियो भन्ने कुरा प्रत्यक्षदर्शीहरुले बताए। बेइज्जती हुने डर का कारण पीडित व्यक्तिद्वारा यो घटनालाई प्रहरीसम्म पनि पुऱ्याइएन ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

यस जिल्लाको नेवार सम्प्रदायको विशेष चाड पर्वको रुपमा पर्ने बिस्केट जात्रा चैत्र २७ देखि वैशाख ५ गतेसम्म बर्षेनी मनाइन्छ। पहिलो र पछिल्लो दिन राती रथ तान्ने पनि गरिदै आएको छ । केही वर्ष यता यस जात्रामा उच्छृंखल गतिविधि देखिन थालेका छन् । २०४८/४९ को जात्रामा जम्मा भएका अज्ञात व्यक्तिहरुले न्यातपोल मन्दिर नजिकै ढुंगा, ईंटा हान्दा ३-४ जनालाई टाउकोमा चोट लागेको थियो भने एक जनाले त एउटा आँखा नै गुमाउनु पऱ्यो । त्यसैले पनि प्रशासन, प्रहरी सबैको ध्यान ८-९ दिनसम्म बिस्केट जात्रामै केन्द्रित हुने गर्दछ ।

### ५.१ दासत्व बिरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाइँदैन ।

### ५.२ अन्य अमानवीय ब्यवहार

२०४८ फागुन ६ गते बिहान ६ बजे भौखेल गा.वि.स. वडा नं. २ मा आगलागी हुँदा गणेश प्रसाद दहालको अन्दाजी ८५ हजार् रुपैयाँ बराबर, दुर्गाप्रसाद दहालको ६८ हजार रुपैयाँ बराबर, विष्णु प्रसाद दहालको ८० हजार रुपैयाँ बराबर, हरिशरण दहालको ४५ हजार रुपैयाँ बराबर, सानुकान्छा दहालको ३१ हजार रुपैयाँ बराबर तथा नरहरी

दहालको अन्दाजी ३६ हजार रुपैयाँ बराबरको धनमाल नष्ट भएको थियो ।

चाँगु गा.बि.स. वडा नं. ५ को खोरिया गाउँमा आगलागी हुँदा चन्द्रबहादुर तामाङ, सन्तबहादुर तामाङ लगायत ९ घर तथा १४ परिवारको सम्पूर्ण नगद जिन्सी नष्ट भएको थियो । उनीहरु कसैले पनि राज्यस्तरबाट आवश्यक सहयोग पाएको देखिएन ।

दुईतिन पुस्ता अघि देखि एकजना जमिन्दारको जग्गामा मोहियानी हक प्राप्त गरी १६ रोपनी जग्गा कुतमा कमाउँदै आएका एउटा परिवार भक्तपुर जिल्ला सुडाल गा.बि.स. वडा नं. ४ जितपुरमा बसोबास गर्दछन् । अशिक्षित, सोझो त्यो नेवार परिवारको मूलिको नाम हो - सन्तबहादुर धुलिखेले श्रेष्ठ र श्रीमती जुनु श्रेष्ठ । उनीहरुको अनपढ र सोझोपनको फाइदा उठाएर २०३४ साल साउनमा च्युरा कुट्न भनि उधारो ५ मुरी धान दिइ त्यो धान बापतको पैसा तिर्न नसकेको निहुँमा साहु पूर्व प्रधानपञ्च तथा हाल राप्रपाका नेता छत्र बहादुर कार्कीले कित्ता नं. १९० र १९७ को ६ रोपनी जग्गाको मोहियानी हक निज श्रेष्ठलाई दवाब दिएर छोडेको भन्ने कागज गराई सही (ल्याप्चे लगाइ) छुटाए । उक्त मोही परिवारका अनुसार हाल फेरी बाँकी १० रोपनी जग्गा (बारी) कसरी, कुन षडयन्त्रबाट हात पार्ने भन्ने दाउमा छत्र बहादुर लागेका छन् । जग्गा धनीले कुतबाट पाउनु पर्ने ३८ पाथी अस्थाइ निस्सामा मकै देखिएको तर "हामी ढिडो खाने होइनौं" भन्दै २ मुरी धान लिने गरेका भर्पाइ गराउने गरेका छन् ।

उक्त जग्गाको छेउछाउमा श्रेष्ठले नै रोपेका बाँस, रुख त्यहीँका कार्कीले जवर्जस्ती काटिदिने गर्छन् र त्यसो नगर्न अनुरोध गर्दा उल्टै निरीह श्रेष्ठ दम्पति माथि आफ्ना सहयोगीका साथ जाइ लाग्ने गर्छन् । यस्ता घटना वारम्बार हुने गर्छ । यस्ता काममा छत्रबहादुर कार्कीलाई उनका भाइ पदमबहादुर कार्की, जमबहादुर कार्की तथा छोराहरुले पनि साथ दिने गरेका छन् ।

२०४९ सालको लक्ष्मी पूजाको दिन विहान त मोहीकी श्रीमती जुनु श्रेष्ठलाई उनकै घरमा कार्की साहुले घाँटीमा समाइ भित्तामा अचेट्ने जस्तो अमानविय काम गरे । घाँटीमा बेसरी समाएकोले उनले केही दिन भात खान र पानी निल्न समेत सकिनन् । यसरी नकुट भन्दा छिमेकी दिलबहादुर रायले समेत कार्कीको कुटाई खानु पर्‍यो । यसको उजुरी गर्न जाँदा गा.बि.स., जिल्ला प्रशासन, जिल्ला प्रहरी कार्यालय कसैले वास्तै गर्दैनन् । त्यसले गर्दा कार्कीको मनोबल बढ्ने काम भएकोछ । जीउ ज्यानको सुरक्षा गरि पाउँ र बाँसको क्षतिपूर्ति पाउँ भन्ने निवेदन उपर सम्बन्धित निकायले बेवास्ता गर्‍यो । अझ यसमा अघि बढेर गा.बि.स.ले छत्रबहादुरको दवावमा सन्त बहादुर श्रेष्ठ चरित्र हिन व्यक्ति हो भनी प्रमाणित गरि दिएको छ । "जो होचो उसको मुखमा घोचो" भन्ने उखान गा.बि.स.ले दिएको प्रमाणित पत्रले देखाउँछ ।

भक्तपुर जिल्ला क्षेत्रफलको हिसाबले सबै भन्दा सानो जिल्ला भए पनि विभिन्न जाती, तथा जनजातिका व्यक्तिहरु यस जिल्लामा बसोबास गर्दछन् । समाजमा छुवाछुतको भेदभाव गरिने जनजातिहरुमा सार्की, दमाई, गाइने, कामी, कुल्ली, कसाई, पोडे र च्यामे पर्दछन् । यी जातिका मानिसहरुलाई सकभर सार्वजनिक स्थलमा पनि (होटल, अन्य पसलमा पनि) भित्र पस्न नदिने, पस्न दिंदा पनि खाएका भाँडाहरु माझेर घोप्ट्याउनु पर्ने हुन्छ । सरकारी कार्यालयहरुमा पनि अप्रत्यक्ष रुपमा भेदभाव गर्ने गरेको कुरा पीडितहरु बताउँछन् । सरकारी सेवा (खास गरि पियन पदमा) प्रवेश गर्न नदिने पनि गरिन्छ ।

गाउँ-घरमा कुनै झगडा वा कुटपिट भएका उजुरीहरु आएमा (उत्पीडित जातिका मानिस र अन्य जातिका बीच) प्रशासनिक निकायहरुले उत्पीडित जातिका मानिसहरुलाई नै तिमीहरु जाँड-रक्सी खान्छौ, तिमीहरु नै बदमास हौ भन्ने गरेकोमा उनीहरु रोष व्यक्त गर्छन् । र भन्छन् के रक्सी उत्पीडित जातिकाले मात्र खान्छन् त ?

विश्व बाल अधिकार सन्धिमा हस्ताक्षर गर्ने नेपालको एक जिल्ला भक्तपुरमा मात्र प्राथमिक विद्यालयमै पढ्ने उमेर का २०० जति बाल मजदूरहरु गलैचा उद्योग र चिम्नी भट्टामा काम गरि जीवन धान्न बाध्य छन् ।

■



# २. मध्यमाञ्चल

## बागमती

# २.१५ काठमाडौं

| | | |
|---|---|---|
| जनसंख्या | : | ६,६८६,०५ |
| साक्षरता | : | ७०.० प्रतिशत |
| महिला साक्षरता | : | ५७.३ प्रतिशत |
| क्षेत्रफल | : | ३९५ वर्ग कि.मी. |

नेपालको राजधानी काठमाण्डौ रहेको यो जिल्ला सबभन्दा बढी जनघनत्व भएको जिल्ला हो । राजनीतिक रुपले सचेत एवं प्राय: साक्षरहरुको बसोबास भएको यो जिल्लाभित्र राणाकालदेखि अहिलेसम्म कैयन नागरिकहरुले प्रजातन्त्र र मानव अधिकारका निम्ति ज्यान आहुती गरेका छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

काठमाण्डौ जिल्ला अदालतमा ०४८ पुषदेखि ०४९ पुषसम्म प्रहरीबाट जम्मा १४ वटा हत्या सम्बन्धी मुद्दाहरु दर्ता गरिएका थिए ।

प्रजातन्त्रको बहाली पश्चात नेपालमै घटेका गोली काण्डहरु मध्ये सबभन्दा ठूलो गोली काण्ड ०४८ चैत्र २४ गते काठमाण्डौमा घटेको थियो ।०४८ माघ १० गते नेपाल कम्युनिष्ट पार्टी (एकता केन्द्र) ले ८ सूत्रीय मागहरु अघि सार्दै आन्दोलनको थालनी गरेको थियो । सोही आन्दोलनको सिलसिलामा चैत्र २४ गते नेपाल बन्द गर्न आव्हान गरिएको थियो ।त्यसै क्रममा चैत्र २३ गते बेलुकी देखि नै राजधानीमा तनावपूर्ण स्थितिको श्रृजना भएको थियो ।०४८ चैत्र २४ को घटनाबारे छानबिन गर्न बनेको नागरिक आयोगको प्रतिवेदन अनुसार सोही दिन राती साढे आठ बजे पुतली सडक स्थित शंकरदेव क्याम्पस नजिक तेह्रथुमका प्रेम गुरागाईको निधार निरबाट एउटा गोली हुन्हुनाउँदै गएको थियो । त्यसबेला पुतली सडक क्षेत्र वरिपरि बत्ती निभाउने वा ननिभाउने कुराको द्वन्द चलिरहेको थियो र सबैतिर बत्ती निभे पश्चात गुरागाईको टाउको नेरबाट गोली हुन्हुनाएको थियो ।

"नयाँ सडकमा आन्दोलनकारीहरुले २३ गते बेलुकी मशाल जुलुसको आयोजना गरेका थिए । ३० प्रतिशतले जुलुस भएको बताए भने आमसभा हुन नदिएको बताउनेको संख्या २० प्रतिशत थियो । २० प्रतिशत प्रत्यक्षदर्शीले गोली चलेपछि मात्र ईंटा हानाहान भएको बताए । ८० प्रतिशतले बिना हवाई फायर र गोली चलेको बताए" ।

स्थानिय एक सिसा पसलमा काम गर्ने १३ वर्षीय रविन्द्र श्रेष्ठलाई पनि चैत्र २३ गते बेलुकी गोली लागेको थियो । त्यस बेला सबैतिर बत्ति निभाइएकोले अँध्यारो थियो ।नयाँ सडक स्थित अमेरिकी पुस्तकालय अगाडि पहिले प्रहरीद्वारा अश्रुग्यास प्रयोग गरी त्यसको आधा घण्टा पछि चलाइएको गोली लाग्दा घाइते भएर उनी भुईमा पछारिएका थिए । २० मीटर टाढाबाट हानिएको गोलीद्वारा घाइते भएका रविन्द्रको खुट्टा समाति प्रहरीले उनलाई ध्यानमा हुत्याएको थियो । त्यसबेला उनको खुट्टा पनि मर्किएको थियो । केही मिनेट पश्चात उनलाई महेन्द्र पुलिस क्लबमा पुऱ्याइको थियो । उनलाई करिब आधा घण्टा पश्चात अस्पताल पुऱ्याइएको थियो । उनले उपचारका क्रममा १ महिना ३ दिनसम्म अस्पतालमा बस्नु परेको थियो । उनको उपचारको खर्च केही गैर सरकारी सामाजिक संस्थाहरुले बेहोरेका थिए ।

सोही दिन नयाँ सडक ढोका नेर राती पौने आठ बजे चुरोट किन्न निस्केका ६५ वर्षीय रत्न बहादुर तुलाधरको दाहिने खुट्टाको नलीहाडमा गोली लागेको थियो । गोली चल्नु अघि त्यहाँको स्थिति शान्त थियो । सो ठाउँ नजिकै

अमेरिकी पुस्तकालय अगाडि अलि ढिलो साढे आठ-नौ बजे तिर ३० बर्षिय शम्सेर शाहको देब्रे खुट्टाको नली हाडमा गोली लागेको थियो । त्यस बखत त्यहाँ १५/१६ जना भन्दा बढि मान्छे नभएको बताइन्छ ।

२४ गते बिहान १२ बजेतिर रत्नपार्कमा जनताको जमघट शुरु भयो । तर शान्तीपूर्ण ढंगले एकत्रित भएको जनसमूहलाई प्रहरीद्वारा विस्थापित गर्न थालियो । भीड पछि हट्दै गएर असन चोक तथा महाबौद्धमा पुग्यो । त्यसै बीच प्रहरी हस्तक्षेपका कारण भीड उत्तेजित हुन पुग्यो । पाटनमा गोली चलेको खबरले उत्तेजनाको आगोमा अझ घिउ थप्ने काम गर्‍यो । दिउँसो १ बजेतिर भीडमा नाराबाजी शुरु भयो । तनाब बढ्दै गयो र भीडका केही व्यक्तिले प्रहरी तर्फ ढुंगा प्रहार गरे । प्रहरीले पनि तिनै ढुंगा टिपेर भीड तर्फ प्रहार गरे । त्यसै बीच विभिन्न ठाउँमा तोडफोड भएको पनि देखियो । नयाँ सडकमा विज्ञापनका लागि राखिएका पाताहरु सडकमा फ्याँकिए । प्रदर्शनकारीहरुले प्रहरीलाई छेक्न अवरोधका रुपमा त्यस्ता पाताहरुको प्रयोग गरेका थिए । न्यूरोड नजिकैको टेलिफोन क्याबिनेट पनि बिगारिएको थियो । शाही नेपाल वायु सेवा निगमको कार्यालयका झ्याल, ढोकाहरु माथि पनि ढुंगा प्रहार गरिएका थिए । त्यस्तै भूमि सुधार र कानून मन्त्रालयका झ्यालका सिसाहरु पनि फुटाइएका थिए ।

भीड र प्रहरी बीच ढुंगा हानाहान भइरहेकै बेला दिउँसो २ बजेतिर महाबौद्धमा प्रहरीले विना चेतावनी गोली चलायो । एउटा गोली पसलभित्र बसिरहेका मनोज शाहीको पेटमा लाग्यो । उनको पेटमा प्वाल नै पर्‍यो । गोलीको आवाज सुनेर भाग्न लागेका नेपाल कानून क्याम्पस पुतली सडकका विद्यार्थी आर.पी. सापकोटा घाइते भए ।

चैत २४ गते नै सुन्धारामा ३४ वर्षीय सिकर्मी इन्द्रबहादुर कार्कीलाई घुँडामाथि दाहिने फिलामा गोली लागेको थियो । उनलाई १०० मीटर जति परबाट हानिएको गोली लागेको थियो । उनको भनाई अनुसार नयाँसडक ढोकानेर केही केटाहरु हाहा होहो गरिरहेका थिए । प्रहरीहरु त्यस बेला पीपलबोटनेर थिए । पहिले त्यहाँ अश्रुग्यास छोडिएको जस्तो गन्ध आइरहेको थियो । प्रहरीले चलाएको गोली उनलाई लागेपछि त्यही गोली अर्को १३ वर्षे बच्चाको कट्टीमा लागेको थियो ।

घाइतेलाई अस्पताल लान जनताले गाडि माग्दा शा.ने.वा.नि.ले तत्काल नदिएकोले पछि उत्तेजित भीडले शा.ने.वा.नि.को मोटरमा ढुङ्गा हाने र केही गाडीहरुमा आगो लगाउने प्रयास पनि गरेको कुरा प्रत्यक्षदर्शीहरुबाट अवगत भएको थियो । प्रत्यक्षदर्शीहरुको भनाइ अनुसार त्यहाँ पनि प्रहरीहरुले भीड अनियन्त्रित भएर, लाठीचार्ज अश्रुग्यास र ब्ल्यांक फायर गरेर चेतावनी दिई गोली चलाएको होइन ।

सोही दिन नेपाल बन्दको रुप हेर्न अरु मानिसहरु भएको ठाउँमा पुग्ने १४ वर्षका विद्यार्थी रमेश महर्जन साथीसंगै बरफ खाँदै नयाँ सडक ढोकानेर हिंड्दा दिउँसो १.३० बजे तिर प्रहरीले जुद्ध शम्शेरको शालिक वा पीपलबोट नेरबाट चलाएको गोलीबाट घाइते हुन पुगे । उनलाई पेटमै गोली लागेको थियो । गोली लागेपछि उनी बेहोश भए । उनलाई तन्नामा हालेर उपचारका लागि लगिएको थियो ।

बीर अस्पताल क्षेत्रमा दिनभरी जस्तो प्रहरीहरु तैनाथ थिए । महाबौद्ध क्षेत्रमा जनताको भीड थियो । दिउँसो ४.४५ तिर महांकाल विद्यालय अगाडि बाटोमा २ जनालाई गोली लाग्यो । गोली लाग्ने पहिलो व्यक्ति २/३ पाइला हिंडेर लड्यो । घाइतेलाई त्यहाँ जम्मा भएका मानिसहरुले उठाएर उपचारका निम्ति लगे । दोश्रो गोली लाग्ने व्यक्ति हजामको पसल अगाडि ढल्यो । कुनै एकजना मानिस आएर उठाउन खोजे, सकेनन् । तुरुन्त ५/७ जना मानिसहरु आएर घाइतेलाई उठाए ।

गोली हान्दा एक जत्था प्रहरी अगाडि लाईन लागेर उभिने र गोली हान्ने प्रहरीचाहीं तिनीहरुको पछाडी उभिएर प्रहरीकै बीचबाट राइफलको टुप्पो छिराएर फायर गर्ने गरेका थिए ।

प्रत्यक्षदर्शीहरुका भनाई अनुसार २ बजेतिर भोटाहिटी र असनको बीच भागतीर पनि मानिसहरु जुटेका थिए । केही मानिसहरुले जुलुस निकाल्ने तयारीमा नारा लगाउन शुरु गरेका थिए । त्यही बेला प्रहरीले लाठी चार्ज गर्‍यो । २/४ जना युवाहरुले प्रहरीमाथि ढुङ्गा प्रहार गरे र भागाभाग भयो । प्रहरी भाग्यो भनेर ४०/५० जनाले फेरी नारा लगाए । प्रहरी आएर त्यहाँ सामान्य स्थितिमै अश्रुग्यास छोड्यो र कुनै चेतावनी नदिईकन मानिसलाई ताकेर एक्कासी गोली चलायो । त्यसपछि साफा पसलको अगाडि सोही गोलीबाट एकजना व्यक्ति भुईमा ढलेको थियो । पछि तत्काल प्रहरीले ती व्यक्तिलाई संगीनले निर्ममतापूर्वक घोचेको र सो व्यक्ति बाँचेको अनुमान गरिन्छ । भोटाहिटीबाट प्रहरीले चलाएको गोली एक अग्ला व्यक्तिको कुमबाट पारभई पछाडिपट्टि उभिएका होचा व्यक्तिको टाउकोमा पनि बजियो । दुवै जना रगतपच्छे भएर त्यही ढले । ५/७ मिनेट पछि प्रहरीको जत्था त्यहाँ आइपुग्यो । अग्लो व्यक्तिको गलामा भएको सुनको सीक्री तथा नाडीघडी खोलेर प्रहरीले खल्तीमा हाल्यो र मानिसलाई घिसार्दै लगेर ट्रकमा फ्याँक्यो । गोली लागेका दुबैजनालाई उठाउन त्यहाँ रहेका कसैले पनि हिम्मत गरेनन् । गोली चल्दा ढलेका दुई जना मध्ये एउटाको कुमबाट र अर्काको टाउकोबाट रगत बगेको देखियो । ढलेका २ जना मध्ये एक जनाको घटनास्थलमै मृत्यु भएको थियो ।

त्यहाँ भीड उत्तेजित भएर नियन्त्रण गर्न नसकेर लाठी चार्ज, अश्रुग्यास, पानीको फोहरा र चेतावनी पछि हवाइ फायर गरेर मात्र अन्तमा गोली चलाइएको थिएन । गोली चलाउनु अघि प्रहरीले कुनै चेतावनी दिएको थिएन । असनमा त्यतिखेर गोली हान्नु पर्ने कुनै स्थिति थिएन । त्यहाँ त्यति भीड पनि थिएन । प्रहरी पछि हटिदिएको भए अथवा नआइदिएको भए असनमा कुनै अप्रिय घटना नै घट्ने थिएन भन्ने प्रत्यक्षदर्शीहरुको भनाइ रहेको छ ।

भोटाहिटीमा गोली लागेर मानिस मरेपछि साझाभवन अगाडि गणेशथानको आडमा उभिएर प्रहरीले कमलाक्षी तिर ताकेरै गोली चलाएको पनि धेरैले देखेको बताइन्छ ।

महाबौद्धमा १६ वर्षीय विद्यार्थी मनोज शाहीलाई आफ्नो पसल बन्द गरि पल्टिराखेको बेला दिउँसो १.०-१.३० बजे अकस्मात गोली लागेको थियो । गोली लाग्नु अघि लाठीचार्ज, अश्रुग्यास, हवाइ फायर, चेतावनी आदि कुनै कुरा आफु घरभित्रै भएकोले नदेखे नसुनेको कुरा उनी बताउँछन् । गोली लागेको १० मिनेट पछि ४ जनाले बोकेर उनलाई बीर अस्पताल लगेका थिए । तर प्रहरीले अस्पतालको मुख्य ढोका भित्र लैजान नदिएकोले अस्पतालको दक्षिणपट्टिको ढोकाबाट मुस्किलले उनलाई भित्र छिराइएको थियो । सरकारको तर्फबाट सो खर्च नबेहोरिएको र सरकारको तर्फबाट कोही पनि त्यस बेला उनलाई भेट्न नआएको कुरा उनी बताउँछन् । गोलीबाट उनको अन्द्रामा १० ठाउँमा प्वाल परेको थियो ।

उक्त दिन महाबौद्धमा ३५ वर्षीय व्यापारी अमर शाक्यले मानिसहरु भागेर आएकोले के भएछ भनी आफ्नो घरको तेस्रोतल्लाको झ्यालबाट मात्र के हेरेका थिए ४०-५० मिटर टाढाबाट आएको एउटा गोली सबैभन्दा पहिले उनको ७ वर्षिय बालक छोरा अनिश शाक्यको टाउकोमा र त्यसपछि उनको मुखमा बायाँ पट्टी लाग्यो । त्यही गोली उनकी छोरी सम्झना शाक्यलाइ समेत लागेको थियो । अनिश शाक्यको तत्कालै मृत्यू भयो । प्रहरीले गोली चलाइ सकेपछि छोडिएको अश्रुग्यासबाट पीडीत अनिशकी आमाले आफ्नो घाइते छोरा छोरी र पतिलाइ अस्पताल पुऱ्याइदेउ भनी प्रहरीलाई अनुरोध गर्दा उनीहरुले ठाडै इन्कार गरेको बताइन्छ । घाइते अमर शाक्य को भनाइ अनुसार, दुई चार जना युवाहरुले ढुङ्गा हानेका थिए र प्रहरीले एक्कासी पहिले गोली चलाएर अनिमात्र अश्रुग्याँसको प्रयोग गरेका थिए । गोली लाग्नासाथ उनी आफै बीर अस्पतालको आकस्मीक उपचार कक्षमा गएर उपचार गराएका थिए । गोली चलाउने आवश्यकता नपरि कुनै दुई चार जनाले ढुङ्गा हाने भन्दैमा त्यसरी गोली चलाउनु ठीक थिएन भन्ने उनको भनाई छ ।

महाबौद्धमा घटेका उक्त गोली काण्डको सन्दर्भमा प्रत्यक्षदर्शीहरुका अनुसार त्यहाँ दिउसो १२ बजे पछि जनताले प्रहरीलाई जिस्क्याउने र ईटा हान्ने गरेका थिए भने प्रहरीहरुले त्यही ईटाहरु जनतालाई फर्काउने गरेका थिए । जम्मा भएका जनताले तीन चारवटा गाडालाई जोडेर प्रहरीतर्फ गुडाउने पनि गरेका थिए । त्यहाँ कुनै तोडफोड, आगजनी, जुलुश, आमसभा आदि केही पनि भएका थिएनन् तापनि प्रहरीले एक्कासी जनताभाथि गोली चलाए । गोली हानिसकेपछि मात्र त्यहाँ अश्रुग्यास र हवाई फायर गरिएको थियो । तर त्यहाँ गोली चल्नु पर्ने स्थिति नभएको कुरामा प्रत्यक्षदर्शीहरुको एउटै राय पाइएको छ ।

बीर अस्पताल कम्पाउण्डभित्र इमर्जेन्सीको मूल ढोकामा रहेका प्रत्यक्षदर्शी स्वास्थ्यकर्मीहरुले के पनि भनेका छन् भने बीर अस्पताल अगाडि ६ राउण्ड गोली चलेकोमा पहिले त उनीहरुले त्यसलाई हवाइफायर भन्ने सम्झेका थिए । तर लगत्तै ४ जना घाइतेलाई अस्पताल ल्याइयो ।

प्रहरीले भेटेजति मृतकहरुलाई र लाठीचार्जमा परेका घाइतेहरुलाई पनि वाहनमा राखेर लाने गरेका थिए । भिड पन्छिएर भागेपछि प्रहरीले पछाडिका व्यक्तिलाई पनि पक्रेर लगेका थिए भनि प्रत्यक्षदर्शीले बताए ।

प्रेसमा काम गर्ने २० वर्षीय बिजेन्द्र श्रेष्ठलाई आफ्नो काम गर्ने ठाउँबाट भात खान घर फर्कंदा दिउसो २ बजे असन चोकमा १५ मिटरको दूरीबाट घाँटीमा गोली लागेको थियो । अर्को एकजना व्यक्तिको गोली लागी त्यही मृत्यु भएको कुरा पनि उनी बताउँछन् । असन गएको अर्को साथीलाई गोली लागेको र त्यसपछि प्रहरीले जीपमा हाली उनलाई अस्पताल पुऱ्याएको थियो ।

कमलाक्षीमा भारतको दरभंगा घर भएका, भान्छे काम गर्ने ३० वर्षीय मोहम्मद मुस्तफाको दाहिने हातमा गोली लागेको थियो । उनको भनाइ अनुसार त्यसबेला त्यहाँ लाठी चार्ज, अश्रुग्यास केही प्रहार नगरिकन एक्कासी गोली चलाइएको थियो । भोटाहिटी तर्फ जाने बाटोको छेउको साइकल पसलमा उभिइरहेको बखत १०० मिटर जति परबाट आएको गोली उनलाई लागेको थियो ।

दिउसो ४.३० बजेतिर बबरमहलस्थित आफ्नो घरको भान्छा कोठाभित्र पस्न लागेको युएसएड अधिकृत चित्राराणाको तिघ्रामा प्रहरीको गोली लाग्यो । प्रहरीको गोलीबाट चित्राराणाका अतिरिक्त ८ वर्षीय भतिजी श्रेया राणा र साढे दुई वर्षीय भतिजा प्रणव राणा पनि घाइते भए ।

प्रत्यक्षदर्शीका अनुसार बबरमहलको गोली चलेको घरबाट ५०/६० मिटर पूर्वतिर केही मानिसहरु सडकमा ईट्टा हान्दै गरेका देखिन्थे । सडकमा प्रहरीले २/३ राउण्ड गोली चलायो । यस पछि केही प्रहरी जवानहरु एक्कासि चित्राराणाको कम्पाउण्ड भित्र पसे र गोली चलाए ।

श्रीमती चित्राराणाको भनाइ अनुसार उनी चौध दिन अघि गलब्लाडरको अप्रेशन गरी घरमा आराम गरेर बसिर हेकी थिइन् । बाहिर सडकमा केटाकेटीहरुले प्रहरीलाई ढुङ्गा हानिरहेका थिए। आफ्ना बच्चाहरु कहाँछन् भनी आफ्नो घर को पेटीमा आएर हेर्दा १८/१९ वर्षका बाहिरिया दुइ केटाहरु दौडदै घरको बारी तर्फ भागेको देखेको कुरा उनी बताउँछिन् । त्यसपछि आफ्नो घरभित्र पस्न एक खुट्टामात्र ढोकामा राख्न लाग्दा चार फीटको दूरीबाट प्रहरीले हानेको गोली लागेर उनी घरभित्र लडिन । कार्यालयबाट भरखर घर आईपुगेका उनका पतिलाई देख्नासाथ प्रहरीले उनलाई पनि बन्दुक तेर्स्याएका थिए । श्रीमती चित्रा राणाका नातेदारले सुने अनुसार एकजना प्रहरीले "हानुँ" भन्दा अर्कोले "हान" भनेपछि फेरी गोली चल्यो र अर्दलीको काखमा बोकेको अवस्थामा रहेको राणा दम्पतिका बालक प्रणव र छोरी श्रेयालाई पनि त्यही गोली लाग्यो । यसरी तीनजनालाई अनाहकमा गोली हानी प्रहरीहरु फर्के । त्यसरी फर्किरहेका प्रहरीलाई श्रीमती चित्राराणाका ससुराले घरको माथिबाट "अर्काका घर कम्पाउण्डमा पसी किन गोली हानेको भन्दा कौशीतर्फ फर्किएर प्रहरीहरुले उनी तिर पनि बन्दुक ताकेका थिए भन्ने श्रीमती राणाको भनाई छ ।

लगभग ३ बजेतीर सडकमा त्यति भीड थिएन । सबैतिर सन्त्रास थियो । असनमा गोली चलेको हल्ला ओमवहालमा पनि चल्यो । त्यसै बीच ओमबहालको एउटा पसलबाट चिया पिएर निस्केका एकजना किशोर लगायत अन्य २ जनालाई गोली लाग्यो । गोली बसन्तपुर पट्टीबाट हानिएको थियो । गोली हान्नु अघि प्रहरीले कुनै चेतावनी दिएको थिएन । यथार्थमा त्यहाँ गोली चलाउनु पर्ने कुनै अवस्था थिएन ।

१२ वर्षका विद्यार्थी महेश रानामगरलाई आफ्नो दाजुसंग चिया खाएर घरबाट निस्केको बखत ओमबहाल चोकमा प्रहरीले चलाएको गोली लाग्यो । गोलीले उनको फिलाबाट पसेर उनको पेट क्षतविक्षत पारेको थियो । करीब १५०-२०० मीटर टाढाबाट हानिएको उक्त गोली चेतावनी, लाठीचार्ज, अश्रुग्यासको कुनै संकेत नदिई चलाइएको थियो ।

३२ वर्षका ट्याक्टर ड्राइभर आशाकाजी महर्जनलाई पनि ओम बहालमा प्रहरीले चलाएको गोली निजको बायाँ खुट्टामा लागेको थियो । गोली पछिल्तिरबाट पसि अघिल्तिर बाट निस्केको थियो । खाजा खानको लागी जहानले बोलाउन आएको हुँदा खाजा खान जान लाग्दा ओमबहाल चोकमा ३.३० बजे निजलाई गोली लागेको थियो । गोली लागेको ३० मीनेटपछि साथीले गाडी ल्याएर उनलाई वीर अस्पताल लगिएको थियो । त्यहाँ सामान्य ड्रेसिङ्ग गरेर पाटन अस्पताल लाने क्रममा पुलिस भ्यानमा राखेपछि अर्को अफिसरको आदेश चाहिन्छ भनेर पुरानो अंचलाधीश कार्यालयनेरको ट्राफिक अफिसमा आधा घण्टा जति प्रहरीले रोकिराखे । घाइतेले घाउ ज्यादै दुख्यो भनी जोड गरेपछि मात्र उनलाई पाटन अस्पताल लगिएको थियो । ठीक ३ हप्ता अस्पताल बस्दा उनको औषधोपचार खर्च अस्पतालले नै बेहोरेको थियो । गोली चलाउनै नपर्ने ठाउँमा गोली चलाइएको कुरा महर्जन व्यक्त गर्दछन ।

नोकरीमा संलग्न २० वर्षीय रोशन अग्रवाललाई पनि ओमबहालमा गोली लागेको थियो । गोली उनको पिठ्यूबाट पसेर कोखबाट बाहिर निस्केको थियो । उनी बाटोमा हिंड्दा त्यहाँ अश्रुग्याँसको गन्ध आइरहेको थियो भन्ने कुरा बताउँछन । गोली लागेको ५ मिनेटपछि साथीहरुले उनलाई अस्पताल पुऱ्याएका थिए ।

प्रत्यक्षदर्शीहरुका अनुसार २४ गते ४.३० बजेतिर काठमाण्डौ गणेशथान वरिपरि १६ राउण्ड गोली चल्यो गोली बसन्तपुरतिरबाट हानिएको थियो । प्रत्यक्षदर्शीहरु मध्ये कसैले २ जना कसैले ४ जना र कसैले ७ जना घाइते भएको देखें भनी बताए । गोली मानिसको हात र भुँडीमा पनि लागेको थियो र कतिपयको भुँडी नै बाहिर निस्केको थियो । गोली हान्ने प्रहरीहरुले आफ्नो अनुहारमा पट्टी बाँधेका थिए र उनीहरु चिन्न नसकिने भएका थिए । त्यहाँ रहेका प्रहरीहरु अति क्रुद्ध र उत्तेजित देखिन्थे । संफाउन बुझाउनतिर हैन सोझै गोली हान्न उनीहरु उद्यत थिए ।

चैत्र २४ गते काष्ठमण्डपमा जगत् भनिने व्यक्तिका छोरालाई गोली लागेर शिक्षण अस्पताल लगिएको भन्ने कुरा पनि केही प्रत्यक्षदर्शीहरुले बताएका छन । त्यस ठाउँमा गोली चल्नु अघि लाठी चार्ज, अश्रुग्यास र चेतावनी आदि केही नदिई प्रहरीले गोली चलाएका थिए भन्ने उनीहरुको टिप्पणी छ ।

नोकरी गरेर आफ्नो जीवीका चलाउने ५५ वर्षीय नजरमान श्रेष्ठलाई चुरोट किनेर गणेशस्थानबाट फर्किंदा दिउँसो ३/४ बजेतिर बसन्तपुरमा गोली लागेको थियो । उनलाई करीब १० मीटरबाट हानिएको गोली घुंडामुनि लागेको थियो । उपचारको क्रममा ०४९ वैशाख १ गते उनको खुट्टा काटिएको थियो ।

बसन्तपुरमै १४ वर्षका विद्यार्थी वीर बहादुर तामाङ्गलाई पनि दिउँसो ४.३० बजे बाटोमा हिंडिरहेको अवस्थामा विना चेतावनी, लाठी चार्ज र अश्रुग्यास हानिएको प्रहरीको गोली उनको बायाँ खुट्टामा घुंडामुनि लागेको थियो । गोली लागेको आधा घण्टापछि परोपकारको गाडीले उनलाई अस्पताल पुऱ्यायो ।

गोली चल्दा त्यहाँ जुलुस आमसभा केही थिएन । बसन्तपुरको प्रहरीवीट जलिरहेको थियो । त्यहाँ वरिपरि

प्रहरी नै प्रहरी थिए । अरुकसैलाई जान दिएको थिएन । प्रहरीहरुका बीचको प्रहरीबिट कस्ले जलाउन सक्थ्यो र ? जनता यताउती लाग्दै थिए । असनमा र अन्यत्र पनि गोली चलेको चर्चाले बटुवाहरु त्रसित र सशंकित देखिन्थे । त्यत्तिकैमा प्रहरीले एक्कासी जथाभावी किसिमले गोली चलायो । कुमारी गेस्ट हाउसको माथि टंकीमा २ वटा गोली लागेको दाग पछि सम्म थियो । साथै जर्मन नागरिक फ्रान्कलाई पनि खुट्टामा गोली लागेको थियो । कुमारी मन्दिर को झ्यालको गजुर पनि गोलीले ढलेको थियो । गोलीका अतिरिक्त प्रहरीले घरभित्र पसेर पनि लाठी चार्ज गऱ्यो भन्ने प्रत्यक्षदर्शीहरुको भनाई छ ।

चैत २४ गते प्रहरीले १०/१५ जना मानिस भएका ठाउँमा पनि प्रहरीले गोली चलाएको थियो । गोली चलाउनु अघि चेतावनी दिइएको थिएन ।

२०४९ वैशाख ३ गतेको गोरखापत्रका अनुसार "नेपाल बन्द" का घटनाहरुको सिलसिलामा काठमाण्डौमा ७१ जना घाइते भएका थिए ।

नागरिक छानबिन आयोगका अनुसार त्यस दिन काठमाण्डौमा आशिष वज्राचार्य (२०), कृष्ण श्रेष्ठ (१८), अनिश शाक्य (७), राधेश्याम शर्मा (४६), राजीव रघुवंशी (१९), महेन्द्र श्रेष्ठ र दुईजना नचिनिएका गरी कूल ९ जना व्यक्तिको प्रहरीको गोलीद्वारा मृत्यु भएको थियो ।

०४८ चैत्र २४ गतेको गोली काण्डका सम्बन्धमा नेमाधिसंले पनि एक छानबिन टोली बनाएको थियो । उक्त टोलीले "गोली नचलाएको भए काठमाण्डौ ध्वंस्त हुने थियो" भन्ने सरकारी भनाइलाई गलत ठहऱ्याएको थियो । नेमाधिसं र मासमका अनुसार उक्त दिन पनि ०४६ मा प्रयोग गरिएकै जस्तो टुप्पो बिगारिएको दमदम गोली नै चलाइएको थियो । उक्त दिन कतै चेतावनी दिएर गोली चलाइएको थिएन ।

घना शहरी आवादी भएकोले काठमाण्डौमा अप्रत्यासित र अस्वभाविक मृत्युहरु भइरहने गरेको देखिन्छ । ०४९ भदौ १० गते ठमेल स्थित लामटाङ गेष्ट हाउसको कोठा नं. १०९ मा ३० वर्षीय फ्रान्सिसी नागरिक लेब्रेट बारीक मृत्यु भइसकेको अवस्थामा फेला परे । पछि प्रहरी अनुसंधानका क्रममा पत्तो लाग्यो उनलाई धनमाल वा गरगहना र अमेरिकी डलरको लोभमा ५१ वर्षीय चिनीयाँ नागरिक वाङ यु फूले मारेका रहेछन् । प्रहरीले वाङ यु फूलाई सामान सहित फेला पाऱ्यो ।

०४९ भदौ १९ गते नैकापमा ५२ वर्षीय जीवनाथ रिजाल मृतक अवस्थामा फेला परेपछि प्रहरीले अनुसंधान सुरु गऱ्यो । प्रहरी सूत्रका अनुसार उनलाई काठमाण्डौ नगर पालिका वडा नं. ५ की सावित्री रिजालका साथै सोही ठाउँका शिव कुमार रिजाल र वडा नं. २ की अन्जु रिजालले कर्तव्य गरी मारेका थिए ।

त्यस्तै साङ्ला गा.वि.स. वडा नं. २ की ठूली लमिनीले ०४९ असोज १५ गते प्रहरी समक्ष आफ्ना ७२ वर्षीय मामा पोते तामाङलाई हरियो झोल र ट्यावलेट विष ख्वाइ



*महिला सुरक्षा दबाव समूह काठमाण्डौ द्वारा आयोजित ऱ्याली*

मारेको जाहेरी दिएकी थिइन् । उक्त जाहेरीमा शिव प्रसाद देवकोटालाई प्रतिवादी बनाइएको थियो ।

०४९ असोज २३ गते काठमाण्डौ नगरपालिका वडा नं. ७ कालिकास्थानका रमेश कुमार महर्जनको टाउकोमा सोही स्थानमा बस्ने धरानका मणिराज राईले कोकाकोलाको बोतलद्वारा प्रहार गरेका थिए । त्यसपछि रमेश कुमारको वीर अस्पतालमा उपचारकै क्रममा निधन भयो ।

झोर गा.वि.स. वडा नं. ७ की २० वर्षीया सरिता अधिकारीको मृत शरीर ०४९ कार्तिक २३ गते घर भन्दा १५ मीनेटको दुरीमा खेतमा मिल्किएको पाइयो । उनी कार्तिक २० गते बालाजुबाट घर तर्फ लागेकी थिइन् ।

घटनास्थल वरपरका मानिसले त्रासका कारण खुलेर कुनै कुरा बताउन नसके पनि त्यहीं नजिकै रहेको एउटा गोठमा २१ गतेका दिन त्यहाँ रहेका माटाका भाँडाहरु थुप्रै फुटेका थिए । घटनास्थलमा पुगी स.ई. गोपाल ढकालले लाशलाई हत्तपत्त ओल्टाइ पोल्टाइ पारेका थिए । त्यस बखत उनलाई त्यसो नगर्न आग्रह गरिंदा उनले आफ्नो अधिकार भएको कुरो बताएका थिए । तर पछि जाँचबुझ गर्न कुकुर ल्याइनु पर्छ भन्ने कुरो उठ्दा उनैले भनेका थिए - "अब लाश छोइ सकिएको छ, मिल्दैन ।" स्थानीय बासिन्दा बताउँछन- "स.ई. ढकालले सोधखोज गर्ने कुरामा पनि नैराश्यता देखाए ।" शंकास्पद व्यक्तिहरुसंग पनि सोधपुछ नगरिनु र कार्तिक २५ गते पक्राउ परेका केहीलाई मंसीर १ गते रिहा गरिनुले पनि घटनाका सम्बन्धमा अनेक सन्देह उठेका छन् । स.ई. ढकाल पछि बलात्कार मुद्दामा परे पश्चात र उनलाई पदबाट समेत बर्खास्त गरिए पश्चात पनि सरिता - हत्याकाण्ड विषयमा नयाँ ढंगले छानबिन थालिएको छैन ।

०४९ पुष ४ गते मच्छेगाउँ वडा नं. ७ का ७७ वर्षीय कान्छा रोक्का मादक पदार्थको सेवन गरी हो-हल्ला गर्दै थिए । उनी त्यसै क्रममा आफ्ना छोराद्वारा भएको फलामको पाइपको प्रहार बाट मृत हुन पुगे ।

०४९ पुष १५ गते धुम्बाराहीमा डेरा गरी बसेका ३७ वर्षीय बैदार तामाङ आफ्नै पिता लाल बहादुर तामाङले घचेट्दा छत बाट खसी सख्त घाइते हुन पुगे । बीर अस्पतालमा उपचार हुँदा हुँदै उनको मृत्यु भयो । मृतक बैदार तामाङकी पत्नी २४ वर्षीया सिता तामाङले प्रहरी समक्ष दिएकी जाहेरी अनुसार खुकुरीको प्रहारबाट आत्मरक्षा गर्नका लागि उनका ससुराले उनका पतिलाई धकेलेका थिए ।

## १.२ जेल

देशका कूल बन्दीहरु मध्ये २१ प्रतिशत काठमाण्डौमै रहने गर्दछन् । मध्य काठमाण्डौ, त्रिपुरेश्वरमा अवस्थित केन्द्रीय कारागार, भद्र बन्दी गृह र महिला कारागारमा क्रमशः ५१९, ३२१ र १०९ बन्दीहरु रहेका छन् ।



*झोर गा.वि.स. मा मारिएकी सरिता अधिकारी*

देशको सबभन्दा ठूलो जेल केन्द्रीय कारागारमा पंचायतकालमा धेरै राजनेताहरुले समय बिताएका थिए । राजबन्दीहरुको दवाब र सचेत शहर बीचको अवस्थितिका कारण पनि केन्द्रीय जेल तुलनात्मक रुपले नेपालको सुविधायुक्त जेलमा गनिन्छ । यहाँको जस्तो खेलकूद, पुस्तकालय र पढाई-लेखाईको सुविधा देशको कुनै पनि जेलमा प्राप्त छैन । केन्द्रीय जेलको कम्पाउण्ड भित्रै भलिवल मैदान र केही व्यायाम गर्न सकिने खुला ठाउँ छ भने जेल कम्पाउण्ड भित्रै कक्षा ८ सम्म पढाई हुने गर्दछ ।

केन्द्रीय जेलमा बन्दीहरुले आफै रकम उठाएर टेलीभीजन पनि राखेका छन् । पानीको दुःख सम्पूर्ण काठमाण्डौमै रहे पनि यहाँ ट्यांकरद्वारा आवश्यक पानी पुऱ्याइने गरिएको छ । तैपनि पानी र त्यसको अभावका कारण चर्पीहरुमा देखिएको फोहर समस्याकै रुपमा रहेको छ । राणाकालमा निर्मित यस जेलका भवन र पर्खालहरु अत्यन्त थोत्रा भइसकेकाले कुनै पनि बेला दुर्घटना हुन सक्ने पनि देखिन्छ । छतहरु ठाउँ ठाउँमा नराम्रोसंग लच्किएकाले बन्दीहरु संत्रास बीच बाँचिरहेका छन् ।

केन्द्रीय कारागार प्रशासनको मातहतमा रहेका तीन वटै जेलका लागि जेलर कार्यालयमा गोरखापत्र लिने गरिएको छ । तर त्यस बाहेक बन्दीहरुलाई कुनै पत्र पत्रिकाको सुविधा प्राप्त छैन । यस जेलमा उमेश थापा (३), दीपक श्रेष्ठ (९), गोविन्द नेपाली (७), मानबहादुर तामाङ (८), नवराज दहाल (७), नवे विश्वकर्मा (५), किशोर लामा (६), रामहरी चौलागाई (८), जीवन राई (७), लोपसाङ तामाङ (६), ज्ञान बहादुर थिङ (६), गोकुल पोडे (५), कैलाश पुन (६), सन्तोष राउत कुर्मी (१०) र मोहन सिंह धलान (९) गरी १५ जना बालकहरु पनि आफ्ना अभिभावकहरुसंग बन्दी जीवन बिताइ रहेका छन् ।

केन्द्रीय जेलको छेउमै रहेको भद्र बन्दी गृह पनि राणाकालमै भद्र शम्सेरलाई कैद गर्न बनाइएको बताइन्छ ।

भद्र बन्दी गृह भद्रगोल जेलकै नामले चर्चित छ । यो जेल र केन्द्रीय जेल उस्तै उस्तै छन् । यहाँ पनि प्रायसः ट्यांकर मा पानी ओसार्ने गरिन्छ । चर्पी र पानीको समस्या यहाँ पनि उस्तै हो । पुराना पर्खाल र छतको पिरलो यहाँका बन्दीहरुलाई पनि उत्तिकै छ । यसजेलमा पनि खेल मैदान र बन्दीहरुकै सक्रियतामा जोडिएको टेलीभीजन रहेको छ । भद्र बन्दी गृह भित्र एउटा प्राथमिक विद्यालयको व्यवस्था छ ।

भद्र बन्दी गृह भित्र गोपाल तामाङ (१०), विकास तामाङ (८), राम कुमार परियार (२) र विकास लामा (४) गरी ४ जना बालकहरु आ-आफ्ना अभिभावकहरुसंगै बन्दी जीवन बिताइरहेका छन् ।

केन्द्रीय जेलभित्र कपडा बुन्ने तान-कारखानाको पनि व्यवस्था छ । यस जेलको मध्य भागमा रहेको गोलघरलाई बन्दीहरु माफ त्रासको रुपमा लिने गरिएको पाइन्छ । गोलघर भित्र मुस्किलले उभिन सकिने स-सानो पिंजडाहरु जस्ता कोठाहरुको बीचमा सानो चोक रहेको छ । गोलघरभित्र रहेको बन्दी आम बन्दीहरु भन्दा पृथक रहेको हुन्छ । गोलघर भित्र दिसापिसाब पनि बसेकै ठाउँनेर गर्नु पर्दछ । हाल चित्र बहादुर तामाङ ५ महिनादेखि नेल हत्कडी सहित गोलघरमा थुनिएका छन् । जेल प्रशासनका अनुसार नख्खु जेलबाट फरार भएको अभियोगमा उनलाई सो सजाय दिइएको हो ।

केन्द्रीय जेलबाट केही पश्चिम तर्फ रहेको महिला जेल वास्तवमा यातना गृहका रुपमा रहेको छ । पत्र पत्रिका र पुस्तकालयको सुविधाबाट यहाँका महिलाहरु बंचित छन् । यहाँभित्र सामान्य पढाई हुने गरेकोछ । तर कूल महिला बन्दीको ४२ प्रतिशत अथवा ४६ जना पागलहरु रहेकोले यहाँको वातावरण अत्यन्त अस्तव्यस्त देखिन्छ । महिला जेल भित्र पनि अर्को जेल रहेको छ । सानो पर्खालले घेरिएको उक्त कम्पाउण्ड भित्र रहेको टहरोका स-साना कोठाहरुमा बस्ने पागल आइमाईहरुको हेरचाह गर्ने जिम्मा पनि बन्दी महिलाहरुलाई नै दिइएको छ । पागलहरु राखिने वार्डको दुर्गन्ध केही वरसम्म आउने गर्दछ । गर्मी बर्षाको बेलामा पागलहरु मर्ने गरेको प्राय सुनिन्छ भने बन्दीले आत्महत्या गरेर मरेको इतिहास पनि यस जेलसंग छ ।

यस जेलमा मनिषा तामाङ (३), राजु लामा (२), हेमन्त खड्का (५), दावा गम्बु शेर्पा (२), सुवास तामाङ (५), सुरज तामाङ (२) र मीरा बुढाथोकी (१५) गरी जम्मा ७ जना बालवालिका रहेका छन् ।

डिल्लीबजारस्थित चारखाल कम्पाउण्ड भित्र अवस्थित सदरखोर बेलाबेला विवादमा आइरहेको देखिन्छ । ०४९ पुषतिर एकजना बन्दी फरार भए पश्चात त्यहाँ बन्दीहरुमाथि भएको कडाईका विरुद्ध संघर्ष भएको थियो । बर्ष पुस्तक प्रतिनिधि यस जेलमा पुग्दा जेलर विदुर प्रसाद रेग्मीले सुरक्षाका कारण जेल भ्रमण गर्न नदिइने कुरा बताए । तर केही दिन पश्चात ०५० वैशाख १९ गते तीनै जेलर एकजना पाकिस्तानी बन्दी मल्लिक अहमद लाई भगाउने षडयन्त्रमा सामिल भएको अभियोगमा पक्राउ परे । जेलरको गैर जिम्मेवार र गलत कामको मामिलामा यो जेल बेला बेला चर्चामा आउने गर्दछ । महिला र पुरुष वार्डमा विभाजित यस जेलमा हाल जम्मा २२९ बन्दीहरु रहेका छन् । उक्त जेलको क्षमता कूल १५० जना सम्मको रहेको छ ।

सदर जेलमा ढल निकासको अत्यन्त समस्या रहेको बताइन्छ । बर्षामा त यहाँ घुँडा घुँडा सम्म पानी जम्ने गरेको बताइन्छ । यस जेलको महिला वार्ड तर्फ हाल माया गुरुङ (४), रेखा लामा (२), सजनी कार्की (३) र राजु मिजार

(२) गरी जम्मा ४ जना बालबालिका पनि आ-आफ्ना अभिभावकहरुसंग बन्दी जीवन व्यतित गरि रहेका छन् । पानीको अभाव यहाँ पनि माथि उल्लेखित जेलहरुमा जस्तै छ ।

जेलहरुमा राखिएका टेलीभीजनहरुमा नेपाल टी.भी. बाहेक अरु कार्यक्रमहरु हेर्न पाईदैन ।

## १.३ गिरफ्तारी / यातना

०४८ फागुन ७ गते प्रजातन्त्र दिवसको अवसरमा कालो झण्डा प्रदर्शन गर्ने केही विद्यार्थीहरुलाई पक्राउ गरी सार्वजनिक सुरक्षा ऐन अन्तर्गत कार्वाही चलाइएको थियो । त्यस बखत पक्राउ पर्नेहरुमा सिन्धुपाल्चोक मेलम्चीका सरोज पाण्डे, सर्लाही बोडेका गणेश चौधरी, झापा दमकका टीका पाठक, उदयपुर नानीटारका तासी शेर्पा र नुवाकोटका प्रल्हाद पोखरेल थिए । उनीहरुलाई सबै प्रतिपक्षी पार्टीहरुले आफ्नो कार्यकर्ता नभएको जनाएका थिए ।

नेपाल कम्युनिष्ट पार्टी (एकता केन्द्र) ले १९ सूत्रीय माग राखि सुरु गरेको आन्दोलनको क्रममा ०४९ वैशाख २१ गते नेपाल बन्दको आव्हान गरेको थियो । सो दिन काठमाण्डौमा एकता केन्द्रका करिब १०० जना कार्यकर्ताहरु पक्राउ परेको कुरा समाचारहरुमा जनाईएको थियो ।

०४९ कार्तिक ४ गते भारतीय प्रधानमन्त्रीको नेपाल भ्रमणको क्रममा कालो झण्डा देखाउन गएका ४ जना सांसद सहित २९ जनलाई पक्राउ गरिएको थियो । सोही क्रममा कालिमाटीबाट पक्राउ परेका ठहिंटी निवासी मनोहर लाल भन्दछन् "मलाई पुलिसले कपडा नै च्यातिने गरी कठालोमा समात्यो, अनि भ्यान नजिक ल्याएर पछाडी लात्तीले हानी त्यस भित्र कोच्यो । तर सिटमा बस्न लाग्दा ढाडमा लठ्ठीले बेस्करी हिर्कायो । त्यस पछि नाम ठेगाना सोध्ने क्रममा जगल्टाउँदै यस्तो पनि सोध्यो - "तँलाई दमनले पठाएको की मनमोहनले ?" उनी आफ्नो मुखमा पनि प्रहरीले बेस्करी हिर्काएको बताउँछन् ।

त्यस दिन कालो झण्डा देखाउने कार्यमा संलग्न रहेका संयुक्त जनमोर्चा नेपालका संसदीय दलका नेता लीला मणि पोखेल लगायत सोही पार्टीका सांसद कमल चौलागाई, नेपाल कम्युनिष्ट पार्टी (मसाल) का केशव नेपाल सहित शम्भू पौडेल, दिनेश पौडेल, अम्बिका रायमाझी, विहानी थापा, शंका लामा, राम बहादुर कुँवर, अष्ट महर्जन, राम बहादुर तामाङ, दिपक राई, पासाङ लामा, मनोहर श्रेष्ठ, राष्ट्रिय सभासद् सिन्धुनाथ प्याकुरेल, खड्ग बहादुर बुढा, काईला बा, अनिल शर्मा, श्याम श्रेष्ठ, कमला थापा, माधव रोक्का, सूर्य थापा, बाबुराम धिमिरे, विष्णु हिसुलु, जगदीश चन्द्र भण्डारी, राम बहादुर श्रेष्ठ, ओम कुमार, शिवाशंकर पक्राउ परेका थिए ।

०४९ मंसीर २९ गते बुढानिलकण्ठमा होटलमा भाँडा माझेर खाने मणीकला राईलाई प्रहरी सब इन्सपेक्टर गोपाल प्रसाद ढकालले नै बलात्कार गरेको कुरो पुष्टि भइसकेको छ । तर सो घटनाको विरोध गर्ने युवाहरुलाई प्रशासनले सार्वजनिक अपराध ऐन अन्तर्गत पक्राउ गरी यातना समेत दिएको बताइन्छ । गिरफ्तार हुनेहरु अधिकांश नेपाल कम्युनिष्ट पार्टी (एमाले) का कार्यकर्ता थिए । ती राजनीतिक एवं सामाजिक कार्यकर्ताहरुमाथि प्रहरीले मानवोचित व्यवहार नगरेको कुरा रिहा हुनेहरुले त्यसैबेला बताएका थिए । उक्त काण्डमा प्रहरीको भ्यानमा ढुंगा मुढा गरेको अभियोग लगाइ पक्राउ गरिएका युवाहरुलाई कुटपीटकै बलमा साविती गराइएको बताइन्छ ।

०४९ पुष ३ गते खेलकूद परिषद्को दशरथ रंगशाला स्थित कार्यालयबाट तोडफोड गरेको अभियोग लगाइ सोही कार्यालयका ओभरसियर हिरण्य कुमार गुप्तालाई पक्राउ गरियो । उनलाई १९ दिनसम्म डी.एस.पी. खोर हनुमानढोकामा राखी रु. दुई सय धरौटीमा छोडिएको थियो । उनलाई सार्वजनिक अपराध ऐन अन्तर्गत कार्वाहि गरिएको थियो र उनको जागिर पनि खोसिएको थियो ।

काठमाण्डौका प्रमुख जिल्ला अधिकारी रमानन्द मिश्रले जिल्लामा मानव अधिकारको ठयाम्मै उल्लंघन नभएको बताउँदै कसैलाई गैरकानूनी ढंगले पक्राउ नगरिएको बताउनु भयो । वर्ष पुस्तक प्रतिनिधिसंग अति गाह्रो मानेर कुराकानी गर्दै वहाँले कसैलाई यातना पनि नदिइएको दावी गर्नु भयो । तर वहाँसंग सार्वजनिक अपराध ऐन अन्तर्गत भएका कारवाही र ०४८ चैत २४ एवं त्यस पछिका घटनाहरुका सम्बन्धमा लिखित जानकारी मांगिदा ठाडै अस्वीकार गर्नु भयो ।

यहाँका कानूनविद्हरु प्रहरीको रवैयामा पंचायतकालको भन्दा निकै बदलाव आएको बताउँदै भन्दछन् - "केही न केही हातपात र कुटपीट त प्रहरीहरुले अझ पनि गरिरहेका छैनन् भन्न सकिने ठाउँ छैन ।"

काठमाण्डौमा ०४८ को "नेपाल बन्द" को सिलसिलामा चैत २३ र २४ गते पक्राउ गरिएका मध्ये २४ जनालाई डी.एस.पी. हनुमान ढोकामा सार्वजनिक अपराधको पूर्जि बुझाइएको थियो । त्यसै गरी २४ र २५ गते निषेधाज्ञा उल्लंघन गरेको आरोपमा ३३ जनालाई ८/८ दिनको कैद तोकी केन्द्रीय र भद्रगोल जेलमा राखिएको थियो । पक्राउ गरी सोहखुट्टे थानामा लगिएकाहरुलाई १५० पटक उठबस गराउन लगाइएको थियो । उनीहरुलाई दुई हातले कान

समातेर सोही अवस्थामा घुँडा र कुइनाले घसेर चौकीको हातामा राखिएको म्यानलाई ३ फन्को लगाउने सजाय दिइएको थियो । चैत २६ र २७ गतेको निषेधाज्ञा उल्लंघन गरेको आरोपमा २४ जनालाई प्रमुख जिल्ला अधिकारी कहाँ सजायका लागि पेश गरिएको थियो ।

## २. मौलिक अधिकार

देशको राजधानी भएकोले यहाँका बासिन्दाले देशका अन्य भागमा भन्दा मौलिक अधिकारको उपभोग गर्न पाएका छन् ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

०४८ फागुन ७, चैत २३ र २४ गतेका साथै कार्तिक ४ गतेका विरोध कार्यक्रमहरुका सन्दर्भमा यहाँ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार खोसिएको महसुस गरियो ।०४९ वैशाख २१ गते नेपाल कम्युनिष्ट पार्टी (एकता केन्द्र) द्वारा आव्हान गरिएको नेपाल बन्द र त्यसअघि देखिएको अखिल नेविसंघ भीडन्तका क्रममा पनि त्यस्तो महसुस गरियो ।०४८ चैत्र१९ गते साढे एघार बजेतिर प्रदर्शनी मार्ग स्थित रत्न राज्य लक्ष्मी क्याम्पस र नेपाल ल क्याम्पसमा अनेरास्ववियु र नेविसंघका विद्यार्थीहरु बीच सुरु भएको भीडन्त चैत २४ गते सम्मै कायम रहेको थियो । त्यस क्रममा चैत २१ गते प्रहरी हस्तक्षेप समेत भएपछि निकै विद्यार्थीहरु घाइते भएका थिए । ०४९ कार्तिक ८ गते काठमाण्डौमा आयोजित एम्नेष्टीको कार्यक्रममा हस्तक्षेप भएको थियो ।

"चिनिया राजदूतावास र काठमाण्डौको जिल्ला प्रशासनसंग पूर्व स्वीकृति लिइ तिब्बतमा मानव अधिकारको हनन बन्द गरियोस् भन्ने अपीलका साथ कार्तिक ८ का दिन एम्नेष्टी नेपालद्वारा आयोजना गरिएको विरोध जुलुसका सहभागीहरु उपर अचानक प्रहरी हस्तक्षेप गरियो र प्रजातन्त्र र मानव अधिकारलाई नेपालको परराष्ट्र नीतिको आधार स्तम्भहरु भनेर साहसिलो सार्वजनिक घोषणा गर्दै, देशमा प्रहरी प्रशासनद्वरा मानव अधिकार विरुद्ध यस्ता अमानवीय अभद्र र अशोभनीय घटनाहरु घटाइयो ।" उक्त घटना पछि नेमाधिसंले एक वक्तव्य जारी गरी उपरोक्त कुरो बताएको थियो । उक्त कार्यक्रममा महिला सहभागीहरु उपर अभद्र व्यवहार गरिएको थियो भने लाठी चार्ज गरी सहभागीहरुले बोकेको मैनबत्ती खोसिएको थियो ।

### २.२ धार्मिक स्वतन्त्रता

यहाँ धर्मनिरपेक्षका हिमायती बौद्धिकहरु संविधानमा "हिन्दू अधिराज्य" लेखिएकोमा पक्षपात भएको दावी गर्दछन् । तर दैनन्दिनको कुनै पनि धार्मिक संस्कारमा राज्यको प्रत्यक्ष हस्तक्षेप भएको देखिदैन ।यहांको पशुपति मन्दीरमा गैर हिन्दु मानिसलाई प्रवेश निषेध छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

०४८ माघ २६ गते काठमाण्डौ-५ मा भएको उपनिर्वाचनका क्रममा सत्ताधारी पार्टीका कार्यकर्ताहरुको अवान्छित हस्तक्षेपको विरोध गर्दा थानकोटमा एमालेका तत्कालिन पोलिटब्युरो सदस्य झलनाथ खनालमाथि बन्चरो प्रहार भएको थियो । वहाँलाई ठूलो चोट लाग्न पाएन । तर वहाँको चस्मा फुट्यो। सोही निर्वाचनको क्रममा ब्रम्हटोलमा नेपाली कांग्रेसका केही कार्यकर्ताहरुले पेस्तोल नै तेर्साएका कुरा एमाले सूत्र दावी गर्दछ ।

०४९ चैत १५ र १८ गते भएको स्थानीय निर्वाचनमा पनि काठमाण्डौमा थुप्रै ठाउँमा हस्तक्षेप भए । मतदाता सूचीबाट विपक्षीहरुको नाम काटिएको, निर्वाचनका क्रममा प्रतिपक्षी उम्मेदवारहरुको अपहरण गरिएको आदि थुप्रै घटनाहरु प्रकाशमा आए ।

सोही निर्वाचनका क्रममा बानेश्वरमा एमालेका महासचिव मदन भण्डारीमाथि हातपात गर्ने प्रयास भएको थियो । कालिमाटी बाफल बुथबाट फर्किरहेका एमालेका ट्रेड युनियन कार्यकर्ता राजु सिलवालमाथि पनि कुटपिट भएको थियो ।

स्युचाटार गा.वि.स. वडा नं. ४ का एमालेका वडा सदस्यका उम्मेदवारलाई मनोनयन पत्र दाखिल गर्न जाने दिन अपहरण गरिएको थियो । सोही गा.वि.स.मा निर्वाचनका दिन कांग्रेसका कार्यकर्ताहरुद्वारा बुथमा केही बेरका लागि कब्जा नै जमाइएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यहाँको न्यायपालिकाका अनुसार जिल्लावासीलाई सक्दो सुगम र निष्पक्ष न्यायिक अधिकार प्रदान गरिएको छ । न्यायपालिका र प्रहरी प्रशासनसंग सम्बद्ध पदाधिकारीहरु राजनैतिक दबाब पर्ने गरेको कुरो पूर्णत अस्वीकार गर्दैनन् । "त्यस्ता कुरालाई दबाब भन्दा पनि जनचासो भन्नु उपयुक्त होला ।" - एकजना प्रहरी अधिकृतले बताए । प्रतिपक्षी

राजनीतिक व्यक्तिहरुको भने प्रशासनमा सत्ता पक्षको निकै दवाब पर्ने गरेको बताउँछन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

काठमाण्डौका नदि किनारतिर छाप्राहरु बनाएर बसेका सुकुम्बासीहरु देखिन्छन् । त्यस्ता मानिसहरुको आधिकारिक गणना भने भएको छैन । काठमाण्डौमा भूमिहीनहरुको अर्को समस्याको रुपमा खाते बालकहरुको समस्या पनि देखा परेको छ । वाल मजदुर सरोकार केन्द्र (सीवीन) का अनुसार हाल काठमाण्डौमा मात्र एक हजार भन्दा बढी खाते बालकहरु रहेका छन् ।

## ४. महिला अधिकार

यस राजधानी शहरमा महिला अधिकारका विषयमा बेला बेला गोष्ठी र सम्मेलनहरु भई नै रहन्छन् । तर यहाँ पनि महिला अधिकारमाथि कैयन वाधाहरु तेर्सीएको देखिन्छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

०४८ पुष देखि ०४९ पुषसम्म काठमाण्डौ जिल्ला अदालतमा प्रहरीका तर्फबाट १४ वटा बलात्कारका मुद्दाहरु दर्ता भएका थिए । आधुनिकीकरणका साथ साथै काठमाण्डौमा वेश्यावृत्ति पनि निकै बढ्दै गएको देखिन्छ । एक सर्वेक्षण अनुसार काठमाण्डौमा मात्र पाँच हजार युवतीहरु वेश्यावृत्तिमा संलग्न छन् । त्यही आधारमा भन्न सकिन्छ नेपालको यस राजधानी शहरमा महिलाहरुको किनबेचको समस्या तीव्र भइसकेको छ । जिल्ला अदालतमा पुगेका जिउ मास्ने बेच्ने अपराध सम्बन्धी मुद्दाहरुले पनि सोही कुराको पुष्टी गर्दछन् ।

यस जिल्लामा बलात्कारको समस्या पनि बढ्दै गएको छ । ०४८ चैत्र ३ गते कुलेश्वरमा एक जना स्वास्थ्य कर्मचारीकहाँ काम गरी बस्ने बालिका झुमा थारुलाई सोही ठाउँमा डेरा गरी बस्ने धादिङका २३ वर्षीय प्रेम बहादुर सार्किले राती ९ बजे त्यहिंको चौरमा लगी बलत्कार गरेका थिए।

०४९ असार ३ गते रंगशालामा "मार्चपास" हेरि रहेकी ७ वर्षीया मिरा गुरुङलाई अपहरण गरेर कुमार लामाले अति क्रुरतापूर्वक बलात्कार गरेका थिए। ४ गते विहान ठमेल स्थित अर्थ हाउस लज सफा गर्दा सफाइ कर्मचारीहरुले कोठा नं. ४०५ मा ती बालिकालाई रगताम्मे अवस्थामा फेला पारेका थिए। कोठामा बाहिरबाट ताल्चा मारिएको थियो। उपचारका क्रममा मीराको गुप्ताङ्गमा करिब १२ वटा टाँका लगाइएको कुरा चिकित्सकहरुले बताएका थिए। त्यसै ताका बौद्धमा जीरीकी रत्नमाया क्षेत्रीलाई एक जना महर्जनले बलात्कार गरेका समाचार पनि आएको थियो ।

त्यसैताका ०४९ साउन १२ गते कलंकी रिङरोड बल्खुखोला नेर बनेपाकी कोपिला क्षेत्रीलाई कलंकीका गौतम थापा, नरेश महर्जन, मिठाराम माली, नरेश श्रेष्ठ र साईला तामाङ मिलेर बलात्कार गरेको बताइन्छ ।

०४९ साउन २४ गते दोलखा जाने गा.बि.स. वडा नं. ३ की १३ वर्षीया अंजु नेपालीलाई खोटाङ रोसाङुलुखर्क गा.बि.स. बडा नं. ७ का चन्द्र बहादुर बस्नेतले डेराकोठामै बलात्कार गरेको कुरा पनि थाहा भएको छ ।

०४९ भदौ १३ गते सोलू पंचन गा.वि.स. बडा नं. ८ की ५ वर्षीया निर्मला राईलाई काठमाण्डौ नगरपालिका वडा नं. १० का ३० वर्षीया विष्णु पौडेलले बलात्कार गरेको कुरा पनि प्रहरी सूत्रबाट थाहा भएको छ । बेलुकी साढे सात बजेतिर घरबाट चकलेट किन्न निस्किएकी निर्मलालाई वानेश्वर महादेवस्थान स्थित स्वान गारमेन्ट नजिकै बलात्कार गरेका थिए । निर्मलाका बाबु महादेवस्थान वानेश्वरमा चिया पसल खोलेर बसेका छन् ।

०४९ भदौ २६ गते सर्लाही गौरीशंकर गा.वि.स. बडा नं. ७ की १४ वर्षीया सुन्तली दमिनीलाई सोही जिल्ला तिजकापुर गा.वि.स. बडा नं. ५ का २२ वर्षीय शिवलाल दमाईले काठमाण्डौमै धामी कहाँ झारफुक गर्न जाँदा बलात्कार गरेका थिए ।

०४९ असोज २ गते स्थानीय भोटे बहाल स्थित "गार्मेन्ट फ्याक्ट्रीका" मालिक बनवारीलालका जेठा छोरा सावर मलकी २ महिना अघि मात्र विवाह गरिएकी पत्नी सन्तोषीको स्टोभले जलेर बीर अस्पतालमा उपचार गर्दा गर्दै मृत्यु भयो । त्यसको ९ महिना अघि मात्र उनकी पहिलो पत्नीको पनि रहस्यमय ढंगले मृत्यु भएको बताइन्छ ।

०४९ कार्तिक ९ गते सामाखुसी स्थित नागार्जुन कार्पेट कारखानामा काम गर्ने चितबन मंगलपु गा.बि.स. बडा नं. ५ का इन्द्र अधिकारी, इन्द्र भण्डारी र भावना प्याकुरेललाई डर त्रास देखाइ काठमाण्डौ नगरपालिका बडा नं. २९ का २६ बर्षीय धिरेन्द्र प्याकुरेल, २५ बर्षीय मधुकर राज भंडारी र जोरपाटीका २५ बर्षीय राजेश श्रेष्ठ, लक्ष्मण अधिकारी र बुद्धिरत्न शाक्यले मिलेर बलात्कार गरेको कुरा पनि थाहा हुन आएको छ ।

०४९ कार्तिक १८ गते सुन्टोल गा.वि.स. बडा नं. २ का राम प्रसाद ढंगोलले ताहचलकी ११ वर्षीया मिना कुमारी शाहीलाई बलात्कार गरेका थिए ।

०४९ कार्तिक २३ गते सिंधुली भीमान गा.बि.स. बडा नं. ३ का २२ बर्षीय रामहरी लुईटेलले गौरीधारामा मकवानपुर पालुङ गा.वि.स. बडा नं. ८ की ५ बर्षीया मोहन

माया श्रेष्ठलाई बलात्कार गरेका थिए ।

०४९ कार्तिक २४ गते रसुवा रुन्से पानी गा.वि.स. वडा नं. ६ की ४ वर्षीया सुमित्रा तामाङलाई ललितपुर बुढमती गा.वि.स. वडा नं. २ का ३५ वर्षीय अन्तमान शाक्यले ताहाचलमा बलात्कार गरेका थिए ।

०४९ मंसीर २९ गते बुढानीलकण्ठमा २२ वर्षीया महिला श्रमिक मणिकला राईलाई स.ई. गोपाल प्रसाद ढकालले प्रहरी चौकी भित्र ल्याइ बलात्कार गरेका थिए ।

पछि मणिकला राईलाई उनकै एक नातेदार र प्रहरीसंग उनको घर भोजपुर पठाइएको थियो । धरान हिंड्नु अघि उनले विलाप गर्दै भनेकी थिइन् । - "चार जना प्रहरीले म बसेको होटलबाट राती चौकी भित्र ल्याएर मलाई जबरजस्ती गर्न खोजे । मैले मानिन, मलाई पाइप र बुटले हिर्काए । सहन नसकेर मैले गुहार मागें । त्यसपछि मेरो सारी मुखमा कोची दिएर, दुई वटा फुली लगाउनेले जबर्जस्ती मेरो इज्जत लुट्यो ।"

काठमाण्डौमा कार्पेट कारखानामा महिलाहरुको यौन शोषण हुने गरेको देखिन्छ । यहाँका कार्पेट कारखानाका मालिक र मेनेजरहरुको व्यवहारका कारण श्रमिक महिलाहरुले असुरक्षित महसुस गरिरहेको देखिन्छ ।

काठमाण्डौमा यस वर्ष दाइजो प्रथाले श्रृजिएका समस्याहरु पनि देखा परे । ०४८ चैत्र गते देखी राजधानीमा संध्या गुप्ता नामकी एक महिलाले दाइजो कम ल्याएको आरोपमा लोग्ने, सासू र ससुराको उत्पिडन खानु परेको समाचार निकै चर्चामा आयो । अनामनगरका ओम प्रकाश गुप्ताकी पत्नी संध्या संध्याले घरमा मनिसहरुले गरेको कुटपिटको उपचार गराउन शिक्षण अस्पतालको केबिन नं. ३०२ मा १९ दिन बिताउनु परेको थियो ।

त्यस्तै ०४९ बैशाख अन्तिम साताातिर विशाल बजारमा एक व्यापारीकी छोरी रिन्कु अग्रवाललाई घरका मानिसले दिएको यातनाका बयानहरु पनि प्रकासित भएका थिए । ज्ञानेश्वरका बजरंग बागलाका छोरा श्याम सुन्दर बागलाकी पत्नी रिन्कुलाई विवाहको भोली पल्ट देखिनै दाइजो कम ल्याएको अभियोग लगाउँदै सताइएको कुरा प्रकाशमा आएको थियो । त्यसबेला रिन्कुले बताएकी थिइन मेरो जिउमा तातो आइरन समेत लगाइयो । जीवन देखी वाक्क भएर मैले एक चोटी आत्महत्याको समेत प्रयास गरे ।

०४९ कार्तिक १३ गते चितलाङ घर भई गैह्री धारा डेरा गरी बस्ने एकजना ३५ वर्षीया महिलाकी पाँच वर्षीया छोरीलाई सिन्धुली भीमान्‌का रामछी लुइटेलले बलात्कार गरेका थिए । उपचारको क्रममा ती बालिकाको गुप्ताङ्गमा ७ टांका लगाउनु परेको थियो ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

काठमाण्डौमा जारी, देउकी र बादी प्रथाको अस्तित्व छैन । तर यहाँको अदालतमा पनि बहुविवाहका मुद्दा दर्ता भएका छन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

बाल मजदूरीको समस्याले काठमाण्डौलाई ग्रस्त पारेको छ । बाल मजदूर सरोकार केन्द्र (सीवीन) का अनुसार काठमाण्डौ शहरमा १ लाख २० हजार बाल मजदूर गलैंचा उद्योगमा संलग्न छन् । उक्त संस्थाका अनुसार काठमाण्डौ जिल्लाका करिब २ सय ५८ वटा ईटाभट्टाहरुमा काम गर्ने मजदूरहरु मध्ये १३ प्रतिशत भन्दा बढी बाल मजदूरहरु रहेका छन । त्यस्तै काठमाण्डौ शहरका स-साना होटलहरुमा लगभग ८ हजार ग्रामिण बालकहरु होटल कान्छा भएर जीवन बिताइ रहेका छन । काठमाण्डौ शहरमा करिब डेढ सय बालकहरुले आफ्नो जीवन जुत्ता पालिस गरेर धान्ने गरेको बताइन्छ ।

पर्यटन केन्द्रको रुपमा रहेको काठमाण्डौमा रहेका कतिपय तारे होटलहरुमा मजदूरहरुमाथि निकै ज्यादती हुने गरेको बताइन्छ । कतिपय होटलमा न्यूनतम सुविधाहरुलाई आन्तरिक नियमद्वारा काटिएको पनि पाइन्छ ।



# २. मध्यमाञ्चल

## बागमती

## २.१६ धादिङ्ग

| | | |
|---|---|---|
| जनसंख्या | : | २७८४८८ |
| साक्षरता | : | ३३.३ प्रतिशत |
| महिला साक्षरता | : | १९.० प्रतिशत |
| क्षेत्रफल | : | १९२६ बर्ग कि.मी. |

धादिङ बागमती अञ्चलका सातवटा जिल्लाहरुमध्ये न ज्यादा दुर्गम न उस्तो सुगम जिल्लाका रुपमा चिनिन्छ । तर धादिङका उत्तरी भेग भने धेरै अर्थमा काठमाडौंबाट टाढा छ । यहाँ मानव अधिकार उल्लंघनका घटनाहरु छिटफुट रुपमा घटि रहन्छन् । चुनावताका हुने गरेका अवान्छित हस्तक्षेपहरु यहाँका बासिन्दाहरुले वर्षौ देखि भोग्दै आएका छन् । प्राय: हरेक ग्रामीण समाजमा पाइने मानव अधिकार इतर परम्परागत संस्कारहरुको धादिङमा पनि बाहुल्य रहेको छ ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

सम्मानित रुपले बाँच्न पाउने अधिकारको यहाँको परिवेशमा विवेचना गर्दा ग्रामीण बासिन्दामा रहेको अधकल्चो राजनीतिक चेतनाको उल्लेख गर्नै पर्ने हुन्छ । कैयन पटक साधारण लेनदेनबाट शुरु भएको झैझगडा समयान्तरमा राजनीतिक मुद्दा बन्ने गरेको पनि यहाँ पाइएको छ ।

*राजनीतिक उग्रताका कारण धादिङमा भएका मानव अधिकार उल्लंघनका घटनाहरुको जिकिर गर्दा राष्ट्रिय प्रजातन्त्र पार्टीका रेगमान तामाङको हत्यालाई पनि उल्लेख गर्नै पर्ने हुन्छ । स्थानीय तिप्लीङमा २०४८ बैशाख १० गतेका दिन राष्ट्रिय प्रजातन्त्र पार्टीको सभा सम्पन्न गरी बैठक संचालन गरिरहेको अवस्थामा तामाङको हत्या भएको थियो । धादिङमा यस हत्यालाई राजनीतिक हत्याको रुपमा लिइएको छ र हत्या हुनु अघि नेपाली कांग्रेस र उल्लेखित पार्टीका कार्यकर्ताहरु बीच भनाभन मात्र होइन लाठी-छुरी सहित आक्रमण-प्रत्याक्रमण भएको बताइन्छ । हाल उक्त हत्याकाण्डका निम्ति प्रशासन द्वारा अभियुक्त ठहऱ्याइएका दस जना फरार रहेका छन भने एकजना शिक्षक सहित पाँच जना गिरफ्तारीमा परेका छन् ।*

लेनदेनको झगडाका क्रममा साहु गणेशबहादुर अधिकारी माथि २०४८ चैत्र १५ गतेका दिनमा बन्चरो प्रहार भए पश्चात् प्रहार गर्नेका पक्षमा नेपाली कांग्रेसका स्थानीय व्यक्तिहरु नै देखिए । त्यसपछि घटनाले नयाँ मोड लियो र उक्त झगडा राष्ट्रिय प्रजातन्त्र पार्टी र नेपाली कांग्रेसको झगडामा परिणत हुन पुग्यो ।

२०४९ असोज २० गते बडादशैंको टिकाको दिन स्थानीय त्रिपुरेश्वर गा.बि.स. बडा नं. ४ मा एउटी ७/८ महिनाकी गर्भवती महिलाको अपर्झट मृत्यु भएको थियो । रौटहटका कृष्णकुमार मिश्र नामक व्यक्तिकी श्रीमतीलाई सैनिक कर्मचारी मदन थापाले जारी गरि भगाएर ल्याएका थिए । मदन थापा उक्त दिन जेठी श्रीमतीसंग पहिलेको ससुराली तर्फ लागे पश्चात् घरमा एक्लै रहेकी नव बिबाहिता तील कुमारी थापा मृत अवस्थामा फेला परेकी थिइन् । उक्त मृत्युलाई धादिङका धेरै जसो राजनीतिक कार्यकर्ता वा सामान्य मानिसहरु आत्महत्या नै ठान्दछन् । पोष्टमार्टमको रिपोर्टमा पनि बिषालु औषधिको सेवन गरि आत्महत्या गरि एको कुरा उल्लेख गरिएको छ । तर संयुक्त जनमोर्चाका स्थानीय नेता मोहन कार्की उक्त मृत्युलाई हत्या नै ठहऱ्याउनु हुन्छ । यहाँको बिचारमा त्यस घटनाको राम्रोसंग छानबीन नै भएको छैन ।

धादिङको सदरमुकाम धादिङ बेँसीमा २ रोपनी जग्गामा फैलिएर रहेको जेलको निर्माण २०३८ मा मात्र भएको हो । तर उक्त जेल अत्यन्त जीर्ण भइसकेको देखिन्छ। जेलको पर्खाल ढल्नै आँटेको जस्तो देखिन्छ भने छाना चुहिने गर्दछ । "माकुराको जालो जस्तो यो जेल स्वास्थ्य, सुरक्षा वा सामाजिक वातावरण कुनै पनि दृष्टिले ठीक छैन ।" जेलका वरिष्ठ कर्मचारी नै यस्तो धारणा व्यक्त गर्दछन् ।

त्यहाँ जेलको मर्मतका लागि इष्टिमेट समेत भइसक्दा पनि त्यसतर्फ कुनै पाइलो चालिएको छैन । करिव १६ x ८ हातको एउटा कोठामा तीस जनासम्म बन्दीहरु राख्ने गरिएको छ । हाल पनि त्यहाँ उन्नाइस जना बन्दीहरु राखिएका छन् । जेलका बाँकी दुई कोठाहरु मध्ये एउटामा नौ जना बन्दीहरु राखिएका छन् भने अर्को एउटा खाली रहेको छ ।

जेलको कोठामा माथि पट्टि करिब १.५ x २ फीटको आँखी झ्याल मात्र रहेको छ। कोठा भित्र हावाको निकास हुन सक्ने स्थिति छैन र सम्पूर्ण कोठामा ध्वाँसो पोतिएको छ । बन्दीहरुले राती कोठा भित्रै दिसा-पिसाब गर्नु पर्दछ । बन्दीहरुका लागि तीन वर्षमा मात्र एउटा गुन्द्री बाँड्ने गरिएकोले कतिपय बन्दीहरुले चिसो सिमेन्ट मै सुत्ने गरेको समेत पाइयो। बन्दीहरुले बुन्ने गरेको नाम्लोमा पनि अनुचित फाइदा उठाउने गरिएको देखियो । कैदीहरु वकिलहरुबाट ठगिने गुनासो पनि यहाँ सुन्न पाइयो ।

## १.३ गिरफ्तारी / यातना

यस वर्ष धादिङमा राजनीतिक गिरफ्तारी उल्लेखनीय ढंगले भएको पाइदैन । वर्षको अन्त्यतिर मैदीको जात्रामा आफूलाई नेपाली कांग्रेस र नेकपा (एमाले) समर्थित ठान्ने दुई पक्ष बीच भीडन्त भएपश्चात् एमाले भनेर दाबी गर्नेहरुलाई बिना पूर्जी दुई दिनसम्म थुनामा राखि छाडिएको थियो ।

२०४९ असार १९ गते महादेवबेसी परियोजनाको गाडी चोरीको अभियोगमा पक्राउ परेको ड्राइभर कर्णबहादुर कार्की र खलासी कृष्ण गुरुआचार्यलाई प्रहरी हिरासतमा कठोर यातना दिइएको कुरा बताउँछन् । आफूलाई हातका औंलामा पीन रोप्ने, बुट र लाठीले हिर्काउने आदि गरिएको कुरा बताउने कर्ण बहादुर कार्की भन्दछन् उनीहरुलाई अझसम्म ओढ्ने ओछ्याउने वस्तु पनि उपलब्ध गराइएको छैन ।

चोरी गरेको अभियोगमा २०४८ चैत्र ४ गते पक्राउ परेका तेइस वर्षीय कृष्ण बहादुर मगरका अनुसार दुई दिनसम्म प्रहरीले कठोर यातना दिएकोले मात्र उनले अभियोग स्वीकार गरेका थिए ।

प्रहरीले यातना दिने गरेको कुरा सम्बन्धित निकाय वा प्रशासनसंग सम्बद्ध व्यक्तिहरु अस्वीकार गर्दछन् । जुनसुकै पक्षका पनि स्थानीय नेताहरु प्रहरीले शारीरिक यातना दिएको कुराबारे उनीहरु अनभिज्ञ रहेको बताउँछन् । एकजना कानून व्यवसायी बताउँछन्- "प्रहरी समक्ष गरेको स्वीकारोक्तिलाई अदालतमा आएर इन्कार गर्ने चलन व्यापक भएबाट अझै पनि यातना दिने गरिएको छैन भन्न सकिदैन ।"

२०४८ चैत्र ११ गते एकसय बयासी किलोग्राम चरेस ओसारी रहेको अवस्थामा पक्राउ परेका तेजलाल तामाङ, भीमसेन भण्डारी, गोकर्णबहादुर थापा, शेरबहादुर थापा, बासुदेव थापा, शिवबहादुर थापा र धनबहादुर तामाङ उनीहरुले चार दिनसम्म यातना पाएको कुरा बताउछन् । टाउकोमा समेत लाठी र बुटले हिर्काइएको कुरा उनीहरु बताउँछन् ।

# २. मौलिक अधिकार

## २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

यस जिल्लामा संविधान प्रदत्त मौलिक अधिकारहरुको उपभोग गर्न पाइएको छैन भन्ने कुरा सत्ताधारी पार्टीसंग सम्बद्ध व्यक्तिहरु नै पनि बताउछन् ।

यद्यपि जिल्ला प्रहरी कार्यालयका अनुसार २०४९ माघसम्म सार्वजनिक अपराधका मुद्दाहरुको यस जिल्लामा प्रयोग भएको छैन । तर सबै पक्षका खासगरी नेपाली कांग्रेस र नेकपा(एमाले) का नेताहरु आफ्ना मान्छे पक्राउ परे छोडाउन र अर्को पक्षका परे थुनाउन आउँछन् भन्ने कुरा प्रहरी सूत्र बताउँछ ।

पार्टी विशेषका राजनीतिबाट असंलग्न बुद्धिजीविहरु बताउँछन् "जहाँ जुन पार्टीको बाहुल्यता रहेको छ, त्यहाँ सोही पार्टीले मानव अधिकारको उल्लंघन गरेको पाइन्छ ।" २०४९ को दशैंताका धुवाँकोट गा.वि.स.मा नेकपा (एमाले) र संयुक्त जनमोर्चाका कार्यकर्ताहरु बीच झै झगडा मात्र होइन हात हालाहाल समेत भएको थियो । स्थानीय निर्वाचनमा एमालेको विजय भएको उक्त गाउँमा जनमोर्चाको त्रासले गर्दा विजयी पार्टीले जुलुस समेत निकाल्न नसकेको र उल्लेखित झगडामा स्थानीय माध्यमिक विद्यालयका प्रधानअध्यापकमाथि प्रहार पनि भएको थियो । बेनिघाट गा.वि.स. चरौंदीमा एमाले र जनमोर्चाका कार्यकर्ताहरु बीच अद्यापी भेला-भक्षत झडप भइरहने गर्दछ ।

## २.२ धार्मिक स्वतन्त्रता

जिल्लाको उत्तरी क्षेत्र अर्थात क्षेत्र नं. १ मा बौद्ध र क्रिश्चियन धर्मावलम्बीहरुका बीच बरोबर झै-झगडा हुने गर्दछ । त्यहाँका बासिन्दाहरु सुरुवातमा क्रिश्चियन थिएनन् । तर धर्म परिवर्तन गरेपश्चात क्रिश्चियन बनेका कतिपय बासिन्दाहरुलाई गाउँ-निकाला गरिएको पाइयो ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यहाँको जिल्ला प्रशासनले २०४९ असार-साउनमा भएको स्थानीय निर्वाचनमा अप्रत्यक्ष रुपमा हस्तक्षेप नै गरेको थियो । उक्त निर्वाचनका क्रममा धाँधली, बुथ कब्जा आदि सबै प्रकारका घटनाहरु घटेका थिए । खासगरी जिल्लाको उत्तरी भेगका १० वटा गा.वि.स.हरुमा नेपाली कांग्रेस र राष्ट्रिय प्रजातन्त्र पार्टी बाहेकका दलहरुले कतिपय ठाउँमा मनोनयन पत्र समेत दाखिल गर्न पाएनन् । गुम्दीमा एमाले र संयुक्त जनमोर्चा दुवै मिलेर प्रतिकार गर्दा समेत नेपाली कांग्रेसका युवाहरुको अवाञ्छित क्रियाकलापलाई रोक्न सकेनन् । सेमजोङ गा.वि.स.मा राष्ट्रिय प्रजातन्त्र पार्टी र नेपाली कांग्रेस बीच प्रतिस्पर्धा रहेको थियो । तर प्रशासनले बाटैमा नेपाली कांग्रेस पक्षलाई निर्विरोध भएको प्रमाण-पत्र प्रदान गरिदियो । लापामा सोही चुनावका क्रममा राष्ट्रिय प्रजातन्त्र पार्टीका कार्यकर्ताहरुद्वारा कांग्रेस पक्षीय टेकबहादुर तामाङ कुटिए । सेमजोङमा भने कांग्रेसका कार्यकर्ताहरुबाट जेष्ठ १८ गते रा.प्र.पा.का मोहन श्रेष्ठ माथि हातपात भयो । उक्त निर्वाचनका क्रममा उत्तरी क्षेत्रका १० वटा निर्वाचन केन्द्र मध्ये ७ वटा सत्ता पक्षले र ३ वटा रा.प्र.पा.का कार्यकर्ताहरुले कब्जा गरेका थिए भनेर अन्य प्रतिपक्षी पार्टीका कार्यकर्ताहरु बताउँदछन् । उनीहरुले तत्कालिन प्रजिअ सत्ताको ज्यादै निकट रहेको चर्चा पनि गरे ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

"अदालतबाट हेर्दा जिल्लाको न्यायिक स्थिति राम्रो छ । तर यहाँका निमुखा जनता सामाजिक न्यायबाट भने बंचित छन् ।" धादिङका राजनीतिक कार्यकर्ताहरु यस्तो विश्लेषण गर्दछन् । अदालतमा दवाव पर्छ कि पर्दैन भन्ने विषयमा केही विवाद देखा परेको भए पनि अधिकांश राजनीतिक कार्यकर्ताहरु स्वतन्त्र न्यायपालिकाको स्वतन्तत्र अस्तित्व रहेको कुरा स्वीकार गर्दछन् ।

अपराधीलाई कारवाही नगराउन समेत बेलाबेला सत्ता पक्षको दवाव पर्ने गरेको कुरा यहाँका राजनीतिक कार्यकर्ताहरु बताउँछन् । रेगमान तामाङको मुद्दामा अदालतमाथि समेत दवाव दिन खोजिएको दावी पनि केही राजनीतिक पक्षको रहेको छ ।

जिल्ला प्रहरी कार्यालयका अनुसार अभियुक्तहरु माथिको कार्वाही अघि बढाउने क्रममा थेर-थोर मात्रामा प्रायः सबै राजनीतिक पार्टीहरुको दवाव खप्नु पर्दछ । जिल्लाका न्याय क्षेत्रसंग सम्बद्ध व्यक्तिहरु बताउँछन् - न्यायलयबाट सन्तोष गर्न सकिने ठाउँ छ, तर अर्ध-न्यायिक निकायहरु- नापी, मालपोत आदिमा भ्रष्टाचारले नराम्रोसंग जरो गाडेको छ । तर जिल्लाका केही वरिष्ठ राजनीतिक कार्यकर्ता भने अदालतको कार्वाहीबाट सन्तुष्ट नभएको पनि पाइयो । "न्यायधिशले संयमी भएर मुद्दाको फैसला गर्नु पर्नेमा बन्दीहरुको अशिष्ट व्यवहारबाट प्रभावित भएर निर्णय गरेको पनि यदाकदा देखिन्छ । कटुन्जे गा.वि.स. निवासी टक्कर बहादुर तामाङ विरुद्धको ज्यान मुद्दामा यथेष्ठ प्रमाण नहुँदा पनि गंजीमा रगत लागेको भरमा ती तामाङलाई बीस वर्ष कैदको सजाय सुनाइयो । जबकी डाक्टरी प्रमाण पत्रमा पनि उनको गंजीमा लागेको रगत मृतकको होइन भन्ने लेखिएको थियो ।" एकजना त्यस्तै राजनीतिक कार्यकर्ताले आफ्नो भनाई यसरी राखे ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

वेश्यावृति र रक्सीका लागि कहलिएको राजमार्गको छेउमा पर्ने धादिङको सानो बस्ती चरौंदीमा बेला बेला महिलाहरु माथि हातपात हुने गरेको मात्र देखिंदैन । त्यहाँ झैझगडा पनि अत्यधिक हुने गरेको छ ।

### ४.२ जारी, बहु बिबाह, दैउकी, बादी प्रथा

धादिङमा बहु-विवाह र बाल-विवाह पनि प्रशस्त देखिन्छ । यहाँ प्राय: जसो विधवा आइमाईलाई बोक्सी भनेर दु:ख दिने गरेको पनि पाइएको छ । रि गा.वि.स. वडा नं. ३ कुतालकी ६८ वर्षीय माया तामाङ्नीलाई २०४९ असार २८ गते बेलुकी बोक्सीको आरोप लगाई गाउँबाटै लखेटियो । उनलाई करिव ५० जनाको जमातले कागज गरी गाउँ निकाला गरेका थिए । र प्रहरीले त्यस्तो कामलाई रोक्न खोज्दा उदण्ड युवाहरु प्रहरीमाथि नै जाइलाग्ने संभावना देखिए पश्चात प्रहरी पनि चुप लागेको थियो ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व बिरुद्धको अधिकार

सेमजोङ गा.वि.स.का एकजना सिंखडा साहुको घर मा १४ वर्षको उमेरदेखि हली बस्दै आएका ५३ वर्षीय चंखे नेवार भन्दछन् - "मलाई ६ मुरी धान आउने खेत दिन्छु भन्ने साहुले यो बुढेसकालमा खाली हात निकाली दिए । मेरो अब केही छैन ।" यस्ता हलीहरु धादिङका अन्य ठाउँहरुमा पनि छन् भन्ने अनुमान गरिन्छ ।

### ५.२ अन्य अमानवीय व्यवहार

धादिङमा छुवाछुत पनि व्यापक देखिन्छ । तीन वर्ष अघि मैदीका एकजना उपल्लो जातिको मनिने युवाले तल्लो जातकी केटीसंग बिहे गरेकोले गाउँ नै छोड्नु पर्‍यो ।

जिल्लाको क्षेत्र नं. १ को उत्तरी भाग र राजमार्ग छेउको दक्षिणी भेगका क्रमश: तामाङ र चेपाङहरुको स्थिति अत्यन्त दयनीय रहेको देखिन्छ । उनीहरुसंग दुई महिना खान पुग्ने खेती पनि छैन ।

पर्याप्त कपडा नहुने चेपाङहरु जाडोमा आगोको भर मा अंगेनाको वरिपरि सुत्ने गर्दछन् । उनीहरु अधिकांश समय च्यूरी, तरुल, गिठ्ठा र सिस्नुले जिविका धान्ने गर्दछन् । सरकारले प्रजा विकासका लागि निकासा गरेको अपर्याप्त रकममा समेत अकूत भ्रष्टाचार हुने गरेको देखिन्छ । तर ती निर्धा चेपाङ वा प्रजाहरुलाई त्यसको कुनै पत्तो छैन । प्रजा जनजातिमा कक्षा १० भन्दा माथि पढ्ने विद्यार्थी देखिंदैनन् ।

## २. मध्यमाञ्चल

### वागमती



# २.१७ सिन्धुपाल्चोक

| | | |
|---|---|---|
| जनसंख्या | : | २६०९७२ |
| साक्षरता | : | २९.३ प्रतिशत |
| महिला साक्षरता | : | १४.५ प्रतिशत |
| क्षेत्रफल | : | २५४२ वर्ग कि.मी. |

वागमती अञ्चलका दुर्गम र विकट जिल्लाहरुमा पर्ने सिन्धुपाल्चोक जिल्ला चेलीबेटी व्यापार र चीनियाँ सामानहरुको सस्तो बजारका रुपमा प्रसिद्ध छ । चीनको स्वशासित क्षेत्र तिब्बत सीमानाको ३० किलोमिटरसम्म बसोबास गर्ने बासिन्दाहरुले सामान खरीद गर्न छुट सुविधा पाए अनुरुप उक्त सामानको अवैध व्यापार एवं तस्करी व्यापक रुपमा भएको पाइन्छ । साथै यस जिल्लामा मुख्य गरी राजनैतिक प्रतिशोध, हत्या, बलात्कार, तस्करी, चेलिबेटी व्यापार आदिका घटनाले मानव अधिकार हननको साक्षी बकिरहेका छन् ।

यसै जिल्लामा २०४० सालमा चर्चित पिस्कर हत्याकाण्ड भएको थियो भने २०४४ सालमा भोटेनाम्लाङ्ग गा.वि.स.मा तत्कालीन सत्ता पक्षका मतियारहरुबाट वीर बहादुर गुरुङको हत्या भएको थियो ।

## १. बाँच्न पाउने अधिकार

संविधानले सम्पूर्ण नेपालीलाई सम्मानपूर्वक बाँच्ने अधिकारको व्यवस्था गरे पनि राजनैतिक पूर्वाग्रह, चेलीबेटी व्यापार, तस्करी आदिका कारण यस जिल्लाका बासिन्दाहरु भय र सन्त्रासमा जीवन बिताइरहेका छन् ।

### १.१ हत्या / गोली

चीनियाँ सामानको सानोतिनो व्यापार गरी जीविकोपार्जन गर्ने सानु सिरुवारी गा.वि.स. बस्ने गोपाल चौलागाई र टेकनपुर गा.वि.स. बस्ने कृष्णबहादुर बोहराको २०४८ चैत्र २६ गते फुल्पिङ्कोट गा.वि.स. आदममारा भन्ने ठाउँमा हत्या भएको थियो । हत्या पश्चात् स्थानीय बासिन्दाहरुले प्रहरीलाई नै मृतकको लाश बोकाइ जिल्ला सदरमुकाम चौतारा ल्याएका थिए । भोलिपल्ट जनसमुदायले उत्तेजित भएर प्रहरी कार्यालय घेरेपछि भीड तितरबितर पार्न हवाई फायर गरिएको थियो । स्थानीय बासिन्दाहरु यो हत्या तस्कर र प्रहरीहरुको मिलोमतोमा भएको ठान्दछन् ।

### १.२ जेल

वि.सं. १९८४ मा निर्माण भएको यहाँको जेल पुरानो र जीर्ण भैसकेको अवस्थामा छ । जेलमा बन्दीहरु सीपमूलक व्यवसाय, मनोरञ्जनका सामग्री, पठन-पाठन गर्ने सुविधा आदिबाट बञ्चित रहेको पाइयो । साथै यहाँ पानीको अभाव, फिनेल, साबुन, बगैंचा, करेसा आदिको व्यवस्था नहुनाले जेल एउटा सुधार गृहको साटो यातना गृहका रुपमा रहेको प्रतीत हुन्छ । जेलभित्र चिकित्सा सेवाको अभावमा ७० वर्षीय बन्दी हीराबहादुर बानियाँ आफ्नो पेटमा उठेको सुम्लो सुमसुम्याउँदै जीवनका अन्तिम दिनहरु गनिरहेका छन् । ३५ जना बन्दीहरु अटाउने क्षमता भएको यस जेलमा नाबालक समेत ४६ पुरुष र ३ महिला गरी ४९ जना बन्दी छन् ।

### १.३ गिरफ्तारी / यातना

यस वर्ष गिरफ्तारी र यातनाका उल्लेखनिय घटना प्रकाशमा आएनन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

यस जिल्लामा शिक्षकहरु सरकारी कोपभाजनका शिकार भएका थिए। नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरुलाई यहाँ स्पष्टीकरण सोधिनुका साथै जिल्लाको अपायक र दुर्गम क्षेत्रमा सरुवा, घटुवा आदि गरी पठाइएको थियो । जसमा पदमप्रसाद पराजुली, भोलानाथ सापकोटा, बाबुलाल पराजुली आदि शिक्षकहरु यसका उदाहरण बनेका भेटिए।

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार



*फुलपिङ कट्टी गा.वि.स. का पदम बहादुर खड्का घाइते अवस्थामा*

संविधानले ग्यारेण्टी गरेको राजनैतिक स्वतन्त्रताको यहाँ उपेक्षा भएको देखियो । गत स्थानीय निर्वाचन यस जिल्लामा शान्तिपूर्ण र निष्पक्षताका साथ भएको थिएन भनिन्छ । जहाँ जुन दलको बाहुल्य र पकड छ, त्यहाँ उसले स्थानीय निर्वाचनको परिणाम कुनै पनि अवस्थामा आफ्नो पक्षमा ल्याएको बताइयो ।

किउल, फुल्पिङकट्टी, मार्मिङ, सानु सिरुबारी आदि गा.वि.स.हरुमा स्थानीय निर्वाचन अशान्ति र अनियमित रुपमा भएको थियो । यसरी अशान्त वातावरण र एक पक्षीय रुपमा निर्वाचन भएको हुनाले कैयौं मतदाताहरु आफ्नो मतदान गर्ने अधिकारबाट बञ्चित भए ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा ४६९ देवानी र ६०७ फौजदारी गरी १०७६ वटा मुद्दा दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

०४८ साउनमा देशका अधिकांश अखबारहरुमा जिल्लाको क्षेत्र नं. २ का एमालेका सांसद कृष्ण राज श्रेष्ठले एकजना अविवाहित र लठेब्री युवती अनीता प्रधानलाई गर्भ धारण गराएको चर्चा भएको थियो । अनीताले ०४८ भदौ १६ गते काठमाण्डु प्रसुती गृहमा छोरा जन्माएकी थिइन् । त्यसपछी उक्त विवाद बढ्दै गई अदालतमा पुगेको छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

सिन्धुपाल्चोक जिल्लामा महिला किनबेच र देह व्यापार प्रमुख समस्याका रुपमा रहिआएको छ । जिल्लाको पश्चिमी क्षेत्र इचोक, महांकाल, मेलम्ची, तालामाराङ,



फोटोः नर पुनम

*टेकनपुर गा.वि.स. वडा नं. ६ का बलात्कारी सिताराम बोहोरा*

भोटासिपा, बाँसखर्क, हेलम्बू आदि स्थानहरु चेलीबेटी व्यापार का प्रमुख केन्द्रहरु रहेका छन् । १२ वर्षदेखि ३५ वर्षसम्मका महिलाहरुले आफ्नो किनबेच भएमा गौरव ठान्ने गरेका पनि पाइयो । विदेशबाट फर्किएपछि घरमा टिनको छाना हाल्ने, बाबु आमालाई हात मुख जोर्न सहयोग गर्ने आदि रङ्गीन सपना देख्ने यी चेलीबेटीहरुको बेचबिखनमा गल्लावालहरुले भा.रु. २५ हजारसम्म तिर्ने गरेको पाइन्छ। उपरोक्त क्षेत्रबाट लगभग २ हजारभन्दा बढी चेलीबेटीहरु विदेशिएका छन् । मुख्यत: आर्थिक विसङ्गतिले गर्दा यो व्यवसाय संस्कारगत रुपमा हुर्किराखेको छ। विदेशबाट फर्कदा प्रतिष्ठा र इज्जत बढेको ठान्ने प्रवृत्तिले विदेशिने अर्थात् ठूलो गाउँ जाने यहाँका चेलीबेटीहरुको जीवन शैली भैसकेको छ ।

चेलीबेटी व्यापारका अतिरिक्त यहाँ यो वर्ष बलात्कार का घटना पनि घटेका थिए। २०४९ असार २७ गते टेकनपुर गा.वि.स. बस्ने वर्ष १९ का कृष्णबहादुर भन्ने सीताराम बोहराले सोही गा.वि.स. बस्ने वर्ष १० की भवानी बोहरालाई बलात्कार गरे । बलात्कार पश्चात् अभियुक्त सीताराम बोहरा फरार रहेका छन्।

### ४.२ झारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा झारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यहाँ अधिकांश घटनालाई राजनीतिकरण गरेको देखिन्छ। यसै प्रसङ्गमा जिल्ला प्रहरी कार्यालयका सम्बन्धित अधिकृतको गुनासो यस्तो रहेको छ - "अपराधी उपर कार-वाही गर्दा कुनै कुनै मुद्दामा राजनैतिक पार्टीद्वारा आफ्नो पार्टीका मानिस असल र निर्दोष भएको जिकिर गर्दै छाडि दिनु पर्‍यो भन्ने अनुरोध गर्दछन्। यदि नछाडी कानून बमोजिम कारवाही गर्ने हो भने प्रहरीको नैतिक आचरण पतन गराउनका लागि भए-नभएका टीका टिप्पणीहरु पत्र-पत्रिकामा प्रकाशित गर्ने गरेका छन् ।"



# २. मध्यमाञ्चल

## वाग्मती

## २.१८ नुवाकोट

| | | |
|---|---|---|
| जनसंख्या | : | २४५६४५ |
| साक्षरता | : | ३१.७ प्रतिशत |
| महिला साक्षरता | : | १८.५ प्रतिशत |
| क्षेत्रफल | : | ११२१ वर्ग कि.मी. |

वाग्मती अञ्चलमा पर्ने नुवाकोट जिल्लामा मानव अधिकार हनन सम्बन्धी घटनाहरुमा राजनैतिक प्रतिशोध, कुटपीट, हत्या, बलात्कार, चेलीबेटी व्यापार आदि प्रमुख हुन् । यस जिल्लामा अधिकांश तामाङ जातिहरुको बसोबास रहेको हुनाले आफ्नो धर्म संस्कृतिको नाममा अधिक जाँड रक्सी खाने संस्कारले एकातर्फ खाद्यान्नको दुरुपयोग भइरहेको छ भने अर्कोतर्फ समाजमा झै झगडा अशान्ति जस्ता सामाजिक अपराधहरुले प्रश्रय पाइरहेका छन्। यस जिल्लाका दुःखद घटनाहरुमा २०४९ साउन १६ गते घ्याङफेदी गा.वि.स.को तालुकाशिर भन्ने ठाउँमा बैङ्ककबाट काठमाडौं आइरहेको थाई इण्टरनेशनल एयरवेजको एयरबस टि.जि. ३१०-३०० नं. विमान दुर्घटना हुँदा विमानमा रहेका ११३ जना यात्रुहरुको असामयिक निधन भएको थियो । यस सम्बन्धी छानविन गर्न श्री ५ को सरकारले एउटा आयोग पनि गठन गरेको छ ।

### १. बाँच्न पाउने अधिकार

संविधानले सबै नेपालीलाई सम्मानपूर्वक बाँच्ने अधिकार प्रदान गरे तापनि राजनैतिक प्रतिशोधका कारण असहमत विचारका व्यक्तिहरुमाथि मानसिक आतङ्क आदिले गर्दा यहाँका जिल्लावासीहरु भयमुक्त रहेका देखिदैनन् ।

#### १.१ हत्या / गोली

२०४८ फागुन १६ गते चौघडा गा.वि.स. वडा नं. ९ बस्ने ज्ञानबहादुर ठकुरीको घरमा खरानीटार प्रहरी चौकीका प्रहरी हवल्दार रामकृष्ण उप्रेतीको हत्या भएको थियो । हत्या पश्चात् हत्याको अभियोग लागेकाहरुलाई राजनीतिकरण गरी निरपराध व्यक्तिहरुमाथि विभिन्न यातना दिई सावित गर्न खोजिएको थियो ।

२०४८ वैशाख २४ गते ककनी गा.वि.स. वडा नं. ७ सिम्ले बस्ने नारायण गुरुङको पत्नी विहान सबेरै उठेर घर बाट हिंडेको र समयमा घर नआएकोले खोजतलाश गर्दै जाँदा २५ गते सोही गा.वि.स. वडा नं. ७ स्थित ठाङखोलामा डुबी मरेको अवस्थामा भेटिएको थियो ।

२०४९ असार १९ गते शिखरबेसी गा.वि.स. वडा नं. ९ बस्ने चन्द्रबहादुर तामाङ सोही ठाउँ बस्ने जिल्लाप तामाङको घरमा जाँदा निज तामाङका छोरा मीनबहादुर तामाङसंग झगडा पऱ्यो । मीनबहादुरले खुकुरी प्रहार गरी चन्द्रबहादुरलाई घाइते बनाए र घाइतेको त्रिशूली अस्पतालमा उपचार हुन नसकेपछि बीर अस्पताल, काठमाडौंमा उपचार गराउँदा गराउँदै २०४९ असोज २६ गते मृत्यु भएको थियो ।

#### १.२ जेल

बिदुर नगरपालिका वडा नं. २ अशोकवारीमा अवस्थित यहाँको जेलको निर्माण ४० वर्षअघि यातना गृहको

रुपमा भएको थियो । आज पनि त्यही यातना गृह जिल्ला कारागारको रुपमा परिणत भएको छ । जेल भवन मात्र यहाँ दयनीय स्थितिमा रहेको छैन, जेलमा उपलब्ध भौतिक सुविधाहरु पनि साह्रै खस्केको प्रतीत हुन्छ । जसको फलस्वरुप जनआन्दोलन ताका उचित उपचारको अभावमा एकजना बन्दीको जेलमै मृत्यु भएको थियो । हाल यस जेलमा ४२ जना बन्दीहरु छन् ।

### १.३ गिरफ्तारी / यातना

खासगरी फरक विचारधारा राख्ने व्यक्तिहरु यस जिल्लामा गिरफ्तारी तथा यातनाका शिकार भएका छन् ।

त्यस्तै यस जिल्लामा असहमत विचारधारा राख्ने कार्यकर्ता तथा व्यक्तिहरुलाई दबाउने क्रममा विभिन्न झुठा लान्छना आरोपहरु लगाई मुद्दा दायर र गिरफ्तार गरेका अनेकौं घटनाहरु घटेका थिए ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानले स्वतन्त्र अभिव्यक्ति भेला हुने तथा संगठन गर्न सक्ने अधिकार दिएको भए तापनि व्यवहारमा फरक मत राख्नेहरुले यी क्रियाकलापहरुमा संलग्न भएमा सम्बन्धित निकायको कोप भाजनको शिकार हुनुपर्दछ ।

गत वर्षको कर्मचारी आन्दोलनमा संलग्न एवं नेपाल निजामती कर्मचारी संगठनसंग सम्बद्ध भएको कारणले यो जिल्लामा कर्मचारीहरु पूर्णसिंह टण्डन, रामकुमार ढकाल, शिव अधिकारी, सुशील सुवेदीले जागिरबाट हात धुनु परेको थियो भने नरेन्द्रराज पाठक, यादव गजुरेल, महेन्द्र खनाल, रामशरण प्याकुरेलले विना कारण प्रहरी हिरासतमा मानसिक यातना र पीडा भोग्नु परेको थियो । साथै कर्मचारी आन्दोलनमा सरिक भएको नाताले नै यहाँका २५ जना जति कर्मचारीहरुको ग्रेड कट्टा हुनाका अतिरिक्त जिल्लाको अपायक तथा दुर्गम क्षेत्रमा सरुवा गरिएको थियो ।

कर्मचारीहरुले मात्र होइन फरक मत राख्ने शिक्षकहरुले पनि यस जिल्लामा मानसिक यातना र पीडाको सजाय भोगिरहनु परेको छ । २०४९ मंसीर ३० गते सुन्दरा मा.वि सातविसेका प्रधानअध्यापक गोकर्णराज पाठकलाई हिंडिरहेको बेला प्रहरीले एक्कासि गिरफ्तार गरी यातना मात्र दिएन, फरक मत राखेकोले उनले जागिर गुमाउने स्थिति आएको थियो ।

### २.२ धार्मिक स्वतन्त्रता

धार्मिक सहिष्णुता भएको यस जिल्लामा व्याप्त गरीबी र पछौटेपनले गर्दा हिजोआज व्यापक रुपमा नव इसाई धर्मावलम्बीहरु देखा परिरहेका छन् । यसैको फलस्वरुप देउराली गा.वि.स.को गोगने र काहुले गा.वि.स.को पञ्चलिङ्गमा यी धर्मावलम्बीहरुबीच झडप हुँदा केही व्यक्तिहरु घाइते भएका थिए ।

### २.३ राजनैतिक स्वतन्त्रता/स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यो जिल्लामा संविधान प्रदत्त राजनैतिक स्वतन्त्रताको उपहास गरेको पाइन्छ । जहाँ जुन दलको पकड र बाहुल्य छ, त्यहाँ त्यस दलले अनियमितता र धाँधली गर्नुका साथै एकपक्षीय रुपमा मतदान गर्ने वातावरण सिर्जना गरी मतदाताहरुलाई स्वतन्त्र मतदान गर्ने अधिकारबाट बञ्चित गराएको देखिन्छ । राउतबेसी, बेतिनी, खरानीटार, ककनी, बेलकोट, जिलिङ्ग, शिखरबेसी, भद्रुटार आदि गा.वि.स.हरुको निर्वाचन अनियमित र अशान्त वातावरणमा एकपक्षीय रुपमा भएको बताइयो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

सर्वसाधारणका लागि सुगम र निष्पक्ष न्याय पाउने अधिकारको समुचित व्यवस्था जिल्लामा देखिएन । लगभग ७० प्रतिशत निरक्षर भएको यस जिल्लाका गाउँघरमा मुखिया, काजीहरुकै बोलवाला छ । उनीहरुको इच्छा र निर्देशनमा गाउँमा न्याय निसाफ हुने गरेको भेटियो । त्यस्तै नेतालाई "राजा" जस्तै मान्नु पर्ने र प्रमुख जिल्ला अधिकारी तथा प्रहरीको अगाडि थक फुकाएर बोल्न नसक्ने यहाँका निमुखा जनताहरु कसरी सुगम, निष्पक्ष र न्यायिक अधिकारको अपेक्षा गर्न सक्तछन् ? काठमाडौंबाट आएको राजनैतिक नेताको टेलिफोनको भरमा जिल्ला प्रशासनले आफ्नो कार्य सम्पादन गर्ने परिपाटी रहेको छ । यस्तो परिस्थितिमा निमुखा जनताहरुले सुगम र निष्पक्ष न्यायिक अधिकारको उपभोग कसरी गैरहेको छ सजिलै अनुमान गर्न सकिन्छ ।

यस वर्ष यहाँ विभिन्न अपराधका गरी ३१२ मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा सुकुम्बासी समस्या पनि विकराल रुपमा देखिँदै आएको छ । त्यसमा पनि निर्वाचनमा

सुकुम्बासीहरुलाई राजनैतिक रुपमा उपयोग गर्ने र पछि उनीहरुको मागलाई बेवास्ता गर्नुले पनि यहाँका सुकुम्बासीहरुलाई उत्तेजित बनाएको थियो ।

२०२२ सालमा विदुर नगरपालिका वडा नं. १० ढोंडेनीमा सिस्नोबारी फँडानी गरी निर्माण भएको त्रिशूली जलविद्युत् योजनाका लागि कामदारका रुपमा धादिङ, नुवाकोट र रसुवाबाट आएका कामी, नगरकोटी र दमाई जातिका सुकुम्बासीहरुको १३ घर विगत ३ दशकदेखि अद्यापि कायम छ ।

विदुर नगरपालिका वडा नं. १ पहराढुंगे वडा नं. ४ बट्टारमा पैतृक सम्पत्ति नभएको कारण जीवन धान्नका लागि कामको खोजीको क्रममा समुन्द्रटार, कल्याणपुर, गेर्खु ,पूर्व १ नं. चौताराबाट आएका १८ घरमा करीब ६० सुकुम्बासीहरुले बसोबास गरेका छन् ।

२००२ सालमा फिकुरी गा.वि.स.मा आएको बाढी पैरोबाट ठूलो मात्रामा धनजन क्षति हुन गई घरबार बिहीन भएका बासिन्दाहरुलाई तत्कालीन जिल्ला पञ्चायतले वि.न.पा. वडा नं. ४ बट्टारमा बसोबास गराएको थियो। हाल सुकुम्बासी टोलको रुपमा चिनिने उक्त टोलका सुकुम्बासीहरु अझै पनि सुकुम्बासी नै भएर रहनु परेको गुनासो व्यक्त गर्दछन् ।

२०१७ सालमा चीनको स्वशासित क्षेत्र तिब्बतबाट नेपाल प्रवेश गरेका १७ परिवारका ९० जना तिब्बती शरणार्थीहरु हाल वि.न.पा. वडा नं. ६ चण्डीपोखरीमा बसोबास गरिरहेका छन्। यस चण्डीपोखरीमा २०१५ सालमा पञ्चायतकालीन गृह मन्त्रीले केन्द्रीय कारागार निर्माणको लागि शिलान्यास गरेका थिए। र अन्तरिम सरकारको पालामा गठित जेल सुधार समितिको प्रतिवेदनले पनि सोही ठाउँमा केन्द्रीय कारागार बनाउने निर्णय गरेपछि अब आफ्नो भविष्य पुन: अन्धकार मै रहने चिन्ता तिब्बती शरणार्थीहरुको छ ।

## ४. महिला अधिकार

अशिक्षा, रुढीवाद तथा पिछडिएको ग्रस्त मनस्थितिले गर्दा यस जिल्लामा महिलामाथि निकै शोषण र अन्याय भएको पाइन्छ । यहाँ दमाई, कामी, पोडे, सार्की आदि दलित जातिहरुमाथिको छुवाछुत र भेदभाव अद्यापि गाउँघरतिर कायम नै छ । साथै पूर्वाग्रह, रिसइवी आदिका कारणले समाजमा मन नपर्नेहरुमाथि डंकिनी, बोक्सीको आरोप लगाई अपमानित गर्ने गरिएको देखिन्छ ।

### ४.१ महिला किनबेच र बलात्कार

चेलीबेटी व्यापारमा यो जिल्लाले निकै कुख्याती कमाएको छ। ८५ प्रतिशत तामाङ जातिको बसोबास भएको यस जिल्लाका प्राय: गरेर पूर्वी पहाडी भेकका बेतिनी, बालकुमारी, शिखरबेसी, घ्याङफेदी, समुन्द्रटार र गाउँखर्क गा.वि.स. का मात्रै ३ हजार १ सय ४१ जना चेलीबेटीहरु भारतका विभिन्न शहरमा नारकीय जीवन बिताइरहेका छन् ।

२०४९ साउन ३२ गते विदुर नगरपालिका वडा नं. ३ बस्ने वर्ष १७ की सुधा अधिकारी दिदीसंग खेतमा काम गरी घर फर्कन लाग्दा विदुर नगरपालिका वडा नं. २ घर भई हाल ६ नं. वाहिनी अड्डामा कार्यरत लेसनायक भुवनराज पाण्डे र तारादल गुल्म वाहिनीमा कार्यरत अमल्दार जगन्नाथ पाण्डेले बलात्कार गरेका थिए ।

*२०४८ कात्तिक २१ गते वि.न.पा. वडा ४ बस्ने वर्ष २८ का जीतराम भन्ने जीतेन्द्र तामाङले सोही ठाउँ बस्ने वर्ष १० की पूर्णमाया तामाङलाई रु.२०/- दिन्छु भनी फकाई फुलाई निजकै खर पाखामा लगी बलात्कार गरेका थिए ।*

*२०४८ मंसीर ५ गते तारुका गा.वि.स. वडा नं. ५ बस्ने गोरे श्रेष्ठले सोही गाउँ बस्ने वर्ष १० की ओममाया श्रेष्ठलाई डर, त्रास, धम्की देखाई बाखाको खोरमा लगी बलात्कार गरेका थिए ।*

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

गाउँघरतिर जारी प्रथा व्यापक रहे पनि शहर बजार तिर भने केही कम भएर गएको देखिन्छ । बहुविवाह यस जिल्लाको समस्याको अर्को एउटा मूल जड हो ।

२०४८ फागुन १ गते थानसिं गा.वि.स. वडा नं. ९ बस्ने तेजमान तामाङले घरमा सूर्यमाया तामाङ नामकी श्रीमति हुँदाहुँदै दोस्रो विवाह गरेका थिए ।

२०४८ चैत १६ गते झिल्तुङ गा.वि.स. वडा नं. ३ बस्ने नवराज नेपालले घरमा राधा नेपाल नामकी श्रीमति हुँदाहुँदै दोस्रो विवाह गरेका थिए ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यहाँको उत्पादनले दुई महिना धान्न पनि जिल्लाबासीलाई धौधौ परेको छ। गाउँमै बसेर जीवन धान्नका लागि पनि चर्को ब्याज दरले गर्दा असहाय निमुखा जनताहरुले ऋण लिन सकिरहेका छैनन् । तसर्थ यहाँ बढ्दो चेलीबेटी व्यापार नै आफ्ना आवश्यकताहरु परिपूर्ति गर्ने एक मात्र सजिलो र सुलभ माध्यम बन्न खोजिरहेको प्रतीत हुन्छ ।



# २. मध्यमाञ्चल

## वागमती

# २.१९ रसुवा

| | | |
|---|---|---|
| जनसंख्या | : | ३६७६८ |
| साक्षरता | : | २४.२ प्रतिशत |
| महिला साक्षरता | : | ११.२ प्रतिशत |
| क्षेत्रफल | : | १५४४ वर्ग कि.मी. |

वागमती अन्चलका ८ जिल्लाहरुमध्ये रसुवा एक हो । यस जिल्लाको सदरमुकाम सम्म मोटर यातायातको सुविधा भए तापनि बाँकी अन्य क्षेत्रहरु दृष्टिगत गर्दा यो जिल्लालाई दुर्गम नै मान्नु पर्दछ । रसुवा जिल्ला लामटाङ, गणेश जस्ता प्रसिद्ध हिमालका काखमा रहेको र थोरै आवादी भएको जिल्ला हुनाले तराई तथा भित्री मधेशका जिल्लाहरुमा जस्तो यस जिल्लामा सामाजिक, राजनैतिक तथा अन्य कारणले त्यति झै-झगडा, मुद्दा-मामिला, राजनैतिक रुपले प्रतिशोधात्मक घटना भएको पाईदैन ।

## १. बाँच्न पाउने अधिकार

देशमा आएको राजनैतिक परिवर्तनपछि निर्माण भएको संविधानले जनताको मौलिक अधिकार, मानव अधिकार जस्ता मानव हित र उत्थानमा जनताका नैसर्गिक अधिकारहरुको ग्यारेण्टी गरेको छ । तर देशको सामाजिक, आर्थिक, शैक्षिक वस्तुस्थिति र परिवेशले गर्दा नेपाली जनताले संविधान प्रदत्त आफ्ना अधिकारहरु व्यवहारमा अनुसरण गर्न सकेका छैनन् । रसुवा जिल्ला पनि देशको यही विसङ्गति र विकृतिको चपेटाबाट मुक्त हुन सकेको छैन ।

यस वर्ष रसुवा जिल्लामा भएका घटनाहरुमा मुख्य गरी दुई हत्या, एक बलात्कार र एक ज्यान मार्ने उद्योग हुन् ।

### १.१ हत्या / गोली

राम्चे गा.वि.स. वडा नं० ४ बस्ने नुर्पु सिङ्गी तामाङले २०४८ फागुन १३ गतेका दिन आफ्नी श्रीमती नेम्साङ तामाङलाई खुकुरी प्रहार गरी हत्या गरे । त्यस्तै भोर्ले गा.बि.स. वडा नं० ५ बस्ने देवानसिंह तामाङले २०४९ असोज २५ गते आफ्नी श्रीमती बिरामी भएकीले झारफुक गर्न धामी काजीमान लामालाई बोलाउन जाँदा समय मै उपचार गर्न धामी काजीमान लामा नआएको रिसले झोंकमा देवानसिंह तामाङ धामी कै घरमा गई खुकुरी प्रहार गरी हत्या गरे । हाल यी दुई हत्या अभियोग लागेका अभियुक्तहरुको मुद्दा जिल्ला अदालतमा चलिरहेको छ । विदिम गा.बि.स. वडा नं. ६ बस्ने पासाङ तामाङले सोही गा.बि.स. बस्ने तासी तामाङ्नीलाई खुकुरी प्रहार गर्दा मीङ्मर छिरिङ तामाङले बँचाएको र यस अपराधमा संलग्न व्यक्तिलाई पक्राउ गरी कारवाही चलाइएको छ ।

### १.२ जेल

यस जिल्लामा पञ्चायत कालमै निर्माण भएको जेललाई हाल आएर मर्मत सुधार गरिएको छ । रसुवा पहाडी

जिल्ला भएको हुनाले र यस जिल्लामा बसोवास गर्ने जनजातिहरु तुलनात्मक रुपमा सोझा र शान्त स्वभाव भएका हुनाले अन्य जिल्लामा जस्तै यहाँ जेल सम्बन्धी त्यति गुनासा र समस्याहरु छैनन् । यहाँको जेलमा १४ जना बन्दीहरु छन्, जसमा १२ जना कैदी र २ जना थुनुवा छन् । जेलमा पाउने सुविधा-असुविधाहरुका बारेमा बन्दीहरुले त्यति व्यापक आपत्ति नजनाए पनि जेलभित्र कुनै पत्र-पत्रिका नभित्रिने, पठन-पाठनको व्यवस्था नभएको कारणले उनीहरु संविधानले ग्यारेण्टी गरेको सुसूचित हुने अधिकारबाट भने आफू वञ्चित रहेको धारणा व्यक्त गर्दछन् । हालसम्म यस जेलमा निम्न अभियोग लागेका बन्दीहरु छन् - ज्यान मार्ने अभियोगमा ७ जना, कर्तव्य ज्यान अभियोगमा २ जना, ज्यान मार्ने उद्योगमा १ जना, चोरीमा २ जना, सुन तस्करीमा १ जना र लागू पदार्थ ओसार-पसारमा १ जना गरी जम्मा १४ जना ।

### १.३ गिरफ्तारी / यातना

यो सवालमा अन्य जिल्लामाभन्दा यो जिल्लाको स्वरुप बेग्लै छ । यस जिल्लामा जेलका १४ जना बन्दी बाहेक अन्य कसैलाई बिना कसुर गिरफ्तारी गरिएको छैन । देशमा व्याप्त अशिक्षा, अज्ञानता र गरीबीले गर्दा एक आपसमा झै-झगडा, मुठभेड आदि हुनु स्वाभाविकै भइसक्यो र यातनाको सम्बन्धमा यहाँ त्यस्तो कुनै बिकराल र बिभत्स प्रमाण भेटिएन ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

यस जिल्लामा बार एसोसिएशन र मानव अधिकार सम्बन्धी कुनै पनि संस्था नभएकोले जनताले व्यवहारमा आफ्ना अधिकार रुपान्तरित गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

बौद्ध र हिन्दू धर्मावलम्वीहरुको बाहुल्य भएको यस जिल्लामा धार्मिक सहिष्णुता व्यापक छ । त्यस्तो कुनै धार्मिक कलहभएको घटना घटेको छैन ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

देशको संविधान र राजनैतिक प्रणालीले राजनैतिक स्वतन्त्रताको ग्यारेन्टी गरे पनि यस जिल्लामा व्याप्त गरीबी, अशिक्षा, अज्ञानताले गर्दा आफ्नो प्रभाव र बाहुल्य भएको क्षेत्रमा राजनैतिक दलहरुले एकाधिकार कायम नै गर्न खोज्दछन् र गरीबीले गर्दा पैसा, पद र अन्य लोभ-लालच देखाइ भोट आफूतिर तान्ने प्रयास गरेको देखिन्छ । उदाहरणार्थ जिल्ला बिकास समिति सभापतिको निर्वाचनका क्रममा नेपाली कांग्रेसका उम्मेदवार छुवाङ दिण्डुप ताभाङले आफूले भोटका निम्ति बाँडेको रकम लिने मध्येबाट भोट आफूलाई नआएकोले बाँडिएको मध्येबाटै २ जनाको रु. १० हजार फिर्ता असूल गरेको कुरा निर्वाचनपछि बताएका थिए ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा सत्तापक्षसंग असहमत भएका व्यक्तिहरुलाई कुनै न कुनै रुपमा प्रतिशोध लिएको देखिन्छ । यसैको फलस्वरुप यस जिल्लाका महेश्वर घिमिरे, श्रीमती उमा कोइराला र गजेन्द्र लगायत केही शिक्षकहरुलाई बिना कसूर अवकाश दिईएको छ । त्यस्तै नोकरी गर्ने, बैंकबाट ऋण लिने तथा अन्य कार्यहरुमा राजनैतिक प्रतिशोध राखिएको बिचार अन्य पक्षका व्यक्तिहरुले व्यक्त गरेका छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा साह्रै पातलो आवादी र हिमाली क्षेत्र भएकोले यस सम्बन्धी समस्याहरु देखिएका छैनन् ।

## ४. महिला अधिकार

यो जिल्ला बागमती अञ्चलमा परे पनि दुर्गम जिल्ला भएकोले यहाँ महिला हक हित र अधिकार सम्बन्धी कुनै ज्ञान र जानकारी प्राय: विरलै मानिसहरुमा मात्र पाइयो ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लामा महिला किनबेच सम्बन्धी गाईगुई चले पनि खुला रुपमा भने आउन सकेको छैन र महिला देह व्यापार र किनबेच सम्बन्धी घटनामा कहिलेकाँहि यो जिल्ला पनि मुछिने गरेको छ । त्यस्तै यस जिल्लामा व्यापक रुपमा चलन चल्तीमा आएको मादक पदार्थको सेवनले महिलामाथि हातपात र बलात्कारलाई प्रोत्साहन गरेको भेटिन्छ । सामूहिक बलात्कार गरेका घटना पनि यहाँ छन् । यस जिल्लाको लहरेपौवा गा.वि.स. वडा नं. २ बस्ने सुभद्रा आचार्य सोही गा.बि.स.मा अवस्थित कमौडाँडा हेल्थपोष्टमा उपचार गराउन आएको मौका पारी मिति २०४९ असार २१ गते उक्त हेल्थपोष्टका स्वास्थ्य कर्मीद्वय रामकेवल महत्तो र शत्रुधन मण्डलले ति एक महिलामाथि सामूहिक बलात्कार गरे । तर धुनामा परेका यी बलात्कारीहरुलाई सत्तापक्षबाट कारवाही नगर्ने दवाब दिएपछि हाल ती बलात्कारीहरु छुटेका छन् भन्ने स्थानीयवासीहरुको मत रहेको पाइयो ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यो जिल्ला अशिक्षा, अज्ञानता र कुरीतिले जर्काडिएको हुनाले यहाँ उक्त समस्याहरु कायम नरहेका होलान् भन्न सकिन्न तर व्यवहारमा खुला रुपमा यी प्रथाहरु देखिएका छैनन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाइँदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

रसुवा जिल्ला देशका दुर्गम क्षेत्रहरुमध्ये नै पर्ने भएकोले यस जिल्लामा अशिक्षा, अज्ञानताले गर्दा विसङ्गति, विकृति र कुरीतिहरु व्याप्त रुपमा भेटिन्छन् । मुलुकको राजनैतिक परिवर्तनपछि जनतामा आएको अधिकारबारे ज्ञान यहाँ प्राय: शून्य छ । विरामी पर्दा धामी, झाँक्रीमा आश्रित हुने, अद्यापि गुफा र ओडारको जीवन यापन गर्ने गरेका यहाँका जनताहरुलाई आफ्नो अधिकारबारे अवगत गराउन विभिन्न कार्यक्रमहरु संचालन गर्नु पर्ने धारणामा सबै राजनैतिक दल र जिल्लाका प्रशासकहरुको मत्यैक्य रहेको पाईयो । ■

# पश्चिमाञ्चल



३.१ तनहुँ

३.२ गोरखा

३.३ लमजुङ्ग

३.४ स्यांग्जा

३.५ कास्की

३.६ मनाङ्ग

३.७ नवलपरासी

३.८ रुपन्देही

३.९ पाल्पा

३.१० कपिलवस्तु

३.११ अर्घाखाँची

३.१२ गुल्मी

३.१३ वाग्लुङ्ग

३.१४ पर्वत

३.१५ म्याग्दी

३.१६ मुस्ताङ



# ३. पश्चिमाञ्चल

## गण्डकी

# ३.१ तनहुँ

| | | |
|---|---|---|
| जनसंख्या | : | २६६७६६ |
| साक्षरता | : | ५२.८ प्रतिशत |
| महिला साक्षरता | : | ३८.८ प्रतिशत |
| क्षेत्रफल | : | १५४६ वर्ग कि. मी. |

गण्डकी अञ्चलमा पर्ने ६ जिल्लाहरुमध्ये तनहुं जिल्लामा भएका क्रियाकलापहरुलाई दृष्टिगत गर्दा मानव अधिकार हनन् भएको त्यति बिघ्न प्रमाणहरु भेटिंएनन्। आ-आफ्नो क्षेत्रमा पकड स्वरुप स्थानीय निर्वाचनमा बिभिन्न राजनैतिक दलहरुबाट भएको अनियमितता, विभिन्न राजनैतिक कार्यकर्ताहरु बीचको वैमनस्यता, चेलीबेटी व्यापार, खाद्यान्न चोरी आदि यस जिल्लाका प्रमुख समस्याका रुपमा देखिन्छन्।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

यस जिल्लामा अन्य जिल्लाहरुमा भन्दा प्रबुद्ध र सचेत व्यक्तिहरुको बसोबास बढी भएकोले होला यहाँ हत्या र गोली काण्डका घटनाहरु प्रायः शून्य नै छन्। यस जिल्लामा हत्याको घटना त्यति देखिएन। यसै वर्षको दशैं अगाडि आबुखैरनीमा जुत्ता सिएर बस्ने सानकान्छा सार्कीले आफ्नी पत्नीलाई पैसा नदिएको निहुँमा हत्या गरेका थिए।

### १.२ जेल

तनहुं जिल्लामा जेलको स्थिति त्यति नाजुक अवस्थामा रहेको देखिंदैन। यहांको जेलको क्षमता २५ जनाको छ। हाल यहाँ २४ जना बन्दीहरु छन्। महिलाहरुका लागि यस जेलमा स्थान नभएकाले महिला बन्दीहरुलाई पोखरा लग्ने गरिन्छ। साथै जेल कर्मचारीहरुका व्यवहार र सुविधामा बन्दीहरुका तर्फबाट गुनासाहरु कमै रहेको पाइयो। यहाँ बन्दीहरुलाई यातना र पीडा दिइएको पाइदैन। स्थानाभावको कारणले यस जेलमा अन्य सुविधाहरु उपलब्ध गराउन सकिएको छैन।

### १.३ गिरफ्तारी / यातना

स्थानिय निर्वाचनमा उब्जिएको विवादका कारण व्यापक गिरफ्तारी गरिएको थियो। त्यसमध्ये हालसम्म कोही तारेख धाउँदैछन् भने कोही जेल मै छन्। त्यस्तै राजनैतिक पूर्वाग्रहको कारणले गिरफ्तार गराउने षडयन्त्र यस जिल्लामा रहेको देखिन्छ।

यस जिल्लामा राजनैतिक पूर्वाग्रहको कारणले झूठा मुद्दाहरु पनि लगाएको पाइन्छ। भीमाद गा.वि.स. बस्ने चेतमान श्रेष्ठलाई २०४९ वैशाखमा चोरी तथा साउनमा वन फडानीको मुद्दा लगाएर थुनिएको थियो। तर पुनरावेदन अदालतले उक्त व्यक्तिलाई धरौटीमा रिहा गर्ने आदेश दिएको थियो।

भगवतिपुर-७ बस्ने सुर्य कुमार श्रेष्ठ ०४९ भाद्र २२ गते आफ्नो पसलको चोरी भएकोले उजुर गर्न जाँदा जिल्ला प्रहरी कार्यालयले उल्टै उनलाई नै थुनामा राख्यो। पछि पुनरावेदन अदालतमा मुद्दा हालियो र त्यहाँको आदेश भएपछि मात्र छोडियो।

## २. मौलिक अधिकार

देशको शासन प्रणाली र प्रदत्त संविधानले प्रत्येक जनतालाई मौलिक अधिकारद्वारा सुसज्जित गरेको छ। तथापी शिक्षा, ज्ञान, चेतनाको कमिले गर्दा यहाँका बासिन्दाले ती अधिकार पूर्णत उपभोग गर्न सकेका भने छैनन् ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त सबै कुराहरुको ग्यारेण्टी गरेको छ । तर यस जिल्लामा स्थापना भई आफ्नो कार्य संचालन गर्दै आएको दमौलीमा अवस्थित स्थानीय संगम क्लब माथि राजनैतिक पूर्वाग्रहको भावना राखी स्थानीय प्रशासनले संविधानको आदर्श र मर्म विपरीत सो को दर्ता खारेज गऱ्यो। तर प्रशासनको उक्त कार्यलाई अदालतले गैरकानूनी ठहराए पनि राजनैतिक प्रतिशोधको फलस्वरुप स्थानीय प्रशासनले २०४९ साउन २८ गते पुन: खारेजीको पत्र दिएको थियो ।

### २.२ धार्मिक स्वतन्त्रता

प्रवुद्ध र सचेत बर्गहरुको बाहुल्य भएको तनहुँ जिल्लामा हालसम्म धार्मिक कलह र भै-भगडाका खबरहरु सुन्नमा आएका छैनन् । तर यस जिल्लाको छाउदी बाराही र ढोर बाराही मन्दिरको गेटमा अछुत जातिलाई प्रवेश निषेध लेखनले देशको प्रदत्त संविधानलाई चुनौति दिईरहेको प्रतीत हुन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

प्रजातन्त्रको मूलभूत आदर्श राजनैतिक स्वतन्त्रता भए पनि देशको बस्तुस्थिति, परिपाटी, संस्कार आदिलाई नियाल्दा यसतर्फ अझै धेरै कार्य र जनचेतनाको आवश्यकता बोध हुन्छ। यस जिल्लामा मानब अधिकारको हननका आधारहरुमा स्थानीय निर्वाचनमा देखा परेको बाधा अड्चन, स्थानीय प्रशासन माथिको हस्तक्षेप, समाजका बिविध क्षेत्रमा कोरिएको राजनैतिक पूर्वाग्रह नै प्रमुख हुन् ।

मुख्य गरेर स्थानीय निर्वाचनमा भएका अनियमितताहरु नै यस जिल्लामा मानव अधिकार हनन् सम्बन्धी घटनाहरु हुन् । स्थानीय निर्बाचन ताका २०४९ जेठ २ गते भीमाद गा.बि.स. वडा न. १ जनज्योति माध्यमिक विद्यालयमा मतदाताहरुको छुट नाम भर्ने क्रममा शुरु भएको विवाद मतदानसम्म कायम नै रह्यो। त्यस्तै यसै निर्वाचनको क्रममा २०४९ जेठ १५ गते स्थानीय बरभञ्ज्याङको सेप बगैंचा बुथमा मतदान भैरहेको बेला आँखा नदेख्ने बृद्धाको सहमतिमा खसालेको मतको विषयलाई लिएर सत्तापक्ष र बिपक्ष बीच भएको बिवादले मुठभेडको स्थिति सिर्जना गऱ्यो । जसमा अर्जुनबहादुर अधिकारी सख्त घाइते हुन पुगेका थिए र यस बिषयलाई लिएर केही व्यक्तिहरुलाई ज्यान मार्ने उद्योगको मुद्दा चलाएको देखिन्छ। त्यस्तै स्थानीय निर्वाचनको क्रममा मिर्लुङ गा.बि.स., पुर्कोट गा.वि.स., छाङ गा.वि.स., मानकोट गा.बि.स. आदिमा अनियमितता र अशान्ति भएको थियो। यसरी स्थानीय निर्वाचनको बेला भीमाद गा.बि.स.का ७० वर्षीय बृद्ध समेत सत्तापक्ष र प्रतिपक्षको खिचातानी र हानथापबाट मुक्त रहन सकेनन् । यसैगरी स्थानीय निर्वाचनकै क्रममा स्थानीय छिरिङ सुन्धारा गा. बि. स. पुग्नु भएका राष्ट्रिय सभाका सदस्य क्या. नरबहादुर गुरुङ पनि पक्ष विपक्षका हानथापबाट अछुत रहन सक्नु भएन। त्यस्तै स्थानिय निर्वाचनको क्रममा यस जिल्लामा जिल्ला प्रशासकहरुले शान्ति, सुरक्षा, स्वतन्त्र निर्वाचनको कार्य जिम्मेवारीपूर्वक र निष्पक्षताका साथ गरेको देखिंदैन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

जनतालाई प्राप्त आफ्ना अधिकारहरुको अवगत र विना हस्तक्षेप संविधान प्रदत्त अधिकारहरुलाई क्रमवद्ध रुपमा उपभोग गर्दै लैजानु पर्ने आवश्यकता यस जिल्लामा प्रगाढ रुपमा देखिएको छ ।

हालसम्म जिल्ला प्रशासन कार्यालयमा ५६ बटा सार्वजनिक अपराधका मुद्दाहरु छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा सुकुम्वासी समस्या ठूलो रुपमा बिद्यमान नभए पनि भएकोलाई राजनीतिकरण गरिएको छ । भीमाद गा.बि.स. बडा नं. १ मा रहेका निजी जग्गामा नक्कली

सुकुम्वासी सिर्जना गरी अतिक्रमण गर्ने प्रयास गरिएको यसको ज्वलन्त उदाहरण हो ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लामा जिउ मास्ने, बेच्ने अपराधका घटनाहरु हुन थालेका छन् । यसै वर्षको पुष महिनामा भारतको बम्बईबाट भागेर आएकी गौंडा निवासी सपना कुमालले प्रहरी समक्ष उजुरी गरेपछि सीता कुमारी खड्का, देउमाया परियार, मीनु माया कुमाल, सपना कुमाललाई बम्बईमा लगी बिक्री गरेको अभियोगमा गौरीकुमारी शाही, शुक्रबहादुर दमाई, गोपाल परियार, कमला श्रेष्ठलाई कारवाही गरिएको छ ।

### ४.२ जारी, बहु विवाह, देउकी, बाबी प्रथा

यस जिल्लामा बहु-विवाहले निकै जरा गाडेको देखिन्छ । बन्दिपुर गा.वि.स. वडा नं. ४ बस्ने सूर्य कुमार श्रेष्ठकी श्रीमती सुशीला श्रेष्ठ आफूले सक्दो सेवा गर्दा गर्दै लोग्नेले दोश्रो विवाह गरेको र आफूलाई छोडेको विचार व्यक्त गर्दछिन् । त्यस्तै राम्जाकोटा गा.वि.स. बस्ने बर्ष ५० का लालहरि रानाभाटले २ वटी श्रीमती हुँदाहुँदै आफू डेरागरी बसेको घरकी १४ वर्षिया बालिका मीठु सुवेदीसंग अनुचित सम्बन्ध कायम गरी अन्ततः भगाएर लगे ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय ब्यबहार



# ३. पश्चिमाञ्चल

## गण्डकी

# ३.२ गोरखा

| | | |
|---|---|---|
| जनसंख्या | : | २५१७५० |
| साक्षरता | : | ४३.६ प्रतिशत |
| महिला साक्षरता | : | ३०.२ प्रतिशत |
| क्षेत्रफल | : | ३६१० वर्ग कि.मी. |

गण्डकी अञ्चलका ६ जिल्लाहरुमा गोरखा जिल्लाको ऐतिहासिक महत्व रहेको छ । यस जिल्लाको सदर मुकाम र दक्षिण भू-भाग बाहेक बाँकी क्षेत्र अति विकट र दुर्गम छ। यस जिल्लामा पछौटेपन, रुढीवाद, अन्धविश्वास, अशिक्षा, अज्ञानताको व्यापकताले गर्दा यहाँका महिलाहरुमाथि शोषण र अन्याय भएको छ। यहाँका महिलाहरुको शारीरिक श्रमको उपयोग कृषि उत्पादन तथा अन्य उत्पादनमूलक कार्यका लागि सहायकका रुपमा लिइन्छ । त्यसैले यहाँको कृषि उत्पादन महिला र गोरुमा आश्रित छ। "गोरखामा छोरी र गोरु नदिनु" भन्ने उखान उपरोक्त कुराबाट चरितार्थ भएको बोध हुन्छ। प्राय: गरेर चोरी, सार्वजनिक अपराध, लुटपाट-कुटपीट, आत्महत्या, ज्यान मुद्दा आदि यस जिल्लाका मानव अधिकार हनन् सम्बन्धी घटनाका उदाहरण हुन् ।

यस जिल्लाका माननीय न्यायाधीशलाई स्थानीय निर्वाचनमा अध्यक्ष पदमा निर्वाचित एक प्रतिनिधिले निर्वाचित भएको ६ महिनापछि "कांग्रेस र कम्युनिष्ट भनेको के हो" भनी सोधेको घटनाले पनि यो जिल्ला कुन हदसम्म पिछडिएको र हेछ भन्ने स्पष्ट हुन्छ ।

## १. बाँच्न पाउने अधिकार

संविधानले प्रत्येक नेपालीलाई सम्मानपूर्वक बाँच्ने स्वतन्त्रता प्रदान गरे पनि यस जिल्लामा राजनैतिक प्रतिशोधको भावनाले गर्दा यत्र-तत्र भय र सन्त्रासको वातावरण छाएको प्रतीत हुन्छ ।

### १.१ हत्या / गोली

२०४९ कात्तिक १४ गते बेलुका थालाजुङ गा.वि.स. वडा नं. ६ बस्ने लाहुरे तेजबहादुर गुरुङको घरमा चोरी भयो। उक्त चोरीको अभियोगमा लमजुङ निवासी वर्ष ६१ का पूर्णबहादुर विश्वकर्मा लगायत सानुमाया विश्वकर्मा, प्रताप सुनार, भीमबहादुर गुरुङ, देवानसिंह गुरुङ र सूर्यबहादुर रानालाई प्रहरील हिरासतमा राखी विभत्स र क्रुर यातना दिईयो । २०४९ कात्तिक १८ गतेदेखि मंसीर ४ गतेसम्म कठोर पीडा र यातना सहेर छुटेका यी पीडितहरुमध्ये पूर्णबहादुर विश्वकर्माको ३ दिनपछि अर्थात् मंसीर ७ गते मृत्यु भएको थियो ।

### १.२ जेल

गोरखाको जेलको स्थिति नारकीय रुपमा रहेको विचार जेलर स्वयंले व्यक्त गरे। बढ्दो महंगीको अनुपातमा बन्दीहरुलाई दिइने सुविधा न्यून रहेको छ। साथै शौचालय, मनोरञ्जन, पठनपाठनबाट वञ्चित यहाँका बन्दीहरुले मानव अधिकारको उपभोग गर्न पाएका छैनन् । ज्यानमुद्दा, चोरी, हडनाता, कर्तव्य ज्यान, सवारी ज्यान आदि मुद्दा अन्तरगतका २४ जना बन्दीहरु यस जेलमा रहेका छन् ।

### १.३ गिरफ्तारी / यातना

गोरखा जिल्लामा संविधानले दिएका अधिकारहरुको उपभोग गर्दा पनि विभिन्न यातनाहरुको शिकार हुनु परेको

देखियो । त्यस्तै शान्तिपूर्ण सभा र जुलुस प्रदर्शन गर्दा समेत प्रहरीले हस्तक्षेप गरेको थियो । गत वर्ष स्थानीय निर्वाचनका क्रममा प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला यहाँ जानु हुँदा केही राजनैतिक कार्यकर्ताले उहाँलाई कालो झण्डा देखाई विरोध प्रदर्शन गरेका थिए । उक्त विरोध प्रदर्शनका सिलसिलामा राजनैतिक पूर्वाग्रह राखी स्थानीय प्रशासनले कैयौं मान्छेहरुलाई गिरफ्तार गरेको थियो । त्यस्तै गत २०४८ चैत २४ गते भएको "नेपाल बन्द" आन्दोलनलाई दबाउने क्रममा जिल्लाका केही राजनैतिक नेताहरु नै हातमा प्रहरीको वाकीटकी समेत लिएर सक्रिय भएको घटना यहाँ चर्चाको विषय बनेको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लाको वस्तुस्थिति र परिवेशलाई आँक्दा स्थानीय निर्वाचन स्वतन्त्र र निष्पक्ष भयो भन्ने तथ्यमा शंका गर्नु पर्ने स्थिति आउँछ, तर स्थानीय निर्वाचनमा भएको हिंसा, हत्या, मुठभेड आदि हालसम्म प्रकाशमा आउन सकेको देखिदैनन् ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको अदालतमा आत्महत्या, भवितव्य मृत्यु, ज्यान मुद्दा, सार्वजनिक अपराध, कर्तव्य ज्यान आदि गरी ६२ वटा मुद्दा दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

यहाँ पनि महिलाहरु सामाजिक तथा सांस्कृतिक दुवै रुपबाट ठगिएका देखिन्छन् । महिलाहरुले कानूनी रुपमा पाउने सम्पत्ति, अंशवण्डा आदि अदालतले निर्णय गर्दा पनि महिलाहरुले अझापि पाउन सकेका छैनन् । महिलाहरुलाई यहाँ कृषि उत्पादनका साधनका रुपमा लिइन्छ । बहुविवाह यहाँ सामान्य भैसकेको छ । महिलाहरुमाथि पुरुषको मात्र होइन आमा, सासू, दिदी आदि स्वयं महिलाहरुले नै गरेको पक्षपात र भेदभावका यथेष्ट उदाहरणहरु छन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा देउकी र वादी प्रथा देखा परेको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाइँदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा यति विकट र पिछडिएका क्षेत्रहरु छन्, जहाँ सदरमुकाम भनेको नागरिकता र चामल लिन जाने ठाउँ हो भन्ने परेको छ । त्यस्तै यस्ता विकट क्षेकम्पार, सिर्दिवास, चुचेत, प्रोक, लहरे, गुम्दा आदि गा.बि.स.हरुमा पुग्ने मान्छेको अनुभवमा "मानव भनेको दुई खुट्टा टेक्ने र बोल्ने" प्राणि मात्र हो भन्ने भान पर्दछ ।

अन्धविश्वास र रुढीवादले जरा गाडेको यहाँका लामा जातिको बाहुल्य भएका केही बस्तीहरु छन् । राक्षेन र मुगुगुम्बामा तामाङ जातिको आफ्ना माइला छोरा र माइली छोरीलाई श्री सम्पत्ति सहित गुम्बाका लामालाई बुझाई उनीहरुको वैवाहिक तथा व्यक्तिगत स्वतन्त्रतालाई कुण्ठित गरिने कुरीति अझापि कायम रहेको देखिन्छ । जसबाट मानव अधिकारमा अन्तर्निहित व्यक्तिगत स्वतन्त्रताको हनन् भएको बोध हुन्छ ।

■



# ३. पश्चिमाञ्चल

## गण्डकी

## ३.३ लमजुङ

| | | |
|---|---|---|
| जनसंख्या | : | १५३७८६ |
| साक्षरता | : | ४८.७ प्रतिशत |
| महिला साक्षरता | : | ३४.८ प्रतिशत |
| क्षेत्रफल | : | १६९२ वर्ग कि. मी. |

हिमालको काखमा रहेको लमजुङ जिल्ला गण्डकी अञ्चलमा पर्दछ । अञ्चलमा अलि विकट मानिने लमजुङ जिल्लामा मानव अधिकारको उल्लंघनका घटनाहरुमा हत्या, बहुविवाह, राजनैतिक प्रतिशोधका कारणले हुने झूठा मुद्दा, गैर कानूनी गिरफ्तारी आदि रहेका छन् ।

### १. बाँच्न पाउने अधिकार

संविधानमा हरेक जनता सम्मानपूर्वक बाँच्न पाउने अधिकारको प्रावधान भए तापनि व्यवहारमा पछौटेपन, अन्धरुढीवाद, गरीबी, अशिक्षा आदिका कारणले संविधान प्रदत्त मौलिक अधिकारहरु लागू हुन नसकिरहेको देखिन्छ ।

#### १.१ हत्या / गोली

स्थानीय निर्वाचनको पूर्व सन्ध्यामा २०४९ वैशाख २९ गते बिहान चिती गा.बि.स. वडा नं. ३ भण्डारी पाताल भन्ने जङ्गलमा राजनैतिक कार्यकर्ता हरिबाबु पाण्डेको लाश चिलाउनेको रुखमा लोग्ने मान्छेले लगाउने धोतीले बाँधिएको अवस्थामा फेला परेको थियो । रहस्यमय तरिकाले भेटिएको सो लाशको प्रकृति हेर्दा आत्महत्या नभएको बोध हुन्थ्यो ।

२०४८ फागुन २७ गते स्थानीय बेसीशहर बजारमा प्रहरीले बच्चालाई जथाभावी गाली गरेकोमा सोही गा.बि.स. वडा नं. ९ घटचौर बस्ने एकबहादुर दीक्षितले प्रहरीलाई सम्झाउँदा उल्टै प्रहरीहरुले एक बहादुर दीक्षितमाथि आक्रमण गरेका थिए । निरपराध व्यक्ति माथि आक्रमण हुँदा उक्त सेरा टोलमा उपस्थित ठूलो भीडले प्रहरी ज्यादतीको विरोध गरे । यसै सिलसिलामा उत्तेजित भीडलाई शान्त पार्न प्रहरीले हवाई फायर गऱ्यो, जसबाट चन्द्रिका गुरुङ, सुश्री लक्ष्मी बराल र शान्ता बराल सामान्य घाइते भएका थिए ।

भार्ते गा.वि.स.मा राजनैतिक कार्यकर्ता कृष्णप्रसाद अधिकारीको पनि रहस्यमय मृत्यु भएको थियो ।

#### १.२ जेल

लमजुङ जिल्लामा अवस्थित जेलको स्थिति त्यति दयनीय नरहेको ज्ञात भयो । हाल २९ जना बन्दी रहेको उक्त जेलमा बन्दीहरुले सुविधाका नाममा पत्र-पत्रिका समेत पढ्न नपाएको गुनासो रहेको पाइयो । त्यस्तै उपयुक्त शौचालयको प्रवन्ध यहाँ देखिंएन । जेलमा बन्दीहरुले उद्योग गरुन् भन्ने हेतुले केही तानको व्यवस्था गरिएको छ ।

#### १.३ गिरफ्तारी / यातना

२०४७ चैत २३ गते बेसीशहर गा.बि.स वडा न १ नारायण मन्दिर टोलमा अवस्थित होटलमा राजनैतिक कार्यकर्ता डी.बी. कार्की चिया खाइरहेका थिए । अचानक एक हुल मान्छे आएर कुरा गर्नुछ भनी बाहिर ल्याई सांघातिक हमलाद्वारा उनलाई मरणासन्न अवस्थामा पुऱ्याए । कार्कीको गम्भीर अवस्था देखेर जिल्ला प्रशासनको सक्रियतामा हेलिकोप्टर मगाएर उपचारार्थ काठमाडौं पठाइएको थियो ।

तर्कुघाट गा.वि.स. १ बस्ने गोविन्दबहादुर बि.क.ले पर्ती जग्गा कमाइ खाएकोमा आपत्ति जनाई सोही गा.वि.स. बस्ने लामिछाने परिवारले निज गोविन्दबहादुरलाई हातपात गर्नुका साथै चोरी गरेको अभियोग लगाएर प्रहरीलाई बुझाइ दिए। पछि तारेखमा छुटेका पीडित गोविन्दबहादुर बि.क.लाई २०४९ कात्तिक ११ गते भाइटीकाका दिन हर्राबोट ढाँड भन्ने स्थानमा मरणासन्न हुने गरी पिटेपछि उनी ज्यान सुरक्षार्थ अन्यत्र गई बसेका थिए ।

२०४९ माघ ताका जीता गा.वि.स. अन्तरगत सप्तधारा मा.वि.को वार्षिकोत्सवका अवसरमा आयोजित समारोहमा स्थानीय जनताहरुले सो विद्यालयका शिक्षक लक्ष्मीप्रसाद न्यौपानेलाई कुटपीट गरेको घटना यहाँ चर्चाको विषय बनेको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरुले यस जिल्लामा विभिन्न मानसिक यातना सहन गर्नु परेको छ । यस्ता शिक्षकहरुलाई दुर्गम, अपायक ठाउँहरुमा सरुवा गरिएको छ भने कतिपय अस्थायी शिक्षकहरु राजनैतिक प्रतिशोधका कारण सेवाबाट अवकास भएका छन् ।

त्यस्तै गतवर्ष विभिन्न माग राखी शान्तिपूर्ण सञ्चालन भएको कर्मचारी आन्दोलनमा सरिक भएका यस जिल्लाका नेपाल निजामती कर्मचारी संगठनका पक्षधर कर्मचारीहरुलाई पनि मानसिक यातना दिइएको थियो ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्वतन्त्र र निष्पक्ष निर्वाचनको हकमा जहाँ जुन राजनैतिक दलको पकड र प्रभाव छ, त्यहाँ उसले अनियमितता र ज्यादती गरेका यथेष्ट उदाहरणहरु प्रशस्त छन् । यस जिल्लामा पनि स्थानीय निर्वाचन स्वतन्त्र र निष्पक्ष गर्ने अभिभारा लिएकाहरुले नै सत्तापक्षलाई सघाएको बताइयो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा देवानी तर्फ ६६ र फौजदारी तर्फ ५८ मुद्दा दायर भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

२०४९ जेठ २ गते चक्रतीर्थ गा.वि.स. वडा नं. ५ अल्काटार बस्ने सीता तिवारी पँधेरामा पानी लिन जाँदा सासूलाई उनको चरित्रमाथि शंका लागेर छोरा मणिराम तिवारीलाई बुहारीको चरित्र बारे नानाथरीका कुरा सुनाइन् । जस अनुरुप मणिराम तिवारीले श्रीमती सीता तिवारीलाई मरणासन्न हुने गरी पिटे । लोग्ने र सासूको अत्याचार खप्न नसकेकी सीता तिवारीलाई घरमा पनि बस्न दिइएन। घरबाट नियम कानून अनुसार पाउनु पर्ने अंश पनि नपाएर अन्तत: उनी विवश र असहाय भएर माइती धमिलिकुवा गा.वि.स. सालफेदी गएर बसेकी छिन् ।

### ४.१ महिला किनबेच र बलात्कार

यस जिल्लामा महिलाहरु माथि ज्यादती र शोषण भएको पाइन्छ। पहिले लमजुङमा महिला किनबेच सम्बन्धी घटनाहरु नभए पनि व्यापक गरीबीले गर्दा हिजो आज फाटफुट यो समस्या देखा पर्न थालेको छ। साथै नारी माथिको बलात्कारले पनि यहाँ जरा गाडिसकेको प्रतीत हुन्छ। सुन्दर बजार गा.वि.स. वडा नं. ६ बस्ने वर्ष २० का बुद्धराम श्रेष्ठले आफ्नो घरमा आएको मौका पारी १० वर्षीया बालिका तमसु गुरुङलाई बलात्कार गरेका थिए ।

### ४.२ जारी, बहु विवाह, बेउकी, बादी प्रथा

जारी र बहुविवाह प्रथा यस जिल्लामा व्यापक रुपमा रहेको छ । भोटेओडार गा.बि.स. वडा नं. ६ पोखराका हरिबहादुर बि.क.ले जेठी स्वास्नी कुमारी बि.क. हुँदाहुँदै कमल बि.क.संग बहुविवाह गरे ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

चक्रतीर्थ गा.वि.स. अल्काटारका राजकुमार श्रेष्ठ र रामदेवी पराजुली बीच भएको प्रेमसम्बन्ध जातपात र धनी गरीब वर्गभेदका कारण तोडिएको थियो ।

यस जिल्लामा गरीबी दिन प्रतिदिन बढ्दै गएको छ। जस्ले गर्दा दाइजो प्रथा, वेश्यावृत्ति, महिला बेचविखन, चोरी आदिका घटनाहरुको वृद्धि हुँदै गएको छ। यहाँ शिक्षा र चेतनाको अभावमा शोषण व्याप्त छ। गरीब निमुखा जनता २४ देखि ३० % सम्म ब्याजमा ऋण लिन बाध्य छन् ।



# ३. पश्चिमाञ्चल

## गण्डकी

# ३.४ स्याङ्जा

| | | |
|---|---|---|
| जनसंख्या | : | २९२०१४ |
| साक्षरता | : | ५२.६ प्रतिशत |
| महिला साक्षरता | : | ३८.३ प्रतिशत |
| क्षेत्रफल | : | ११६४ वर्ग कि. मी. |

गण्डकी अञ्चलमा अवस्थित स्याङ्जा जिल्लामा मानव अधिकार हननका मुख्य घटनाहरुमा राजनैतिक प्रतिशोधका कारण उत्पन्न विवाद, झै झगडा, बहुविवाह, जारी प्रथा, छुवाछुत आदि हुन् ।

## १. बाँच्न पाउने अधिकार

संविधानले सम्पूर्ण नेपालीलाई सम्मानपूर्वक बाँच्न पाउने अधिकार सुम्पिए पनि राजनैतिक तथा कतिपय कारणहरुले गर्दा यस जिल्लामा भय र सन्त्रासको वातावरण भने यथावत नै रहेको देखिन्छ ।

### १.१ हत्या / गोली

२०४९ असोज १९ गते शिर्षकोट गा.वि.स.का केही व्यक्तिहरुमाथि ज्यान मार्ने उद्योग अभियोग लागेकोमा अभियुक्तहरुलाई सोही गा.बि.स. वडा नं. ६ बस्ने केहरसिंह गुरुङले लुकाएको आरोपमा स्थानीय निवासी भीमलाल ढुङ्गेले निज केहर सिंह गुरुङलाई धम्काएकोले मानसिक यातना सहन नसकी उनले रुखमा झुण्डिएर आत्महत्या गरेका थिए ।

### १.२ जेल

यहाँको जेलको अवस्था गए गुज्रेको देखिन्छ । बन्दीहरुले नियमानुसार पाउने सुविधाहरुमा स्थानीय प्रशासनबाट त्यति चासो र जानकारी राखिएको पाइएन । बन्दीहरुलाई न्यूनतम सुविधा उपलब्ध गराउनका लागि पनि बजेटको अभाव देखाउने यहाँको प्रशासनले जेलमा कतिजना बन्दीहरु छन्, त्यसको किटानका साथ राखेको अभिलेख समेत देखाएनन् ।

यहाँको जेलमा रहेका मानबहादुर थापा २०४३ भदौ ७ गते खुन/चोरी मुद्दामा गिरफ्तार भएका थिए । उनलाई २०४६ मा जिल्ला अदालतबाट जन्मकैद गरिने फैसला भएको थियो । २०४३ असोज १६ गते देखि जेलमा रहेका मानबहादुर ले २०४६ मा पुनरावेदन गर्नु पर्ने थियो र उनी त्यसको तैयारी गर्दै थिए । तर त्यसै बखत उनका वकील तेजप्रसाद कडेल जनआन्दोलनको क्रममा जेल परे पश्चात उनको पुनरावेदन गर्ने म्याद गुज्रीन पुग्यो । हाल उनी आफुलाई निर पराध भएको बताउँछन् । तर उनको कुरो कानूनी रुपमा सुनीनु पर्ने म्याद गुज्रिसकेको छ ।

### १.३ गिरफ्तारी / यातना

खासगरी राजनैतिक प्रतिशोधको भावनाले यस जिल्लामा धेरै जसो व्यक्तिहरु गिरफ्तार र यातनाका शिकार भएका छन् ।

२०४९ कात्तिक १ गते रत्नपुर गा.वि.स. वडा नं. ७ बस्ने यमबहादुर महतलाई केटाकेटीहरुको झगडाको निहुँमा प्रहरीले पक्राउ गरेको थियो । हिरासतमा रहेका निज महतलाई प्रहरीहरुको सहयोगमा रत्नपुर गा.वि.स.का अध्यक्ष वद्रीप्रसाद भट्टराईले "तँ मेरो रैती होस्, तलाई जे गरे पनि हुन्छ" भन्दै कुट्नुका अतिरिक्त चुरोटले जिउमा पोल्ने काम गरेका थिए ।

*२०४९ मंसीर महिनामा आदर्श मा.वि.मा प्रवेशिकाको टेष्ट परीक्षा सञ्चालन भैरहेको बेला सो परीक्षाका केन्द्राध्यक्ष पदमप्रसाद पाण्डेले परीक्षामा कडाई गरेको हुनाले पुतलीबजार गा.वि.स. वडा नं. ९ बस्ने सञ्जय श्रेष्ठले केन्द्राध्यक्षमाथि छुरा प्रहार गरेका थिए ।*

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

संविधानले ग्यारेण्टी गरेको मौलिक अधिकारलाई यस जिल्लामा उपहास गरेको पाइयो ।

गत स्थानीय निर्वाचनमा यहाँ राजनैतिक दलहरुद्वारा नै अनियमित र अशान्तपूर्ण वातावरण सृजना गरेको देखिन्छ ।

२०४९ जेठ १८ गते पुतली बजार गा.वि.स.को निर्वाचन त्रिभुवन आदर्श मा.वि.मा शान्तिपूर्ण रुपमा चलिरहेको बेला शक्तिशाली राजनैतिक दलका नेताको आदेशमा मतदान अधिकृतले निर्वाचन स्थगित गरेका थिए ।

२०४९ जेठ १८ गते बनेयोक गा.वि.स. मा निर्वाचन शान्तिपूर्ण भैरहेको बेला देवबहादुर खवास, कुमार गुरुङ र कमल खड्का सहित आएको एक जत्थाले सोही गा.वि.स. बस्ने विष्णुप्रसाद श्रेष्ठ, गंगाबहादुर वि.क. र बलराममाथि सांघातिक आक्रमण गरेका थिए ।

२०४९ जेठ १८ गते स्थानीय निर्वाचनका क्रममा शिवालय गा.वि.स.मा मतदान कार्य समाप्त भई मतगणनाको विषयलाई लिएर दुई पक्षबीच विवाद उत्पन्न हुँदा मतपेटिकाहरु फाल्ने काम समेत भएको । तर सो कार्य गरेको अभियोगमा ११ जनालाई एकपक्षीय रुपमा निर्वाचन अपराध तथा सजाय ऐन अन्तर्गत मुद्दा चलाइएको थियो ।

त्यस्तै कालिकोट, जगत्र देवी, पुतलीबजार गा.वि.स.हरुमा स्थानीय निर्वाचन प्रक्रिया सन्तोषजनक र सुचारु रुपले सञ्चालन नभएको बताइयो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिवी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस बर्ष यहाँको जिल्ला अदालतमा दुनियावादी १९६ र सरकारवादी २४ गरी जम्मा २२० मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

यस जिल्लामा महिला हक र हितलाई कुण्ठित पारेको देखिन्छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

यहाँ जारी प्रथाको बाहुल्य रहेको छ ।

फेदी खोला गा.वि.स. वडा नं. २ बस्ने, वर्ष २१ की पृथ्वी नारायण क्याम्पसकी छात्रा दुर्गा कुमारीले आफूले मन पराएको केटासंग प्रेम विवाह गरिन् भन्ने रिसमा आफ्नै छोरी दुर्गा कुमारीका विरुद्ध बाबु पूर्णबहादुर खत्रीले ठगी मुद्दा दायर गरेका थिए ।

### ४.२ जारी, बहु विवाह, बेउकी, बादी प्रथा

यो जिल्लामा बहुविवाहको प्रचलन व्यापक छ ।



फोटो: मर्न पुस्तक

*स्याङ्जा जेलको बाहिरी दृश्य*

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा राजनैतिक नेताहरुद्वारा नै नियम कानून उल्लंघन र अदालतको मानहानी गरेको पाइन्छ । उदाहरणको लागि पवित्रा देवी पाध्याको जाहेरीले बादी श्री ५ को सरकार प्रतिवादी खडानन्द उपाध्याय समेत भएको मकै चोरी मुद्दामा प्रतिवादी खडानन्दले राजनैतिक नेता तारापति सुवेदीलाई एउटा साक्षी राखेकोमा अदालतबाट साक्षी तथा सर्जमिनका मानिस झिकाउने आदेश हुँदा अदालतमा हाजिर हुने क्रममा तारेख भरपाईमा सही गर्दा निज सुवेदीले रिसाएर "कारवाही र व्यवहारमा ढीलासुस्ती र उपेक्षा" भनी लेख्दै "अदालतका यस्ता न्यायधीश र कर्मचारीलाई घोक्राएर निकाल्नु पर्दछ । म घरबाट बकपत्र लेखी पठाउँछु । कसले मेरो बकपत्र प्रमाणमा लिंदोरहेनछ हेरौं" भन्ने धम्की दिए । यस मुद्दालाई लिएर नेपाल बार एसोसिएशन जिल्ला इकाईले अदालतको मानहानी भएको भनी एसोसिएशनका जिल्ला सभापति दुर्गा ढकाल र सचिव विष्णु ढुंगानाले सार्वजनिक महत्वको विषय भन्दै तारापति सुवेदी विरुद्ध मुद्दा दायर गरेका थिए ।



# ३. पश्चिमाञ्चल

## गण्डकी

## ३.५ कास्की

| | | |
|---|---|---|
| जनसंख्या | : | २९२००९ |
| साक्षरता | : | ५८.१ प्रतिशत |
| महिला साक्षरता | : | ४४.५ प्रतिशत |
| क्षेत्रफल | : | २०१७ वर्ग कि. मी. |

नेपाल अधिराज्यभरि सुन्दर र मनमोहक शहरको रुपमा परिचित यस जिल्लाको सदरमुकाम पोखरामा राजनैतिक प्रतिशोधका कारण अब गोली चल्नु, हत्या हुनु, कुटपीट हुनु सामान्य भैसकेको छ ।

### १. बाँच्न पाउने अधिकार

यस जिल्लामा नियम र कानूनलाई एकातिर पन्छाएर शक्तिशालीले निर्धोलाई सम्मानपूर्वक बाँच्ने अधिकारबाट बञ्चित गराएको प्रतीत हुन्छ ।

### १.१ हत्या / गोली

२०४८ चैत २५ गते "नेपाल बन्द" को सिलसिलामा पृथ्वी नारायण क्याम्पसमा दुई पक्षका विद्यार्थीबीच भएको भीडन्तमा क्याम्पसको हाताभित्र प्रहरी छिरेर चलाएको गोलीद्वारा हरिश्चन्द्र ढुंगाना सख्त घाइते भएभने अन्य विद्यार्थीहरु सामान्य घाइते भएका थिए ।

२०४९ वैशाख २८ गते भरतपोखरी गा.वि.स. वडा नं. ३ कालिकास्थान सरस्वती मा.वि.मां स्थानीय निर्वाचनका लागि १० वर्षका केटाकेटीहरुले समेत नाम दर्ता गरेकोमा विरोध गर्दा राजनैतिक कार्यकर्ता तुलराज आचार्यको केही व्यक्तिहरुद्वारा हत्या गरिएको थियो । उक्त हत्याको विरोधमा २०४९ जेठ ५ गते पोखरामा विरोध जुलुस प्रदर्शन गर्दा स्थानीय साडी पसलबाट राजेन्द्र कोइरालाले गोली चलाउँदा ७ जना व्यक्ति घाइते भएका थिए । त्यही बेला प्रहरीले लाठीचार्ज गरी ५० जनाभन्दा बढी व्यक्तिहरुलाई घाइते बनाएको थियो ।

पोखरा नगरपालिका वडा नं. ६ मा अवस्थित ताल बाराही मा.वि. को सञ्चालक समितिका सदस्यहरुको चयनको विषयलाई लिएर चैरहेको वाद-विवादमा २०४९ कात्तिक २० गते र मंसीर ५ गते अचानक प्रहरी बल विद्यालयको हाताभित्र प्रवेश गरी अश्रुग्यांस प्रयोग गऱ्यो र गोली पनि चलाइयो । जसबाट परीक्षा दिइरहेका विद्यार्थीहरु घाइते हुन पुगे । यस पश्चात स्थानीय प्रशासनले सो क्षेत्रमा व्यापक दमन कार्य गऱ्यो । जसमा धर्मराज पहाडीको टाउको फुट्यो भने गंगा बरालको हात भाँचियो । यसै घटनामा प्रहरीले अन्य ११ जनालाई पक्राउ गरी चरम यातना दिएको थियो । उक्त घटना पश्चात् सो विद्यालयका प्रधानाध्यापक रामराज रेग्मीलाई निलम्बन गरिएको थियो ।

### १.२ जेल

करीब १९ रोपनी जग्गामा फैलिएको यहाँको जेलको स्थिति ज्यादै नाजुक र जीर्ण रहेको देखिन्छ । खानेपानी र शौचालयको असुविधा भएको, ६० जना बन्दीहरुको क्षमता भएकोमा १२७ जना बन्दीहरु रहेकाछन् ।

### १.३ गिरफ्तारी / यातना

गिरफ्तारी र यातनाका उल्लेखनिय घटना प्रकाशमा आएनन् ।

## २. मौलिक अधिकार

यस जिल्लामा जनताका मौलिक अधिकार तथा राजनैतिक स्वतन्त्रतालाई कुण्ठित गरेको प्रतित हुन्छ । भनाइको तात्पर्य विपक्षीले जितेका क्षेत्रहरुमा बजेट उपलब्ध नगराई योजना र कार्यक्रम ठप पार्ने प्रयास गरिएको छ । सराङकोट र कास्कीकोट गा.वि.स. यसैका उदाहरणहरु हुन् ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

विशेष गरेर राजनैतिक विचारसंग असहमत शिक्षक तथा कर्मचारीहरुमा यहाँ आतंक नै फैलिएको छ । संगठनसंग सम्बद्ध यहाँका अस्थायी शिक्षक तथा कर्मचारीहरुलाई अवकास दिइयो भने अवकास दिन नमिल्नेहरुलाई दुर्गम तथा अपायक क्षेत्रमा सरुवा गरिएको थियो । स्थानीय भुमेश्वर प्रा.वि.का शिक्षक शशिधर अधिकारीलाई एक महिनामा तीन ठाउँमा समेत सरुवा गरेको देखिन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा विभिन्न अपराधका ३७ मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ३. पश्चिमाञ्चल

## गण्डकी

## ३.६ मनाङ्ग

| | | |
|---|---|---|
| जनसंख्या | : | ५३६९ |
| साक्षरता | : | ४७.१ प्रतिशत |
| महिला साक्षरता | : | २३.० प्रतिशत |
| क्षेत्रफल | : | २२४६ वर्ग कि. मी. |

गण्डकी अञ्चलका दुर्गम र विकट जिल्लाहरुमध्ये एउटा मनाङ जिल्ला हो । हिमश्रृंखलाको काखमा रहेको यो जिल्ला अधिराज्यको सबभन्दा कम जनसंख्या भएको जिल्लामा गनिन्छ । हिमाली क्षेत्र, कम जनसंख्या, राजनैतिक चेतनाको अभाव भएर पनि यहाँ खास मानव अधिकार हनन् सम्बन्धी खासै ठूला घटना घटेका छैनन् । गाउँघरमा देखिएका केही कुटपीट र झै-झगडाहरु आपसी समझदारी र गाउँका थकालीको निर्णयद्धारा छिनाफानो गर्ने गरिन्छ । तसर्थ यहाँका प्रहरी कार्यालय अथवा जिल्ला अदालतमा खासै कुनै गम्भीर मुद्दाहरु दर्ता भएका भेटिएनन् । यस जिल्लामा जिल्ला न्यायधीश नरहेकोले अदालतका विचारीलाई निमित्त न्यायधीशको अभिभारा दिइएको पाइयो ।

### १. बाँच्न पाउने अधिकार

संविधानले प्रत्याभूति गरेको सम्मानपूर्वक बाँच्न पाउने मौलिक अधिकार व्यवहारमा लागू नभए पनि यहाँ मानव अधिकार उल्लंघन तथा हनन्का उल्लेखनिय घटनाहरु भएका छैनन् ।

न्यून आवादी भएको यस जिल्लामा दैवी प्रकोप र भवितव्यबाट मात्र मृत्यु भएका घटनाहरु छन् । २०४९ असार २७ गते बोगलुङ्ग गा.वि.स. संखुवासभा घर भई यहाँ भारी बोकी हिंड्ने लोकबहादुर राई बिरामी भै याकखर्क भन्ने ठाउँमा मृत्यु भएको थियो ।

२०४९ कात्तिक २५ गते तिप्लिङ गा.बि.स. धादिङ घर भई चामे गा.वि.स. तलेखु बस्ने तुले थापाको बिरामी भै मृत्यु भयो ।

२०४९ पुस ९ गते धारापानी गा.बि.स. वडा नं. ३ बस्ने ७ वर्षीय माइला गुरुङको आगोले पोली मृत्यु भएको थियो ।

#### १.१ हत्या / गोली

यस जिल्लामा भवितव्य र दैवी प्रकोप मृत्यु बाहेक अन्य हत्या र गोलीका घटनाहरु यस वर्ष जानकारीमा आएनन् ।

#### १.२ जेल

यस जिल्लामा रहेको जेलको आफ्नो भवन नभएकोले २०३८ सालदेखि नै जेल भाडामा लिइएको घरमा छ । जेलमा हाल एकजना पनि बन्दी नभएको भेटियो ।

#### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा यस वर्ष गिरफ्तारी र यातनाका घटनाहरु पनि खास जानकारीमा आएनन् ।

### २. मौलिक अधिकार

#### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका

कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा अशान्तिका नाममा गत स्थानीय निर्वाचनमा २०४९ जेठ १७ गते थोचे गा.वि.स.मा भएको कुटपीटलाई लिन सकिन्छ। पहिले विभिन्न दलका राजनैतिक कार्यकर्ताबीच निर्वाचन परिणाम जस्तो सुकै आए पनि नाराबाजी नगर्ने भन्ने समझदारी भएको थियो। तर निर्वाचन पश्चात् नाराबाजी हुनाका साथै राजनैतिक कार्यकर्ता तथा थोचे गा.वि.स.का अध्यक्ष पदका पराजित उम्मेदवार जुमली पुनेलको घरमा ढुंगामुढा भई घरको शिशा फुटेको थियो। उक्त घटनामा केही व्यक्तिहरुलाई पक्राउ गरी ११ दिनपछि कागज गराई रिहा गरियो।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



## ३. पश्चिमाञ्चल

### लुम्बिनी

# ३.७ नवलपरासी

| | |
|---|---|
| जनसंख्या | ४३५२५६ |
| साक्षरता | ४१.२ प्रतिशत |
| महिला साक्षरता | २५.८ प्रतिशत |
| क्षेत्रफल | २१६२ वर्ग कि. मी. |

नवलपरासी जिल्लामा पनि मानव अधिकार हनन् हुनुका कारणहरु अरु जिल्लाहरु भन्दा फरक छैनन् । यस जिल्लामा मूलत: राजनीतिक प्रतिद्वन्दिता, झै-झगडा, आगलागी, महिलाको बेचबिखन र बलात्कारद्वारा मानवअधिकारको हनन् हुने गरेको देखिन्छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

बहुचर्चित टनकपुर प्रकरणलाई लिएर भारतीय प्रधानमन्त्री पी.वी. नरसिंह रावलाई विरोधपत्र दिन महाकाली बचाउ अभियानको १३ सदस्यीय साइकल ऱ्यालीको गिरफ्तारी र सो गिरफ्तारी विरुद्ध भएको विरोध प्रदर्शनमा भएको गोली काण्ड यस जिल्लाको सर्वाधिक चर्चित र महत्वपूर्ण घटना हो ।

२०४९ साल असोज २९ गते दिउँसो ११ बजेतिर चोरमाराबाट पूर्व लागेको साइकल ऱ्यालीलाई ४० किलोमिटर मा गिरफ्तार गरेर गण्डक कमाण्ड क्षेत्रको सिमरामा राखियो । उनीहरुको स्वागतका लागि कावासोतीमा बसेका मानिस यस गिरफ्तारीबाट क्षुब्ध भए र यातायात अवरुद्ध गरे । यातायात अवरुद्ध भएपछि दिउँसो करीव २ बजेतिर प्रहरीसंग शुरुमा सामान्य विवाद भयो ।

दिउँसोदेखि यातायात अवरुद्ध भए पनि स्थिति सामान्य थियो । राती २.३० बजेतिर परासीबाट प्रजिअ, डि.एस.पी. र सशस्त्र प्रहरी आइपुगे । प्रदर्शनकारीहरु प्रजिअ आएपछि वार्ता गर्ने पक्षमा थिए, तर कावासोती आइपुग्नासाथ प्रजिअले गोली चलाउने आदेश दिए । बिना पूर्वसूचना, बिना चेतावनी सभापति चोकमा राती २.३० बजे अन्धाधुन्द गोली चलाइयो । अँध्यारोमा मानिसको भागाभाग भएपछि पनि प्रहरीले घरघरमा गएर गोली चलायो । गोली र अश्रुग्यासबाट बच्न भागेकाहरु प्रहरीको लखेटाइबाट त्रस्त पारिए ।

प्रहरीले यसरी गोली चलाउँदा मोहनवावु पन्त, दामोदर ढुंगाना, डोलबहादुर पौडेल, बन्धु श्रेष्ठ, रसबहादुर गुरुङ, मानबहादुर तामांग र नरबहादुर थापा मगर गम्भीर घाइते भए भने १५/२० जना सामान्य घाइते भए । गोली काण्डमा ३१ वर्षीय डोलप्रसाद पौडेललाई भाग्दा भाग्दै टाउकोमा गोली लाग्यो । वर्ष ४६ का मोहनवावु पन्त गोली चलेपछि घाइतेको जानकारी लिन घटनास्थल गएका थिए, उनलाई राती ३ बजे दाहिने खुट्टाको तिघ्रामा गोली लागेको थियो । हाल उनको दिल्लीमा उपचार भैरहेको छ । पहिले गोली लागेका घाइतेलाई गाडीमा चढाएर लुक्न जाँदा अगौली ७ निवासी नरबहादुर थापालाई छातीको दाहिनेपट्टी लागेको गोलीले छाती छेडेर पछाडिपट्टी निस्क्यो । शिवमन्दिर गा.वि.स.-३ निवासी ३० वर्षीय बन्धुबहादुर श्रेष्ठ गोली चल्न थालेपछि भाग्दै घरभित्र पस्न लाग्दा नारीमा गोली लाग्यो । सोही गा.वि.स.वडा नं. २ बस्ने दामोदर ढुंगानालाई देब्रे गोडाको पिंडौलामा गोली लाग्यो ।

कावासोती गोली काण्डमा घाइते भएकाहरु प्रशासनिक निकायबाट भएको मानव अधिकार हननका घटनाको दृष्टान्त हुन् भनी नेकपा एमाले, सद्भावना र राष्ट्रिय प्रजातन्त्र पार्टीले घटनाको छानविन गर्न आयोग गठन गर्ने र दोषीलाई कार्वाही गर्ने माग गरेका थिए भने प्रशासनले १२ जना प्रहरी घाइते भएको र आन्दोलनकारीले हातहतियारले आक्रमण गरेपछि गोली चलाएको दावी गऱ्यो ।

जिल्ला प्रहरी कार्यालय नवलपरासीमा यस वर्ष कर्तव्य ज्यान मुद्दा शीर्षकमा ११ वटा मुद्दा दर्ता भए पनि प्रशासनिक निकायबाट भएको कावासोती गोली काण्ड बाहेक उल्लेखनीय हत्या वा गोली काण्ड भएको पाईदैन ।

### १.२ जेल

विक्रम सम्बत १९९९ सालमा ५ कठ्ठा १० धुर जग्गामा बनेको नवलपरासी जेलको क्षमता ३५ पुरुष र ५ महिला गरी जम्मा ४० जना मात्र राख्न सक्ने छ । तर हाल यहाँको जेलमा ७० जना पुरुष, ६ जना महिला र १ नावालक गरी ७७ जना बन्दीहरु छन्। ३ वटा कोठामध्ये २ कोठामा पुरुष र १ कोठामा महिला राखिएको नवलपरासी जेल जर्जर, दयनीय र भत्कनै लागेको अवस्थामा छ ।

सुत्ने ठाउँ नभएर र एकदम साँघुरो भएर बन्दीहरु पालैपालो सुत्ने गर्दछन् । सागुरो ठाँउ र बढी बन्दी भएकाले जेल फोहर छ । झाडा पखाला र अन्य सरुवा रोग सजिलै एकबाट अर्कोमा सर्दछन्, तर उपचारको राम्रो बन्दोबस्त छैन । खाना बनाउने ठाउँ जेलभित्र नभएकाले बन्दीहरु बाहिर खाना पकाउँछन् । पानी परेको र हुरी बतास लागेको दिन बन्दीहरुले खाना बनाउन पाउँदैनन् ।

जेल भित्र अत्यन्त दुर्गन्ध हुने र ढलको बन्दोबस्त पनि नभएकाले जेलको फोहोरले जेल वरपरका बासिन्दालाई पनि असर पार्ने गरेको छ । स्थानीय बासिन्दाले फोहोर मैलाको विषयमा डेलिगेशन गएर पटक पटक गुनासो गरिसकेका छन् । सुत्ने ठाउँको एकदम नजिक सौचालय छ र बढी मानिसको कारण सौचालयबाट दुर्गन्ध आउँछ । जेलको विषयमा नेपाली कांग्रेसका कृष्ण नेपाली, एमालेका बैजनाथ चौधरी, राष्ट्रिय प्रजातन्त्र पार्टीका अर्जुन प्रधान र नेपाल सद्भावना पार्टीका महातमप्रसाद यादव सबैको एउटै प्रतिक्रिया थियो - नवलपरासी जेलको अवस्था दयनीय र नाजुक छ । हामीले आ-आफ्नो पार्टीबाट जेलको अवस्थाको सुधार गर्नुपर्ने माग सरकार समक्ष पुऱ्याएका हौं, तर वास्ता गरिएको छैन ।

चर्पी जेल कम्पाउण्ड भित्रै त छ, तर कोठाहरुबाट अलग्गै भएकाले राती बन्दीहरुलाई दिशा, पिसाब गर्न कठिनाई रहेको पाइयो । महिलाहरुलाई अन्दाजी १२ x ८ फीटको कोठामा राखिने गरेको छ । सोही कोठामा सानो मचान जस्तो अग्लो पारेर त्यसमा बसेपछि चारैतिरबाट १० इन्च जति अग्लाई मात्र छेकिने गरी चर्पी बनाइएको छ र चर्पीको छेउमा भान्छाको लागि ठाउँ बनाइएको छ । महिला बन्दीको कोठामा कहिल्यै घामको प्रवेश हुन पाउँदैन । महिला वार्डमा रहेको एउटा दुई वर्षे बालक बाहिरबाट मानिसले चियाउँदा डरले कुनामा टाँसिन पुग्ने गरेको देखियो ।

पुरुषहरुका निम्ति बनाइएको चर्पी पनि महिलाहरुको जस्तै खुला नै रहेको देखिन्छ । उनीहरुले जेलभित्रको आयतन प्रतिव्यक्ति ८ इन्चका दरले भाग लगाएका छन् र राती सुत्दा कोल्टे परेर खाँदाखाँद गरी सुत्नु पर्ने स्थिति रहेको छ ।

### १.३ गिरफ्तारी र यातना

२०४९ साल असार २८ गते लुम्विनी चिनी कारखानाको गोदाम घरमा लागेको आगोको विषयमा कारखानाले साउन ४ गते त्यसको विषयमा उजुरी गऱ्यो । गोदाम घरको चिनी सबै निकालेर नियतपूर्वक लगाइएको सो आगलागीमा कारखानाका पियनहरु कृष्णबहादुर जि.सी., सतदनकुमार चौधरी र लेखनाथ पौडेललाई थुनामा राखिएको छ ।

आगलागी भएकै दिनदेखि आगलागीको छानबिन गर्ने माग भै आए पनि सो घटनाको छानविन भएको छैन । आगलागीको अभियोगमा थुनामा रहेका ३ जनालाई भेट गर्न प्रयास गर्दा प्र.जि.अ.ले समेत भेट गर्ने अनुमति दिएनन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

गोली काण्ड शर्षिकमा उल्लेखित कावासोती गोली काण्डमा संविधानले प्रदान गरेको संगठित हुने र भेला हुने व्यक्तिको अधिकारको पनि उल्लंघन भएको छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

२०४९ साल जेठ १५ र १८ गते भएको स्थानीय निकायको निर्वाचनमा प्राय: सबै पार्टीले जनताको मताधिकार प्रयोग गर्न पाउने संवैधानिक प्रावधान खलबलिएको कुरा आ-आफ्नै तरिकाले बताएका छन् ।

सुनवल गा.वि.स.मा नेपाली कांग्रेसका उमेद्वार अर्जुन पोखरेलको घरमा एमालेका कार्यकर्ताले ढुंगामुढा र

कुटपिट गरेको र प्रहरीले १ जनालाई पक्राउ गरेको थियो । एमालेका कार्यकर्ताको डरले उपाध्यक्षका उम्मेद्वार रघुवीर गुरुङ र वडा सदस्यका उमेद्वार नरेश शर्मा परिवार सहित सदरमुकाममा गएर बस्नु परेको थियो ।

स्थानीय निर्वाचनको सिलसिलामा मिथुकराम र अन्य पहाडी गा वि स मा राप्रपा कांग्रेस र कम्युनिष्ट पार्टीका कार्यकर्ताहरु बीच धम्की दिने र कुटाकुट गर्ने जस्ता घटनाहरु भए भने निर्वाचनमा अधिकार प्राप्त व्यक्तिले नेपाली कांग्रेसको पक्षमा काम गरेको विपक्षी पार्टीहरुको गुनासो अहिले पनि सुन्न पाइन्छ ।

बन्जारीया गा.वि.स.मा मतदान हुँदा मतदान केन्द्रभित्र लाइनमा उभिइसकेका करीव ३ सय मतदाताले हो-हल्लाको कारण मतको प्रयोगको अधिकारबाट बञ्चित हुनु परेको थियो ।

## २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

अर्द्ध न्यायिक निकायबाट हुने गरेका मुद्दाका फैसलाहरुबाट जनता र राजनीतिक पार्टीहरु आफ्नो न्याय पाउने मौलिक हकबाट बञ्चित भएको अनुभव गर्दछन्। यस्तो अर्द्ध न्यायिक प्रकृया प्राकृतिक न्यायको सिद्धान्त विपरित छ भन्ने उनीहरुको ठम्याइ छ ।

# ३. भूमिहीन तथा सुकुम्बासी समस्या

तराईका अरु जिल्लामा जस्तै यस जिल्लामा पनि सुकुम्वासी समस्या निकै बढी छ। सुकुम्वासीको जीवन कठीन भए पनि जिल्लाभरी यिनीहरुको परिवार संख्या र जनसंख्या यति नै छ भनेर किटान गर्ने तथ्यहरु उपलब्ध भएनन् ।

# ४. महिला अधिकार

## ४.१ महिलाहरुको किनबेच र बलात्कार

२०४९ असार ९, १० र ११ गते लगातार ३ दिन कोपिला बानिया नामक महिलासंग पहिलेदेखिनै सामान्य चिनजान भएकी सुनवल गा.वि.स. वडा नं. ६ सुकुम्वासी टोल बस्ने सरस्वती घिमिरे उनलाई भेट्न गएकी थिइन्। ११ गते कोपिलासंग भेट गरेकी सरस्वती घिमिरे अहिलेसम्म बेपत्तै छिन्। १२ गते सरस्वती घिमिरेकी आमाले छोरीलाई खोज्दा नभेटेपछि र छोरीलाई बेचिएको गाइंगुई भएपछि कोपिला बिरुद्ध असार २५ गते अदालतमा मुद्दा दायर गरिन् । सरस्वतीलाई कोपिलाले ११ गते नौतनवा नगेर बेचेको अभियोगमा अहिले कोपिला बानियालाई जेलमा राखिएको छ भने सरस्वतीको ७ वर्ष छोरालाई माइतमा हजुरआमाले राखेकी छिन् । कोपिलाको घर भारतको नौतनवामा पर्छ ।

२०४८ साल माघ १५ गते रुपन्देही टहेरा निवासी दिलमाया विश्वकर्माले माकर गा.वि.स.का राजकुमारी वि.क., पञ्चनगर निवासी टिकीसरा वि.क. र दाउन्नेदेवी बस्ने एकमाया नेपालीलाई कुकुरमाराबाट बुटवल धागो कारखानामा काम लगाइदिने प्रलोभन दिएर फकाइन् । तिनैजनालाई बम्बइको ग्राउण्ड रोज, इलावज खपडा बिलडींग, अलंकार सिनेमा हल अगाडि मोटी तामाङ्नीलाई भारु. ५७ हजारमा बिक्रि गरिन्। पछि बिक्रि भएकी महिलाका अभिभावकले खैरेनीमा दिलमायालाई फेला पारे । उनलाई प्रहरी कार्यालयमा बुझाएर भारतको उल्लेखित ठेगाना र विभिन्न ठाउँमा खोजी गर्दा पनि हालसम्म उनीहरु फेला परेका छैनन। यसैबिच बम्बईको दलित पन्थर भारत नामको संस्थाले केटी बेच्ने गिरोहकी महिलाहरु पक्राउ परिसक्दा पनि बेचिएका केटीहरुको उद्धार नगरी केवल अभियुक्तहरुलाई थानामा मात्र राखेकोमा घोर विरोध र आपत्ति जनाउँदै श्री ५ को सरकार र गृह मन्त्री समेतको विरोध गर्ने आसयको पत्र लेखेको पाइयो ।

नवलपरासी जिल्ला प्रहरी कार्यालयमा यस वर्ष जबर्जस्ती करणी शीर्षकमा ६ र जीउ मास्ने बेच्ने शीर्षकमा २ वटा मुद्दा दायर भएका छन् ।

२०४९ साल असार १ गते काकी, दिदी र गाउँका अरु मानिससंग बिसापानीको जंगलमा च्याउ खोज्न गएकी १२ वर्षीया बालिकालाई एकान्तमा पारेर हिरउवा भन्ने सूर्यनारायण चौधरीले बलात्कार गऱ्यो। बलात्कृत बालिकाको ३ पुस्ता भित्रको काका पर्ने चौधरी विरुद्ध हाल जिल्ला अदालतमा मुद्दा चलिरहेको छ, तर बलात्कारी त्यसै दिनदेखि फरार छ ।

अमरापुरी गा.वि.स. वडा नं. १ निवासी १७ वर्षीया एक महिलालाई चैते दशौंको मेलामा साँझपख नून किन्न गएको बेला सोही गा.वि.स.का बोधराज पराजुली, हरी ठकुरी, ज्ञानेन्द्र हमाल र शंकर थापाले सामूहिक बलात्कार गरे । यी ४ जना मध्ये २ जना (बोधराज पराजुली र शंकर थापा) थुनामा छन् भने हरि ठकुरी र ज्ञानेन्द्र हमाल फरार छन् ।

दुम्कीवास गा.वि.स.मा २०४९ भदौ २१ गतेका दिन विरामी भएको भैंसी उपचार गर्न वडा नं. ३ को एउटा घर मा गएका गाउँले डाक्टर (जे.टि.ए.) संजय गोपाल चौधरीले बास बसेको घरकी लाटी केटीलाई बलात्कार गरे ।

२०४८ साल माघ १८ गते बाबुसंगै जंगलमा दाउरा खोजी सकेर बाबुलाई जंगलमै छोडी भारी बोकेर घर

आइरहेकी आदर्श गा.वि.स. वडा नं. ७ बस्ने एक ११ वर्षीय अवोध वालिकालाई वडा नं. ८ को २४ वर्षीय लोकनाथ कडेंलले जंगलको खोल्सामा लगेर बलात्कार गऱ्यो । उनका बाबुले जंगलबाट फर्केपछि घटनाबारे थाहा पाए र गाउँलेहरुले पक्राउ गरेर कडेंललाई प्रहरी कार्यालयमा बुझाएर अदालतमा मुद्दा दायर गरे ।

आदर्श गा.वि.स. वडा नं. १ गैडाकोटकी ९ वर्षीया एक वालिकालाई २०४९ साल असोज ७ गते राती ८ बजेतिर सोही गाउँका शेरबहादुर परियारले बलात्कार गऱ्यो । बाबु आमा झगडा गर्दैछन् भनेर वालिकालाई घरबाट फकाएर बाहिर गोठमा लगेर उसले बलात्कार गऱ्यो । बाबु आमा र गाउँलेले पक्रेर उसलाई प्रहरी कार्यालयमा लगेर बुझाए ।

### ४/२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



फोटोः वर्ष पुस्तक

*नवलपरासी जेलमा ठाउँको अभावका कारण खाना समेत बाहिर पकाउने गरिन्छ*



# ३. पश्चिमाञ्चल

## लुम्बिनी

# ३.८ रुपन्देही

| | | |
|---|---|---|
| जनसंख्या | : | ५०७६८९ |
| साक्षरता | : | ४०.२ प्रतिशत |
| महिला साक्षरता | : | २५.१ प्रतिशत |
| क्षेत्रफल | : | १३६० वर्ग कि. मी. |

पश्चीमाञ्चल क्षेत्रको तराई जिल्ला रुपन्देहीको दक्षिणी सिमा भारतको उत्तर प्रदेशसंग जोडिएको छ । नेपाल र भारत दुवै देशका अपराधीहरुका लागि यहाँको खुला सिमानाका कारण निकै सजिलो भएको देखिन्छ । रुपन्देहीमा हत्या र कुटपिटका घटनाहरु ठूलो मात्रामा घट्ने गरेको पाइन्छ । तर त्यस्ता घटनाहरुमा संलग्न रहने ठूला ठूला अपराधीहरुका डरले यहाँका बासिन्दा भरिसक्य त्यस्ता घटनाहरुको उल्लेखसम्म पनि गर्न चाहँदैनन् ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

रुपन्देही जिल्ला अदालतमा ०४८ पुष देखि ०४९ पुषसम्म ५५ वटा कर्तव्य ज्यान सम्बन्धी मुद्दाहरु दर्ता भएका थिए ।

०४८ चैत २३ र २४ गते जिल्लाको बुटवल नगर पालिकाको स्थिति अत्यन्त तनावपूर्ण थियो । चैत २४ गते संयुक्त जनमोर्चा र नेपाल कम्युनिष्ट पार्टी (एकता केन्द्र) ले नेपाल बन्दको आव्हान गरेका थिए । त्यही कार्यक्रमको क्रममा विरोध प्रदर्शन गर्न सडकमा ओर्लिएका जनतामाथि नियन्त्रण गर्न स्थानीय प्रशासनले कर्फ्यू लगाएको थियो । त्यस दिन प्रहरीले चलाएको गोली विष्णु बहादुर दर्लामीको बायाँ तिघ्रामा लागेको थियो । तर चैत २३ गते बेलुकी पनि गोली चलेको थियो । स्थानीय प्रशासनका अनुसार चैत २४ गते राजा महेन्द्रको शालिकमा साईकलको टायर बालेर माला लगाइ दिएकोले र प्रदर्शनकारीहरुद्वारा बैंक लुट्ने समेत प्रयास भएकोले गोली चलाइएको थियो । तर सालिकका छेउछाउमा सामान्य आगो लगाएको देखिए पनि त्यस्तो नोक्सानी नभएको देख्दा र प्रहरीले जम्मा १० मिटरको दूरीबाट गोली चलाएको अवस्थालाई दृष्टिगत गर्दा प्रहरीको भनाईमा सत्यता रहेको देखिँदैन ।

०४९ जेठ १६ गते भएको स्थानीय निर्वाचनको क्रममा सिपवा गा.वि.स.मा नेपाली कांग्रेस र राष्ट्रिय प्रजातन्त्र पार्टी बीचका कार्यकर्ताहरु बीच मुठभेड भयो । उक्त अवसर मा प्रहरीले चलाएको गोलीबाट राष्ट्रिय प्रजातन्त्र पार्टीका ओम प्रकाश यादवको घटनास्थलमै मृत्यु भयो ।

०४९ जेठ १८ गते सिपवा गा.वि.स.मा निर्वाचन मुठभेडमा प्रहरीले चलाएको गोलीले एक जनाको ज्यान गएको थियो ।

०४९ मंसीर २८ गते विहान बुटवल नगरपालिका वडा नं. ६ अमरपथ स्थित आफ्नै पसलभित्र स्थानीय व्यापारी देव कुमार अमात्य मृत अवस्थामा पाइए । उनलाई अन्तिम चोटी जीवित अवस्थामा अघिल्लो दिन बेलुकी ७ बजे देखिएको थियो । मृत अमात्यको रुद्र घण्टी धारिलो हतियार ले काटिएको थियो र शव घोप्टो परेको थियो । त्यस क्रममा अमात्यको साढे अट्तीस हजार रुपैयाँ पनि लुटिएको कुरा मृतकका दाजु देव कुमार बताउँदछन् । देवकुमार उक्त हत्याकाण्डका विषयमा ठोस अनुसन्धान हुन नसकेको कुरा पनि व्यक्त गर्दछन् ।

## १.२ जेल

जेलको क्षमता भन्दा बढी बन्दीहरु रहेकोले रुपन्देही जेलमा विभिन्न समस्याहरु देखिएका छन् । जेल भित्रको दुर्गन्धमय वातावरणका बारेमा सबैले बारम्बार कुरो उठाएको भए पनि सम्बन्धित निकायबाट चासो नदेखाइएको बताइन्छ । कूल ६० जना अटाउन सक्ने जेलमा हाल झण्डै दुई सय बन्दीहरु राखिएका छन् ।

जेलभित्र शौचालयको स्थिति अति दुर्गन्धमय रहेको छ । जेलको क्षमता भन्दा बढी मानिस राखिएका कारण बन्दीहरुलाई सुत्न र बस्न समेत अप्ठ्यारो भएको देखिन्छ । ठाउँको अभावका कारण बन्दीहरुले खाना पकाउने र खाने काम पनि आँगनमा गरेको देखियो ।

## १.३ गिरफ्तारी / यातना

"०४८ चैत्र २४ को घटनाबारे नागरिक छानबिन आयोगको प्रतिवेदन" अनुसार चैत्र २३ गते बुटवल पेट्रोल-डिजेल सेन्टरमा पेट्रोलमा मट्टितेल मिसावट गरिँदै गरेको फेला परेपछि लुम्बिनी दैनिकका सम्पादक कर्ण बहादुरले ती पम्पका संचालकलाई कालाबजारी अन्तर्गत कारवाही गर्न इलाका प्रहरी थानामा अनुरोध गरे । तर अ.स.ई. घिमिरे सहितका प्रहरीले त्यस उजुरीको वास्ता नगरेपछि त्यहाँ उपस्थित जनसमुदाय ती संचालकहरुलाई प्रहरी समक्ष लैजान आफै अग्रसर भए । त्यस पछि भीडले ती संचालकलाई कालो मोसो दली चारपाटे मुढे पश्चात बजार घुमाएर थानामा बुझाएको थियो । तर त्यसको केही समयपछि नै नेपाल सद्भावना पार्टीका सांसदहरु श्याम प्रसाद गुप्ता र शंत प्रसाद चौधरी आफ्ना सहयोगीहरु सहित तीनवटा वाहनमा सिद्धार्थनगर देखि बुटवल आइपुग्नु भयो । वहाँहरुले पेट्रोल पम्पका मालिकको रिहाईको माग गर्दै कालोमोसो दल्नेहरुमाथि कारवाही गरियोस् भन्नु भयो । सांसदहरुबाट पहाडे र मधिसेको विवाद उठाइन थालेपछि जनसमुदाय र प्रहरी पनि अत्यन्त उत्तेजित भएका थिए । प्रहरीले पम्पका मालिक, सम्पादक कर्ण बहादुर र सांसदहरुलाई समेत नियन्त्रणमा राख्यो ।

कामु प्रजिअ पूर्णबहानुर कार्की र प्रहरी उपरिक्षक गया प्रसादद्वारा कर्ण बहादुर र बीन बहादुर कुँवरलाई विना पूर्जी पक्राउ गरी सार्वजनिक अपराध मुद्दामा फसाउन खोजिएको बुझे पछि उपस्थित जनताले कर्ण बहादुरको रिहाईको माग गर्न थाले । इलाका प्रहरी कार्यालयबाट गृह मन्त्रालयसंग ट्रंकलमा झण्डै पौने घण्टासम्म उनको रिहाइका बारेमा कुरा भयो । तर अन्तमा कर्ण बहादुर कार्की र बीन बहादुर कुँवरलाई गिरफ्तार नै गरिने निर्णय सुनाइयो ।

"प्रहरीले अभियुक्त गिरफ्तार गरेपछि अलि अलि यातना दिन्छन् । प्रहरीलाई एउटै लाइनमा हिंडाइएको हुन्छ । उनीहरुले बाहिरी वातावरणसंग घुलमिल हुन पाएका हुँदैनन् । त्यसैले उनीहरुले थोरै थोरै यातना त दिन्छन् ।" - एकजना स्थानीय न्यायिक निकायसंग सम्बन्धित व्यक्ति बताउँदछन् ।

# २. मौलिक अधिकार

## २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

## २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

## २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

आमा गा.वि.स.का अध्यक्ष रविन्द्र नाथ शुक्लाले आफ्नो गा.वि.स. भित्र कम्युनिष्टहरुलाई प्रवेश निषेध छ भन्दै राजनैतिक स्वतन्त्रताको हनन गरेको गुनासो एमालेका कार्यकर्ताहरु गर्दछन् । एमालेका कार्यकर्ताहरुका अनुसार उनीहरुले ०४९ पुष २८ गते प्रमुख जिल्ला अधिकारी समक्ष ज्ञापन पत्र पनि दिए । तर कुनै सुनवाइ भएन ।

०४९ जेठ १५ गते भैरहवा नगरपालिका वडा नं. ४,८,९ मा भइरहेको निर्वाचनमा कांग्रेसका कार्यकर्ताहरु द्वारा अवान्छित काम भए पश्चात उक्त पार्टी र सद्भावना पार्टीका कार्यकर्ताबीच झै-झगडा समेत भयो । त्यहाँ कांग्रेसका कार्यकर्ताहरुले सद्भावना पार्टीको एउटा गाडी नै जलाइ दिएका थिए । ती दुई वडाहरुमा पुन: निर्वाचन भएको थियो । सोही दिनको निर्वाचनमा मोतीहा, अमवा, मानपकदी, बगहा, करहिया आदि ठाउँमा पनि कांग्रेसका कार्यकर्ताहरु द्वारा हस्तक्षेप भएको थियो ।

जेठ १८ गते नै सेमलारमा पनि एमालेका कार्यकर्ताहरुमाथि कांग्रेसका कार्यकर्ताहरुद्वारा कुटपिट भएको



फोटो: मं कार्की

*भैरहवा जेलको एक झलक*

थियो । उक्त कुटपिटको घटनामा राम प्रसाद रेग्मी, शक्ति सापकोटा आदि घाइते भएका थिए । सोही क्रममा ५० वटा जति साइकलहरु पनि हराएका थिए ।

१८ गते नै सिकटहन गा.वि.स. मा सेना तैनाथ गरी चुनावमा हस्तक्षेप गरिएको बताइन्छ । उक्त दिन त्यहाँ गोली समेत चलेको थियो । सोही दिन वुटवलमा भएको निर्वाचनमा पनि निकै अवाञ्छित कार्यहरु भएका थिए । त्यहाँ पुन: निर्वाचन भएको थियो । त्यसै दिन सिपवा गा.वि.स.मा चुनावकै क्रममा राष्ट्रिय प्रजातन्त्र पार्टी र नेपाली कांग्रेसका कार्यकर्ताहरु बीच मुठभेड हुँदा प्रहरीले चलाएको गोलीबाट सद्भावना पार्टीका एकजना कार्यकर्ताको मृत्यु नै भएको थियो ।

नेपाली कांग्रेस जिल्ला कार्य समितिका अनुसार पनि ०४९ जेठ १५ र १८ गते जिल्लाका विभिन्न नगरपालिका र गा.वि.स.हरुमा सम्पन्न निर्वाचनमा निकै हस्तक्षेप भएका थिए । उक्त क्रममा निर्वाचन विथोल्ने, मतदातालाई भड्काउने, तर्साउने आदि अवाञ्छित कार्यहरु भएको कुरा कांग्रेस पक्ष पनि स्वीकार गर्दछ । तर सो पक्षका अनुसार सिपवा गा.वि.स.को अध्यक्ष पदमा निर्वाचित कांग्रेसका अवधराम यादव र उनका सहयोगीहरु उपर केही स्वतन्त्र प्रत्यासी र सद्भावना पार्टीका कार्यकर्ताहरुबाट ज्यादती भएको थियो । कांग्रेसका अनुसार सद्भावना पार्टीका कार्यकर्ताहरुद्वारा निर्वाचनको परिणाम घोषणा भइसके पश्चात मतपेटिका र मतगणनासंग सम्बन्धित कागजातहरु बन्दूकको बलमा खोसिएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

"संविधानले नागरिकको अधिकार संरक्षण गर्ने सम्पूर्ण अधिकार न्यायालयलाई सुम्पिएको छ । तर कार्यान्वयन पक्षमा हेर्दा वैयक्तिक स्वतन्त्रतालाई ठाडै दमन गर्ने उद्देश्यका साथ पंचायतकालमा बनेका थुनछेक सम्बन्धी ऐनहरुमा रहेका न्यायिक वा अर्ध न्यायिक निकायका न्यायाधीश वा अधिकारीलाई दिइएको तजबिजी अधिकारको समन्वय सद्विवेकका आधारमा वस्तुनिष्ठ रुपमा भइरहेको छैन । हचुवाको भरमा आफूखुसी अधिकारको प्रयोग गरी इच्छा विरुद्धको प्रहरी साविती कै आधारमा थुनुवा राख्ने गलत प्रवृतिबाट न्यायालय पूर्णत मुक्त भएको पाईदैन ।" - यहाँका राजनैतिक कार्यकर्ताहरु यस्तो गुनासो गर्दछन् । कतिपय राजनीतिक कार्यकर्ता मानव अधिकारको संरक्षण र संवर्द्धन गर्ने दिशामा न्यायालयको भूमिका सकारात्मक मात्र छ भन्न नसकिने बताउँछन् ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्वासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

यस वर्ष रुपन्देहीमा जिउ मास्ने बेच्ने ८, बहु विवाह ५, जवरजस्ति करणीको १० वटा मुद्दा जिल्ला प्रशासन कार्यालयका अनुसार दर्ता भएका थिए ।

## ४.१ महिलाहरुको किनबेच र बलात्कार

०४९ वैशाखमा बुटवल नगरपालिका वडा नं. १४ का भीम बहादुर वि.क.की पत्नी सानी र बहिनी कान्छी वि.क.लाई गजेडी गा.वि.स. वडा नं. ३ का राम प्रसाद थारु र उनकी पत्नी मिलेर बम्बई पुऱ्याइ २० हजार भा.रु. मा बेचेका थिए । भीम बहादुरले वैशाख २८ गते राम प्रसाद थारुमाथि मुद्दा दायर गरेका छन् ।

०४८ माघ २ गते सिद्धार्थनगर नगरपालिका वडा नं. ९ बस्ने रतन ठकुरी लगायतका व्यक्तिहरुले देवदह गा.वि.स. मलुहीकी १३ वर्षीया टुकूमाया आचार्यलाई बम्बईमा पुऱ्याइ बेचेका थिए । घटना विवरण अनुसार बुटवलमा रहेका आफ्ना दिदी-भिनाजु कहाँ आएकी टुकूमायालाई माघ ३ गते सीमा कटाइएको थियो ।

*०४७ मंसीर २१ गते बम्बई पुऱ्याएर बेचिएकी बुटवल हाट बजारमा डेरा गरी बस्ने स्याँग्जाकी १६ वर्षीया कमला नेपाली विवाहको प्रलोभनमा फसेकी थिइन् । बुटवल हाट बजारमै बस्ने सुनरात भनिने फूल कुमारीले नोकरी लगाइ दिने बहानामा नेपालगंजका लाल बहादुर थापासंग बिहे गराइ दिएकी थिइन् । त्यस पछि उनलाई बम्बईमा पुऱ्याइ ३० हजारमा बिक्री गरिएको थियो । कमला ०४८ चैत्रमा फर्किएर आएकी थिइन् ।*

*बुटवल नगरपालिका वडा नं. ६ आदर्शनगरकी १५ वर्षीया देवी थापा र १३ वर्षीया मंजु रानालाई ०४८ असार १० गते बम्बई पुऱ्याएर बेचिएको थियो । सोही ठाउँमा बस्ने तारा थापाद्वारा बेचिएका दुई किशोरीहरु ६ महिना पश्चात स्वदेश फर्कन सफल भएका थिए ।*

०४८ चैत्र १७ गते गुल्मी हर्दिनेरा गा.वि.स.की हेमकला वि.क.लाई बुटवल स्थित होटल होलिडेमा वेश्यावृत्ति गरिरहेको अवस्थामा पक्राउ गरिएको थियो । उनलाई सो कार्यमा सोही ठाउँका धन बहादुर अर्यालले लगाएका थिए ।

जिल्ला अदालतबाट प्राप्त जानकारी अनुसार ०४९ असार ९ गते मनिषा जैनको जाहेरीले श्री ५ को सरकार वादी रहेको सतिश चन्द्र उपाध्याय माथि जिउ मास्ने बेच्ने मुद्दा परेको छ । त्यस्तै ०४९ असार १६ गते गोमा वि.क.को जाहेरीले वादी श्री ५ को सरकार प्रतिवादी भारतीय नागरिक मनोजकुमार श्रीवास्तवमाथि पनि जिउ मास्ने बेच्ने मुद्दा परेको छ ।

०४९ असोज ८ गते धनमाया वि.क.को जाहेरीले वादी श्री ५ को सरकार प्रतिवादी बुटवल नगरपालिका वडा नं. ११ मा बस्ने अशोक कुमार सार्की माथि जिउ मास्ने बेच्ने मुद्दा दायर भएको छ । त्यस्तै ०४९ कार्तिक ६ गते गंगा पुनको जाहेरीले वादी श्री ५ को सरकार प्रतिवादी बुटवल नगरपालिका वडा नं. ४ की घर्ती मगरनी समेतमाथि जिउ मास्ने बेच्ने मुद्दा दायर भएको छ । तर प्रतिवादी हालसम्म पक्राउ परेकी छैनन् ।

०४८ माघ १ गते स्थानीय युवकहरु राजेश आचार्य, बल बहादुर आचार्य, अनिल थापा र विष्णु बहादुर कुमालले राती साढे दस बजे ४० वर्षीया बरसाती थरुनीलाई ट्राफिक चौकबाट अपहरण गरेका थिए । त्यस पछि उनीहरुले बरसातीलाई बुटवल चलचित्र हल पछाडी लगी सामुहिक बलात्कार गरेका थिए ।

०४९ वैशाख ३० गते बुटवल नगरपालिका वडा नं. ८ मिलनचौक बस्ने नीलम बानियाँलाई सोही ठाउँ बस्ने राजाराम बानियाँले बर्मेटोलस्थित एउटा होटलमा लगी बलात्कार गरेका थिए । त्यस्तै ०४९ साउन ३२ गते सिद्धार्थनगर नगरपालिका वडा नं. १३ की रिता थापालाई बारा जिल्ला सिमरौनगढका हरिहर महतले बलात्कार गरेका थिए । जीरु गोपाह गा.वि.स. वडा नं. ४ का गुधुर चमार पनि सोही ठाउँकी ५ वर्षीया गोरख चमारलाई बलात्कार गरेको अभियोगमा थुनामा रहेका छन् ।

बुटवल नगरपालिका वडा नं. ९ पुष्पनगरकी ९ वर्षीया शान्ती थापामाथि भएको विभत्स बलात्कारको घटना झन करुणाजनक छ । स्कूलमा कर्म थापा नामले चिनिने शान्ती थापालाई ०४८ चैत्र १६ गते राती ११ बजेतिर आमा र दाजुभाईसंग सुतिरहेकी अवस्थामा ओम बहादुर गौतम लगायत दुई जनाले अपहरण गरी लगेका थिए । ढोका नभएको झोपडीमा सुतिरहेकी शान्तीलाई त्यस पछि मुख थुनेर जंगलतिर लगिएको थियो । शान्तीको गुप्ताङ्गलाई ब्लेडले समेत चिरिएको कुरा उनी बताउँछिन् । अबोध बालिका माथि त्यस्तो पाशविक दुर्व्यवहार गर्ने अपराधीहरुमाथि कारवाही गर्ने काममा भने ढिलाइ भइरहेको बताइन्छ ।

## ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

# ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

## ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

## ५.२ अन्य अमानवीय व्यवहार



# ३. पश्चिमाञ्चल

## लुम्बिनी

# ३.९ पाल्पा

| | | |
|---|---|---|
| जनसंख्या | : | २३६२३८ |
| साक्षरता | : | ५१.० प्रतिशत |
| महिला साक्षरता | : | ३६.५ प्रतिशत |
| क्षेत्रफल | : | १३७३ वर्ग कि. मी. |

लुम्बिनी अञ्चलका ६ जिल्लाहरुमध्ये पाल्पा जिल्ला प्राकृतिक सौन्दर्य र ऐतिहासिक महत्वको जिल्लाको रुपमा प्रसिद्ध छ । यस जिल्लामा मुख्यगरी विविध विचारका मतभेदबाट उत्पन्न घटनाहरुद्वारा मानव अधिकार को उल्लंघन भएको छ भने आत्महत्या, हत्या, चोरी, बहु-विवाह, चेलीबेटी बेच-बिखन, सवारी दुर्घटना आदि यस जिल्लाका समस्याका रुपमा देखा परेका छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

२०४८ पुस १३ गते यस जिल्लाको कुसुम खोलामा मादक पदार्थ सेवन गरेपछि नेपाली कांग्रेसका रामप्रसाद खनाल र नेकपा (एमाले) का बेणीमाधव आचार्य सहित कार्यकर्ताहरु बीच झडप भएपछि स्थानीय प्रशासनले बेणीमाधवलाई थुनामा राखेको थियो। बेणीमाधवको रिहाईका लागि नेकपा (एमाले) का कार्यकर्ताले पुस १८ गते देखि जिल्ला प्रशासन कार्यालयमा धर्ना दिए। शान्तिपूर्ण धर्नाबाट समस्या नसुल्झेपछि कार्यकर्ताहरुले कार्यालयभित्र कसैलाई पनि पस्न दिएनन्। यसबाट विवाद र होहल्ला उत्पन्न भएपछि स्थानीय प्रशासनले पुस २२ गतेको दिन स्थितिलाई शान्त पार्न ४० राउण्ड अश्रुग्यास र ३०/४० राउण्ड हवाइ फायर गऱ्यो, जसबाट ६ जना महिलाहरु घाइते भएका थिए ।

यसैगरी २०४९ बैशाख ६ गते पाल्पा जेलका बन्दीहरुले सुविधा सम्बन्धी विभिन्न माग राखेर नारा लगाई अनसन बसेका थिए। रातपरेपछि कोठाभित्र जान नमानेपछि बन्दीहरुमाथि हवाइ फायर गरियो । यतिले मात्र नपुगी भोलिपल्ट नाइके र अस्थायी प्रहरीद्वारा बन्दीहरुलाई कुटपीट समेत गरिएको थियो । राष्ट्रिय स्तरका जुडो-करांते खेलाडी भीमसेन कार्कीलाई विपक्षी राजनैतिक कार्यकर्ताहरुलाई जुडो सिकाएको निहुँमा पाल्पा बाहिरबाट गुण्डाहरु ल्याएर २०४९ बैशाख २४ गते बर्तुङ हुँदै तानसेन आइरहेको मौका पारी जैसी चौतारीमा सांघातिक हमला भएको थियो ।

शिक्षक देवीप्रसाद सुवेदीलाई ०४९ बैशाख ३ गते विद्यालय जान लाग्दा बन्दुकले हानेर हत्या गरियो । हत्या अन्य कुनै राजनैतिक कारण नभई साम्प्रदायिक भावनाले भएको देखिन्छ ।

### १.२ जेल

यस जिल्लामा जेलको स्थिति त्यति गएगुज्रेको नभए पनि साह्रै राम्रो पनि देखिदैन । यहांको जेलमा १७४ जना बन्दीहरु छन्, जसमध्ये १३४ जना पुरुष, ३४ जना महिला र ६ जना केटाकेटी (नाबालक) हरु छन्। जेलमा कपडा बुन्ने घरेलु कारखाना पनि छ । त्यस्तै पठन-पाठनका लागि यहाँभित्र ब्रम्हाविष्णु निम्न माध्यमिक विद्यालय नामक विद्यालय पनि खोलिएको छ ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक प्रतिशोधको कारणले नै यहाँ गिरफ्तारीहरुको संख्यामा वृद्धि भएको देखिन्छ। २०४८ चैत्र २४ गते नेपाल बन्दको सिलसिलामा संयुक्त जनमोर्चाका कार्यकर्ताहरुलाई गिरफ्तार गरिएको थियो, तर गिरफ्तार भएकाहरु कसैलाई पनि यातना भने दिएको पाईएन ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

सानातिना वादविवाद बाहेक यस जिल्लामा संविधान प्रदत्त अधिकारहरु निर्बाध रुपले उपभोग गर्दै आएको प्रतीत हुन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

धार्मिक कचिङ्गल, झै-झगडा यस जिल्लामा प्राय: नगण्य छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

राजनैतिक स्वतन्त्रताका नाममा यस जिल्लामा आफ्नो पकड र प्रभाव भएको क्षेत्रमा राजनैतिक दलहरुले आफूखुसी निर्देशित गरेको देखिन्छ । त्यस्तै स्वतन्त्र र निष्पक्ष निर्वाचनका हकमा स्थानीय निर्वाचनका केही बुथहरुमा केही व्यक्तिहरुले १०/१२ पटकसम्म मतदान गरेका पाइएको थियो । स्थानीय निर्वाचनमा तानसेन नगर पालिकाका वडा नं. ४,७,१३ र १५ मा बढी अनियमितता भएको देखिन्थ्यो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

प्रजातन्त्र र मानव अधिकारलाई सुदृढ र संस्थागत रुपमा विकास गर्नका लागि संविधानमा अन्तर्निहित अधिकारहरुको ज्ञान प्रत्येक जनताको घर दैलोसम्म पुऱ्याउनु पर्ने देखिन्छ ।

हत्या- २, आतमहत्या - ९, बलात्कार- १, चोरी- ५, जिउ मास्ने- २, सार्वजनिक अपराध - १६, दुर्घटना - १९, बहु विवाह - ३, अन्य - १४ यहाँको जिल्ला अदालतमा उजुर परेका मुद्दाहरु हुन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

उपरोक्त समस्याहरुले यस जिल्लामा त्यति जरा गाडेको छैन ।

## ४. महिला अधिकार

देशाको संविधान र राजनैतिक प्रणालीले पुरुष सरह महिलालाई समान अधिकार दिए तापनि व्यवहारमा महिलालाई अझै असमान दृष्टिकोणले हेरिनुका साथै उनीहरुमाथि हुने शोषण र अन्याय कायम नै छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

पहिले पहिले यस जिल्लामा शून्य रहेको महिला किनबेच र बलात्कारको समस्या हाल आएर देखिन थालेको छ। चिर्तुङ्धारा घर भई भारततिर बस्ने श्रीमती बटई कुमाल्नी र उनका लोग्नेले गंगा र किस्नी कुमाल्नीलाई २०४८ मङ्सीर मा विदेश लगी बेचेको देखिन्छ । त्यस्तै तानसेन नगरपालिका वडा नं. २ धरमपानी बस्ने बलबहादुर वि०क०ले गंगा पाण्डेलाई बलातकार गरेको जस्ता घटनाहरु पनि घटेका छन् ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा जारी, देउकी, वदिनी प्रथा नदेखिए पनि बहु-विवाह भने देखा परेको छ । कुसुम खोलाका हुमबहादुर नेपालीले विमलासंग २०४९ असार २४ गते बहु विवाह गरेको देखिन्छ । त्यसैगरी २०४९ असार २१ गते तानसेन नगरपालिका वडा नं. ११ वस्ने चन्द्रबहादुर महर्जनले सर-स्वतीसंग बहु-विवाह गरेको पनि ज्ञात भयो ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

२०४६ सालको ऐतिहासिक जन आन्दोलन पश्चात देशमा प्रजातान्त्रिक व्यवस्थाको प्रार्दुभाव भए तापनि जनचेतनाको अभावमा संविधान प्रदत्त आफ्ना अधिकारहरु व्यवहारमा अनुसरण गर्न सकिरहेको देखिँदैन ।



# ३. पश्चिमाञ्चल

## लुम्बिनी

# ३.१० कपिलवस्तु

| | | |
|---|---|---|
| जनसंख्या | : | ३७२२०५ |
| साक्षरता | : | ३०.८ प्रतिशत |
| महिला साक्षरता | : | १५.९ प्रतिशत |
| क्षेत्रफल | : | १७३८ वर्ग कि. मी. |

लुम्बिनी अञ्चलमा अवस्थित कपिलवस्तु भारतसंग सीमाना जोडिएको जिल्ला भएकोले सीमाना जोडिएका अन्य जिल्लामा झै यहाँ पनि चौपाया चोरी, जिउ मास्ने,हातहतियार खरखजाना, गोवध,आत्महत्या आदि प्रमुख समस्याका रुपमा रहेका छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

*कपिलवस्तु बहुमुखी क्याम्पसमा अध्ययनरत विद्यार्थी हीराप्रसाद ज्ञवालीको उपचारमा भएको हेलचक्रयाईले २०४८ साउन २२ गते मृत्यु भएको थियो । उपचारमा भएको लापरवाहीका विरुद्ध विद्यार्थीहरुको एक जुलुसले स्थानीय जिल्ला प्रशासन गएर ज्ञापन-पत्र दिएको थियो । ज्ञापनपत्र बारे छलफल भईरहेकै बेला प्रहरीले एक्कासी लाठीचार्ज, अश्रुग्यास र ब्ल्याङ्क फायर समेत गऱ्यो । उक्त झडपमा केही विद्यार्थी घाइते भए भने केही विद्यार्थीलाई अमानवीय व्यवहार गरिएको र यातना समेत दिइएको थियो ।*

### १.२ जेल

कपिलवस्तु जिल्लामा अन्य जिल्लामा झै जेलको स्थिति त्यति नाजुक देखिंदैन । संवत् १९९५ सालमा बनेको यहाँको जेलमा १०० जना बन्दीहरु अटाउने क्षमता छ । हाल यस जेलमा २ महिला र एक नाबालक गरी ८२ जना बन्दीहरु छन् । पुरुष बन्दी बस्ने ठाँउको तुलनामा महिला बन्दीको कक्ष अलि असुविधापूर्ण छ । साथै सरुवा रोग लागेका र मनस्थिति बिग्रिएका बन्दीलाई अन्य बन्दीहरु सरह एकै ठाँउमा राख्ने गरेको देखिन्छ ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक पूर्वाग्रह नै यस जिल्लाको अशान्तिको मूल जड हो । शिवगढी गा.वि.स. वडा नं. ७ भगवानपुर गाउँमा २०४८ असोज ३० गते विजयादशमीको उपलक्ष्यमा देखाइएको सांस्कृतिक कार्यक्रममा भिन्न राजनैतिक विचारधारा राख्नेहरुले गरेको हुलदंगा तथा आक्रमणमा ११ वर्षीया बालिका राजमाया वि.क. लगायत अन्य १५ जना घाइते भएका थिए ।

२०४८ चैत महिनामा आफ्नो विचारसंग असहमत भएकाहरुले आफ्नो समूह विरुद्ध मुद्धा दर्ता गराएको प्रतिशोधमा शिवगढी गा.वि.स. वडा नं. ७ भगवानपुरका चक्रबहादुर चन्द, तुलाराम घर्ती मगर, मेघबहादुर थापा र कोषबहादुर मल्लमाथि सार्वजनिक मुद्धा लगाइयो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिँदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्षभरिमा यहाँको जिल्ला अदालतमा विभिन्न अपराधमा गरी १३५४ वटा मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा सुकुम्वासी समस्या त्यति जटिल नभए पनि मुख्य गरी यहाँका हरुवाहरु नै सुकुम्वासीका रुपमा रहेका छन् । त्यस्तै भारतको मेघालयबाट खेदिएका शरणार्थीहरु हल्पौसा गा.वि.स. वडा नं. ८ बरवामा सुकुम्वासीका रुपमा बसेका छन् ।

## ४. महिला अधिकार

देशको संविधानले महिला हक र अधिकारलाई समान रुपमा प्रत्याभूति गरे तापनि व्यवहारमा महिलामाथि पुरुषप्रधान समाजबाट भएको दुर्व्यवहारको अन्त्य हुन सकेको छैन ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

महिला किनबेच र देहव्यापारले गम्भीर रुप नलिएको यस जिल्लामा बलात्कारको समस्या चरम सीमामा पुगेको देखिन्छ ।

शिवगढी गा.वि.स. वडा नं. १ बस्ने वर्ष १५ की राधिका कुमारी चौधरीलाई स्थानीय प्रहरीले चुरोट खान आगो मागेको निहुँले बलात्कार गर्न खोज्दा महिलाले बचावको लागि चिच्याएपछि उनका दाजु २५ वर्षीय प्रहलाद चौधरीले प्रहरीलाई समाए, जसको फलस्वरुप प्रहरीमाथि हातपात गरेको आरोपमा प्रह्लाद चौधरीलाई ५ दिनसम्म हिरासतमा राखेर वीभत्स यातना दिईएको थियो ।

हल्पौसा गा.वि.स. वडा नं. ८ बरवामा मेघालयबाट आएका असहमत विचारधारा राख्ने सुकुम्वासीहरुमाथि वन अतिक्रमण गरेको बहानामा आतंक मच्चाउनुका साथै वन कार्यालयका रेञ्जरले ३ दिनको सुत्केरीलाई समेत हातपात गर्न छाडेनन् ।

*गत २०४७ साल भदौ महिनामा यस जिल्लाको भटनी डाँडामा भएको सामूहिक बलात्कारको वीभत्स घटना कसैबाट ओझेल भएको छैन ।*

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

देशमा हालै आएको राजनैतिक परिवर्तनले शहर बजारतिर जारी प्रथा र बहु-विवाह नदेखिए पनि गाँउघरतिर अझ विकराल समस्याका रुपमा रहेको छ । देशमा कमारा कमारी प्रथा उन्मूलन भएको करीव करीव एक शताब्दी हुन लागे पनि यस जिल्लामा यो समस्या "हरुवा" प्रथाको रुपमा विद्यमान छ । यी हरुवाहरुलाई दिइने ज्यालामा एक रुपता छैन । एक गाँस खान पाउनु बाहेक औषधिमूलो, शिक्षा केही पाउँदैनन् । यसबारे आवाज उठाउँदा मालिक पक्षबाट डर, त्रास, धम्की र खप्की खानु पर्छ । यस जिल्लाको कुल जनसंख्याको ७ प्रतिशत "हरुवा" हरु रहेको पाइन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या दास प्रथाकै नाममा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा नागरिकता सम्बन्धी समस्या पनि व्यापक रहेको छ र यहाँ नक्कली नागरिकताको कारोवार पनि भएको देखिन्छ ।



# ३. पश्चिमाञ्चल

## लुम्बिनी

# ३.११ अर्घाखाँची

| | | |
|---|---|---|
| जनसंख्या | : | १८०४०६ |
| साक्षरता | : | ४७.४ प्रतिशत |
| महिला साक्षरता | : | ३२.० प्रतिशत |
| क्षेत्रफल | : | ११९३ वर्ग कि. मी. |

लुम्बिनी अञ्चलका ६ जिल्लाहरु मध्ये अर्घाखाँची जिल्ला पनि राजनैतिक रुपले चेतनशील जिल्लाका रुपमा परिचित छ । सायद त्यसैले होला यहाँ राजनैतिक घटना निरन्तर हुने गर्दछन् । चाहे त्यो पञ्चायत कालमा टंक भुसालको हत्या होस् या बहुदलीय व्यवस्थामा बसीर मियाको होस् ।

## १. बाँच्न पाउने अधिकार

राजनैतिक रुपमा परिपक्व र चेतनशील जिल्ला भएर राजनीतिकै कारणले यहाँ बीभत्स घटनाहरु घट्ने गरेका छन् ।

### १.१ हत्या / गोली

*२०४८ जेठ २२ गते पाली गाउँमा देखिएको राजनैतिक तनावलाई ध्यानमा राखी स्थिति शान्त पार्ने बहानामा चलाइएको प्रहरीको गोलीद्वारा राजनैतिक नेता बसीर मियाको मृत्यु भएको थियो ।*

*२०४८ साउन १२ गते ढिकुरा गा.वि.स. बस्ने बलबहादुर बाँकावललाई केही व्यक्तिहरुले विशेष काम छ भनेर लगेको तर निज बाँकावलकी पत्नीलाई शंका लागेर खोज्दा बलबहादुर बाँकावलको लाश नजिकैको खोल्सामा भेटिएको थियो । लाशको जाँच पड्ताल र शव परीक्षणबाट बलबहादुर बाँकावलको कञ्चटमा चोट लागेर मृत्यु भएको देखिन्थ्यो ।*

सन्धिखर्क गा.वि.स. वडा नं. ६ बस्ने कक्षा ५ मा अध्ययनरत वर्ष १२ की शकुन्तला चुँदालीलाई सोही गाउँका भीमबहादुर कुमालले बलात्कार पश्चात् घाँटी थिचेर हत्या गरेको थिए ।

### १.२ जेल

यस जिल्लामा जेल निर्माण भएको छैन । र यहाँका बन्दीहरुलाई गुल्मीको जेलमा राख्ने गरिएको छ ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक प्रतिशोधका भावनाले सत्तापक्षीय दवाबले यस जिल्लाका कतिपय राजनैतिक कार्यकर्ताहरुले विना कसुर सार्वजनिक अपराधका मुद्दाहरु खेपिरहनु परेको देखिन्छ ।

यस जिल्लामा कर्मचारीहरुको पनि मानव अधिकार हनन् भएको छ । स्थानीय जलुके गा.वि.स.मा बन सम्बन्धी



*प्रहरीको गोलीद्वारा पालीमा मारिएका बसिर मियाको शव*

निरीक्षण गर्न खटिएर गएका जिल्ला प्रशासनका दुई नासु र एक रेञ्जरलाई कुटपीट गरी रातभरि गैरकानूनी रुपमा थुनेको देखिन्छ ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्थानीय निर्वाचनको प्रचार-प्रसारको क्रममा २०४९ जेठ १० गते प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला यस जिल्लामा हुने आम सभालाई सम्बोधन गर्न आउनु हुँदा उहाँको विरोधमा विपक्षीहरुले कालो झण्डा देखाउनुका अतिरिक्त आमसभा रोक्ने विभिन्न कार्यहरु गर्न थाले । जसले गर्दा दुई पक्षबीच भीडन्त हुँदा स्थिति अति तनावपूर्ण रह्यो । र स्थिति शान्त पार्न स्थानीय प्रशासनले ८ राउण्ड हवाई फायर, दुई राउण्ड अश्रुग्यास र लाठी चार्ज गर्नुका अतिरिक्त बेलुकी ५ बजेदेखि विहान ७ बजेसम्म निषेधाज्ञा (कर्फ्यु) जारी गरेको थियो ।

उक्त भीडन्तमा प्रदीप ज्ञवाली, गुणनिधि भुसाल, प्रकाश घिमिरे, मणिराज गौतम, हुमबहादुर चौहान, ज्ञानेन्द्र खनाल, मधु स्वर्णाकार लगायत अनेकौं राजनैतिक कार्यकर्ताहरु घाइते भएका थिए ।

गत स्थानीय निर्वाचनमा अन्य जिल्लाको तुलनामा यहाँ बढी अशान्ति र झैझगडा भएको देखिन्छ । यहाँ मतदाता नामावली समावेश गर्न केही क्षेत्रमा बाधा अड्चनको सामना गर्नु पऱ्यो भने केही क्षेत्रमा मतदाता नामावली समावेश गर्न खटिएका कर्मचारीलाई उमेर नपुगेका मतदाताहरुको नाम थप गर्न विवश र बाध्य गराइयो । त्यस्तै अर्घाखाँची र ठुला पोखरा गा. बि. स. मा असहमत विचारधारका उम्मेदवार हरुलाई मनोनयन-पत्र दर्ता गर्न नदिएको उदाहरणहरु छन् भने चिदिका, डिभर्वा, बाँगी आदि क्षेत्रहरुमा सुचारु रुपले स्वस्थ मतदान नभएको गुनासा पनि थिए । त्यस्तै खन र खनदह गा. बि.स. का मतदान अधिकृतमाथि हातपात गरी घाइते बनाइएका घटनाहरु पनि भएका थिए ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्वासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

संविधानले महिला हक, हित र समानताको यथेष्ट प्रावधान गरे तापनि यस जिल्लाका गाउँघरतिर मन नपरे का महिलाहरुलाई बोक्सी भनेर अपमानित गरेको देखिन्छ । साथै बाह्रै महिना कठोर परिश्रम गरेर पनि तीन महिना खान नपुग्ने उत्पादन हुने हुनाले रोजगारी र अन्य विवशताले गर्दा यस जिल्लावासीहरु तराईतिर बसाई सरेका छन् । जारी प्रथा, बहुविवाह, धामी, झाँक्री, बायु भूतप्रेत, छुवाछुत प्रचलन बजारतिर नभए पनि गाँउतिर अद्यापि कायम छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लामा महिलाहरु बराबर बलात्कारका शिकार भएका घटना पनि सुन्नमा आएका छन् । २०४९ असार ३ गते राति सबिन उर्फ नवीन लामाको नेतृत्वमा एक हुल सिद्धारा गा. वि. स. वडा नं. ६ जामुने बस्ने बन्दे पुनको घरमा आई निज पुनकी छोरी कक्षा ४ पढ्ने वर्ष १२ की कुमारी पुनलाई घर पछाडिको जंगलमा लगी रतन बुढा र नवीन लामाले सामूहिक बलात्कार गरेका थिए भने बाँकी जमातले पीडित बन्दे पुनको घरमा लुटपाट गरेका थिए । उक्त घटनामा गाउँलेको सक्रियताले ४ जना अभियुक्तलाई प्रहरीसमक्ष बुझाइएको थियो भने मुख्य अभियुक्त चाहिं फरार रहेको थियो ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■



# ३. पश्चिमाञ्चल

## लुम्बिनी

## ३.१२ गुल्मी

| | |
|---|---|
| जनसंख्या | २६५७०७ |
| साक्षरता | ४८.७ प्रतिशत |
| महिला साक्षरता | ३३.० प्रतिशत |
| क्षेत्रफ | ११४९ वर्ग कि. मी. |

लुम्बिनी अञ्चलका ६ जिल्लाहरुमा गुल्मी राजनैतिक चेतनशील र शिक्षित जिल्लाका रुपमा मानिन्छ । मुख्य गरी राजनैतिक दलहरुका भीडन्त र मुठभेडले यस जिल्लामा मानव अधिकार हनन् भएको पुष्टि गर्दछन् ।

### १. बाँच्न पाउने अधिकार

संविधानले सम्पूर्ण नेपालीलाई समान रुपमा बाँच्ने अधिकार प्रदान गरे तापनि यस जिल्लाका जिल्लावासीहरुले राजनैतिक प्रतिशोध तथा अन्य कारणले भय र सन्त्रासको जीवन बिताएको प्रतीत हुन्छ ।

#### १.१ हत्या / गोली

यस जिल्लामा हत्या सम्बन्धी खास घटना नभए पनि नयाँगाउँ गोली काण्ड, दिगाम घटना, घुर्कोट घटना आदि मानव अधिकार हननका घटनाहरु हुन् ।

*२०४७ कातिक महिनामा नयाँगाउँ गा.बि.स. वडा नं. ३ बस्ने राजनैतिक पार्टीका स्थानीय नेता जयप्रताप मल्लले २२३ रोपनी सार्वजनिक जग्गा आफ्नो नाममा नामसारी गराएपछि उत्पन्न विरोधलाई शान्त पार्न र असहमत विचार का राजनैतिक कार्यकर्ताको अस्तित्व मेटाउने उद्देश्यले २०४८ कातिक २० गते सार्वजनिक तथा व्यक्तिगत सम्पतिको क्षति गर्दै भक्तबहादुर बि.सी. र बिनोद ज्ञवालीलाई गोली प्रहार गरी घाइते बनाए। भोलिपल्ट सो गोली काण्डको विरोध जनाउँदा दुबै पक्षबीच भीडन्त भई लीलाबहादुर बि.क. हरि ज्ञवाली लगायत अनेकौ घाइते भए ।*

*२०४७ पुस १ गते दिगाम गा. वि. स अवस्थित विद्यालयबाट घर फर्किरहेका छात्राहरुलाई जिस्काएको घटनाबाट शुरु भएको सो विवाद अन्त्यमा डरलाग्दो रुपमा देखा पऱ्यो, जसबाट राजनैतिक कार्यकर्ता कमल श्रेष्ठमाथि छुरा प्रहार गर्नुका साथै अचेत अवस्थासम्म कुटपीट गरी मरणासन्न पारिएको थियो । यस घटनामा भएको सांघातिक आक्रमणबाट दर्जनौ कार्यकर्ताहरु घाइते भएका थिए ।*

२०४९ जेठ २१ गते घुर्कोटवस्तु गा. वि. स. मा अवस्थित हिमालय मा. वि. मा दुई पक्ष बीचका विद्यार्थीहरुमा भनाभन हुँदाहुँदै मारपीट हुन गयो । मारपीटको खबर सुनेर सम्बन्धित क्षेत्रको सांसदको नेतृत्वमा आएको एक समूहद्वारा जैसिथोक गा. वि. स. का अध्यक्ष ठाकुर पोखेल, निजको दाजु टंक पोखेलमाथि सांघातिक आक्रमण हुनुका साथै निजको घरभित्र पसी तोडफोड गर्नुका अतिरिक्त परिवार माथि हातपात गरेको थियो । उक्त घटनामा सोही गा. वि. स. का वडा सदस्य कृष्ण पोखेल, शिक्षक लक्ष्मण पोखेल सख्त घाइते भएका थिए। भनिन्छ यस घटनामा राजनैतिक दबाबले गर्दा प्रहरी नायब निरीक्षक तेजप्रसाद शर्माले यज्ञप्रसाद पोखेललाई हिरासतमा लिएर वीभत्स अमानवीय यातना दिएका थिए। साथै उक्त घटनालाई लिएर स्थानीय प्रशासनले कृष्ण पोखेल, ज्ञानबहादुर खत्री, मोतीबहादुर पोखेलमाथि सार्वजनिक अपराधको एकतर्फी मुद्दा लगाएको देखिन्छ ।

#### १.२ जेल

यहाँ अवस्थित जेलको भौतिक स्थिति सारै दयनीय छ। जेल भवन पुरानो र जीर्ण भएर चर्किएको छ। यहाँ कुल २० जना बन्दीहरु छन्। जेलभित्र बन्दीहरुलाई खास सुविधा छैन । र जेलभित्र घरेलु उद्योग, प्रौढ शिक्षाको व्यवस्था, टेलिभिजन र खेलकूदका सामग्री हुनु पर्ने बन्दीहरुको माग छ ।

#### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा राजनैतिक प्रतिशोध नै गिरफ्तारी र यातनाको मूल कारण रहेको छ। २०४९ जेठ २४ गते सिर्सेनी

गा वि स का अध्यक्ष सूर्यबहादुर जि सि., ज्ञानबहादुर क्षेत्री, मनीराम भण्डारीमाथि तम्घासबाट ट्याक्टरमा आइरहेको एक जत्थाले सांघातिक आक्रमण गरी मरणासन्न पारेका थिए। यसैगरी राजनैतिक पूर्वाग्रहकै कारण २०४९ कात्तिक २३ गते जैसिथोकमा राजनैतिक कार्यकर्ता बोमबहादुर प्रदेशलाई एक हुलले लछारपछार गरी गालीगलौज गरेको थियो। त्यस्तै २०४९ कात्तिक २३ जैसिथोक गा वि. स. का उपाध्यक्ष लुमबहादुर घर्ती मगर लगायत केही राजनैतिक कार्यकर्ताहरुलाई घाइते बनाइएको थियो।

२०४९ भदौ २५ गते राजनैतिक दवावको कारण जुमुड गा. वि. स. का अध्यक्ष पूर्णबहादुर घर्ती मगरलाई प्रहरी निरीक्षक चिरञ्जीवी देवकोटाले विनाकारण गिरफ्तार गरी कुटपीट तथा यातना दिएका थिए। यसैगरी २०४९ भदौ २९ गते अर्वेनी गा. वि. स. का अध्यक्ष देवीप्रसाद न्यौपाने, पौधा गा. वि. स. का सचिव जीवनारायण न्यौपानेलाई ७ दिनसम्म विनाकारण गिरफ्तार गरी सार्वजनिक अपराध मुद्दा लगाइएको थियो।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ। तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन्।

नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरुलाई यस जिल्लामा मानसिक यातना तथा अपायक पर्ने दुर्गम ठाँउहरुमा सरुवा गरेको पाइन्छ। त्यस्तै कतिपय अस्थायी शिक्षकहरुलाई विनाकारण खारेज गरिएको छ भने कतिलाई घटुवा गरी मनोवल गिराएको देखिन्छ।

गत वर्ष २०४८ सालमा विभिन्न माग राखी शान्तिपूर्ण सञ्चालन भएको कर्मचारी आन्दोलन समाप्त भएको लगत्तै नेपाल निजामती कर्मचारी संगठनसंग सम्बद्ध १३ कर्मचारीहरुलाई विना कसूर अवकास दिएको देखिन्छ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन। अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन। निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन्।

यस वर्ष यहाँको जिल्ला अदालतमा सरकारी फौज्दारी तर्फ २९, दुनियावादी फौज्दारी तर्फ १४८ र दुनियावादी देवानी तर्फ २४५ मुद्दा दायर भएका छन्।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

महिला किनबेच र बलात्कार सम्बन्धी घटनाहरु यस जिल्ला प्रत्यक्ष रुपमा देखिएका छैनन्। साथै जारी र बहु-विवाह भने यस जिल्लामा व्यापक रहेको देखिन्छ। यस वर्ष मात्र जारी विवाहको ११ वटा र बहु-विवाहको ४ वटा घटनाहरु जिल्ला अदालतमा दर्ता भएका थिए।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन। त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन।

### ५.२ अन्य अमानवीय व्यवहार

देशमा राजनैतिक परिवर्तन पश्चात् संविधानले ग्यारेण्टी गरेको मानव अधिकार बहाल गर्नका लागि यस जिल्लामा रहेका राजनैतिक दल, प्रशासन र प्रहरीलाई मानव अधिकारसंग सम्बन्धित विभिन्न संस्थाहरुले प्रशिक्षण प्रदान गरेमा यी संस्थाहरुमा मानव अधिकार उपभोग गर्ने क्षमताको विकास हुने तथ्यमा सबै राजनैतिक संघ संस्था, प्रशासन र प्रहरी एकमत छन्। ■



# ३. पश्चिमाञ्चल

## धवलागिरी

## ३.१३ बागलुङ

| | | |
|---|---|---|
| जनसंख्या | : | २३२७३७ |
| साक्षरता | : | ४३.२ प्रतिशत |
| महिला साक्षरता | : | २७.४ प्रतिशत |
| क्षेत्रफल | : | १७८४ वर्ग कि. मी. |

धौलागिरी अञ्चलको अन्य जिल्लाको तुलनामा यस अञ्चलको सदरमुकाम बागलुङ्ग सुगम नै मान्नु पर्छ। देशका पिछडिएका अञ्चलहरु मध्ये पर्ने यस अञ्चलमा व्याप्त गरीवी, अशिक्षा, अज्ञानता आदिले गर्दा संविधानले प्रत्याभूति गरेको अधिकारसम्म पनि यहाँका बासिन्दालाई अवगत भएको देखिंदैन।

### १. बाँच्न पाउने अधिकार

गरीवी पछौटेपन, रुढीग्रस्त समाजमा संविधान प्रदत्त अधिकारहरु उपभोग गर्नु भन्ने कुरा अलि असंभव जस्तो प्रतीत हुन्छ।

#### १.१ हत्या / गोली

२०४८ माघ १ गते माघे सङ्क्रान्तिका अवसरमा यस जिल्लाको ज्यामिरे गाउँमा राजनैतिक पार्टीका कार्यकर्ताहरुले गरेको सांस्कृतिक कार्यक्रममा हुलदंगा हुन गई अज्ञात व्यक्तिको छुरा प्रहारद्वारा प्रहरी निरिक्षक ज्ञानेश्वर वैद्यको हत्या हुन गयो। हत्या कसले गऱ्यो भन्ने तथ्य अझ पत्ता लागेको छैन, तर पूर्वाग्रहले गर्दा कारवाही भएकाहरुलाई बेहोश हुञ्जेलसम्म पाइतालामा पिट्ने, पानी माग्दा मुखमा पिसाब गरिदिने, पिनले नङमा घोच्ने, आँखामा पोल्ने पदार्थ हाल्ने, जिउ डढाउने, बुटले संवेशनशील क्षेत्रमा जथाभावी हान्ने आदि बीभत्स, कठोर र अमानवीय यातना दिएको पाइन्छ।

यसरी यातना दिएको विषयलाई लिएर सबै राजनैतिक दलले एकमत भएर विरोध जनाइसकेका छन्।

*कालिका गा.वि.स. बस्ने ४७ का कृष्णप्रसाद श्रेष्ठ २० वर्ष देखि यहाँको अड्डा अदालतमा लेखापढी गर्दै आएका हुन्। मादक पदार्थ अलि बढी सेवन गर्ने निज श्रेष्ठको लाश २०४७ असोज २६ गते सोही गा.वि.स. वडा नं. ३ को पुरानो छात्रावास मुनिको भीरमा बेवारिसे रुपमा पाइयो। यस सम्बन्धी जाँच पड्ताल र शव परिक्षणबाट कृष्णप्रसाद श्रेष्ठलाई कर्तव्य गरी मारेको देखियो। र स्थानीय प्रशासनबाट हत्याराको कुनै खोजवीन र कारवाही नभएपछि विभिन्न राजनैतिक दल, संघ संस्था अदिले हत्यारामाथि कारवाही होस् भनी विरोध जुलुश निकाले, तर उक्त जुलुशमाथि जिल्ला प्रहरी कार्यालयबाट दुङ्गामुढा गर्नुका साथै अश्रुग्यास र २८ राउण्ड हावाई फायर गरियो।*

#### १.२ जेल

यस जिल्लाको जेलको क्षमता २५ जना बन्दीहरुको छ तर हाल यहाँ ४ महिला २५ पुरुष गरी २९ जना बन्दीहरु छन्। अधिकांश बन्दीहरु ज्यान मुद्दा, ज्यान मार्ने उद्योग र चोरीमा परेका छन्। यस जेलमा शीप विकासको नाममा नाम्लो बुन्ने बाहेक अरु केही सुविधा छैन। जेलमा प्राप्त सुविधाहरु त्यति नकारात्मक नरहेको धारणा पनि यहाँका बन्दीहरु व्यक्त गर्दछन्।

### १.३ गिरफ्तारी / यातना

प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला गत स्थानीय निर्वाचनको क्रममा २०४९ जेठ १० गते यस जिल्लामा आउनु हुँदा उहाँलाई केही राजनैतिक दलहरुका कार्यकर्ताहरुले कालो झण्डा देखाएर विरोध प्रदर्शन गरे। संविधान प्रदत्त अधिकार भित्र रही प्रदर्शन गरेको यस विरोध जुलुश माथि राजनैतिक प्रतिशोध स्वरुप ढुंगामुढा गरेको आरोप लगाई २४ जना स्थानीय राजनैतिक कार्यकर्तामाथि सार्वजनिक अपराधको मुद्दा दायर गरिएको थियो।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

स्थानीय निर्वाचनमा यस जिल्लाको राजकुट गा.वि.स.मा पक्ष विपक्ष बीच विवाद उत्पन्न भएपछि गोली हानाहान भएर केही घाइते भएका थिए।

स्थानीय निर्वाचनमा गल्कोट, हरिया, हिलनेर, ठोटी आदि स्थानहरु केही अशान्त र अनियन्त्रित भएकोले स्थानीयवासीहरु मतदान गर्नबाट बञ्चित भएका थिए।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिँदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ३. पश्चिमाञ्चल

## धवलागिरी

# ३.१४ पर्वत

| | | |
|---|---|---|
| जनसंख्या | : | १४३७५३ |
| साक्षरता | : | ४२.१ प्रतिशत |
| महिला साक्षरता | : | ३८.३ प्रतिशत |
| क्षेत्रफल | : | ४९४ वर्ग कि. मी. |

पश्चिमान्चल क्षेत्रमा पर्ने पर्वत नेपालका साना जिल्लाहरु मध्ये एक हो । पहाडी क्षेत्रमा पर्ने पर्वत राजनीतिक रुपमा उस्तो चर्चामा आएको जिल्ला ठानिंदैन ।

## १. बाँच्न पाउने अधिकार

संविधानले प्रत्याभुत गरेको सबै नागरिकले बाँच्न पाउने अधिकार बारेमा यस जिल्लाका अधिकांश नागरिकले बुझ्न सकिरहेका छैनन । दुर्गम र विकट ग्रामिण इलाका रहेको हुनाले शिक्षा र सचेतनता न्युन रहेको छ तर पनि यताका केही बर्षहरुमा राजनीतिक गतिविधिले त्यो न्युनतालाई केही घटाउन मद्दत पुऱ्याइरहेको महशुस हुन्छ। यस जिल्लामा पनि अरु जिल्लामा जस्तै मानव अधिकार उल्लंघनका घटनाहरुमा प्रतिशोधपूर्ण व्यवहार, हत्या, गोली गिरफ्तारी यातना र झै-झगडाका कारण भएका कुटपिटहरु नै प्रमुख हुन् ।

### १.१ हत्या/गोली

लिमीठाना गा.वि.स. वाड नं. ६ निवासी ५० वर्षिय हरिप्रसाद वि.क. लाई स्थानिय दिलवहादुर समेतका ९ जनाले मासु काट्दा भएको झगडाको निहुँमा ०४९ असोज २४ गते लाठि र मुड्कीले हानी शक्त घाइते बनाएका थिए । सोही कारणबाट भोलिपल्ट असोज २५ गते हरिप्रसादको मृत्यु भयो ।

खुर्कोट गा.वि.स. वडा नं. २ निवासी अन्दाजी २३ बर्षिय बाबुराम रोका क्षेत्रिलाई ०४९ कार्तिक ४ गते साँझ ७ बजे बाग्लुङ्ग जाने बाटो खुर्कोटको नयाँ पुलमा टिकाराम देवकोटा समेतका ३ जनाले छुरीले घाँटी रेटी मारेका थिए । उक्त घटनामा जाहेरी दरखास्त परेकोले र अभियुक्तलाई थुनामा राखी अदालतमा मुद्दा चलिरहेको छ ।

### १.२ जेल

सामान्यतया अरु जिल्लाका जेल जस्तै यस जिल्लामा रहेको जेल पनि असुविधा र अभावको एउटा नमुना नै देखियो । जेलमा महिला बन्दीहरुलाई राख्ने छुट्टै कोठा त छ तर पुरुष वार्डमा ठाउँ अत्यन्त साँगुरो रहेको र महिला बन्दी नभएको बेला त्यही कोठामा पनि पुरुष बन्दीहरुलाई राखिने गरेको बताइयो । घामको प्रकाश पुरुष वार्डमा विहान पख र महिला वार्डमा बेलुकीपख मात्र छिर्ने गर्दछ । केही समय अघिसम्म सेफ्टी ट्यांक नभएकोले जेल दुर्गन्धित थियो तर अहिले त्यस्तो छैन । जेलमा लुतो, ग्याष्टिक, पीलो जस्ता रोगले ग्रस्त बन्दीहरु छन् तर औषोधोपचारको सुविधा त्यहाँ छैन । पत्रपत्रिका इन्सेकले दिएको जति पढ्न पाइराखेको कुरा बन्दीहरुले बताए । सरुवा रोग लागेका, मानसिक असन्तुलन भएका, कम उमेरका, साधारण बन्दी र ठूलो अपराधका वयस्क व्यक्ति समेतलाई एकै ठाउँ राखिने गरेको पाइयो । यस सम्वन्धमा जेलर शोभाकान्त कणेल भनाइ यस्तो रहेको थियो- "बन्दीको अवस्था अनुसार भन्दा पनि उनीहरुको वीचमा पारस्परिक मेल हुने दृष्टिकोण अनुसार मिलाएर राखिएको छ ।"

जेल भित्र बन्दीहरुलाई घरेलु उद्योग तथा शिपमूलक तालिमको व्यवस्था छैन । जेलरका अनुसार सोको व्यवस्था बारे सम्बन्धीत निकायमा पत्राचार गरिएको तर स्वीकृति नआएकोले गर्न सकिएको छैन ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक प्रतिशोधका कारण सत्तपक्षको इशारा र दवावमा प्रतिपक्षका कार्यकर्ता माथि मिथ्या र कपोलकल्पित आरोप लगाई गिरफ्तारी गरिएका थुप्रै उदाहरणहरु यो जिल्लामा पनि पाइन्छन् । यसरी गिरफ्तार गरिएका व्यक्तिहरुलाई सामान्यत यातना दिने गरेको पाइयो । अहिले पनि सार्वजनिक मुद्दामा निकै मानिसहरु फसाइएका देखिन्छन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

संविधानले संरक्षण गरेको मौलिक अधिकार व्यवहारत यो जिल्लामा लागु भएको देखिएन । यसको कारण जनतामा रहेको अशिक्षा र अज्ञानता पनि एउटा हो भने अर्को तर्फ लोभ लालच र मिथ्या प्रलोभनमा पारेर केही टाठा-बाठाहरुले आ-आफ्ना संगठन वा दलतिर लैजाने गरेको पनि देखियो । आफ्नो आश्था अनुरुप इच्छाएको दलमा संगठित नागरिकहरुले आश्था कै कारण पक्षपातपूर्ण व्यवहार बेहोर्नु परेका घटनाहरु पनि यस जिल्लामा देखन पाइन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

जिल्लामा ब्राह्मण, क्षेत्री, गुरुङ, मगर, कामी, दमाई सबै जातिको बसोबास छ । छुवाछुत र जातिपाती बारेमा प्रशस्त अन्ध धारणा हुँदा हुँदै पनि धर्मकै नाममा लडाई झगडा भने यहाँ भएको छैन । धार्मिक स्वतन्त्रताको संवैधानिक प्रावधान नबुझेकै भए पनि जिल्लावासीमा धार्मिक सहिष्णुता कायम रहेको पाइयो ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निस्पक्ष चुनावको अधिकार

राजनैतिक स्वतन्त्रताको एउटा सबल पक्ष नै निर्वाचन निस्पक्षता र स्वतन्त्र निर्वाचन प्रक्रिया हो । यस सबाललाई मध्यनजरमा राखेर हर्ने हो भने यस जिल्लामा निर्वाचन सम्बन्धी ८ ओटा मुद्दा दायर भएको तथ्यले पनि कतिपय ठाउमा निर्वाचन निस्पक्ष नरहेको प्रष्ट हुन्छ ।

स्थानीय निर्वाचनको सिलसिलामा खुर्कोट गा.वि.स.को बुथमा एमाले र राप्रपा का उम्मेदवार तथा मतदाता समेतलाई लखेटी करीब १२.३० बजे अन्य गाउँका व्यक्तिहरु जम्मा पारी सत्ता पक्षका कार्यकर्ताहरुले एकलौटी मत खसाएका थिए । साथै बुथबाट मत पेटिकाहरु स्थानीय छत्रराज रेग्मीको घरमा लगी त्यहीं गनेर परिणाम घोषणा पनि त्यहीं गराइएको थियो । त्यस बुथमा मतदाता मात्र होइन स्वयम उम्मेदवार समेत मतदानको अधिकारबाट वंचित हुनु परेको थियो । रुद्रप्रसाद सुवेदी समेतका ११ जना उम्मेदवारहरुको जाहेरीले मुद्दा दर्ता भएको छ तर कार्वाही किनारा अझै भएको छैन ।

पाङ गा.वि.स. को विद्यालय भवनमा रहेको बुथमा शान्तिपूर्ण ढंगले मतदान चलिरहेको बेला १२.३० बजे अचानक सत्तापक्षीय दलका जिल्ला अध्यक्ष अर्जुन जोसी स्वयमको अगुवाइमा १५०-२०० जनाको हुल आएर विपक्षी दलसंग सम्बन्धीत उम्मेदवार र मतदाता समेतलाई हुल हुज्जत गरि लेखेटेको थियो । यसरी लेखेटे पछि बुथ कब्जा गरी सत्तापक्षका उम्मेदवारलाई विजयी घोषित गरिएको थियो । यस घटनालाई पनि लिएर अदालतमा मुद्दा चलिरहेको बताइयो ।

सरौं खोला गा.वि.स. को बुथमा शान्तिपूर्ण ढंगले मतदान कार्य चलिरहेको बेला सूर्य चिन्ह लगाएका व्यक्तिहरुको बीचबाट मुक्ति भन्ने एकजनाले मत पेटिका टिपेर भीडमा फालेको र निर्वाचन स्थगित गरिएको थियो ।

पाङराङ गा.वि.स.को तीनकुलेमा सत्तापक्ष र विपक्षका कार्यकर्ता बीच अश्वस्थ प्रतिस्पर्धाका कारण आपसमा कुटपिट र हुल हज्जत भएको र हुलहालका बीच मतदान नगरी कतिपय मतदाताहरु घर फर्केका थिए । उक्त घटनामा पाङराङको मतदान केन्द्रमा लोकबहादुर कुवर लगायत १० जना घाइते भएको बताइयो ।

### २.४ सुगम र निस्पक्ष न्यायिक अधिकार

अरु पहाडी जिल्लामा जस्तै यस जिल्लामा पनि छिटो छरितो र निस्पक्ष ढंगले न्यायिक अधिकारको उपयोग गर्ने अवशर जिल्लावासीले पाएका छैनन् ।

यस वर्ष पर्वत जिल्ला अदालतमा ज्यान मारेको ३, ज्यान मार्ने उद्योग २, गाली बेइजति १८, कुटपिट ६ र वालविवाह सम्बन्धी ३ र निर्वाचन सम्बन्धी ८ ओटा मुद्दा दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

तराईका अरु कतिपय जिल्लामा जस्तो सुकुम्वासीको विकराल समस्या यस जिल्लामा भने देखिएन । फाट्टफुट्ट केही परिवार जिल्लाका विभिन्न गाउँहरुमा रहेका छन । उनीहरुको तथ्यगत जानकारी भने पाइएन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनवेच र बलत्कार

अधिकांश जिल्लावासी महिलाहरुमा चेतना र शिक्षा एकदमै कम छ र उनीहरु आफ्ना हक अधिकारका वारेमा पनि असचेत छन् । पारिवारिक रुपले दमन उत्पीडनमा बाँच्न विवस महिलाहरुको एउटा प्रतीक श्रीमती सिता कुमारी पनि हुन् । श्रीमानले उनको दुवै हात काटिदिएका थिए । महिला बेचबिखनको उल्लेखनीय घटना नघटेको भए पनि बलात्कार प्रयासका घटना भने फाट्टफुट्ट देखिएका छन् ।

नाङ्लीवाङ गा.वि.स. वडा नं. ९ फोर्से निवासी होमवहादुर श्रेष्ठकी १७ वर्षिय पत्नी धनकुमारी श्रेष्ठ ०४९ भदौ ११ गते सातले बेथाने भीरमा घाँस दाउरा भएको बेला सोही गा.वि.स. बस्ने २० वर्षिय ध्रुव क्षेत्रीद्वारा बलात्कार गर्ने प्रयास गरिएको थियो ।

### ४.२ जारी, वहुविवाह, देउकी, बादी प्रथा

यो जिल्लामा देउकी तथा वादी प्रथा छैन तर वालविवाह र वहुविवाहका समस्याहरु भने यत्र तत्र भेटिन्छन् नै । पाखा पानी गा.वि.स. वडा नं. ८ बस्ने १९ वर्षिय प्रेमसिंह आले मगरकी श्रीमतीलाई मनरुपा मगर्नीको भाइले लगेको भन्ने आरोपमा प्रेमसिंह समेतका मानिसहरुले घर तोडफोड गरेका थिए । पछि जि.प्र.का. मा जाहेरी परेको र मुद्दा पनि चलिरहेको बताइयो ।

त्यस्तै कुर्घा गा.वि.स. वडा नं. ७ दुक्तान बस्ने २१ वर्षिय डम्बर सिंह गुरुङले ०४९।९।७ मा सरस्वति मा.वि. दुक्तानमा कक्षा ५ मा अध्ययनरत १३ वर्षिय मनमाया गुरुङलाई विवाह गरेका थिए । यो अवैधानिक वालविवाहमा मनकुमार गुरुङ समेतले अनुचित फाइदा लिइ सहयोग गरेको बताइन्छ । वालिका मनमाया गुरुङ्को वावु जीत वहादुर गुरुङ विदेश गएको बेला यो विवाह भएको र उ फर्केर घर आइ अदालतमा फिराद गरेको र मुद्दा चलिरहेको वताइन्छ।

यस जिल्लामा वहुविवाहका उदाहरण पनि प्रसस्तै पाइन्छन् । यस बर्ष पनि असोज ४ गते शाही सेनामा कार्यरत २७ बर्षिय कर्णबहादुर कुवरले आफ्नो घरमा पत्नी हुँदाहुँदै कास्की धान्दुक गा.वि.स. वडा नं. ९ बस्ने पूर्ण कुमारी कुवरलाई दोस्रो विवाह गरी ल्याएका थिए । यस सम्वन्धमा अदालतमा मुद्दा पनि चलिरहेको बताइन्छ ।

## ५. मानव अधिकार सम्वन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

मानव अधिकार उल्लंघनका अरु घटनाहरुमा यस जिल्लामा धामी झाँक्रीको अन्ध भ्रममा परी बोक्सीको आरोप लगाइ अपमानित गर्ने, ठूलो जात र सानो जातका बीच छुवाछुत, हली-गोठालाको रुपमा बँधुवा मजदूर आदि रहेका छन् । ■



# ३. पश्चिमाञ्चल

## धवलागिरी

# ३.१५ म्याग्दी

| | | |
|---|---|---|
| जनसंख्या | : | १००९१८ |
| साक्षरता | : | ४३.३ प्रतिशत |
| महिला साक्षरता | : | २७.३ प्रतिशत |
| क्षेत्रफल | : | २२९७ वर्ग कि. मी. |

म्याग्दी पंचायती काल देखि नै राजनीतिको चर्चामा आइरहने जिल्लाको नाम हो । पश्चिमाञ्चल क्षेत्रको यस पहाडी जिल्लाका बासिन्दाले पनि प्रजातान्त्रिक संविधानले प्रत्याभूत गरेको सबै अधिकार उपभोग गर्न सामर्थ्य जुटाउन सकेका छैनन् ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

*०४९ पुष ६ गते स्थानीय सिख गा.वि.स. पोखरे बगरका युवक सुरत बहादुर खत्रीको कुटपीटका कारण हत्या भएको थियो । तर उक्त कुरो पुष ८ गते मात्र थाहा हुन सक्यो । उनको लाश काली गण्डकीको तिरमा वेवारिश अवस्थामा फेला परेको थियो । उनलाई ज्यूँदो अवस्थामा अन्तिम पटक पुष ६ गते बेलुकी धनकुमारी र कमला गर्बुजाको दोवा गा.वि.स. भीरकोट ओढारमा रहेको भट्टीमा देखिएको थियो । त्यस बेला उनी पर्म वा खेतीपातीको काम सकी घर तिर फर्किरहेका थिए । हाल सोही गाउँका बुद्धि बहादुर पुन, सुरतबहादुर खत्रीको हत्याको अभियोगमा जेल सजाय भोगिरहेका छन् ।*

#### १.२ जेल

भाडामा लिइएको घरमा रहेको यहाँको जेलभित्र राम्रोसंग हावा पनि छिर्दैन । झयाल पनि नभएको यहाँको जेलमा ३-४ जना अट्न सक्ने ठाउँ रहेको छ । तर हाल यहाँ १२ जना बन्दीहरु राखिएका छन् । जेलभित्र बन्दीहरुबीच कपडाको अभाव हुने गरेको देखिन्छ । यहाँको जेलमा विहानको खाना ७ देखि आठ बजेसम्म र बेलुकीको खाना दिउँसो २ बजे भित्रै खाइ सक्नु पर्ने बाध्यता रहेको छ । बन्दीहरुले राती दिसापिसाब पनि भित्रै राखिएको भाँडामा नै गर्नु पर्दछ । म्याग्दी जेलका अधिकांश बन्दीहरु ग्याष्टिक वा पेटका अन्य रोगबाट ग्रसीत रहेका छन् ।

#### १.३ गिरफ्तारी / यातना

०४९ जेठ-असारमा भएको स्थानीय निर्वाचन ताका मुदी गा.वि.स. स्थित मुदी मतदान केन्द्रमा नेपाली कांग्रेसका कार्यकर्ताहरुको दवाबमा राष्ट्रिय प्रजातन्त्र पार्टीका पहलमान घर्ती र विद्यार्थी राम बहादुर पूर्जालाई पक्राउ गरिएको बताइन्छ । पछि घर्तीलाई ४२ सय ५० रुपैयाँ धरौटीमा छोडियो । हाल उनी सार्वजनिक अपराध ऐन अन्तर्गत तारिख धाइरहेका छन् ।

प्रतिपक्षका समर्थक भएका हुनाले बरंजा गा.वि.स. सातवीसेका उत्पीडित विश्वकर्माहरु माथि प्रशासनिक दमन भएको पनि बताइन्छ । उक्त क्षेत्रका साहुहरुद्वारा लिने गरि एको चर्को ब्याजको समेत विरोध गरेकोले ०४९ कार्तिक १६ गते बुद्धि बहादुर, पूर्ण बहादुर र टेक बहादुर विश्वकर्मा लगायतका चारजनालाई गिरफ्तार गरिएको थियो । पक्राउ परेका विश्वकर्मा बन्धुहरुलाई कठोर यातना दिइएको बताइन्छ । हिरासतमा उनीहरुलाई कुटपिट गरी जबरजस्ती

सादा कागजमा सही गर्न लगाइएको र सोही आधारमा अन्य २२ जना माथि कार्वाही सुरु गरिएको पाने बताइन्छ । स्थानीय बासिन्दा उनीहरुलाई नाङ्गै पारी कम्बल ओढाएर माथिबाट लाठीले कुटिएको कुरा बताउँछन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

प्रधानमन्त्री गिरिजा प्रसाद कोइराला ०४९ जेठ ९ गते म्याग्दी पुग्नु हुँदा नेपाल कम्युनिष्ट पार्टी (एमाले), संयुक्त जनमोर्चा र नेपाल कम्युनिष्ट पार्टी (मसाल) का कार्यकर्ताहरुले विरोध कार्यक्रमको आयोजना गरेका थिए । तर संयमित ढंगले अगाडि बढीरहेको कालो झण्डा सहितको जुलुसमाथि वीरेन्द्र चौक भन्दा केही वर डी.एस.पी. कार्यालयको उत्तर पट्टि अन्धाधुन्ध लाठी चार्ज गरियो । उक्त अवसरमा सोम बहादुर बोगटी, मान बहादुर क्षेत्री लगायतका ३०-३२ जना गैर प्रदर्शनकारीहरु समेत घाइते भए । लाठी चार्ज र होहल्ला बीच गोविन्द पौडेल र यम बहादुर थापा पनि सामान्य घाइते भएका थिए । स्थानीय प्रकाश मा.वि.का शिक्षक ध्रुवलाल शर्मालाई उक्त प्रदर्शन कार्यक्रममा भाग लिएको आरोप लगाई स्पष्टीकरण माग गरिएको थियो । हाल उनलाई गुल्मी सरुवा गरिएको छ ।

प्रधानमन्त्रीको आगमन हुँदा स्वागत र विरोध गर्नेहरु बीच सुरुमा नाराकै माध्यमबाट पनि झगडा भएको थियो । स्थानीय मानवाधिकार कार्यकर्ताहरु बिना चेतावनी लाठी चार्ज गरिएको बताउँछन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

०४९ जेठ १८ गते भएको स्थानीय निकायको चुनवाका क्रममा मुदी गा.वि.स.मा निकै गडबड भएको थियो । उक्त मतदान केन्द्रमा शान्तिपूर्ण ढंगमा मतदान भइर हेको अवस्थामा दिनको करिब साढे बाह्र बजे पुर्जा गा.वि.स.का अध्यक्ष ऋद्धिमान घन्त्याल आइपुगे । उनले आफ्नो पार्टी नेपाली कांग्रेसका मतदाताहरुलाई बाटैमा रोकिएको बताउँदै मतपेटिका नै हुत्याइ दिए । उनले मतपेटिका पटक पटक हुत्याए र पटक पटक त्यसलाई ठीक ठाउँमा ल्याएर राखियो । तर अन्ततः विवाद निकै बढ्दै गए पश्चात चुनाव नै स्थगित गर्ने सूचना जारी गरियो ।

मतपेटिका फाल्न नानचाकु र छुरी सहित आएका ऋद्धिमान लगायतका दुईजना माथि कुनै कार्बाही गरिएन । तर उनीहरुका विषयमा उजुरी गर्ने पहलमान घर्तीमाथि सार्वजनिक अपराध गरेको अभियोगमा मुद्दा चलाइयो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

जिल्लाको ज्यामरुकोट गा.वि.स.मा ७-८ कुरिया सुकुम्बासीहरु रहेका छन् । जिल्लाका अन्य भागहरुमा पनि फाट्टफुट्ट रुपमा सुकुम्बासीहरु रहेको बताइन्छ । जिल्ला भरमा १०४ कुरिया रहेको बताइन्छ ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

बेनी बजार वडा नं. २ बैरागीटोलमा डेरा गरी बसीर हेकी एउटी केटीलाई अपहरण गरी बलात्कार गरिएको पनि बताइन्छ ।

### ४.२ नारी, बहुविवाह, देउकी, बादी प्रथा

यस जिल्लामा देउकी र बादी प्रथा देखिदैन । तर बहुविवाहको समस्या भने यस जिल्लामा पनि देखिन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ३. पश्चिमाञ्चल

## धवलागिरी

# ३.१६ मुस्ताङ

| | | |
|---|---|---|
| जनसंख्या | : | १४३१९ |
| साक्षरता | : | ४५.४ प्रतिशत |
| महिला साक्षरता | : | ३१.४ प्रतिशत |
| क्षेत्रफल | : | ३५७३ वर्ग कि. मी. |

पश्चिमाञ्चलको पहाडी जिल्ला मुस्ताङ विकटताका कारण पनि मानव अधिकार चेतना भन्दा धेरै टाढा छ । जिल्लाका कूल १६ वटा गा.वि.स.हरु मध्ये १० वटामा हरेक काम स्थानीय राजा कहलिने भिंमी पर्वल विष्टकै तजविजमा निर्भर रहने गरेको पाइन्छ। विष्टलाई देख्ने बित्तिकै यहाँका बासिन्दा घुँडा टेकेर कपाल कन्याउने वा जिब्रो निकाल्ने गर्दछन् । स्थानीय परम्परा अनुसार ती प्रक्रिया अति सम्मानका सूचक ठानिन्छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

०४९ को सुरुकै महिनातिर टुकुचे गा.वि.स. वडा नं. २ का सुक बहादुर विश्वकर्मा र सोही गाउँका दुन्दुल भोटे, गुरुङ बीच पानीका कारण ठूलै भगडा भयो। भगडाकै क्रममा सुक बहादुरले गुरुङको पेटमा प्रहार गरेको घुस्सा नै अन्ततः गुरुङको मृत्युको कारण बन्न पुग्यो । ०४९ साउनमा भएको सर्जिमिनमा पनि सुक बहादुर नै दोषी ठहऱ्याइए । हाल उनी मुस्ताङ जेलमा रहेका छन् ।

### १.२ जेल

बढीमा १८ जना अटाउन सक्ने यहाँको जेलमा हाल जम्मा दुई जना पुरुष बन्दीहरु रहेका छन् । जेलभित्र पानी र विजुलीको व्यवस्था रहेको छ । तर अन्य कुराहरु यहाँ पनि नेपालका अरु जेलहरु जस्तै नै देखिन्छ ।

### १.३ गिरफ्तारी / यातना

यस बर्ष गिरफ्तारी र यातनाका उल्लेखनीय घटना प्रकाशमा आएनन् ।

## २. मौलिक अधिकार

पिछडिएको मुस्ताङका जनताले मौलिक अधिकारको बारेमा बुझ्ने मौका पनि पाएका छैनन् । यहाँका बासिन्दा निर्वाचित पदाधिकारीहरु भन्दा बढी गाउँका मुखियालाई मान्दछन् । गाउँलेहरुकै सरसल्लाहमा चुनिएको मुखिया स्थानीय तहका निर्वाचित पदाधिकारीहरु भन्दा शक्तिशाली पनि हुन्छन् ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

गत ०४९ जेठ-असारमा भएको स्थानीय निर्वाचनमा यहाँ उल्लेख्य ढंगमा हस्तक्षेप भएको थियो । यहाँ मतदातालाई चुनाव चिन्ह र पैसा समेत बाँडिएको पनि देखिएको थियो । स्थानीय निर्वाचनको सम्बन्धमा नेपाल मानव अधिकार संगठनको मुस्ताङ शाखाले तयार पारेको संक्षिप्त प्रतिवेदनमा लेखिएको थियो । - "गोप्य मतदानको सिद्धान्तलाई यस पटकको जिल्ला विकास समितिको निर्वाचनले सुरक्षा गर्न नसकेको स्पष्ट देखा पऱ्यो। मतपत्रमा अनेकौं चिन्ह राखिएको, नोट अथवा कुनै वस्तुले बेरेर मत खसालेको पाइयो। ती मतहरु सबै धनको प्रलोभन, डर, धम्कीको दवाबमा परेर खसालेको हो भन्नुमा कुनै अत्योक्ति नहोला ।" प्रतिवेदनमा यस्तो पनि लेखिएको छ । - "यस पटक भएको जिल्ला विकास समितिको निर्वाचनमा उम्मेदवारका कार्यकर्ताहरुले सदरमुकाममा आएका मतदाताहरुलाई नाका, नाकामा बसी धरपकड गरेको देखियो ।"

"०४९ असार १३ गते भएको जिल्ला विकास समितिको चुनावमा कांग्रेसका कार्यकर्ताहरुले विपक्षका मतदाताहरुलाई कोठामा थुनी दिने काम समेत गरे ।" एकजना प्रतिपक्षी कार्यकर्ता बताउँछन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । तर स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा कतिपय ठाउँमा हस्तक्षेप भएको ज्ञात भयो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

यस जिल्लामा रहेको बहुपति प्रथाले महिला अधिकार लाई प्रभावित तुल्याउँछ भन्ने यहाँका महिलाहरुलाई लाग्दैन । श्रीमती पाल्मु गुरुङ कुनै बेला पंचायतको वर्गीय संगठन महिला संघकी जिल्ला सभापति थिइन् । तर उनकै दुईजना पतिहरु रहेका छन् । यहाँ घरको जेठो दाजुले बिहे गरे पश्चात उनकै पत्नीलाई सबै भाइहरुले स्वास्नी मान्नु पर्ने चलन रहेको छ । त्यस वैवाहिक स्थिति विरुद्ध जान खोज्ने युवाले पैतृक सम्पत्तिबाट बंचित हुनु पर्ने भएकोले पनि विद्रोह गर्ने आँट सितिमिति कसैले जुटाउन सक्दैनन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

मुस्ताङमा घरका महिला छोरा र माहिली छोरीलाई गुम्बामा चढाउने प्रथा पनि रहेको छ । त्यसरी चढाइएका केटा र केटी दुवैले कहिल्यै बिहे गर्न पाउँदैनन् । चढाइएका पुरुष लामा र महिला झूमा कहलिन्छन् । यहाँको प्रसिद्ध मुक्तिनाथको मन्दिरमा पनि झूमाहरु रहेका बताइन्छ ।

यहाँ गाउँघरमा भएका झैझगडा लगायत अनेक प्रकारका मुद्दाहरुमा स्थानीय बासिन्दा हतपती प्रशासन वा न्यायिक - अर्धन्यायिक निकायहरु समक्ष पुग्दैनन् । गाउँका मुखियालाई दण्ड जरिवाना आदि गराउने समेत अधिकार प्राप्त हुन्छ । यहाँका मानिसलाई देशको राजाका बारेमा बरु त्यति धेरै थाहा नहोला तर मुस्ताङे राजालाई बिर्सिएर उनीहरुको जीवन चल्न सक्दैन भन्ने ठान्दछन् ।

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

स्वतन्त्रता र मौलिक हकको समेत सोही प्रकृतिमा हनन भइरहेको धारणा पनि प्रतिपक्षका कार्यकर्ताहरु व्यक्त गर्दछन् ।

# मध्य पश्चिमाञ्चल



४.१ दाङ्ग
४.२ प्युठान
४.३ रोल्पा
४.४ सल्यान
४.५ रुकुम
४.६ बाँके
४.७ बर्दिया
४.८ सुर्खेत
४.९ जाजरकोट
४.१० दैलेख
४.११ डोल्पा
४.१२ जुम्ला
४.१३ कालिकोट
४.१४ मुगु
४.१५ हुम्ला



# ४. मध्य पश्चिमाञ्चल

## राप्ती

## ४.१ दाङ्ग

| | | |
|---|---|---|
| जनसंख्या | : | ३५२२३७ |
| साक्षरता | : | ४०.६ प्रतिशत |
| महिला साक्षरता | : | २४.९ प्रतिशत |
| क्षेत्रफल | : | २९५५ वर्ग कि. मी. |

राप्ती अञ्चलमा अवस्थित दाङ जिल्ला भित्री मधेशमा पर्दछ । राजनैतिक प्रतिशोध, साम्प्रदायिक भगडा, कुटपीट, चोरी, ज्यान मुद्दा आदि यहाँका मानव अधिकार हनन् सम्बन्धी प्रमुख घटनाहरु हुन् ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

२०४९ साउन ९ गते धर्ना गा.वि.स. वडा नं. २ बस्ने करम कामीलाई सोही गा.वि.स. बस्ने गणेश नेपाली र कृष्ण नेपालीले आक्रमण गर्न गएका थिए । करम कामीले आफ्नो सुरक्षाका लागि प्रत्याक्रमण गर्न खोज्दा गणेश नेपाली र कृष्ण नेपालीको मृत्यु भएको थियो ।

२०४९ जेठ १९ मानपुर गा.वि.स. वडा नं. ४ मा भएको स्थानीय निर्वाचनको भोलिपल्ट राजनैतिक कार्यकर्ता गिरिराज के.सी., टोपेन्द्र के.सी. लगायत केही व्यक्तिले वडा नं. ४ का निर्वाचित उम्मेदवार गणेश चौधरी लगायत केही व्यक्तिहरुमाथि सांघातिक हमला गरेका थिए । जसबाट उत्तेजित हुन पुगेको भीडले गिरिराज र टोपेन्द्र के.सी.को घरमा तोडफोड गर्नुका साथै बम पड्काएको बताइन्छ ।

#### १.२ जेल

दाङ जिल्लामा तुलसीपुर र घोराहीमा गरी दुईवटा जेल छन् ।

तुलसीपुर जेल - दाङ तुलसीपुर नगरपालिकामा पर्ने यस जेलको निर्माण २०३५ सालमा भएको थियो । यहाँ पुरुष ६७ जना र महिला ५ गरी ७२ जना बन्दीहरु छन् । जेलभित्र पत्र-पत्रिका लगायत खेलकूद सामग्रीहरुको पनि त्यति विघ्न सुविधा नभएको प्रतीत हुन्छ । यस जेलमा दीर्घ रोगी, सरुवा रोगी तथा मगज बिग्रेका बन्दीहरुलाई पनि अन्य बन्दीसँगै राख्ने गरेको देखियो । त्यस्तै यस जेलमा सीपमूलक उद्योगको अभावमा बन्दीहरु त्यसै हात बाँधेर बस्नु परेको छ ।

घोराही जेल- दाङ घोराही जेलको निर्माण २०२१ सालमा भएको थियो । हाल भवन पुरानो र जीर्ण भएकोले वर्षात्मा पानी चुहिन्छ । त्यस्तै उपयुक्त शौचालय ठीक अवस्थामा नभएको यस जेलमा अध्ययन, खेलकूद र सीपमूलक उद्योगको व्यवस्था छैन । क्षमता भन्दा बढी ४० जना बन्दी रहेको यस जेलमा रोगी तथा मगज बिग्रेका कैदीहरुलाई पनि सामूहिक रुपमा राखिएको देखियो ।

#### १.३ गिरफ्तारी / यातना

प्रहरीले साबिति गराउन वा प्रमाण खोज्न दिने यातना बाहेक उल्लेखनिय यातनाका घटना सार्वजनिक जानकारीमा पाइएन ।

### २. मौलिक अधिकार

#### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

२०४९ कात्तिक १० गते तुलसीपुरमा हिन्दूहरुका नाममा विभिन्न नाराहरु लगाएर निस्केको साम्प्रदायिक जुलुसले मुसलमानहरुको मस्जिद् र मदरसा तोडफोड गरेको थियो। उक्त जुलुसमाथि स्थानीय प्रशासनले लाठी चार्ज र अश्रु ग्यॉस प्रयोग गर्नुका साथै १५ जनालाई गिरफ्तार गरी राज्य विरुद्धको मुद्दा दायर गरेको पाइयो।

उपरोक्त बाहेक यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् आम रुपमा यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

२०४९ जेठ १७ गते उरहरि गा.वि.स. बस्ने प्रदीप देवकोटालाई स्थानीय निर्वाचनको प्रचार प्रसार कार्य सकी राति १ बजे घर फर्केको बेला पारी सोही गा.वि.स. वडा ५ र ७ को बीच कलाहामा सोही गा.वि.स. वडा नं. ९ बस्ने रमेश भण्डारीले गोली प्रहार गरे। गोली प्रहारबाट प्रदीप देवकोटाको खुट्टामा चोट लागेको थियो।

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन। स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि स्थानिय र आम निर्वाचनका क्रममा हुल र शक्तिको प्रदर्शन गर्ने, आतंक मच्चाउने प्रयास राजनीतिक दलहरुले गरे बाहेक यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा विभिन्न अपराधमा गरी ८३९ वटा मुद्दाहरु दर्ता भएका थिए।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

देशको संविधानले महिलाहरुलाई समान अधिकार प्रदान गरे तापनि व्यवहारमा यस जिल्लामा बहुविवाह, महिला किनबेच, बलात्कार आदि समस्याहरु यथावत देखिए। २०४९ वैशाख २४ गते लक्ष्मीपुर गा.वि.स. वडा नं. २ खोलाबगर बस्ने वर्ष २१ का खिमानन्द शर्माले सौदियार गा.वि.स. वडा नं. १ कटुवा खोलाको किनार पथरैया बगरमा कक्षा ३ मा अध्ययनरत वर्ष ८ की शीलाकुमारी शर्मालाई एक्लै देखी जबरजस्ती करणी गरे। र बालिका बेहोश भएपछि मरी भन्ठानेर त्यहीं छोडी उनी भागे। तर सम्बन्धित निकायमा उजुरी गरे पश्चात् अपराधीलाई गिरफ्तार गरी कारवाही गरिएको थियो।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन । तर बादी प्रथा भने यहाँ व्यापक रुपमा कायम रहेको छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■



# ४. मध्य पश्चिमाञ्चल

## राप्ती

## ४.२ प्यूठान

| | | |
|---|---|---|
| जनसंख्या | : | १७३८९३ |
| साक्षरता | : | ३४.८ प्रतिशत |
| महिला साक्षरता | : | १७.४ प्रतिशत |
| क्षेत्रफल | : | १३०९ वर्ग कि. मी. |

राप्ती अञ्चलमा अवस्थित प्युठान जिल्लाका मानव अधिकार हननका प्रमुख घटनाहरु निर्दोष व्यक्तिहरुमाथिको झुठा मुद्दा, हत्या, गर्भपतन आदि हुन् ।

### १. बाँच्न पाउने अधिकार

संविधानले सबै नेपालीलाई सम्मानपूर्वक बाँच्न पाउने अधिकार प्रदान गरेता पनि यस जिल्लामा व्याप्त अशिक्षा, अज्ञानता गरिबी आदिले गर्दा जनताले आफ्ना अधिकारहरु व्यवहारमा उतार्न सकेका छैनन् ।

#### १.१ हत्या / गोली

*२०४७ चैत १ गते पूजा गा.वि.स. वडा ६ बस्ने राजनैतिक कार्यकर्ता शमसेरबहादुर के.सी.को स्थानीय गौमुखी मा.वि.को हिसाब किताबको विषयमा उत्पन्न विवादमा मृत्यु भयो । सो मृत्यु पश्चात राजनैतिक प्रतिशोध साधनका लागि पूजा, नारीकोट, ओखरकोट, बादीकोट, तोखाड, तुसारा गा.वि.स.का १०० जना व्यक्तिहरुमाथि ज्यान मुद्दाको अभियोग लगाइयो । ती मध्ये हाल ९ जना थुनामा रहेका छन् ।*

*२०४७ चैत १२ गते उदयपुरकोट गा.वि.स. वडा नं. २ भेडावारी बस्ने जैसरा सार्कीको घरमा अचानक आगो लागेर मृत्यु भएपछि आफ्नै परिवारको षडयन्त्रमा निज जैसरा सार्कीकी छोरी लली सार्की र ज्वाई चन्द्र बहादुर सार्की माथि सासुको हत्या गरेको अभियोग लाग्यो । उक्त अभियोग लागेर प्रहरीले हिरासतमा लिएका यी दम्पतीहरुलाई अमानवीय र जघन्य यातना दियो । जेलभित्र उचित स्वास्थ्य सेवाको अभावमा चन्द्रबहादुर सार्की र लली सार्कीका साथमा रहेका चार नावालक छोरा छोरीमध्ये एउटा छोराको जेलमा नै मृत्यु भयो ।*

गर्भपतन र बालहत्या यस जिल्लाको अर्को समस्या हो । लुङ गा.वि.स. वडा नं. बस्ने रामबहादुर के.सी.ले पत्नी जीवा के.सी.ले २०४९ असोज १३ गते दिदीको घर तुसारा गा.वि.स. कुता भन्ने ठाउँमा गएर जन्माएको बच्चाको खोजीनीति गर्दा निज जीवा के.सी.ले उक्त बच्चा पति रामबहादुर के.सी.बाट नजन्मी परपुरुष हुकुमबहादुर जि.सी.बाट जन्मेको हो, त्यसैले आफूले बच्चालाई मारेको तथ्य स्वीकारेकी थिइन् ।

#### १.२ जेल

यस जिल्लाको जेल भवनको स्थिति साह्रै गए गुज्रेको छ । जेलको निर्माण धेरै पहिले भएकोले मर्मत सम्भार गर्नु पर्ने अति आवश्यक देखिन्छ । १५ जनाको क्षमता भएको यस जेलमा हाल ४२ जनाभन्दा बढी बन्दीहरु छन् । ५ महिला, ३ नावालक र ३४ पुरुष बन्दी रहेको यस जेलमा सुविधाका नाममा अति आवश्यक भौतिक वस्तु बाहेक केही छैन । जेलमा महिला र पुरुषको एउटै शौचालय तथा विभिन्न रोगीका बन्दीहरुलाई सगोलमा राखिएको छ । हाल मात्र जेलमा रहेका बन्दीहरुले जेलको भौतिक स्थिति, पेशागत सीप, औषधोपचार, महङ्गी, स्वास्थ्य तथा शारीरिक तन्दुरुस्ती, लत्ताकपडा आदि सुविधाको माग राखी एक पत्र सम्बन्धित निकायमा बुझाएका छन् । जिल्ला विकास समितिको सहयोगमा यस जेलभित्र बन्दी ज्ञान उपार्जन पुस्तकालय स्थापना गरिएको छ ।

#### १.३ गिरफ्तारी / यातना

*०४७ फागुन २५ गते नेपाली कांग्रेसका तत्कालीन महामन्त्री गिरीजाप्रसाद कोइराला यस जिल्लामा प्युठान रातामाटा आउनु हुँदा उहाँमाथि अप्रिय घटना भएको थियो, जसको फलस्वरुप यहाँका फरक विचार राख्ने कैयौं राजनैतिक कार्यकर्ताहरुलाई थुनामा राखी मुद्दा चलाइएको थियो ।*

*२०४८ मा सम्पन्न आम निर्वाचनको क्रममा दाङवाङ गा.वि.स.मा भएको निर्वाचनमा निर्वाचन बहिष्कार गर्नुका साथै मतपेटिका फ्याकेको अभियोगमा यस गा.वि.स.का ९ जना राजनैतिक कार्यकर्ताहरुलाई ४ महिनासम्म थुनामा राखी मुद्दा चलाइएको थियो ।*

*२०४८ साउनमा आफ्नो माग राखी शान्तिपूर्ण रुपमा सञ्चालनएको कर्मचारी आन्दोलनलाई यस जिल्लामा सघाए बापत २०४८ साउन २ गते कर्णध्वज के.सी. लगायत केही राजनैतिक कार्यकर्ताहरुलाई सार्वजनिक अपराधको मुद्दालाई जेल चलान गरिएको थियो ।*

*२०४८ भदौमा जेलमा बन्दीहरुले नियमानुसार सुविधा पाउनु पर्छ भनी शान्तिपूर्ण आवाज उठाएकोले कर्णध्वज के.सी., चोपलाल आचार्य, गुरुप्रसाद आचार्य, तारा बेलवासे, महेश थापालाई भदौ ९ देखि १७ गतेसम्म प्रहरीले हिरासतमा लिई कुटपीट गरेको थियो ।*

२०४९ कार्तिक २५ गते भिङ्ग्री गा.वि.स. वडा नं. ३ र ४ बीचको जलुकी भन्ने ठाउँमा प्रहरी हवल्दार नेत्रबहादुर अधिकारीको मृत्यु भयो । मृत्युपछि पूर्वाग्रहको भावनाले बिना कसूर ३८ जना व्यक्तिहरुलाई हिरासतमा लिइयो । हत्याको आरोपमा लिएकाहरुलाई प्रहरी नायब उपरीक्षक विजयराज भट्टले क्रुर, अमानवीय, बीभत्स यातना र पीडा दिएर साबिती गराउन खोजे ।

## २. मौलिक अधिकार

यस जिल्लामा संविधान प्रदत्त मौलिक अधिकारलाई उपेक्षा गरेको पाइन्छ । संविधानले संगठन गर्ने अधिकार दिए तापनि यहाँ फरक मत राख्ने संगठन प्रति सम्बद्ध शिक्षक, कर्मचारीहरु यसका शिकार भएका छन् । त्यस्तै गत वर्षको स्थानीय निर्वाचनमा पनि आ-आफ्नो क्षेत्रमा पकड र बाहुल्य भएका राजनैतिक दलहरुले कतै कतै अनियमित, धाँधली गरेर जनतालाई मतदान गर्ने अधिकारबाट बञ्चित गराएको पाइन्छ ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ एकाध ठाउँमा बाहेक उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

२०४९ साउन १ गतेदेखि हालसम्म यहाँको जिल्ला अदालतमा दुनियावादी फौजदारी ३५, सरकारवादी फौजदारी २६ र देवानी तर्फ २७ गरी जम्मा ८८ मुद्दाहरु दर्ता भएका छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु बिवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यहाँ बालबालिकालाई प्रदान गरेको शिक्षालाई दृष्टिगत गर्ने हो भने उनीहरुले पाउनु पर्ने शैक्षिक अधिकार हनन् भएको प्रतीत हुन्छ । विद्यार्थीलाई प्रतिस्पर्धात्मक स्वस्थ, सन्तुलित र व्यावहारिक शिक्षा दिनु पर्नेमा यहाँका कुनै कुनै विद्यालयमा विद्यार्थीलाई राजनैतिक रुपमा प्रशिक्षण दिएको पाइन्छ ।



# ४. मध्य पश्चिमाञ्चल

## राप्ती

## ४.३ रोल्पा

| | | |
|---|---|---|
| जनसंख्या | : | १७९९०४ |
| साक्षरता | : | २९.८ प्रतिशत |
| महिला साक्षरता | : | १०.२ प्रतिशत |
| क्षेत्रफल | : | १८७९ वर्ग कि. मी. |

राप्ती अन्चलमा पर्ने रोल्पा जिल्ला देशका दुर्गम र विकट जिल्ला मध्येकै एक हो । भौगोलिक विकटता, अशिक्षा, अज्ञानता आदिले गर्दा यस जिल्लाका हरेक पक्षमा मानव अधिकारको हनन भएको छ । ७५ प्रतिशतभन्दा बढी निरक्षर रहेका यस जिल्लामा प्रायजसो मगर जाति बसोबास गर्दछन् ।

### १. बाँच्न पाउने अधिकार

देशको संविधानले सबै नेपालीलाई सम्मानपूर्वक बाँच्न पाउने अधिकारको ग्यारेण्टी गरेता पनि यस जिल्लामा आ-आफ्नो क्षेत्रमा पकड भएका विभिन्न राजनैतिक शक्तिहरुले भय र सन्त्रासको वातावरण पैदा गरेको प्रतीत हुन्छ ।

#### १.१ हत्या / गोली

*२०४८ वैशाख ६ गते लिवाङ गा.वि.स. वडा नं. ६ मुख्याटोल बस्ने गजाधर आचार्यको घर बनाउने सोही गा.वि.स. वडा नं. ८ तिम्रिकोट बस्ने मजदूरहरु वर्ष १८ का आइतबहादुर पुन, वर्ष ४५ का जोखीलाल विष्ट, वर्ष ३३ का रवि रावल, वर्ष २० का बेगम बहादुर विष्ट र वर्ष २२ का नरसिंह विष्ट घर मालिककहाँ रक्सी र साग खाएर घर फर्कदा बाटामै बेहोश भए । त्यसै दिन स्थानीय धासी खोला नजिकै उनीहरुको मृत्यु भयो । मृतकका परिवारहरुलाई स्थानीय प्रशासनले आर्थिक सहयोग स्वरुप रु. १ हजार दिएको थियो भने दोषीमाथि अझापि कुनै कारवाही भएको देखिदैन ।*

२०४९ असार २३ गते रासी गा.वि.स. अन्तर्गत मालेपारे गाउँ बस्ने हरिकला खत्रीले दहीमा मेटासिड (विषालु पदार्थ) मिसाई आफूले खानुका साथै छोरालाई खुवाएकी थिइन् । तर हरिकला खत्री बचिन् भने छोरा नन्दराम खत्रीको मृत्यु भएको थियो ।

०४९ असोज १० गते जिनाबाङ गा.वि.स. वडा नं. १ पुनागाउँ बस्ने ५५ वर्षीय बालाराम घर्तीको हत्या भयो । तर मनिन्छ राजनीतिक कारणले आफै लडेर मरेको भन्ने सर्जमिन गराइयो र लाश जलाइयो । मृतकका छोरा बिर्ख बहादुर घर्तीले यसबारे जिल्ला प्रहरी र प्रशासन कार्यालयहरुमा अजुरी पनि गरेका छन् । तथापी अहिलेसम्म कुनै कारवाही भएको थाहा पाइएन ।

२०४९ कात्तिक २४ गते लोकबहादुर पुनले रासी गा.वि.स. वडा नं. २ चौधारा बस्ने हरिप्रसाद रोकालाई गाई बाँध्ने किलाले हानी हत्या गरेका थिए ।

#### १.२ जेल

यस जिल्लाको जेलको स्थिति साह्रै दयनीय रहेको छ । जेलभित्र बन्दीहरुलाई हिंडडुल गर्न, राजनैतिक कार्यकर्ताहरुसंग भेटघाट गर्न अनुमति दिईदैन । साथै, शौचालय, स्वास्थ्योपचार आदिको यहाँ कुनै उचित बन्दोबस्त भएको देखिदैन ।

५२ जना पुरुष र ४ जना महिला गरी ५६ जना बन्दीहरु रहेको यस जेलमा विभिन्न सरुवा र दीर्घ रोगको प्रकोप ब्याप्त छ । बिरामी बन्दीहरुको उचित उपचार हुन

नसकेको कारण २०४९ कात्तिक २६ गते राति १२ बजेतिर सोही जेलको दीर्घरोगी बन्दी हार्जन गा.वि.स.की समन रोकाले आफ्नै कपडाको पासो लगाई आत्महत्या गरेकी थिइन्। निज समन रोकाको आत्महत्यापछि जेलका बन्दीहरु दलबहादुर खत्री, ताराबहादुर पुन, हर्कमान रोका, जय बहादुर बाठालाई २०४९ मंसीर ३ गते प्रहरी हिरासतमा राखी राजनैतिक प्रतिशोध र रिसइवी साध्ने मनस्थितिले प्रहरी निरिक्षक राधाकृष्ण विडारीले निर्मम, जघन्य तथा अमानवीय यातनाहरु दिएका थिए । साथै निज प्रहरी निरिक्षकले आत्महत्याकै कारवाहीको सिलसिलामा यी बन्दीहरुलाई जेल सार्ने निहुँमा सार्ने धम्की पनि दिएका थिए ।

१.३ गिरफ्तारी / यातना

यस जिल्लामा राजनैतिक प्रतिशोधका कारणले राजनैतिक कार्यकर्ता, कर्मचारी तथा शिक्षकहरु गिरफ्तारी र यातनाका शिकार भएका थिए ।

नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरु पर्सुराम पन्थी, राजेश सुवेदी लगायत दर्जनौं शिक्षकहरुलाई डाका मुद्दा तथा सार्वजनिक अपराधका मुद्दाहरु लगाइएको छ। गोविन्द शर्मा लगायत जिल्लाका ३० औं शिक्षकहरुलाई मानसिक आतंक पैदा गराइएको छ ।

२०४९ वैशाख १३ गते स्थानीय निर्वाचनको क्रममा प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला यस जिल्लाको सदरमुकाम लिवाङमा आयोजित आमसभालाई सम्बोधन गर्न आउनु भएको थियो । त्यसबेला फरक मतका राजनैतिक कार्यकर्ताहरुले उक्त आमसभा सम्पन्न हुन नदिने उद्देश्यले विभिन्न गा.वि.स.का राजनैतिक कार्यकर्ता देवबहादुर विष्ट, टोपलाल शर्मा लगायत अनेकौं कार्यकर्तालाई घाइते तुल्याएका थिए ।

२०४९ मंसीर १ गते लिवाङमा सरकारको विरोधमा राजनैतिक नेता चित्रबहादुर के.सी.द्वारा सम्बोधित एउटा र्काक्रम सम्पन्न भएको थियो। त्यही कार्यक्रमको सिलसिलामा स्थानीय प्रशासनले लिवाङ गा.वि.स. वडा नं. ६ ठकुरी टोल बस्ने राजकुमार कक्षपति, भेषबहादुर के.सी., अर्घाखाँची घर भई खोंग्नी गा.वि.स. वडा नं. ४ बस्ने जितेन्द्र सिंह ठकुरी, दाङ देउखुरी घर भई चाइलादी गा.वि.स. बस्ने नारायण योगी, रुकुम जिल्ला महत गा.वि.स. गुनाम बस्ने गणेश बुढा, जुवा गाउँ गा.वि.स. वडा नं. १ बाकुल बस्ने टंक बहादुर पुन र राजनैतिक नेता चित्रबहादुर के.सी.लाई गिरफ्तार गरी केहीलाई निर्मम यातना दिईएको थियो। साथै सो क्षेत्रमा भाषण, जुलुस तथा आमसभा माथि निषेधाज्ञा जारी गरिएको थियो । यस जिल्लामा राजनैतिक दलहरुले सत्ता र शक्तिको आडमा यस्ता राजनैतिक प्रतिशोध लिएका यथेष्ट घटनाहरु घटेका छन्

२०४९ भदौ १८ गते डविडाँडा गा.वि.स. वडा नं. ४ जसपुर बस्ने कविरामी डांगीले सम्बन्धित कर्मचारीलाई भनसुन गरी ८४ रोपनी सार्वजनिक जग्गा आफ्नो नाममा दर्ता गरेका थिए। यसो गरिनु हुन्न भन्दै विरोध गर्ने टेक बहादुर विश्वकर्मा र लालबहादुर मल्ललाई प्रहरीले गिरफ्तार गऱ्यो । प्रहरी उपरिक्षक मदनबहादुर खड्का र प्रहरी निरिक्षक राधाकृष्ण विडारीले उनीहरुलाई निर्मम यातना तथा पीडा दिएका थिए र पीडितहरुले सत्तापक्षीय राजनैतिक दलमा प्रवेश गरेको कागज गरेका थिए ।

२०४९ असोज १८ गते जिनवाङ गा.वि.स. वडा नं. ७ घोरानेटी बस्ने रुद्रकुमार वलीले मादक पदार्थ सेवन गरी व्यक्तिगत रिसइवीका कारण आफ्नै नातेदार तालावाङ गा.वि.स. वडा नं. २ खर्सु डाँडा बस्ने नरबहादुर खड्कालाई खुकुरी प्रहार गरी मरणासन्न अवस्थामा पुऱ्याएका थिए। वली माथि हालसम्म कुनै कारवाही भएको देखिंदैन ।

२०४९ कार्तिक ११ गते कोटगाउँ गा.वि.स. बस्ने गौरी प्रसाद वलीलाई सोही गा.वि.स. बस्ने गमाले भन्ने रामप्रसाद कामीले छुराद्वारा दुवै आँखामा प्रहार गरी ज्यान सार्ने उद्योग गरेका थिए ।

२०४९ मंसीर २४ गते लिवाङ गा.वि.स. वडा नं. ६ स्थित देउपुज्य मेलामा महिलाहरुमाथि भएको अभद्र व्यवहार को विरोधको विषयलाई लिएर प्रहरी र अन्य व्यक्तिद्वारा तुकमान मेहरा, गंगाबहादुर वि.क. र हरिप्रसाद के.सी. माथि सांघातिक आक्रमण भयो। सो आक्रमणका कारण तुकमान मेहराको खुट्टा भाँचिएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / मेला र संगठित हुने अधिकार

यस जिल्लामा जसको जहाँ जहाँ पकड र प्रभाव छ, त्यहाँ अरुले उपरोक्त अधिकार खोज्नु निरर्थक हुने देखिन्छ। आमसभा गर्न नदिइने त्यस क्षेत्रमा निषेधाज्ञा जारी गरेबाट स्पष्ट हुन्छ ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा राजनैतिक स्वतन्त्रताको हनन भएको पाइन्छ । राजनैतिक नेतासंग कुरा गरेको भरमा स्थानीय प्रशासनद्वारा जिल्ला शिक्षा कार्यालयका खरिदार शंकर गौतमलाई २४ घण्टाभित्र जिल्ला छोड्ने आदेश दिईएको थियो ।

स्थानीय निर्वाचन त्यस जिल्लामा एक पक्षीय रुपमा भएको थियो । राडसी, राडकोट, जेलवाड, जैमाकसला, गुञ्चाल, राडसी, हरिबाड गा.वि.स.हरुमा अन्य राजनैतिक पार्टीका उम्मेदवारहरुलाई मनोनयन पत्र दर्ता गर्न नदिएर एक पक्षीय रुपमा विजयी उम्मेदवार घोषणा गरिएको थियो। त्यस्तै कुरेली डुविडाँडा अमि गा.वि.स.मा आफ्नो पक्षले चुनाव नजित्ने छाँट देखे पछि शान्तिपूर्ण र सुचारु रुपले चलेको निर्वाचन रद्द गरी पुन: अर्कोचोटि निर्वाचन गराइएको थियो ।

२०४९ जेठ ३१ गते डुबिडाँडा गा.बि.स. धवलावाडमा स्थानीय निर्वाचनको प्रचार प्रसारका क्रममा राजनैतिक पार्टीले आयोजना गरेको सांस्कृतिक कार्यक्रममा स्थानीय डम्बर रावत, लालबहादुर रावत, पञ्चकापुर घर्ती लगायत दर्जनौं व्यक्तिले ढुंगामुढा हानी कार्यक्रम बिथोल्ने प्रयास गरेका थिए ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस वर्ष यहाँको जिल्ला अदालतमा विभिन्न अपराधमा गरी ४१ वटा मुद्दाहरु दायर भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लाको डुविडाँडा गा.वि.स. वडा नं. ४ जसपुरमा २०३२ सालदेखि स्थायी बसोबास गर्ने पूर्णबहादुर बिश्वकर्मालाई फरक मत राखेकै कारण स्थानीय प्रशासनले नागरिकता दिनबाट बञ्चित गराएको देखिन्छ । हाल उनी भूमिहीन सुकुम्वासीका रुपमा यस जिल्लामा बसेका छन् ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

२०४९ कात्तिक २७ गते घोडा गाउँ गा.वि.स. वडा नं.९ थुम्पाकी बस्ने मनबहादुर भण्डारीले नजिकको नाता पर्नेलाई जबरजस्ती बलात्कार गरेका थिए भनिन्छ ।

कुर्चावाड गा.वि.स. वडा नं. ८ रिचा बस्ने दलजीत घर्तीले २ वर्ष पहिले विवाह गरेकी पत्नी नौमती घर्तीलाई मानसिक यातना र पीडा दिएर घरमा टिक्न नसक्ने अवस्थामा पुऱ्याएको र पीडित महिलाबाट रु ३ हजार लिएर २०४९ कार्तिक २५ गते सम्बन्ध विच्छेद गरेका थिए ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी प्रथा व्यापक रहेको छ । यहाँ रु १ हजारदेखि ५० हजारसम्म जारी लिने र दिने प्रचलन छ । २०४९ कार्तिक २६ गते मसिना गा.वि.स. वडा नं. ५ मैचले बस्ने सर्वजीत विश्वकर्माले पहिलो पत्नी बनीसरा विश्वकर्मा हुँदा हुँदै सोही गा.बि.स. वडा नं. ४ बस्ने पवित्रा विश्वकर्मासंग बहुविवाह गरेका थिए । सर्वजीत विश्वकर्माले बहुविवाह गरे बापत रु. दुई हजार जारी दण्ड तिरेका थिए ।

यस जिल्लाका दुर्गम क्षेत्रहरु, गाम, उवा, सिउरी, सेरम गा.वि.स.हरुमा अद्यापि अपरण विवाह गर्ने प्रचलन कायम रहेको देखिन्छ । २०४९ जेठ २८ गते गाम गा.बि.स वडा नं. ५ गजुगा बस्ने टेक बहादुर बुढाले सोही गा.बि.स. वडा नं. ७ डाँडागाउँ बस्ने आखिरी घर्तीलाई राति सुतिरहेको बेला अपहरण गरी विवाह गरेका थिए ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा खास गरी राजनैतिक कार्यकर्ता र जिल्ला प्रशासकहरुले मानव अधिकार हनन गरेको देखिन्छ । सत्ता पक्षलाई खुशी पार्न फरक विचार राख्ने व्यक्तिहरुलाई राजनैतिक प्रतिशोधका कारण स्थानीय प्रशासनले विनाकारण पक्राउ गर्ने, यातना र पीडा दिने गरेको पाइन्छ । यसरी स्थानीय प्रशासकहरुबाट नै संविधान प्रदत्त राजनैतिक स्वतन्त्रता, मौलिक अधिकार आदि जनताका नैसर्गिक अधिकारहरु कुण्ठित गरेको बोध हुन्छ ।



# ४. मध्य पश्चिमाञ्चल

## राप्ती

# ४.४ सल्यान

| | | |
|---|---|---|
| जनसंख्या | : | १८२१४५ |
| साक्षरता | : | ३२.८ प्रतिशत |
| महिला साक्षरता | : | १३.१ प्रतिशत |
| क्षेत्रफल | : | १४६२ वर्ग कि. मी. |

राप्ती अञ्चलमा पर्ने सल्यान जिल्लामा जनचेतना अशिक्षा आदिले गर्दा मात्र मानव अधिकार हनन् भएको होइन। देशमा राजनैतिक परिवर्तन पछि दलगत रुपमा बढ्दो भीडन्त, ठूलो दलले साना दलको अर्थात फरक मत राख्ने विचारको अस्तित्व अस्वीकार गर्न अपनाएको विभिन्न हतकण्डा आदि पनि यस जिल्लाका मानव अधिकार हनन्का मूल कारणहरु हुन्।

## १. बाँच्न पाउने अधिकार

संविधानले सबै नेपालीलाई समान रुपले बाँच्ने, संगठन गर्ने, शान्तिपूर्ण विरोध तथा आफ्ना विचारहरु स्वतन्त्रतापूर्वक अभिव्यक्ति गर्ने अधिकारहरु प्रदान गरेता पनि व्यवहारमा यस जिल्लामा शक्तिशाली राजनैतिक दलले बाहेक अन्य दलले उपभोग गरेको प्राय: विरलै पाइन्छ।

### १.१ हत्या / गोली

२०४९ असोज २७ गते कुपिण्डे गा.वि.स. वडा नं ३ कउछे बस्ने ढकने कामीको आफू दुई वर्ष अगाडि लिएको ऋण चुक्ता गर्न हिँडेको बेला अचानक रहस्यमय रुपमा मृत्यु भएको थियो। उक्त मृतकको लाश पोष्टमार्टम नगरी दाहसंस्कार गरिएको थियो।

### १.२ जेल

यहाँको जेलको स्थिति नाजुकै रहेको छ। मुख्य गरी यहाँका बन्दीहरुलाई समय समयमा औषधोपचार नभएको कारण केहीको स्वास्थ्य दयनीय रहेको देखिन्छ। साथै जेलमा पत्र पत्रिका, मनोरञ्जन र खेलकुदका सामाग्रीहरु आदिको सुविधा देखिदैन। हाल यहाँ जबरजस्ती करणी, लागु पदार्थ, ज्यान मुद्दा आदि गरी २७ जना बन्दीहरु छन्।

### १.३ गिरफ्तारी / यातना

फरक मत राख्नेहरुलाई यहाँ विभिन्न झूठा आरोप र कसुर देखाई गिरफ्तारी र यातना दिएको देखिन्छ।

भाइ टिकाको छैठौं दिन भलचौर गा.वि.स.को फासला चौरमा लागेको मेलामा दार्माकोट गा.वि.स. वडा नं ६ कौछे बस्ने जङ्गबहादुर खत्रीलाई केही गुण्डाहरुले मरणासन्न गरी कुटेका थिए। त्यस्तै गरी दार्माकोट गा.वि.स.मा लागेको मेलामा जङ्गबहादुर खत्री लगायत भाल्चौर गा.वि.स. बस्ने विरबबहादुर के.सी.लाई केही आतङ्ककारीहरुले छुरा प्रहार गरी घाइते बनाइ निज जङ्गबहादुर खत्रीका सानो बुवा मङ्ग खत्रीको घरमा आगो लगाइदिएका थिए।

गत वर्ष यस जिल्लामा सम्पन्न एस.एल.सी. परीक्षामा आफ्ना छोरा छोरीलाई पास गराउनका लागि

जिल्लामा उच्च ओहदामा रहेका पदासीन व्यक्तिहरुले नै परीक्षा अनियमित र अव्यवस्थित गरेको देखिन्छ । परीक्षामा भएको अनियमितता र अव्यवस्थाको विरोध गर्दा स्थानीय प्रशासनले प्रेमप्रसाद शर्मा र सबीन श्रेष्ठलाई गिरफ्तार गर्नुका साथै यातना दिएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

विभिन्न माग राखी देशव्यापी रुपमा सञ्चालन भएको कर्मचारी आन्दोलनबाट यो जिल्ला पनि प्रभावित भएको थियो । त्यसैले कर्मचारी आन्दोलनमा संलग्न भएको बहानामा पूर्वाग्रह राखी कोष तथा लेखा नियन्त्रकको कार्यालयका लेखापाल हरिशरण आचार्यलाई बर्खास्त गरिएको थियो भने सहायक कृषि अधिकृत माधव बाग्लेको जागीरको म्याद थपिएन र दामोदर अर्याल अमरराज शर्मा र रमेश खत्रीलाई घटुवा गर्नुका साथै अन्य कर्मचारीहरुलाई यस जिल्लाको अपायक एवं दुर्गम क्षेत्रमा सरुवा गरिएको थियो ।

त्यस्तै पूर्वाग्रहकै कारण नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षक डम्बर बली र बसन्त शर्मालाई निस्काशन गरिएको थियो भने यस संगठनसंग सम्बद्ध जिल्लाका ५० जना भन्दा बढी शिक्षकहरुलाई घटुवा, ग्रेड रोक्का आदि गरी अपायक ठाउँमा सरुवा गरिएको थियो ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

विशेष गरेर यस जिल्लामा स्थानीय निर्वाचनमा व्यापक धाँधली आतंक र अनियमितता भएको देखिन्छ । स्थानीय निर्वाचनमा यहाँ धेरै मान्छेहरु पक्ष विपक्ष बीच भीडन्तमा घाइते भएका थिए ।

कतिपय गा.वि.स.मा फरक विचारधारा राख्ने व्यक्तिहरुलाई नामाङ्कन पत्र भर्न दिइएन भने बामे लगायत केही गा.वि.स.मा फरक मत राख्नेहरु निर्विरोध निर्वाचित भएकोमा उक्त निर्वाचनलाई रद्द गरी पुनः निर्वाचन गराइएको थियो ।

हार्माकोट, स्विकोट, खलङ्गा, देवस्थल, मूलखोला, त्रिवेणी, माझकोंडा, कोटमौला आदि गा.वि.स.मा फरक मत राख्नेहरुलाई भरसक उमेद्वारी मनोनयन पत्र भर्नै दिइएन । केही गा.वि.स.मा दिइए तापनि षडयन्त्रपूर्वक हराइएको देखिन्छ । डाँडा गाउँ, धारमारे, बडागाउँ, कफेरी गा.वि.स.मा निर्वाचन कार्य आतंक र अनियमित वातावरणमा भएको थियो ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस बर्ष यहाँको जिल्ला अदालतमा गत २०४९ साउन १ गते देखि हालसम्म २०४ मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या पनि देखा परेको छ । कृषि व्यवसायमा निर्भर रहेको जिल्लाको जनसंख्याको करीब २० प्रतिशत संख्या (किसानहरु) भूमिहीन छन् । जिल्लामा कृषि उत्पादित बस्तुबाट साह्रै कम व्यक्तिहरु मात्र आत्मनिर्भर भएका छन् । यसरी यस जिल्लामा उत्पादित खाद्यान्नको अभावमा बाँच्नका लागि यहाँका मान्छेहरु सुकुम्बासीका रुपमा बाँके, बर्दियातर्फ झरेको देखिन्छ । साथै जिल्लामा राजनैतिक शक्तिको आडमा स्थानीय देवस्थल गा.वि.स.को जङ्गल फाँडेर २५ घर जति सुकुम्बासीका रुपमा बसेका छन् ।

## ४. महिला अधिकार

देशको संविधानले महिलाहरुलाई समान अधिकार प्रत्याभूति गरे तापनि व्यवहारमा यस जिल्लामा महिलामाथि व्यापक शोषण र अन्याय भएको प्रतीत हुन्छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

२०४९ भदौ ८ गते सिवाङ्ग गा.वि.स. वडा नं. ३ खोली गाउँ बस्ने वर्ष ५ की काली नाम गरेकी बालिका खेलिरहेको बखत ललाई फकाई सोही गा.वि.स. बस्ने वर्ष १६ का छविलाल वलीले बलात्कार गरेका थिए ।

*२०४८ वैशाख २६ गते सेजवाल टाकुरा गा.वि.स. बस्ने अर्जुन के.सी.ले कजेरी गा.वि.स. वडा नं. ६ बस्ने १३ वर्षीय आफ्नी भाञ्जी कमला विष्टलाई चेलीबेटी कक्षामा पढ्न गइरहेको बेला एकान्तमा पारी बलात्कार गर्नुका साथै ४ आनाको सुनको मुन्द्री र ५ लालको फुली समेत लुटेर लगेका थिए ।*

२०४९ आसोज महिनामा मूलखोला गा.वि.स. वडा नं. ८ राउते बस्ने थुमान रावतले घरमा आफ्नो छोरा नभएको मौका पारी बुहारी काली रावतलाई बलात्कार गरेको थियो ।

मूलखोला गा.वि.स. वडा नं. ५ का धनवीर विष्टले सोही गाउँकी तिर्थी सुनार्नीलाई विवाह गर्छु भनी करणी गरेपछि गर्भपतन गराएका थिए ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, बहु-विवाह र बदिनी प्रथा व्यापक छ । यहाँ रु. ५ सय देखि करिव २० हजारसम्म जारी तिर्ने वा लिने चलन छ । बहु-विवाहको पीडाले पनि यहाँ महिलाहरुलाई आक्रान्त पारेको छ । यहाँ स्वास्नी मन नपरेमा, दाइजो कम ल्याएमा, रोगी भएमा, छोरा नपाएमा बह-विबाह गरेको देखिन्छ । साथै यहाँका ठूला-ठालु, धनी-मानीहरुमा बहु-विवाह गर्नु भनेको इज्जत, प्रतिष्ठा बढ्नु हो भन्ने ठान्दछन् । देउकी प्रथा यस जिल्लामा देखिएको छैन । कतिपय असहाय महिलाहरु घर परिवारको व्यवहारबाट विरक्तिएर माता बनेर घरबार छोड्ने र योगीले झैं भीक्षा मागेर मन्दिरमा, कुटीमा बस्ने गरेको पाइन्छ । बदिनी समस्या यस जिल्लाको अति जटिल समस्या हो । यहाँका धुप्रै बदिनीहरु जीवन गुजाराका लागि गाउँ गाउँमा माग्दै, नाचगान गर्दै हिड्ने गर्दछन् । ठूलाबडा, पैसावालहरुका वासनाका साधन बनेका यी बदिनीहरुले खुला रुपमा मुख्य व्यवसाय देह व्यापार लाई अपनाएको पाइन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

व्याप्त गरीवी र पछौटेपनले ग्रस्त यहाँका बासिन्दाहरुमाथि व्यापक शोषण र अन्याय भएको देखिन्छ । देशमा दास प्रथा लगभग पौने शताव्दी अघि उन्मुलन भए तापनि "हली प्रथा" र "गोठालो प्रथा" दास प्रथाकै पुनरावृत्ति हुन् ।

यसै गरी गरीवीले गर्दा सानै उमेरदेखि यहाका बालबालिकाहरु पाठशाला जानुका साटो गाई भैंसी, भेडा बाखाका गोठालो लाग्दछन् । बाबु आमाले लिएको ऋण चुक्ता गर्न नसकेको कारण हली र गोठालो भएका यी बालबालिकाहरुमाथि ठूला-बडा धनी-मानीहरुले "बालदास" को व्यवहार गरेको अनुभूत हुन्छ । ■



# ४. मध्य पश्चिमाञ्चल

## राप्ती

# ४.५ रुकुम

| | | |
|---|---|---|
| जनसंख्या | : | १५५०१७ |
| साक्षरता | : | ३०.७ प्रतिशत |
| महिला साक्षरता | : | ११.० प्रतिशत |
| क्षेत्रफल | : | २८७७ वर्ग कि. मी. |

देशको दुर्गम जिल्लाहरुमा पर्ने रुकुम जिल्ला युगौंदेखि अन्धविश्वास, रुढीवादी परम्परामा हुर्कदै आएको छ । राजनैतिक प्रतिशोध, बाल विवाह, बहुविवाह, जारी प्रथा, सामन्ती प्रथा यस जिल्लाका प्रमुख समस्याहरु हुन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

बाँफिकोट गा.बि.स. वडा नं. ९ बस्ने पूर्णबहादुर के.सी.ले आफ्नी श्रीमतिले हिके कामीसंग लसपस गरेको शंकामा निज पूर्ण बहादुर के.सी., सोही गाउँ निवासी जनक कामी र महावीर खत्रीसंग मिलेर २०४९ भदौ ९ गते हिके कामीलाई विष सेवन गराई मारियो र उनको लाश सोही गा.बि.स. वडा नं. ८ बस्ने बालजीत खत्रीको खेतमा फ्याँकियो । बालजीत खत्रीसंग हिके कामीको जग्गाको साँध र बालीनालीको विषयमा झगडा भएको थियो । हिके कामीको उक्त लाश २०४९ भदौ ११ गते बालजीत खत्रीको खेतमा फेला पर्‍यो । क्षत विक्षत अवस्थामा फेला परेको लाश पोष्टमार्टमको आधारमा विष सेवनद्वारा मरेको प्रमाणित भयो । तर प्रतिशोधको भावनाले गर्दा उक्त घटनाको सिलसिलामा सोही गा.बि.स. बस्ने बालजीत खत्री, धर्मजीत खत्री, दीपेन्द्र देवकोटा, नन्दराम खत्री, खम्बे कामीलाई हिरासतमा राखी बर्बर यातना दिइएको थियो । तर उक्त घटनामा संलग्न भएकाहरु सत्तापक्षीय राजनीतिमा प्रवेश गरेको हुनाले निज पूर्णबहादुर के.सी., जनक कामी र महावीर खत्रीलाई गिरफ्तार गरे तापनि राजनैतिक दवाबले गर्दा रिहाइ गरियो ।

हुकाम गा.बि.स. का बीरबहादुर बुढाले देशमा आएको राजनैतिक परिवर्तनपछि पनि गाउँलेहरुले शिकार खेले बापत तिर्ने रकम, गाउँको मालपोत, गाउँमा चाडपर्व सम्पन्न हुँदा तिर्नुपर्ने अन्य तिरो आदि लिन नछोडेकोले स्थानीयबासीहरुले सो सामन्ती प्रथाको विरुद्ध २०४९ मंसीर ७ गते जुलुस प्रदर्शन गरे । स्थानीय प्रहरी चौकीमा विरोध पत्र दिएर फर्केको जुलुसमा निज बीरबहादुर बुढाको घरबाट एक्कासी गोली चल्यो । तर स्थानीय प्रशासनले गोली प्रहार गर्ने बीरबहादुर बुढाको साटो जिल्ला विकास समितिका सदस्य ओमप्रसाद घर्ती लगायत २७ जनालाई सार्वजनिक अपराधको मुद्दा चलाउँदैछ । बिगत पञ्चायत कालमा हुकाम गाउँका एकछत्र प्रधानपञ्च भएका निज बीरबहादुर बुढा हाल सत्ता पक्षीय राजनीतिमा प्रवेश गरेका हुनाले चोखा भएका हुन् भन्ने स्थानीयवासी र कर्मचारीको भनाइ रहेको छ ।

### १.२ जेल

यहाँको जेलको स्थिति दयनीय रहेकोछ । भौतिक रुपले पनि त्यति मजबूत नभएको यहाँको जेलमा बर्षात्मा पानी चुहिने, पत्र-पत्रिकाहरु उपलब्ध नहुने, स्वास्थ्य परीक्षण नहुने, पानीको असुविधा, उपयुक्त शौचालय, कुनै व्यवसायको व्यवस्था नहुनु आदि सबैखाले कमी कमजोरीहरु देखिन्छन् । २४ जना बन्दीहरु रहेका यस जेलमा महिला बन्दी एकजना

पनि छैनन् । बन्दीहरुलाई २४ सै घण्टा नेल लगाउने गरेको यस जेलमा ७९ वर्षीय एउटा आँखामा मोती विन्दु भएको र अर्को आँखामा फुले परेका वृद्धलाई डाँका मुद्दामा बन्दीका रुपमा राखेको पाइयो ।

यस जेलमा एक जनाको सट्टा अर्को व्यक्तिलाई थुनेको गुनासो पनि पाइयो । मोरवाङ गा वि स का दल प्रसाद पुन साथी कर्तव्य ज्यानको मुद्दा ०४६ सालमा चलेको थियो । उनको त्यहि वर्ष देहान्त भयो तर निजको ठाँउमा निजका भाई वल प्रसाद पुन ०४६ देखि नै झ्यालखानमा परेका छन । त्यस्तै सोही गा. वि. स. का हरी प्रसाद पुनले प्रसाद पुनको सट्टा कर्तव्य ज्यानको सजाय काटीरहेका छन । यस कुराको न्याय गरिदिने आश्वासन पाएर पनि कुनै कारवाही नभएको गुनासो कैदीहरुले गरे ।

१.३ गिरफ्तारी / यातना

यस जिल्लाका जिल्ला शिक्षा निरीक्षक महम्मद हसरत अली २०४८ पुस २४ गते खोला गाउँ गा.वि.स. वडा नं. ५ सर्कना भन्ने ठाउँमा सल्लाधारी जंगलमा आइरहेको बेला मुखमा कालो फेटा बाँधेका ३ जना मानिसले निर्घातसंग कुटपीट गरे । सो घटनामा कसले कुट्यो भन्ने किटान नहुँदा प्रतिशोधको भावनाले नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध शिक्षकहरु शशीराम कार्की, लोकेन्द्र विष्ट, उदयराम बुडा, धर्मप्रसाद रेग्मी, जीतबहादुर शाह माथि कारवाही गरियो । विना कसूर पक्राउ परेमा पनि आफू माथि बीभत्स यातना र पीडा दिने हुनाले केही शिक्षकहरु फरार भएका थिए । यसरी एकातिर जिल्ला शिक्षा निरीक्षकको मानव अधिकार हनन भयो भने अर्कोतर्फ त्यो भन्दा बढी मानव अधिकार हनन त निर्दोष अभियुक्तहरुको भएको छ, जो विना कसूर यातनाको शिकार भएका छन् ।

प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला २०४९ वैशाख १३ गते यस जिल्लाको सदरमुकाम मुसिकोट आउनु हुँदा उहाँको विरोधमा यस जिल्लाका सांसदको नेतृत्वमा विरोध जुलुस तथा कालो झण्डा प्रदर्शन गरिएको थियो । संविधान प्रदत्त यस विरोध कार्यक्रमबाट सत्तापक्ष र स्थानीय प्रशासन आहत भएर २७ जनालाई गिरफ्तार गऱ्यो, जस अनुरुप राजनैतिक कार्यकर्ता श्यामबहादुर बोहरा र पूर्ण घर्तीलाई सार्वजनिक अपराधको पूर्जी थमाइयो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा २१४ वटा देवानी, १२९ दुनियावादी फौजदारी, प्रहरीबाट आएका २६ गरी ३६९ भन्दा बढी मुद्दाहरु दर्ता भएका छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

यस जिल्लामा पनि अन्य जिल्लामा झैं महिलामाथि शोषण, अन्याय, भेदभाव भएको देखिन्छ । जारी प्रथा र बहुविवाह व्यापक रहेको यस जिल्लामा बाल विवाह पनि भएको पाइन्छ । जुम्ली खलङ्गा गा.वि.स. वडा नं. ३ कोलटाकुरा बस्ने दुर्गालाल उपाध्यायले आफ्नो १३ वर्षका छोरा झनकुप्रसाद शर्माको विवाह पेउवा गा.बि.स. बस्ने १३ वर्षीया बालिकासंग २०४९ वैशाख २३ गते गराइदिए ।

सिम्ली गा.वि.स. वडा नं. ३ जैजने बस्ने वृजलाल ओलीका कक्षा २ मा अध्ययनरत ७ वर्षीय छोराको विवाह सोही गा.वि.स. वडा नं. ७ बस्ने केशु खत्रीकी ७ वर्षीया कन्यासंग २०४८ फागुनमा भएको थियो ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ४. मध्य पश्चिमाञ्चल

## भेरी

## ४.६ बाँके

| | | |
|---|---|---|
| जनसंख्या | : | २८४४३० |
| साक्षरता | : | ३४.६ प्रतिशत |
| महिला साक्षरता | : | २१.९ प्रतिशत |
| क्षेत्रफल | : | २३३७ वर्ग कि. मी. |

भेरी अञ्चलका ५ जिल्लाहरुमध्ये बाँके जिल्ला सवभन्दा सुगम जिल्लाको रुपमा रहेको छ । यस जिल्लामा मानव अधिकार उल्लंघन सम्बन्धी घटनाहरु छिटफुट भए तापनि मुख्य गरी हिन्दू मुसलमान बीचको साम्प्रदायिक दंगा डरलाग्दो रुपमा देखा पर्न थालेको छ ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

२०४९ कात्तिक १० गते दाङमा मुसलमान समुदायमाथि भएको दुर्व्यवहारको विरोध गर्दै कात्तिक १२ गते नेपालगञ्जमा निस्केको मुसलमानको जुलुसमा भनाभन र बाद-विवाद हुँदा महम्मद हारुङ, सफिद अहमद सिद्धिकी, लियाकत अलि सिद्धिकी, मौलाना अमीर उल्लाहलाई पक्राउ गरी पछि रिहा गरियो । यसैको विरोधमा कात्तिक १८ गते हिन्दूहरुले निकालेको उत्तेजित जुलुसलाई तितरवितर पार्न स्थानीय प्रशासनले लाठीचार्ज र अश्रुग्यास प्रयोग गरेको थियो, जसबाट १८ जना व्यक्तिहरु घाइते भएका थिए ।

#### १.२ जेल

बाँके जिल्लाको सदरमुकाम नेपालगञ्जमा रहेको जेलमा १७१ जना बन्दीहरु छन् । जसमध्ये १५६ जना पुरुष, ११ जना महिला र ४ आमासंगै रहेका बच्चाहरु छन् । जेलको स्थिति त्यतिविध्न खराब छैन । तर सन्तोषजनक पनि छैन । सबै प्रकारका बन्दीहरुलाई एकै ठाँउमा राखिएको छ । मूल चौकीदार र नाइकेबाट बन्दीहरुमाथि दमन भएको पाइन्छ । यहाँ भित्र एउटा प्राथमिक विद्यालयको व्यवस्था गरिएको छ भने खेलकूदको लागि पनि केही अनुकूल स्थिति रहेको पाइयो । राजनैतिक परिवर्तनपछि जेल कर्मचारीको व्यवहार र सुविधाहरु सकारात्मक रहेको पाइयो ।

#### १.३ गिरफ्तारी / यातना

*२०४८ साउन २८ गते कञ्चनपुर गा.वि.स. वडा नं. ७ खोरिया गाउँ बस्ने इन्द्रबहादुर खत्रीको घरमा तास जुवा खेलेको र स्थानीयबासी तेजबहादुर डांगीले जुवा हारेपछि आफ्नो रु. १५ सय चोरेको आरोप लगाई इन्द्रबहादुर खत्रीलाई प्रहरीद्वारा गिरफ्तार गराई यातना दिईएको थियो ।*

*२०४८ पुस ७ गते नेपालगञ्ज औद्योगिक क्षेत्रमा रहेको गजानन्द टेक्सटायलका मजदूरहरुले आफ्ना केही माग राखेका र सोको जनाउ जिल्ला प्रशासनमा दिंदा उल्टै जिल्ला प्रशासनबाट मजदूर प्रतिनिधिहरु राम थापा, कृष्ण श्रेष्ठ, अनिलकुमार शर्मा, अयुम अन्सारी, मुदारक अलि , सकिल अहमत, सरिता गुरुङ, रुपा थापा, मायाराधा कुर्मी लागायत १३ जनालाई सार्वजनिक अपराध अन्तर्गत पक्राउ गरिएको थियो ।*

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

साम्प्रदायिक दंगा यस जिल्लामा विकराल रुपमा देखिन थालेको छ । गत २०४९ कात्तिक महिनामा घटेका घटनाले यसलाई पुष्टि गर्दछ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा बर्दिया जिल्लामा जस्तो त्यति व्यापक सुकुम्वासी समस्या नभए तापनि केही मात्रामा भने अवश्य देखा परेको छ । २०४९ साउन २७ गते यस जिल्लाको विनौना र बैजापुर गा.वि.स.का किसानहरुले लगाएको खेतीबालीमा वन विभागका कर्मचारीले वनका जनावर चराउन लाग्दा नदिएकोमा जंगल अतिक्रमण गरेको आरोपमा केही किसानका घरमा आगो लगाउनुका साथै घर भतकाइ दिएका थिए । *पहिलो पटक २०४७ जेठ २ गते र दोस्रो पटक २०४८ असार २८ गते गरी पटक पटक वन अतिक्रमण गरेको निहुँमा कम्दी गा.बि.स. वडा नं. १ का केही सुकुम्वासीहरु यज्ञराज गिरी, लालबहादुर वली, काले दमाई, कालु गिरी, टेकबहादुर हमाल, घनश्याम गिरी, देवराज हमाल र चन्द्रबहादुरमाथि इलाका वन कार्यालयले मुद्धा दायर गरेको थियो ।*

## ४. महिला अधिकार

यस जिल्लामा पनि जन चेतना, ज्ञान, शिक्षाको अभावमा संविधान प्रदत्त महिला अधिकारबाट यहाँका महिलाहरु बञ्चित रहेका छन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लामा महिला किनबेचको त्यति बिध्न समस्या नभए पनि बलात्कारको शिकार भने यहाँका महिलाहरु भएका छन् । २०४९ कात्तिक २ गते पर्वत जिल्लाका दम्पती दिलीप जोशी र कृष्णमाया जोशी आफ्नी ठूली आमालाई भेट्न बर्दिया जाने क्रममा खजुरा बजार नजिक किरणनाला भन्ने ठाँउमा पुगेपछि यमबहादुर गुरुङ, राजकुमार खत्रीले दिलीप जोशीलाई घाइते बनाएर श्रीमती कृष्णमायालाई सामूहिक बलात्कार गरे । यी मध्ये राजकुमार खत्री, वीरबहादुर खत्री र हरि कार्कीलाई प्रहरीले पक्राउ गरेको छ भने अन्य फरार छन् ।

### ४.२ जारी, बहु बिबाह, दैजकी, बादी प्रथा

यस जिल्लामा जारी प्रथा फाट्टफुट्ट देखिन्छ । बादी हरुको घना आवादी नेपालगञ्जमा र अन्यत्र पनि रहेको छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा कमैया र बँधुवा मजदूरहरु रहेको देखिन्छ । विनौना गा.वि. स.मा कमैया प्रथा अलि व्यापक रुपमा छ । बँधुवा मजदूर राख्ने प्रचलन पनि रहेको छ । यस क्षेत्रमा सामान्य मध्यम बर्गीय व्यक्तिहरुले पनि बँधुवा मजदूर राखेका भेटिन्छन् र उनीहरुले आफूले राखिआएका बँधुवा मजदूरहरुमाथि कुनै शोषण नगरेको विचार व्यक्त गरेका छन् ।

यस जिल्लाका कतिपय ठाउँमा बँधुवा मजदूरहरु राखिन्छ । उनीहरुको सपरिवार किनबेच हुन्छ ।

### ५.२ अन्य अमानवीय व्यवहार

## ४. मध्य पश्चिमाञ्चल



### भेरी

# ४.७ वर्दिया

जनसंख्या : २८९८४०
साक्षरता : २९.९ प्रतिशत
महिला साक्षरता : १७.२ प्रतिशत
क्षेत्रफल : २०२५ वर्ग कि. मी.

भेरी अञ्चलका ५ जिल्लाहरुमध्ये वर्दिया जिल्ला तराई भूभागमा परेर पनि हरेक क्षेत्रमा पिछडिएको र विकट छ । खास गरी यस जिल्लामा विकराल देखिएको सुकुम्वासी समस्याका अतिरिक्त हत्या, आत्महत्या, चौपाया चोरी, डकैती, बहु विवाह मारपीट आदि पनि त्यत्तिकै छ ।

## १. बाँच्न पाउने अधिकार

देशको संविधान र शासन प्रणालीको स्वरुप हेर्दा सबै सम्मानपूर्वक बाँच्ने अधिकार भए तापनि व्यवहारमा यसलाई अनुवाद गर्न निकै कठिनाइ परेको देखिन्छ ।

### १.१ हत्या / गोली

सुकुम्वासी समस्या समाधानका लागि गठित सर्वदलीय आयोगको सहमति अनुसार बबई नदीको किनार अवस्थित कनरामा बसेका सुकुम्वासीहरुले लगाएको बाली संरक्षण र गाईवस्तु चरणको विषयलाई लिएर वन कर्मचारीहरुले कुटपीट गरे जसबाट २०४९ पुस १ गते विहान ६ बजेतिर रुन्चे थारुको मृत्यु भयो भने अन्य घाइते भए ।

### १.२ जेल

यस जिल्लामा जेलका स्थिति त्यति सन्तोषजनक छैन । यहाँका बन्दीहरुको शिक्षा स्वास्थ्य लगायत कुनै पनि सुविधा र सहुलियतमा पनि ध्यान पुऱ्याएको देखिंदैन । यस जेलमा ४३ जनाको मुद्दा निर्णय भएको छ भने ४६ जनाको थुनामा रही कारवाही चलिरहेछ, जसमा १७ जना वन सम्बन्धी मुद्दामा परेका छन् । यस जेलमा ३ महिला सहित ८६ जना बन्दीहरु छन् ।

### १.३ गिरफ्तारी / यातना

स्थानीय निर्वाचनको क्रममा सानोश्री गा.वि.स.को निर्वाचन परिणाम आएपछि २०४९ जेठ १९ गते निस्केको विजय जुलुशमाथि अर्को पक्षबाट हानथाप हुँदा यस जिल्लाका सांसद खगराज शर्मामाथि हमला भएको थियो ।

स्थानीय निर्वाचनको प्रचार प्रसारको क्रममा स्थानीय ककौरामा निस्केको बाल न्याली माथि प्रहरी हस्तक्षेप हुँदा ३ जना महिला सहित ५ जना घाइते भएका थिए ।

शिवपुर गा.वि.स.मा रहेका सुकुम्वासीलाई २०४९ असार ६ गते हटाउन खोज्दा सर्वनाथ कुँवर लगायत केहीले मानव अधिकार हनन भयो भनेर प्रतिरोध गर्दा निज कुँवर समेत ६ जनालाई वन विनाश गरेको अभियोगमा गिरफ्तार गरियो ।

यस जिल्लामा राजनैतिक प्रतिशोधको भावनाले आफ्नो विचारसँग असहमत भएकाहरुमाथि वन मुद्दा र सार्वजनिक अपराधका मुद्दा चलाइएको छ । जसमा एकैजनालाई एकै दिन ६ वटा सार्वजनिक अपराधको मुद्दा चलाएको देखिन्छ ।

## २. मौलिक अधिकार

संविधानले मौलिक अधिकारको प्रत्याभूति गरे पनि व्यवहारमा लागु हुन सकेको छैन ।

फोटो: वर्ष पुस्तक



वन सुरक्षा कर्मीहरुद्धारा मारिएका कनराका रुन्चे थारु

फोटो: वर्ष पुस्तक



बर्दियाका कमैयाहरु

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको सामाजिक तथा आर्थिक बिसङ्गतिका कारणले आफ्ना उपरोक्त अधिकारहरूलाई जनताले उपभोग गर्न सकिरहेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा हालसम्म साम्प्रदायिक दुर्भावना देखा परेको छैन ।

### २.३ राजनैतिक स्वतन्त्रता/स्वतन्त्र र निष्पक्ष, चुनावको अधिकार

यस जिल्लामा अन्य जिल्लामा भैं संसदीय निर्वाचन या स्थानीय निर्वाचनमा अनियमित धाँधली भएका प्रमाणहरु प्रकाशमा आएका छैनन् ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

राजनैतिक बिचारधाराको मतभिन्नताले र स्थानीय प्रशासनको पूर्वाग्रहले उत्पन्न भएका मुद्दा मामिलाहरु निष्पक्ष र तटस्थताका साथ अदालतबाट फैसला भएको देखिन्छ ।

यस वर्ष विभिन्न प्रकारका ८२ मुद्दाहरु दायर भएकोमा ३५ वटाको फछ्र्यौट भैसकेको छ ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

देशमा दासत्व प्रथा आजभन्दा ८१ वर्ष पहिले अन्त्य भए पनि यस जिल्लामा दासत्व र कमैया प्रथा अद्यापि कायम छ । कमैया प्रथाबाट मुक्त हुन र जमिनमाथि आफ्नै स्वामित्व कायम गर्न जमिन्दारको हलो, जूवा फ्याकी यस जिल्लाको ४२ वटा फाटामध्ये कनराफाटामा विद्रोह गर्ने करीब १९ हजार संख्यामा रहेका सुकुम्बासीहरुमाथि गत कार्तिक २५ गते भएको अमानवीय दमन र हस्तक्षेपको घटना यहाँ स्मरणीय हुन आउँछ ।

यस जिल्लामा मुख्य गरी सुकुम्बासी समस्याले अस्थिरता नै ल्याएको छ । प्राय: गरेर २०४६ को जनआन्दोलन पछि यहाँका कमैयाहरुले दासत्वबाट मुक्त पाउन संगठित रुपमा बनजंगल फडानी गरी सुकुम्बासीका रुपमा बस्न थालेका हुन् । हाल यस जिल्लामा सुकुम्बासीका संख्या ६५ हजारभन्दा बढी पुगिसकेको छ । यस्तो अनियन्त्रित सुकुम्बासी हटाउन सम्बन्धित पक्षले २०४९ कार्तिक २५ गते बिहान करीब ८.३० बजे ठूलो कनरा वस्तीमा समय समयमा आग्रह, सूचना, डर, धम्की त्रास देखाए तापनि त्यसबाट खासै असर नपरेको देखी डोजर, शाही शिकार सुरक्षा गार्ड, प्रहरी र मादक पदार्थ सेवन गराएको हात्तीद्वारा बल प्रयोग नै गरेको थियो । जसबाट सुकुम्बासीहरु घाइते हुनाका साथै ठूलो मात्रामा उनीहरुको धनमालको क्षति भएको थियो । यसरी आफूमाथि भएको पाशविक निरङ्कुश दमनको बिरोधमा २०४९ कार्तिक २७ गते बर्दियाको सदरमुकाममा विरोध, नारा, जुलूश र २८ गतेदेखि जिल्ला प्रशासन कार्यालय अगाडि धर्ना दिने काम गरे । र यस समस्या समाधानका लागि २०४९ मंसीर २ गतेदेखि रिले अनशन प्रारम्भ भयो । यसै घटनामा सुकुम्बासीको पक्षबाट स्थानीय प्रशासनको उक्त बिरोध गरेकोले बर्दिया जिल्ला विकास समितिका सभापति दीपबहादुर रानामाथि स्थानीय प्रशासनले लाठी प्रहार गरेको थियो ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु बिबाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र बादी प्रथा फाट्टफुट्ट मात्र देखिएको छ । त्यस्तै बहु विबाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या कमैया प्रथाको रुपमा बिद्यमान छ ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा मौलिक अधिकार हनन भएको देखिन्छ । बेलुका गा.वि.स. वडा नं. ७ का प्रेम बहादुर मल्ललाई २ वटा छोराछोरी भएकी अर्काकी पत्नीसंग अनैतिक सम्बन्ध कायम गरिस् भनेर भूठो आरोप लगाएर रु एकहजार ठगेको प्रमाण भेटिन्छ । त्यस्तै कालिका गा.वि.स. बडा नं. ८ कण्ठपुर बस्ने आइते भन्ने व्यक्तिले वर्ष १२ को हिक्मत बहादुर बि.क.लाई भारतमा काम मिलाइ दिन्छु भनी फकाइ लगी ज्यान बेच्ने मास्ने गरेको घटनाहरु पनि देखिन थालेको छ । व्यापक दरीद्रताको कारण आवश्यक आहार नपुगेर जन्मेका छोरा छोरी जन्मजातै अपाङ्ग हुने गर्दछन् र केही बाबु आमाले यस्ता छोरा छोरीहरुलाई मागी खाने भाँडो बनाएर बाल अधिकार हनन पनि गरेको देखिन्छ । ■



# ४. मध्य पश्चिमाञ्चल

## भेरी

## ४.८ सुर्खेत

| | | |
|---|---|---|
| जनसंख्या | : | २२५२९६ |
| साक्षरता | : | ४२.८ प्रतिशत |
| महिला साक्षरता | : | २४.४ प्रतिशत |
| क्षेत्रफल | : | २४५१ वर्ग कि. मी. |

मध्य पश्चिमांचलमा रहेका तुलनात्मक रुपले सुगम जिल्लाहरु मध्ये सुर्खेत पनि एउटा हो। भेरी अंचलको यस जिल्लामा एउटा नगरपालिका पनि रहेको छ। तर यहाँ पनि सर्वसाधारण बीच मानव अधिकार उल्लंघनका घटनाहरु खुट्याउन सक्ने चेतना देखिदैन।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

यस वर्ष यस जिल्लामा १९९२ मा हत्या र गोलीका उल्लेखनीय घटना घटेनन्।

#### १.२ जेल

कूल २५ जना बन्दी अटाउने क्षमता रहेको सुर्खेत जेलमा आज पनि ३१ जना बन्दीहरु रहेका छन्। यहाँको जेलमा बन्दीहरुको लत्ता कपडाको बेहाल देखिन्छ।

सुर्खेत जेलमा रात परेपछि कोठामै कोपरामा दिसा पिसाब गर्नु पर्ने चलन रहेको छ। यहाँ बन्दीहरुले स्वास्थ्य उपचारको सुविधा पनि राम्रोसंग नपाएको देखिन्छ। पठन पाठन, खेलकूद, मनोरंजन आदिको व्यवस्था छैन। स्थानीय मानव अधिकार कार्यकर्ताहरु जेल भित्र सरसफाइ कायम नभएकोमा पनि चिन्तित देखिन्छन्।

#### १.३ गिरफ्तारी / यातना

सुर्खेत मैनतडा गा.वि.स. वडा नं. ४ बस्ने मनसरी बुढाको जाहेरीमा प्रहरीद्वारा ०४९ जेठ ३१ गते सोही ठाउँका धन बहादुर कामी र बर्दिया देउठाक्ला गा.वि.स. वडा नं. ५ का राम बहादुरलाई पक्राउ गरियो । २ लाख १७ हजार बराबरको बिगो चोरी गरेको अभियोगमा पक्राउ परेका धन बहादुर र राम बहादुरलाई जेठ ३२ गते मात्र पक्राउ पूर्जी दिइएको थियो। बर्दिया दुग्धा गा.वि.स.का बनवारी सार्कीलाई पनि सोही अभियोगमा असार ४ गते पक्राउ गरियो।

प्रहरीले उनीहरुलाई कूटपीट गरी साबिती बयान लिएको कुरा प्रमाणित भए पश्चात सुर्खेत जिल्ला अदालतबाट ०४९ फागुन १२ गते तीनै जनाले सफाई पाए।

०४९ असार ३२ गते अदालतको आदेश अनुसार प्रहरी हिरासतमा रहेका तीनै जनाको अवस्था बारे निरिक्षण हुँदा राम बहादुर र बनवारी लालको शरीरमा घाउ चोटहरु देखिएका थिए। उनीहरुबाट बरामद भएको भनी प्रहरीले

आफैले ल्याएका सामानहरु देखाएका थिए । वरामदी मुचुल्कामा पहिले ०४९ वैशाख २७ गते लेखी पछि सच्याई फागुन १२ गते बनाइएको तथ्यलाई पनि अदालतले फैसलाको आधार बनाएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

०४९ वैशाख १२ गते प्रधानमंत्री गिरीजाप्रसाद कोइराला बीरेन्द्रनगर नगरपालिका वडा नं. ३ तीनकुने स्थित रेडियो नेपालको मिडियम वेभ प्रशारण केन्द्रको उद्घाटन गर्न आउनु भएको थियो । उक्त अवसरमा नेपाल कम्युनिष्ट पार्टी (एमाले), संयुक्त जनमोर्चा नेपाल, कम्युनिष्ट पार्टी (मसाल) र नेपाल मजदूर किसान पार्टीले प्रधानमन्त्रीलाई विरोध स्वरुप कालो झण्डा देखाउँदै ज्ञापन पत्र समेत प्रदान गरेका थिए । तत्पश्चात जुलुस शान्तिपूर्ण ढंगले बीरेन्द्रनगर बजार तर्फ लागेको थियो । तर जुलुस रत्नराजमार्ग स्थित खोकै खोला पुल मन्दा पूर्वपट्टि पेट्रोल पम्प नजिक पुग्दा नपुग्दै प्रधानमन्त्रीको गाडी अन्य सुरक्षा अधिकृतका गाडीहरु सहित भीडको बीचबाटै अगाडि जान खोज्यो । त्यसैबीच कसैले कतैबाट ढुंगा प्रहार गर्‍यो, गाडीका केही सिसा फुट्यो तर कसैलाई चोटपटक लागेन । करिब २ बजे घटेको उक्त घटना पश्चात बीरेन्द्रनगरका तत्कालिन प्रहरी निरिक्षक दिनेश अमात्यको जाहेरीमा स्थानीय इगर ब्रीज वोर्डिङ स्कूलका प्रिन्सिपल हेम प्रकाश भूसाल, लक्ष्मी स्टेशनरी स्टोर्सका हरि प्रसाद श्रेष्ठ एवं जिल्ला प्रशासन कार्यालय सुर्खेतका नायब सुब्बा बालकृष्ण भण्डारीका नाममा सार्वजनिक अपराध र सजाय मुद्दा चलाइयो । ती मध्ये हरिप्रसाद र बालकृष्ण भण्डारीलाई आफ्नै पसल र कार्यालयबाटै वैशाख १४ गते विहान १० बजे नै पक्राउ गरियो । त्यस्तै हेम प्रकाश भूसाललाई वैशाख १७ गते उनकै विधालयबाट पक्राउ गरियो । तीनै जनालाई पक्राउ पूर्जी नदिइ डि.एस.पी. कार्यालयमा राखियो । ०४९ वैशाख १६ गते बालकृष्ण र हरी प्रसादका लागि हरी प्रसादकी पत्नी लक्ष्मी देवीले पुनरावेदन अदालत सुर्खेतमा बन्दी प्रत्यक्षीकरणको रिट दायर गरिन् । त्यसपछि अदालतले उनीहरुका सम्बन्धमा मागेको लिखित स्पष्टिकरणको जवाफमा जिल्ला कार्यालयले "सार्वजनिक अनुसन्धानको क्रममा पक्राउ गरेको" जानकारी दियो । उनीहरु तीनै जनालाई वैशाख १७ गते वैशाख १४ गतेको मितिमा पक्राउ गरिएको पूर्जी दिइएको थियो । हाल तीनै जनाको नाममा जिल्ला प्रशासन कार्यालयमा सार्वजनिक अपराध सम्बन्धी मुद्दा विचाराधिन रहेको छ । तर हेम प्रकाश ०४९ जेठ ३ गते र बालकृष्ण एवं हरिप्रसाद जेठ ४ गते तारेखमा रिहा भइ सकेका छन् । उपरोक्त मुद्दाका विषयमा नयाँ ढंगले प्रमाण बुझेर मात्र मुद्दा किनारा गर्ने कुरा वर्तमान प्रमुख जिल्ला अधिकारी डिल्लीराज जोशी बताउनु हुन्छ । वहाँ कानून बमोजिम २ वर्षभित्र मुद्दा किनारा लगाउने विचार व्यक्त गर्नु हुन्छ ।

मुद्दामा गाँसिएका कर्मचारी बालकृष्ण नेपाल निजामति कर्मचारी संगठनमा आवद्ध रहेका छन् भने हरिप्रसाद र हेम प्रकाश वाम राजनीतिमा संलग्न रहेका छन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद बिवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

"यहाँ कानूनी प्रकृया पूरा गरी गिरफ्तार गरिएको कमै पाइन्छ । अभियुक्त भाग्न उम्कन नपाओस् भन्ने कुरालाई नै महत्वपूर्ण ठानेर तत्काल पक्राउ गरी कानूनी प्रक्रिया पछि पूरा गर्ने गरिएको देखिन्छ" -स्थानीय मानवाधिकार कार्यकर्ताहरु

बताउँछन् । तर जिल्लाको न्यायिक स्थितिका बारेमा भने उनीहरु मध्ये धेरै जसोको सकारात्मक धारणा रहेको पाइन्छ। न्यायलयमा राजनीतिक वा अन्य दवाब पर्ने कुरालाई सम्बन्धित निकाय अस्वीकार गर्दछ ।

"अभियुक्तलाई कार्वाही गर्न वा नगर्न प्राय: सबै पक्षबाट दवाब आउँछ तर सत्तापक्षबाट अलि बढी दवाब आउने गर्दछ ।" - प्रहरी सूत्र बताउँदछ ।

"अधिकांश व्यक्तिलाई कानूनी प्रकृया पूरा गरेरै समातिन्छ, तर कहिलेकाही सामाजिक अपराध रोक्नलाई सम्बन्धित व्यक्तिलाई एक दुई पटक समाती संझाएर छोडिन्छ । कहिलेकाहीं एक दुई दिन हिरासतमा पनि राखिन्छ । त्यसरी नमानेमा कानूनी कारवाही गरिन्छ ।" - एकजना प्रहरी अधिकृत भन्दछन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा पंचायतकालमा कति चोटी सुकुम्बासीका नाममा जग्गा भएका मानिसहरुले पनि फाइदा उठाएका थिए। स्थानीय उत्तरगंगा गा.वि.स.को कोलडाँडालाई त्यसको प्रत्यक्ष उदाहरणका रुपमा लिन सकिन्छ । वीरेन्द्रनगर नगरपालिका वडा नं. ५ चिसापानी भूतेपोखरीमा अव्यवस्थित रुपमा रहेका सुकुम्बासीहरुलाई व्यवस्थित रुपमा राखिएको बताइन्छ । तर त्यहाँ रहेका छाप्राहरु टाउको लुकाउन मात्र काम लाग्ने किसिमका छन् । जिल्लाका विभिन्न भागमा ऐलानी जग्गा भोगचलन गरी आएका वास्तविक सुकुम्बासीहरुलाई लालपूर्जा प्रदान गर्न राप्ती अंचल बसोवास कार्यालयले पंचायत कालमै नापी गरेको थियो । तर सुकुम्बासीहरुले हालसम्म धनीपूर्जा पाएका छैनन् ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

सुर्खेतमा पनि जारी प्रथा र बहुविवाहको प्रचलन व्याप्त छ । जारीको लेनदेन गर्दा जारी बुझेको कागज नगराइ गहना र धनमाल बुझेको कागज गराइन्छ । यस जिल्लामा एक हजार देखि दस पन्ध्र हजारसम्म जारी लिनेदिने गरेको पाइन्छ। गत वर्ष वहु विवाहका केवल पाँच वटा मुद्दा अदालत पुगेको देखिन्छ तर अदालतको ढोकासम्म नपुग्ने बहुविवाहहरु यहाँ निकै मात्रामा हुने गर्दछन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

०४९ साउन ३० गते दिउँसो ४ बजेतिर वीरेन्द्रनगर बजार स्थित आर.बी. मेडिकल हलमा उपचारार्थ आएकी एस.ओ.एस. बालग्राम सुर्खेतकी लक्ष्मी के.सी.को त्यहीं मृत्यु भयो । महोत्तरी वदीया बन्चौरी गा.बि.स. वडा नं. ७ का आर.बी. अर्थात राश विहारी साहले लक्ष्मी के.सी.को गर्भपतन गराउन खोज्दा उक्त दुर्घटना भएको बताइन्छ । मृतक के.सी.को पोष्टमार्टम रिपोर्टमा "केही औषधि र जनेन्द्रीय एवं पाठेघरमा भएको हस्तक्षेपका कारण मृत्यु भएको" कुरा उल्लेख गरिएको छ । कानूनी रुपमा चिकित्सा सम्बन्धी अभ्यास गर्ने अधिकार नभएका आर.बी. हाल पूर्पक्षका लागि सुर्खेत जेलमा वन्दी जीवन बिताइ रहेका छन् ।



# ४. मध्य पश्चिमाञ्चल

## भेरी

# ४.९ जाजरकोट

| | | |
|---|---|---|
| जनसंख्या | : | ११४२६७ |
| साक्षरता | : | २४.४ प्रतिशत |
| महिला साक्षरता | : | ८.५ प्रतिशत |
| क्षेत्रफल | : | २२३० वर्ग कि. मी. |

भेरी अञ्चलको उत्तर-पूर्वी पहाडी जिल्ला जाजरकोट दुर्गम र विकट अवस्थितिका कारण राष्ट्रिय राजनीतिबाट पनि टाढा रहेको देखिन्छ । चेतनाको अभाव रहेको यस जिल्लामा मानव अधिकारको स्थिति सन्तोषजनक नभएको कुरामा प्रशासनका वरिष्ठ अधिकारीहरुको समेत स्वीकारोक्ति पाइन्छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

जिल्ला प्रशासन कार्यालय र जिल्ला प्रहरी कार्यालय जाजरकोटका अनुसार यस वर्ष उपरोक्त कार्यालयहरुमा कारवाहीका निम्ति जम्मा पाँच वटा ज्यान सम्बन्धी मुद्दाहरु दर्ता भएका थिए- २०४८ पुष १३ गते ज्यान, चैत्र २१ गते र २३ गते भवितव्य ज्यान ।

२०४९ वैशाख २९ गते आत्महत्या ज्यान र कात्तिक २६ गते ज्यान सम्बन्धी मुद्दा जिल्ला प्रहरी कार्यालय एवं जिल्ला प्रशानसमा दर्ता भएकोमा २०४८ वैशाख २१ मा परेको उजुरी मात्र अदालतमा मुद्दाका रुपमा पेश हुन सक्यो ।

### १.२ जेल

जाजरकोट जेलको दुरावस्था बारे स्थानीय प्रशासक, नेता आदि कसैको विमत पाइँदैन । उक्त जेलका दुईवटा साना र नाम मात्रका कोठाहरुमा कहिल्यै उज्यालो र स्वच्छ हावा छिर्न पाउँदैन । गोदाम घर जस्तो उक्त जेलमा बन्दीहरुलाई चौविसै घण्टा नेल हतकडी लगाइने गरिन्छ । जेलको चर्पी बाटोभन्दा पल्लो पट्टि रहेकोले राती बन्दीहरुलाई कोठा भित्रै दिसा पिसाब गर्न लगाइन्छ ।

सौतालाई मारेको अभियोगमा २०४० साल देखि बन्दी जीवन बिताई रहेकी माझकोट गा.बि.स.की खड्की शाही पूरै जिउ सुन्निएर गत भदौमा झण्डै मरेकी थिइन् । अल्सरकी दीर्घ रोगी शाहीको अवस्था देख्दा जेलको दुरावस्था स्पष्ट हुन्छ । जेल भित्र पुरै निस्सासिंदो वातावरण रहेको छ ।

### १.३ गिरफ्तारी / यातना

२०४९ असोज २ गते जिल्लाको खलंगा गा.बि.स. वडा नं. ३ बाट प्रहरीद्वारा भएको बिजय बिक्रम शाहको गिरफ्तारीलाई ज्यादती ठानिएको पाइयो । उक्त दिन राती ९ बजे बिजय बिक्रमलाई जिल्ला बिकास समितिका सदस्यकहाँ डेरा गरी बस्ने कान्छा बाजे भनिने हरि प्रसाद शर्माको कोठाबाट पक्राउ गरिएको थियो । एक्कासी पक्राउ परेका बिजय बिक्रमलाई कुनै पूर्जी दिइएको थिएन । उनलाई पक्राउ गरिनुको कुनै उचित कारण पनि दर्शाइएको थिएन । पक्राउ गर्दा बिजय बिक्रमलाई लछार-पछार पार्दै कुटपीट गरिएको थियो । चौलिपल्ट प्रहरी कार्यालयमा स्थानीय जनताको ठूलो

भीड जम्मा भए पश्चात उनलाई रिहा गरिएको थियो। पछि जनदवावका कारण तत्कालिन डी.एस.पी. नन्दराम श्रेष्ठ सहित प्रहरी निरिक्षक एवं अन्य प्रहरीहरुको पनि सरुवा भएको थियो।

यस जिल्लामा प्रहरी ज्यादती भइरहेको कुरामा धेरैको मतैक्य पाइन्छ। न्याय क्षेत्रसंग सम्बन्धित व्यक्तित्वहरु पनि उक्त कुरा अस्वीकार गर्नु हुन्न। एक जना प्रहरी अधिकृत बताउँछन्- "प्रहरीलाई पनि मानव अधिकार शिक्षाको आवश्यकता छ।"

२०४९ भदौ ११ गते जिल्ला विकास समिति सदस्य भरतबहादुर बटाला माथि प्रहरीले गरेको दुर्व्यवहारलाई पनि स्थानीय जनता प्रहरी ज्यादतीका रुपमा लिन्छन्। जरतीपुर गा.वि.स., कुडू निवासी भरत बहादुरसंग छिमेकी गोपाल बहादुर बटाला र औशे बटाला बीच घरायसी झगडा चलिरहेको थियो। त्यस दिन दुवै थरि अदालतको तारिख धाई रहेका थिए। दुवै पक्षबीच बाटैमा पुन झगडा भयो र भरत बहादुर जिल्ला प्रहरी निरिक्षककहाँ उजुर गर्न पुगे। तर जिल्ला प्रहरी निरिक्षकले दुवै पक्षमाथि कुटपिट गरि दुवै पक्षलाई अत्यन्त अपमानित तुल्याएर पठाई दिएका थिए।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

जिल्लामा जनचेतनाको अभावका कारण मौलिक अधिकारको पनि यथोचित प्रयोग हुन नसकेको कुरामा प्रशासनका मानिस, राजनेता आदि सबैको स्वीकारोक्ति पाइन्छ। राजनीतिक पार्टीहरुले आ-आपनो कुरा माथि पार्न मात्र मानव अधिकारको नारा दिने गरेको कुरा तठस्थ व्यक्तिहरु बताउँछन्। तर सत्ताभन्दा बाहिर रहेका पार्टीहरुको गुनासो छ - प्रशासन सत्ताधारी पार्टीबाट अत्यन्त प्रभावित छ। त्यसैले प्रशासनबाट बेला बेला मानव अधिकारको उल्लंघन हुने गर्दछ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन। स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा २०४८ फागुन देखि जिल्ला न्यायधिश छैनन्। तत्कालिन जिल्ला न्यायधिशको सरुवा भए देखि यता ध्रुवकुमार शाह निमित्त जिल्ला न्यायधिश हुनुहुन्छ। थुप्रै मुद्दाहरु किनारा लाग्न सकेका छैनन्।

अर्छनी गा.वि.स. वडा नं. ७, फलफूलेका अठ्ठाइस वर्षीय पृथ्वीबहादुर शाही हाल लागु पदार्थको कारोवार गरेको अभियोगमा यहाँको जेलमा दिन काटिरहेका छन्। तर उनको जस्तै अन्य कतिपय व्यक्तिको अभियोगको मामिलामा न्यायधिशकै अभावमा निर्क्योल हुन सकेको छैन।

"कठोर मनोवृत्ति भएका र पेशेवर अपराध प्रवृत्तिका व्यक्तिबाट सत्य कुरा प्रकट गर्न लगाउन प्रहरीद्वारा केही कदम उठाइनु आवश्यक नै पर्छ। किनभने हाम्रो अपराध छानबिन विधि नै प्रतिवादीको बयानबाट शुरु हुने खालको छ।" सुगम र निष्पक्ष न्याय दिने जिम्मा लिएर बसेका यहाँका एकजना न्यायकर्ताको यस्तो भनाई रहेको छ। यहाँको न्याय सम्पादन सम्बन्धी कार्यमा पनि राजनीतिक दवाव पर्ने गरेको कुरा केही राजनीतिक कार्यकर्ताहरु बताउँछन्।

■

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

पुन्मा गा.वि.स. वडा नं. ९ का पन्ध्र वर्षीय दिलबहादुर बुढा र भूर गा.वि.स. वडा नं. ९ की बाह्र वर्षीय रामकली वली २०४९ असार २९ गते बेपत्ता भए। त्यस पछि केटीको दाजु सर्जन वलीले दिलबहादुर माथि जिउ बेच्ने मास्ने अभियोगमा मुद्दा दायर गरे। केही दिन पश्चात केटा र केटी दुवै जना गाउँमा प्रकट भए । त्यस पछि सर्जन वलीले जवरजस्ती करणी मुद्दा दायर गरे। हाल बाल-विबाह सम्बन्धी मुद्दाको डरले केटा र केटी छुट्टिएका छन्। रामकली माइतमै बसिरहेकी छिन् र दिलबहादुर जिउ मास्ने बेच्ने अभियोगमा मुद्दा खेपिरहेका छन्।

जाजरकोटको जिल्ला प्रहरी कार्यालय र जिल्ला अस्पतालको अभिलेखमा २०४९ साउन २७ गते र भदौ ९ गते सेरा गा.वि.स. वडा नं. ९ धैया एवं डाँडा गाउँ गा.वि.स. वडा नं. ४ पाली कल्वतका क्रमशः २७ र ४८ वर्षीया महिलाहरु माथिको बलात्कार सम्बन्धी उजुरी पनि आएका थिए।

### ४.२ जारी, बहु विवाह, बेउकी, बादी प्रथा

यस जिल्लामा जारी प्रथा अद्यापी कायम रहेको तथ्य अदालतमा दर्ता हुन आउने बहु-विबाह सम्बन्धी मुद्दाहरुले पनि प्रष्ट पार्दछन्। यहाँ ल्याकत अनुसार एक दुई हजार देखि तीस चालीस हजारसम्म जारी लिने दिने गरिएको पाइन्छ । तर जारी रकमको लेनदेन सम्बन्धी प्रक्रिया गोप्य राख्ने गरिन्छ । त्यसै कारण जारी रकमका निम्ति तर्साउन बहु-विवाह सम्बन्धी मुद्दा दायर गर्ने गरिन्छ ।

*२०४८ असोज १३ गते जिल्ला अदालतमा बहु-विवाह सम्बन्धी एउटा मुद्दा दायर भयो । जस्मा "झाप्रा गा.वि.स. वडा नं. ८, औंला काटिया बस्ने मनबहादुर खत्रीकी श्रीमती "प्यूरी" दशारो गा.वि.स. वडा नं. ७ लेबा गाउँ बस्ने रत्ने अधिकारीसंग २०४८ को सुरुवाततिरै गएकी कुरा उल्लेख गरिएको थियो । २०४६ साल बैशाखमा मनबहादुर संग प्यूरीको बिबाह भएको उल्लेख गर्दै उक्त मुद्दा दायर गरि एको थियो । तर पछि अदातलमा मुद्दाको खण्डन आइपुग्यो। त्यसबाट अनुमान गर्न सकिन्छ कि जारी रकमको लेनदेन सम्बन्धी मुद्दा मिलेको हुनुपर्छ ।*

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व बिरुद्धको अधिकार

जिल्लाका नायक, वडा, जुँगा थापा चौर आदि गाउँहरुमा अझै पनि बाँधा प्रथाका केही अवशेषहरु पाइन्छन्।

### ५.२ अन्य अमानवीय व्यवहार

■



# ४. मध्य पश्चिमाञ्चल

## भेरी

# ४.१० दैलेख

| | | |
|---|---|---|
| जनसंख्या | : | १८७८२० |
| साक्षरता | : | ३१.४ प्रतिशत |
| महिला साक्षरता | : | १३.३ प्रतिशत |
| क्षेत्रफल | : | १५०२ वर्ग कि. मी. |

भेरी अञ्चलमा पर्ने दैलेख जिल्ला अधिराज्यका विकट जिल्लाहरुमा पर्दछ। राजनैतिक प्रतिशोधद्वारा उत्पन्न भै झगडा, बाल शोषण, बाल विवाह, जारी प्रथा, गुठी जग्गाको कारणले उब्जेका आर्थिक तथा सामाजिक समस्या आदि यस जिल्लाका मानव अधिकार हननका घटनाहरु हुन्।

## १. बाँच्न पाउने अधिकार

दैलेख विकट र दुर्गम जिल्ला भएकोले संविधानले प्रत्याभूति गरेको प्रत्येक नेपालीले सम्मानपूर्वक बाँच्न पाउने अधिकार व्यवहारमा अनुवाद हुन सकेको छैन।

### १.१ हत्या / गोली

*२०४८ साउन ९ गते कुसापानी गा.वि.स. स्थित नेपाल राष्ट्रिय प्रा.वि. घुम्नेखानीका शिक्षक टेकराज गिरी सुर्खेततर्फ आउँदा स्थानीय गाइवन्ना र डबलगैरा बीच पर्ने जङ्गलबाट हराएका थिए। ३३ दिनपछि उनको शरीरका अवशेष र साथमा रहेका सामानहरु फेला परेका थिए। टेकराज गिरीको रहस्यमय मृत्युको अभियोग सोही गा.वि.स. बस्ने भुवबहादुर लामामाथि लागेको थियो। तर स्थानीय राजनैतिक नेताका दबाब र चाहिंदो प्रमाणको अभावमा भुवबहादुर लामालाई तारेखमा राख्नु बाहेक अन्य कुनै कार वाही भएको देखिएन।*

२०४९ वैशाखमा जगन्नाथ गा.वि.स. वडा नं. ७ मा लागेको जात्रामा मादक पदार्थ सेवन गरी कुटपीट हुँदा स्थानीय व्यक्ति धने कामीको घटनास्थलमा नै मृत्यु भएको थियो। कुटपीटको अभियोग लागेका सोही क्षेत्र निवासी भरत थापा र गोपी थापा हालसम्म फरार रहेका छन्।

### १.२ जेल

दैलेख जिल्लाको जेल साह्रै दयनीय अवस्थामा रहेको छ। बजारभित्र साँगुरो ठाउँमा अवस्थित यहाँको जेलको भौतिक सुविधा प्राय: शून्य नै छ। जेलमा ५ वर्षकी एकजना बालिका सहित १६ जना बन्दीहरु छन्। जेलमा दीर्घ रोगीका अतिरिक्त ७० वर्षीया वृद्धा तथा आँखा नदेख्ने मोतीकला कुँवर लोग्नेलाई मारेको अभियोगमा बन्दी भएर जेलमा बसेकी छिन्।

### १.३ गिरफ्तारी / यातना

मुख्य गरी यस जिल्लामा राजनैतिक प्रतिशोधका कारणले गर्दा नागरिकहरु गिरफ्तारी र यातनाका शिकार हुनुपरेको छ।

२०४९ असार ५ गते नारायण गा.वि.स. वडा नं. ८ स्थित त्रिभुवन उच्च मा.वि.का प्रधानाध्यापक एवं नेपाल मानव अधिकार संगठन, दैलेखका अध्यक्ष खगेन्द्रबहादुर मल्ललाई बजारबाट घर गइरहेको बेला राजनैतिक प्रतिशोधको भावनाले केही गुण्डाहरुले कुटपीट गरेका थिए।

२०४९ कात्तिक २९ गते पिलाढी गा.वि.स. निवासी कपेन्द्र वि.सी., धीरेन्द्रकुमार वि.सी., मानबबहादुर वि.सी.ले जिल्ला प्रहरी कार्यालयमा राजनैतिक प्रतिशोधका कारण लालीकाँडामा मेला लागेको बेला केही व्यक्तिहरुले आफूमाथि कुटपीट गरेको बारे दिएको उजुरीका भरमा जिल्ला प्रहरी कार्यालयले लालीकाँडा गा.वि.स. वडा नं. ३ बस्ने पद्म बहादुर खड्कालाई निर्मम यातना दिएर सुरेश खड्का, कर्णबहादुर खड्का, विनोद कुमार वि.सी. विरुद्ध जबरजस्ती सही गर्न लगाएको दावी निज पद्मबहादुर खड्काले गरेका छन् ।

यस जिल्लामा जायज कुरामा स्थानीय नेताहरुलाई अनुरोध गर्दा पनि राष्ट्रसेवक कर्मचारीहरु उनीहरुका कोपभाजन र पूर्वाग्रहबाट मुक्त रहन सकेका छैनन् । श्री ५ को सरकारले सार्वजनिक तथा सरकारी कार्यालयमा धूम्रपान निषेध गरेको सबैलाई विदितै छ । तर यहाँको जिल्ला अस्पतालमा स्थानीय राजनैतिक नेता किशोर के.सी.ले चुरोट खाँदै डाक्टरको कोठामा पसेको बेला अस्पतालका डाक्टर शम्भुप्रसाद न्यौपानेले के.सी.लाई चुरोट खाएर अस्पतालको हाताभित्र नआइदिन अनुरोध गरेका थिए । सामान्य कर्मचारीले आफूलाई सिकाएको रिसमा के.सी.ले डाक्टरलाई जागिर खाइदिने धम्की दिएका थिए । जसको फलस्वरुप अस्पतालका डाक्टरमाथि यौन रोगले ग्रस्त प्रेमकुमारी थापामाथि बलात्कार गरेको आरोप लगाई विना पूर्जी गिरफ्तार गरी जबरजस्ती बलात्कार मुद्दा लगाइएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

दैलेख जिल्लामा बालविवाह, बहुविवाह र जारी प्रथाले गाउँ गाउँमा जरा गाडिसकेको छ । यहाँका ठूला ठालु, धनीमानीहरुलाई बहुविवाह सौखको विषय भएको छ । त्यस्तै कसैको श्रीमति ल्याएमा अघोषित रुपमा जारी दिएर मिलाउने चलन पनि छ । कसैकसैले यहाँ ६-७ वटी विवाह गरेका घटनाहरु पनि देखिएका छन् ।

उदाहरणका लागि बेलासपुर गा.वि.स. बस्ने शिक्षक अमृतप्रसाद रेग्मीले आफूले ट्युसन पढाउँदै गरेका छात्रालाई विवाह गरी घरमा ल्याएका थिए भने यसै झोंकमा उनकी श्रीमति पनि अर्कैसंग पोइल गएकी थिइन् । यसक्रममा निज शिक्षक अमृतप्रसाद रेग्मीले छैठौं पटक विवाह गरिसकेको बताइन्छ ।



*दैलेख डबल गौरामा मारिएका टेकराज गिरीको अवशेष र लत्ता कपडा*

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

बाल शोषण र गुठी जग्गाप्रति देखिएको एकाधिकार यस जिल्लाको मानव अधिकार उल्लंघनको अर्को घटना हो ।

विकट र अनुर्वर भूमिले गर्दा यस जिल्लामा जीवन धान्नका लागि बाल श्रमिक अधिक प्रयोग भएको देखिन्छ । यहाँका ४ देखि १२ वर्षसम्मका विद्यालय जानु पर्ने बाल-बालिकाहरु भरियाका रुपमा सामान बोकेर सुर्खेत र दैलेख गर्दछन् । त्यस्तै विकट बाटाका अधिकांश चिया पसल र घाँस दाउरा गर्नेहरुमा पनि बाल-बालिका नै देखिन्छन् ।

यस जिल्लामा अवस्थित धार्मिक मठ अन्तर्गत रहेका गुठीका अनगिन्ती जग्गा जमिनहरु एकलौटी रुपमा महन्तहरुले सञ्चालन गरेको पाइन्छ । हाल ती जग्गा जमिनका उत्पादकत्व वृद्धि गर्नका लागि जग्गाहरु रैकरमा परिणत गर्नु पर्ने नितान्त जरुरी देखिन्छ ।



# ४. मध्य पश्चिमाञ्चल

## कर्णाली

## ४.११ डोल्पा

| | | |
|---|---|---|
| जनसंख्या | : | २५०७५ |
| साक्षरता | : | २५.८ प्रतिशत |
| महिला साक्षरता | : | ९.४ प्रतिशत |
| क्षेत्रफल | : | ७८८९ वर्ग कि. मी. |

डोल्पा कर्णाली अञ्चलमा पर्ने डोल्पा नेपाल अधिराज्यको सबभन्दा ठूलो जिल्ला हो । जिल्लाको अधिकांश भाग विकट र दुर्गम रहेको यस जिल्लाको कृषि उत्पादनले मुस्किलले तीन महिना पनि खान पुगेको देखिंदैन । सञ्चार तथा अन्य सुविधाहरु नभएको यस जिल्लामा मानव अधिकार हननका घटनाहरु साह्रै कम मात्रामा जानकारीमा आउँदछन् र जति आएका छन् ती पनि नगण्य मात्रामा छन् ।

### १. बाँच्न पाउने अधिकार

देशमा हालै आएको राजनैतिक परिवर्तनको ज्ञान नभएका यहाँका जनतामा संविधान र संविधानले प्रत्याभूति गरेको सम्मानपूर्वक बाँच्न पाउने अधिकारको ज्ञान कतिलाई होला ? यो नै विचारणीय छ ।

#### १.१ हत्या / गोली

*देशमा राजनैतिक परिवर्तनपछि पञ्चायत कालभरि कटुवाले (जिम्दार) रहिआएका स्थानीय त्रिपुराकोट गा.वि.स. रस्सी गाउँका कटुवाले जिम्दार टीका बहादुर सिंहलाई हटाई जनताले लक्ष्मी बुढालाई कटुवाले बनाए । तर टीकाबहादुर सिंहका छोरा विजयबहादुर सिंहले लक्ष्मी बुढालाई कटुवाले मानेका थिएनन् । जसको फलस्वरुप एक आपसमा प्रतिशोध बढ्न गई धाराको विषयमा दुई पक्षबीच झगडा हुँदा विजयबहादुर नराम्रोसंग पिटिएका थिए र उपचार गराउँदा गराउँदै २०४८ दशैं तिहारबीच उनको मृत्यु भयो । विजयबहादुर सिंहको मृत्युपछि यस घटनालाई राजनीतिकरण गरियो । सो मुद्दालाई लिएर डोल्पा जिल्ला अदालतमा पहिलोपल्ट वादी र प्रतिवादी बीच बहस चलेको थियो। जुन वादी र प्रतिवादी बीचको बहस यस जिल्लामा ठूलो चर्चाको विषय बनेको थियो । किनभने डोल्पावासीहरुलाई पहिलोपल्ट प्रतिवादीले पनि वकिल राख्न पाउँछन् भन्ने कुराको ज्ञान भएको थियो ।*

२०४९ जेठ २९ गते तिञ्जे गा.वि.स. बस्ने सोताम डुक्पे गुरुङको हत्या भएको थियो । सो हत्याको सर्जमिन प्रतिकूल मौसमले गर्दा हाल (२०४९ फागुन) सम्म हुन नसकेको कुरा प्रहरी बताउँछन् ।

#### १.२ जेल

डोल्पा जेलको स्थिति अन्य जिल्लाको तुलनामा त्यति नाजुक देखिंदैन । यस जेलमा २ जना चोरी, २ जना ज्यान मुद्दा, १ जना राजस्व हिनामिना र १ जना बन्दी भगाएको अभियोगमा थुनिएको प्रहरी जवान समेत गरी ६ जना बन्दीहरु छन् ।

स्थानीय प्रशासन प्रहरी र राजनैतिक नेताहरुले बेला बेलामा जेल निरीक्षण गरे तापनि जेलको वस्तुस्थितिबारे जानकारी राख्नु पर्ने सम्बन्धित निकाय पुनरावेदन अदालतका न्यायाधीशले भने २०४७ सालपछि एक पटक पनि जेल निरीक्षण गरेको देखिंदैन ।

### १.३ गिरफ्तारी / यातना

भौगोलिक विकटता र शिक्षा, जनचेतनाको अभावले गर्दा स्थानीय राजनैतिक नेताहरुद्वारा नै स्थानीय प्रशासनलाई आफ्नो पक्षमा लिएको देखिन्छ । तसर्थ कर्मचारीहरुमा स्थानीय राजनैतिक नेताको सदैव भय र त्रास छाएको प्रतीत हुन्छ। उदाहरणार्थ २०४९ जेठ महिनामा स्थानीय राजनैतिक नेता अशोक हमालले मादक पदार्थ सेवन गरी अदालत अगाडि आफ्ना नातेदारलाई पिटेका थिए । साथै निज हमालले सो घटनालाई शान्त पार्न गएका प्रहरी नायब उपरीक्षक माथि अपमानजनक शब्दहरु पनि प्रयोग गरेका थिए । राजनैतिक दवावका कारण उनलाई कुनै कारवाही नगरी स्थानीय प्रशासन र प्रहरी उक्त घटनामा केवल मुकदर्शक भएर बस्न बाध्य भएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उललेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लाबासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

संविधान र नियम कानूनको ज्ञान नभएको यस जिल्लामा महिला अधिकारको कुरा गर्नु एका देशको दन्त्य कथा जस्तो लाग्दछ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

महिला बलातकार र किनबेचका घटनाहरु यस जिल्लामा नदेखिए तापनि छोरीलाई बाबुले व्यापारको रुपमा प्रयोग गरेको पाइन्छ । यस जिल्लाको संस्कृति र परम्परा अनुसार केटीको बाबुलाई विहा गर्ने व्यक्तिले दहीको ठेकी कसार र केराका साथ दिने रुपियाँ कबुल गर्नु पर्दछ । आर्थिक र समाजिक हैसियत अनुसार दुलहा पक्षबाट रु ३ हजारदेखि २० हजारसम्म लिएपछि मात्र छोरी दिने प्रचलन रहेको छ ।

### ४.२ जारी, बहु विवाह, बेउकी, बादी प्रथा

यस जिल्लामा जारी प्रथा र बालविवाह व्यापक रहेको देखिन्छ। साथै यस जिल्लामा बुढा, रोकाया आदि जातिमा १० वर्षकै उमेरमा छोरीको विवाह गरिदिने प्रचलन छ। १० वर्षमै छोरीको बिवाह गरिदिने चलनले ठूली भएपछि छोरीले आफूखुसी अन्तै घरजम गर्ने गरेको पनि पाइन्छ। फलस्वरुप यस जिल्लामा जारी प्रथाले प्रोत्साहन पाएको छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■



# ४. मध्य पश्चिमाञ्चल

## कर्णाली

# ४.१२ जुम्ला

| | | |
|---|---|---|
| जनसंख्या | : | ७६३०५ |
| साक्षरता | : | २६.३ प्रतिशत |
| महिला साक्षरता | : | ८.२ प्रतिशत |
| क्षेत्रफल | : | २५३१ वर्ग कि. मी. |

कर्णाली अञ्चल भित्र शिक्षित र सम्पन्न ठानिने जुम्ला जिल्लामा राजनीतिक प्रतिस्पर्धा, गाउँ घरमा हुने साना-तिना झगडा, प्रशासनको दवाब जस्ता कारणहरुले मानव अधिकारको हनन् भैरहेको पाइन्छ भने यहाँका परम्परागत कतिपय रितिथिति पनि मानव अधिकार प्रतिकूल पाइन्छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

सन् १९९२ मा जिल्लामा प्रशासनिक निकायबाट गोली चलेको वा गाउँघरमा झै-झगडा तथा रिस-इवीले हत्या भएको कुरा कतैबाट पनि पुष्टी हुन सकेन ।

*अन्तरिम शासनकालमा २०४७ सालको दशैंको टीकाको दिन रक्सी पसलमा रक्सी पिउन गएका शाही नेपाली सेनाका जवानहरुको कारण २ जनाको ज्यान गएको थियो । एक प्रहरी हवल्दारको श्रीमतीको रक्सी पसलमा रक्सी खादा लालबहादुर शाहीसँग विवाद भएपछि सादा बर्दीमा आएका सेना र स्थानीय बासिन्दा बीच झगडा हुँदा लालबहादुर शाहीको घटनास्थलमा र राजकुमार श्रेष्ठको सैनिक अस्पतालमा उपचार गराउदा गराउदै मृत्यु भएको थियो ।*

### १.२ जेल

जुम्ला जेलको अवस्था अरु जिल्लाका जेलहरुको भन्दा खासै भिन्न छैन । ६२ जना बन्दी राख्ने क्षमता भएको तिला नदीको किनारमा बनाइएको जेल भवन बाहिरबाट हेर्दै जीर्ण देखिन्छ । हाल जेलमा ७ जना कैदीहरु छन् । चोरी र ज्यान मुद्दामा परेका २ महिला बन्दीसंगै २ जना नाबालक पनि जेलमा छन् ।

जेलमा पानीको बन्दोबस्त केही समय अगाडि मात्र गरिएको भए पनि भौगोलिक कारण र जेलको दयनीय अवस्थाले कैदीलाई चिसोबाट लाग्ने रोगहरुले सताइराख्ने गरेको छ ।

### १.३ गिरफ्तारी / यातना

२०४८ साल चैत्र ४ गते राष्ट्रिय समाचार समितिका प्रतिनिधि तिलाचौर निवासी रत्नाकर देवकोटालाई विनाकारण पक्राउ गरेर हिरासतमा राखि उनलाई भ्रष्टाचार गरेको आरोपमा स्थानीय प्रशासनले मुद्दा चलायो । २०४८ साल चैत्र २३ गते रु. ५२ हजार धरौटी राखेर जेलबाट मुक्ति पाए । चिमारा वन उपभोक्ता समितिका सचिव देवकोटाले केही व्यक्तिलाई सो बनबाट काठ काट्न रोकेकाले सो मुद्दा खडा गरेर उनलाई कसैको दवाबमा प्रशासनले कारवाही गरेको हो भन्ने स्थानीय बासिन्दाले ठहर गरेका छन् ।

राजनीतिक कार्यकर्तालाई सार्वजनिक अपराध मुद्दा लगाउने प्रवृत्ति जिल्लामा प्रसस्तै छ । २०४९ साल बैशाख २४ गते प्रधानमन्त्रीलाई कालो झण्डा देखाउने एमालेका कार्यकर्ता देवीलाल थापालाई हत्कडी लगाएर बजार घुमाइएको, विपक्षी दलका कार्यकर्तालाई झुठ्ठा मुद्दामा फँसाएको र दुःख दिएको उनीहरुको गुनासो छ । पक्राउ गरेका व्यक्तिहरुलाई हिरासतमा प्राय: यातना दिने चलन प्रहरीमा अहिले पनि यथावतै देखियो ।

## २. मौलिक अधिकार

सत्तारुढ दल र सरकारको आलोचना गर्ने पार्टीका कार्यकर्ताहरुलाई सार्वजनिक अपराध तथा सजाय ऐन लगाउने प्रवृति बढेकाले विपक्षी राजनीतिमा आस्था राख्नेहरु भयभीत देखिन्छन्। सन् १९९२ मा मात्रै जिल्ला प्रशासन कार्यालयमा दर्ता भएका २५ वटा मुद्दामा १९ वटा सार्वजनिक अपराधसंग सम्बन्धित छन् । र प्राय: जसो यी मुद्दामा वामपन्थी कार्यकर्ताहरु प्रतिवादी बनाइएका थिए।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

२०४९ साल बैशाख २४ गते प्रधानमन्त्री छिनासिम आएको बखत विरोध प्रदर्शनमा केही शिक्षकहरु पनि सामेल भएको देखेपछि नेपाल राष्ट्रिय शिक्षक संगठनका पदाधिकारी, शुभेच्छुक र समर्थक गरेर १४२ जना शिक्षकलाई अपायक र अप्ठेरो पर्ने ठाउँमा सरुवा गरिएको थियो।

### २.२ धार्मिक स्वतन्त्रता

धार्मिक सहिष्णुता र व्याप्त गरिबी र पछौटेपनले गर्दा हिजो आज केही मात्रामा नव इसाई धर्मावलम्बीहरु देखा परिरहेका छन् । यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन। स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

जुम्ला जिल्लामा नारीहरुको स्थिति दयनीय छ । खासगरि जुम्ला जिल्लाका अधिकांश लोग्ने मानिसहरु चौविसै घण्टा रक्सी, जुवा, तास र गफमा भुलिने भएकाले घर र खेतबारीको सम्पूर्ण काम महिलाले नै गर्नु परेको छ भने लोग्नेबाट पिटाई खाने, अपमानित हुने र कुनै पनि समय परित्यक्ता हुनुपर्ने स्थितिले महिलाको अवस्थालाई दयनीय बनाएको छ।

जिल्ला अदालत जुम्लामा २०४८ पौष ११ गतेदेखि असार २६ गते सम्ममा मात्रै जारी र सम्बन्ध विच्छेद सम्बन्धी ५/५ गरी जम्मा १० वटा मुद्दा दर्ता भएका थिए। तर यी मुद्दा पनि गाउँमा नमिलेर मात्र आएका हुन्।

जिल्लाका सरदर ६० प्रतिशत लोग्ने मानिस हिउँद लागेपछि भारतमा कुल्ली काम गर्न जाने, तराईतिर व्यापार गर्न जाने, लोग्ने मानिसबाट घरैमा महिलाले प्रताडित हुनुपर्ने तथा सानो उमेरमै बाबु आमाले बन्दोबस्त गरेर विवाह गरिदिने चलन गाउँमा अद्यावधि रहेकाले जारी प्रथा जुम्लामा प्रबल रहेको हो भन्न सकिन्छ।

बहु-विवाह जिल्लाको ठूलै समस्या हो । सामन्ती चिन्तन शैली र रहन सहनका कारणले महिलाहरु यति धेरै दबाइएका छन् कि बहु-विवाह स्वीकार नगरेर त्यसलाई अदालतमा गएर चुनौति दिन उनीहरु हिचकिचाउँछन्।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

■

## ४. मध्य पश्चिमाञ्चल




### कर्णाली

# ४.१३ कालीकोट

| | | |
|---|---|---|
| जनसंख्या | : | ८८७८१ |
| साक्षरता | : | २०.५ प्रतिशत |
| महिला साक्षरता | : | ४.७ प्रतिशत |
| क्षेत्रफल | : | १७४१ वर्ग कि. मी. |

यस जिल्लामा मानव अधिकार हनन् हुनाका प्रमुख कारणहरुमा आफ्नै हक र अधिकारप्रतिको अज्ञानता, अशिक्षा, राजनीतिक प्रतिद्वन्दिता तथा आपसी झै-झगडा र कलह आदि पर्दछन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

निर्वाचनको लागि म्यादी प्रहरी नियुक्त गर्ने क्रममा भएको हवाई फायर यस जिल्लाको महत्वपूर्ण घटना हुन पुगेको छ। ६० जना म्यादी प्रहरी नियुक्त गर्नु पर्नेमा जम्मा ५०० जनाले दर्खास्त दिएको, तर ६० जनाले मात्र नियुक्ति पाएकाले बाँकी उमेद्वारहरु रुष्ट भएर डाँडामाथिबाट जिल्ला प्रहरी कार्यालयमा ढुंगा-मुढा गरेका थिए। वैशाखमा भएको सो ढुंगा-मुढा रोक्न प्रहरीले ७ राउण्ड हवाइ फायर गरेको थियो।

जिल्लामा सन् १९९२ को अवधिमा हत्याका केही घटनाहरु भए पनि राजनीतिक रुपले हत्या तथा गोली प्रहार जस्ता घटनाहरु भएको पाइएन ।

### १.२ जेल

२२ जना बन्दी अटाउने क्षमता भएको कालिकोट जेलमा ९ जना बन्दीहरु राखिएका छन्। सौचालयको स्थिति राम्रो छैन र बन्दीहरुलाई खेल्ने ठाउँ र मनोरञ्जनको सुविधा छैन । औषधोपचारको लागि वार्षिक रु २ हजार मात्र छुट्याइएकोले बन्दीहरु बिरामी पर्दा औषधोपचार गर्न धेरै अपुग भएको पाइयो। दैनिक ७०० ग्राम चामल र रु. ६।- ले पेटभर खान नपुग्ने गरेको गुनासो बन्दीहरुले गरेका थिए।

२० जना प्रहरी र ७ जना कर्मचारीको लागि पनि छुट्टै आवास नभएकाले यती प्रहरीले पनि धुनामा बन्दीहरुसँगै बस्नुपर्ने बाध्यता छ। जेल कम्पाउण्ड हेर्ने बुर्जा पुरानो भैसकेको छ र पनि मर्मत गरिएको छैन। जेलमा राती पिसाब गर्ने ठाउँ छैन, शौचालय बाहिरपट्टी मात्र छ।

### १.३ गिरफ्तारी / यातना

प्रतिष्ठा र प्रतिद्वन्दिताको लागि प्रतिशोधपूर्वक मुद्दा सृजना गरेर गिरफ्तार गराउने प्रवृति जिल्लामा सामान्य घटना जस्तै भएको छ। नेपाल मजदूर किसान पार्टीका उपाध्यक्ष तुलराज विष्टको घरमा केशबसिंह कार्की नाम गरेका प्रहरीले २०४९ साल असोज २० गते ढोकामा लातले हाने र अनाहकमा गाली गरे। विष्ट ती प्रहरीको विषयमा गुनासो पोख्न जिल्ला प्रहरी कार्यालयमा जाँदा उल्टै उनलाई हिरासतमा राखियो। ७ दिनपछि मात्र उनलाई जिल्ला प्रशासन कार्यालयमा लगेर सार्वजनिक अपराध तथा सजाय ऐन अन्तर्गत कार्वाही गर्ने प्रकृयाको शुरुआत गरियो। करिब ६ बजेतिर जिल्ला प्रशासन कार्यालयमा हाजिर गराएर उनलाई ०४९ कार्तिक ७ गतेसम्म हिरासतमा राखि त्यसपछि धरौटीमा रिहा गरिएको थियो।

प्रजातन्त्रको पुन:स्थापना काल (२०४६) देखि नै यस जिल्लामा पक्राउ परेका मानिसलाई कानून बमोजिम पूर्जी

नदिने, न्यायालय नपुऱ्याउने र बेरितसंग थुन्ने प्रवृत्ति यथावत रहेको पाइयो ।

कर्तव्य ज्यान मुद्दामा एकपल्ट जेल बसेर रिहाई भएका ४३ बर्षिय मोहनबहादुर शाही करीव ५ वर्ष पछि पुनः सोही ज्यान मुद्दामा हाल सजाय भोगिरहेका छन् । ०३८ सालमा सर्वोच्च अदालतले गरेको फैसला भनेर उनलाई २०४७ सालमा पुनः पक्राउ गरिएको थियो । एकै मुद्दामा २ पटक जेल सजाय काटिरहेका शाहीले आफू अन्यायमा परेको निवेदन दिए पनि कतैबाट सुनवाई नभएको बताए ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

महिलाहरुको स्थिति कर्णाली अञ्चलका सबै जिल्लामा अन्यत्रको तुलनामा झन् बढी गए गुज्रेको छ । घर र मेलाको सबै काम महिलाले नै गर्नुपर्ने स्थिति त छँदैछ, त्यस बाहेक बलात्कारका घटनाहरु पनि जिल्लामा प्रशस्त हुने गरेका छन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

२०४९ साल कार्तिक २८ गते राती प्रहरी जवान शिवप्रसाद ढकालले बजारमा चिया पसल गरि बस्ने केला शाहीलाई सुतिरहेको अवस्थामा ओछ्यानमै गएर बलात्कार गर्न लाग्दा महिलाले हल्ला गरिन् । छिमेकीले ढकाललाई पक्राउ गरेर प्रहरी कार्यालयमा बुझाएपछि उनलाई बर्खास्त गरिएको जानकारी पाइयो । केला शाहीको विवाह भैसकेको र हाल उनी त्यहाँ नभएकोले उनीसँग भेट हुन सकेन ।

प्रहरी जोशी हाल हिरासतमा रहेको र न्यायोचित तरिकाले कार्वाही हुने कुरा जिल्लाका डि.एस.पी. बद्रीबहादुर प्रधानले बताएका छन् ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

जारी यस जिल्लामा परम्परादेखि नै चलिआएको र हाल पनि चलिरहेको मानव अधिकारसंग सम्बन्धित समस्या हो । प्रायः जसो गाउँमा नै मिलाइने गरिएका जारी सम्बन्धी मुद्दाहरु यदाकदा अदालत पनि पुग्ने गरेका छन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ४. मध्य पश्चिमाञ्चल

## कर्णाली

# ४.१४ मुगु

| | | |
|---|---|---|
| जनसंख्या | : | ३६४४५ |
| साक्षरता | : | २१.८ प्रतिशत |
| महिला साक्षरता | : | ५.९ प्रतिशत |
| क्षेत्रफल | : | ३५३५ वर्ग कि. मी. |

कर्णाली अंचलका सबै जिल्लाहरु हरेक दृष्टिकोणले पिछडिएको अवस्थामा रहेका छन् । त्यसमध्ये पनि मुगु सबभन्दा विकट जिल्लाका रुपमा चिनिन्छ । झट्ट हेर्दा यस जिल्लामा कसैबाट मानव अधिकारको हनन भएको देखिदैन । तर गहिरिएर हेर्ने हो भने यहाँ परम्परागत रुपमा प्रत्येक व्यक्तिको मानव अधिकार हनन भइरहेको देखिन्छ । अभाव, गरिबी र अशिक्षाद्वारा ग्रसित यहाँका जनता वास्तवमा मानव अधिकारका बारेमा पूर्णत: अनभिज्ञ देखिन्छन् । कुनै पनि यातायातको साधनद्वारा मुगु पुग्न सकिंदैन । कुनै पनि जिल्लाबाट मुगुसम्म पुग्न ठूला ठूला ओराली, उकालीहरु काट्दै करिब तीन दिनको कठोर पैदल यात्रा तय गर्नु पर्दछ ।

स्थानीय बासिन्दाहरुका अनुसार यहाँ लागु पदार्थको सेवन गरी होहल्ला गर्ने र अरुको अधिकारको हनन गर्ने गरिएको निकै पाइन्छ । यहाँ निकै मात्रामा लागु पदार्थकै कारण घटनाहरु घट्ने गरेको पाइन्छ । स्थानीय जनता, राजनीतिक कार्यकर्ता र प्रशासनको संयुक्त प्रयासमा यस जिल्लालाई मादक पदार्थ निषेधित क्षेत्रका रुपमा विकसित गर्ने बारेमा पनि विचार विमर्श भइरहेको छ ।

## १. बाँच्न पाउने अधिकार

मुगु जिल्ला अदालतका अनुसार यस बर्ष मुगु जिल्ला अदालतमा ज्यान र बलात्कार सम्बन्धी मुद्दा एउटा पनि दर्ता भएनन् ।

जिल्ला प्रहरी कार्यालयका एकजना वरिष्ठ अधिकृतले बर्ष पुस्तकका स्वयंसेवकसंगको कुराकानीका क्रममा बताए - "यहाँ सामान्य झै झगडाका मुद्दाहरु मात्र आउँछन् र अधिकांश तुरुन्तै मेलमिलापद्वारा सुल्झन्छन् । यस बर्ष यहाँ हत्या, बलात्कार, गोली, प्रहरी दमन, प्रशासनिक दमन आदि कुनै घटना घटेका छैनन्, यहाँ कहिल्यै त्यस्तो घटना घट्दैन । हामी त यहाँ करिब करिब बेकम्मा भएका छौं ।"

### १.१ हत्या / गोली

यस वर्ष हत्या र गोलीका उल्लेखनीय घटना प्रकाशमा आएनन् ।

### १.२ जेल

मुगुको जेललाई बाहिरबाट हेर्दा जेल भनेर पत्याउन गाह्रो हुन्छ । पाँच वटा स-साना कोठाहरु भएको एउटा दुई तले घरमा "जिल्ला कारागार भवन" को साइनबोर्ड टाँगिएको छ । जेलको छाना खरले छाइएकोछ र हाल यहाँको जेलमा एकजना पनि बन्दी रहेका छैनन् ।

जेल भवन वास्तवमा जेलको आफ्नो नभएर भाडामा लिइएको घर हो । जिल्ला प्रशासन कार्यालयका एक जना कर्मचारीका अनुसार यहाँका बन्दीहरुलाई जुम्ला पठाउने गरिएको छ । ती कर्मचारीका अनुसार उनले जानेसम्म हत्या र बलात्कार सम्बन्धी मुद्दाका अभियुक्तहरु भने जिल्लामा देखिएका छैनन् ।

### १.३ गिरफ्तारी / यातना

"कुनै मुद्दाको केरकार गर्ने क्रममा प्रहरीबाट यातना पनि दिइने गरेको हुन सक्छ । तर प्रहरीले अति ज्यादती गरी साबिती गराएको मुद्दा भने यहाँ दर्ता भएको छैन ।"- स्थानीय राजनीतिक कार्यकर्ताहरुको राय यस्तो रहेको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका

कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिंदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

०४८ पुस देखि ०४९ पुससम्म मुगु जिल्ला अदालतले कूल दसवटा फैसलाहरु गरेको थियो । अदालत सूत्रका अनुसार यहाँ गम्भीर प्रकृतिका मुद्दाहरु प्राय: दर्ता नै गरिंदैन । भौगोलिक विकटताका कारण समेत फैसला ढिलो हुने गर्दछ भन्ने कुरामा यहाँका सबैजसो बुद्धिजिवीहरुमा मतैक्य पाइयो ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिंदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

मुगुमा बहुविवाह, बालविवाह र जारी प्रथा आदि प्रचुर मात्रामा रहेको छ । तर अदालतमा त्यस्ता मुद्दाहरु आउने गर्दैनन् । जिल्लाका प्रतिष्ठित व्यक्तित्वहरु मध्ये कतिपयले ५, ६ वटा विवाह समेत गरेको भेटिन्छ । हाल जारी रकम बापत दश देखि पचास हजारसम्म लिने दिने गरेको पाइन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईंदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

अन्य पिछडिएको समाजमा झैं यस जिल्लामा पनि रुढिवादले दह्रोसंग जरो गाडेको छ । यहाँका जनताले आफ्नो जीवन देवी, देवताको तजविजमा अडेको भ्रम पालेका छन् । छुवाछुतको समस्याले यो जिल्लालाई पनि ग्रसित तुल्याएको छ । बोक्सीको नाममा निर्दोष र निमुखा महिलालाई अमानवीय कष्ट दिने चलन यहाँ पनि यदाकदा देखिन्छ ।

स्थानीय बुद्धिजिवीहरु यहाँ धर्मको नाममा पनि शोषण हुने गरेको धारणा व्यक्त गर्दछन् । यहाँका जनता अदालत, कानून, प्रहरी र सरकार भन्दा पनि धामी, झांक्री र देवी-देवतामा विश्वास गर्ने गर्दछन्



फोटो: मन पुस्तक

मुगु जेलको बाह्यभाग



# ४. मध्य पश्चिमाञ्चल

## कर्णाली

## ४.१५ हुम्ला

| | | |
|---|---|---|
| जनसंख्या | : | ३४६४० |
| साक्षरता | : | २०.९ प्रतिशत |
| महिला साक्षरता | : | ४.८ प्रतिशत |
| क्षेत्रफल | : | ५६५५ वर्ग कि. मी. |

हुम्ला, कर्णाली अंचलका अन्य चार जिल्लाभन्दा पनि भौगोलिक रुपले बिकट र आर्थिक, सामाजिक एवं शैक्षिक दृष्टिले पछिडिएको जिल्ला हो । अशिक्षा, अज्ञानता र गरिबीले गर्दा हुम्लाका अधिकांश नागरिकहरुलाई मानव अधिकार के हो भन्ने सम्मको ज्ञान छैन । त्यसैले यहाँ मानव अधिकारको हनन् हुनु स्वाभाविक र सामान्य जस्तो लाग्छ भने हनन् भएका अधिकारहरुको खोजी नहुनु पनि अस्वाभाविक ठहर्दैन ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

यस जिल्लामा प्रजातन्त्रको पुनर्स्थापना पछि प्रहरी/प्रशासनले गोली चलाएको र नागरिकको हत्या गरेको पाइएन ।

*२०४८ साल वैशाखमा प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला जिल्ला सदरमुकाम सिमीकोट आउनु हुँदा बामपंथी राजनीतिक दलहरुको तर्फबाट निकालिएको शान्तिपूर्ण विरोध प्रदर्शनमा सामेल भएको जनसमूह माथि प्रहरीले लाठीचार्ज गरेको थियो । उक्त घटनामा रामराज शाही, लंकबहादुर शाही लगायतका व्यक्तिहरु सामान्य घाइते भएका थिए ।*

हेप्का गा.वि.स.का ठातोक लामाले नाम्डोल नामकी केटीलाई स्वास्नी बनाउन नाम्डोलकै आग्रहमा आफ्नी पत्नी तालिक लामालाई मारेको भन्ने निवेदन केही समय अघि जिल्ला प्रहरी कार्यालयमा परेको थियो । त्यसैको आधारमा ठातोक र नाम्डोललाई करीब १ हप्ता हिरासतमा पनि राखियो । तर पछि सर्जमिन हुँदा तत्कालिन कायम मुकायम प्रमुख जिल्ला अधिकारी कृष्णप्रसाद रेग्मी, प्रहरी नायब उपरिक्षक चन्द्रकुमार सिंह क्षेत्री र सरकारी वकिललाई ५४ (चौवन्न) हजार रुपैया घुस दिई कालगतिले नै तालिक लामा मरेको कागज गराई अभियुक्त उम्किए भन्ने जनगुनासो रहेको पाइयो ।

#### १.२ जेल

नौ हजार ५ सय फिट उचाइमा रहेको सिमीकोट जेल देशको सबैभन्दा उँचाइमा रहेको जेल पनि हो । हाल यो जेलमा नौ जना पुरुष बन्दी छन् । करणी, ज्यान र चोरी मुद्दाका क्रमश: धनमानसिंह बोहरा, यामनारायण उपाध्याय र बल दमाई कैद सजाय भोगिरहेका छन् भने गोर्खबहादुर शाही र काला ठकुरी चोरी मुद्दाको, राजेन्द्र कार्की र अम्बर सिंह देवान भ्रष्टाचारको तथा छिरिङ पाल्देन लामा र छिरिङ डम्दुल लामा मूर्ति चोरी मुद्दाको पुर्पक्षका निमित्त थुनामा राखिएका छन् ।

कारागारमा रहेका बन्दीहरु राति दिसा पिशाब गर्न कठिनाइ परेको बताउँछन् । उनीहरुलाई राती चर्पिमा गएर दिसा पिशाब गर्न दिईदैन । सुत्ने कोठामा नै एउटा भाँडा

राखेर त्यसैमा दिसा पिसाव गर्नु पर्दछ । औषधि उपचारको उचित प्रवन्ध नभएको गुनासो पनि उनीहरुले गरे ।

कारागारमा महिलाहरुका निम्ति छुट्टै वार्ड नभएकाले उनीहरुलाई थुन्नु पर्दा निक्कै समस्या पर्ने गरेको देखियो ।

देशका सुगम स्थानमा रहेका कारागारका बन्दीहरुलाई र हुम्ला जस्तो अत्यन्तै विकट र प्रचुर महंगी भएको स्थानका बन्दीहरुलाई ऊत्तिकै सुविधा उपलब्ध गराउनु न्यायोचित देखिदैन। निजामति कर्मचारीहरुले तलबको शतप्रतिशत दुर्गम भत्ता पाउने यस ठाउँका बन्दीहरुले भने राजधानी लगायतका सुगम स्थानका बन्दीहरु सरह दैनिक सातसय ग्राम चामल र रु ६ नगद मात्रै पाउँने गरेका छन् ।

१.३ गिरफ्तारी / यातना

हेप्का गा.वि.स.का बहादुर लामा दम्पत्तिको सिमीकोटमा प्रहरीसंग सामान्य भनाभन र पछि गएर हात हालाहालसम्म भएको थियो । सोही घटनालाई लिएर प्रहरीले लामा दम्पत्तिलाई गिरफ्तार गरी करीव डेढ साता प्रहरी हिरासतमा राख्यो । उनीहरुलाई हिरासतमा अमानवीय तवरले यातना दिइएको थियो । पछि लामा दम्पत्तिलाई सार्वजनिक अपराध मुद्दा लगाई जनही ४-४ हजार रुपैयाँ धरौटी लिई तारेखमा छोडियो । उनीहरु अहिलेसम्म पनि सो मुद्दा खेपिरहेका छन् ।

सिमीकोट गा.वि.स.को बुराउसे र हिल्दम भन्ने ठाउँमा गाउँले बीच तिहार पछि घाँसको विषयलाई लिएर झगडा भएको थियो। सोही झगडाको क्रममा संयुक्त जनमोर्चा समर्थक बुराउसेका आङ्गोल लामा र छिरिङ दोर्जे लामालाई प्रहरीले पक्राउ गरी हिरासतमा लिएको र कुटपिट गरी छोडेको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति / भेला र संगठित हुने अधिकार

गत आम निर्वाचनमा गोठी बुथमा नेपाली कांग्रेसका उमेद्वार चक्रबहादुर शाहीले आफ्ना समर्थक बाहेक अरुलाई मतदान गर्नबाट बंचित गराएका थिए। उनका समर्थकहरुले कांग्रेस इतर विचार राख्ने गाउँलेहरुलाई पानीघट्टमा अन्न पिंध्न र मन्दिरमा पूजा-आजा गर्न समेत नदिइ सामाजिक बहिष्कार गरेका थिए। शाहीकी पत्नीले गाउँले आइमाईहरुलाई मेरो पतिले पंचायती कालमा बनाएको धाराको पानी तिमीहरुले खान पाउँदैनौ भनी पानी खान पनि रोकेकी थिइन्। गोठीमा नेपाली कांग्रेस समर्थक बन्न नचाहने जनता हालसम्म पनि अनेकौं प्रकारका दमन र थिचोमिचोबाट मुक्त हुन सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन। स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि एक दुई ठाउँ बाहेक अन्यत्र यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

२०४८ साल पुसदेखि २०४९ पुससम्म यहाँको जिल्ला अदालतमा कुल ५४ बटा मुद्दा दर्ता भएका थिए। ती मुद्दाहरु मध्ये २०४९ साल कार्तिक सम्ममा १६ बटा फछ्र्यौट भए भने अन्य मुद्दा जिल्ला न्यायाधिश नभएका कारणले (२०४९ चैतको अन्त्यसम्म पनि) फछ्र्यौट हुन सकेका थिएनन् । जिल्ला न्यायाधिश गोपालप्रसाद गुरागाई लामो समयदेखि काजमा धनुषा रहनु भएको छ। अहिले यहाँ निमित्त

न्यायाधिश मात्र हुनुहुन्छ, जसलाई मुद्दा छिन्ने अधिकार त हुँदैन नै, कतिपय मुद्दाको अंग पुऱ्याउने अधिकार पनि हुँदैन ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन जनता त खास छैनन् । तर जिल्लावासी अधिकांशलाई नै आफ्नो जग्गा जमीनबाट मुस्किलले ३-४ महिना मात्र खान पुग्दछ ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु बिबाह, देउकी, बादी प्रथा

यहाँ बालविवाह, बहुविवाह र बहुपति विवाह प्रथा विद्यमान छ । बालविवाह र बहुबिवाह प्रशस्तै भए पनि सामाजिक रितिथिति र अज्ञानताका कारण तिनको प्रतिरोध भने कम भएको पाइन्छ । तै पनि अहिले यहाँको जिल्ला अदालतमा तीनवटा बहुविवाहका मुद्दा दर्ता भएका छन् ।

यहाँको लामा सम्प्रदायमा बहुपति प्रथा प्रचलित छ । दुई वा दुइभन्दा बढी दाजुभाइका बीचमा एकमात्र पत्नी राख्ने प्रचलनले यहाँ समाजिक मान्यता र प्रतिष्ठा पाइरहेको भए पनि त्यसबाट महिलाहरु भने शोषित छन् । तर रुढीवादी संस्कार, अशिक्षा र अज्ञानताका कारण ती महिलाहरु यो प्रथाको विरोध गर्न सकिरहेका छैनन् । बरु आफ्ना पतिहरुमध्ये कुनै एक्ले अर्की पत्नी ल्याएमा आफ्नो अधिकार खोसिएको महशुस गर्दछन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा र-हेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

राजनीतिक प्रतिशोध, प्रतिष्ठाको प्रतिद्वन्दिता, घाँसपात, चरन, कुटपिट, आपसी रिसइविका घटना देशका अन्य भागमा भैं यहाँ पनि छन् । यसका साथै छुवाछुत, धामी बोक्सी, जारी र मुखियाली जस्ता रुढीवादी कुरीतिहरु कायम छन् । यहाँका मुखियाहरु अझै पनि गाउँले न्यायाधिश सरहका छन् भने मनोमानी ढंगले जग्गाको बेचबिखन र नामसारी गर्ने हैसियत पनि राख्दछन् । यहाँ जारी बापत कम्तीमा रु १० हजार देखि बढीमा ५०-६० हजारसम्म असुल्ने गरिन्छ ।

त्यसैले यस जिल्लामा मानव अधिकार सम्बन्धी व्यापक सचेतन अभियानको खाँचो खट्किइ रहेको महशुस हुन्छ ।

स्वतन्त्रता र मौलिक हकको समेत सोही प्रकृतिमा हनन भइरहेको धारणा पनि प्रतिपक्षका कार्यकर्ताहरु व्यक्त गर्दछन् ।

■

# सुदूर पश्चिमाञ्चल



५.१ कैलाली

५.२ अछाम

५.३ डोटी

५.४ बाजुरा

५.५ बझाङ्ग

५.६ कञ्चनपुर

५.७ डडेलधुरा

५.८ बैतडी

५.९ दार्चुला



# ५. सुदूर पश्चिमाञ्चल

## सेती

# ५.१ कैलाली

| | | |
|---|---|---|
| जनसंख्या | : | ४२००३५ |
| साक्षरता | : | ३१.२ प्रतिशत |
| महिला साक्षरता | : | १५.७ प्रतिशत |
| क्षेत्रफल | : | ३२३५ वर्ग कि. मी. |

सेती अञ्चलमा अवस्थित कैलाली जिल्लाका अधिकांश बासिन्दा थारु जातिका बसोबास छन् । प्राय: गरेर थारुहरु अशिक्षित हुने हुनाले गाउँका ठूलाठालुहरुबाट यिनीहरु व्यापक रुपमा शोषित र पीडित भएका छन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

२०४८ चैत २४ "नेपाल बन्द" को दिन स्थानीय विकास मन्त्री रामचन्द्र पौड्याल कैलालीको भल्का बजार (बलिया) मा पुग्नु भएको थियो । वहाँ फर्किन लाग्दा झण्डा र ब्यानर बोकेका केही व्यक्तिहरुले अवरोध खडा गरे । त्यसपछी करीब १२ राउण्डगोली चलाइएको थियो । गोली-द्वारा टीकाराम जोशी र हरिप्रसाद ज्ञवाली सख्त घाइते भई उपचारार्थ काठमाडौं पुऱ्याउनु परेको थियो भने घटनामा संलग्न मंगलप्रसाद चौधरी र हिक्मत बहादुर बमलाई गिरफ्तार गरी निर्मम यातना दिइयो । उनीहरुलाई सार्वजनिक अपराध मुद्दा लगाइएको थियो ।

२०४९ असार ४ गते सामान्य कुरालाई लिएर प्रहरी र जनताबीच भएको भिडन्तमा ६ राउण्ड जति हवाई फायर गरिएको थियो, तर हवाई फायरबाट कसैलाई केही नभएको देखिन्छ ।

### १.२ जेल

यस जिल्लामा जेलको स्थिति सामान्य रहेको छ ।

### १.३ गिरफ्तारी / यातना

राजनैतिक प्रतिशोधको भावनाले निर्दोष व्यक्तिहरुलाई पनि साविती गराउन यातना दिएको पाइन्छ । बसौटी गा.बि.स. बस्ने तथा जिल्ला शिक्षा कार्यालयमा कार्यरत धनीराम चौधरीलाई ज्यानमारा अभियोग लगाइएको थियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

२.३ **राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार**

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन। स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन।

२.४ **सुगम र निष्पक्ष न्यायिक अधिकार**

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा सरकारवादी ६०, दुनियावादी फौजदारी ९३, देवानी ९१, अन्य ७५ गरी जम्मा ३१९ वटा मुद्दाहरु दर्ता भएका थिए।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा देखिएको कमैया प्रथाले भूमिहीन तथा सुकुम्बासी समस्याको प्रतिनिधित्व गर्दछ।

## ४. महिला अधिकार

४.१ **महिलाहरुको किनबेच र बलात्कार**

यहाँ गाउँघरका ठूला-ठालु, धनी-मानीहरुले थरुनी महिलाहरुलाई बलात्कार गर्ने गरिएको पाइन्छ। डर, धम्की, त्रास र आफ्नो गाँसबास हरण हुने भयले बलात्कृत महिलाहरुले कतै पनि उजुर-बाजुर गर्ने आँटसम्म गर्न नसकेको देखिन्छ । साथै यी बलात्कृत महिलाहरुले गर्भधारण गरेमा गाउँमा ठूला-ठालु भनाउँदाहरुले गाउँकै सोझा-सीधा थारुहरुलाई हिल्ला (जिम्मा) लगाइदिने चलन यहाँ व्यापक रहेको पाइन्छ। यसरी आफूमाथि देखा-देख अन्याय अत्याचार हुँदा पनि गरीबी, अशिक्षा र पछौटेपनका शिकार भएका थारुहरु आफूमाथि आइपरेका यस्ता अमानवीय र पाशविक मानसिक यातनाहरु सहन विवश भएका देखिन्छन् ।

४.२ **जारी, बहुविवाह, देउकी, बादी प्रथा**

यस जिल्लामा देउकी र वादीहरु पनि छन्। रोजगार र अन्य जीविकोपार्जनका अभावमा आफ्नो सतित्व र अस्तित्व बन्धकी राख्नु परेको विवशता उनीहरुले व्यक्त गर्ने गरेको पाइन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

५.१ **दासत्व विरुद्धको अधिकार**

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको छ र यो कमैया प्रथाको नामले प्रचलित छ । मानिसहरु सपरिवार किनबेच गरिन्छ ।

५.२ **अन्य अमानवीय व्यवहार**



# ५. सुदूर पश्चिमाञ्चल

## सेती

# ५.२ अछाम

| | | |
|---|---|---|
| जनसंख्या | : | १९७८८८ |
| साक्षरता | : | २५.० प्रतिशत |
| महिला साक्षरता | : | ६.४ प्रतिशत |
| क्षेत्रफल | : | १६८० बर्ग कि. मी. |

सेती अंचलको दुर्गम जिल्ला अछाम शिक्षा र चेतनाको दृष्टिकोणले पनि पिछडिएको छ। अछामका बारेमा लेख्दा उल्लेख गर्नै पर्ने कुरो के छ भने यहाँका स्थानीय बासिन्दाहरुले मिलेर रक्सी माथि जिल्लाको सीमाभित्र पूर्णत: प्रतिवन्ध लगाएका छन्। यहाँ रक्सी सेवन गर्ने मानिसलाई सार्वजनिक मुद्दा लगाइन्छ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

०४९ असार २६ गते विनायक गा.बि.स. की मिना शाहीको ढुङ्खेरमेला भन्ने भिरालो पाखामा ढुंगाले लागि मृत्यु भयो। उक्त अकाल मृत्युमा टिका कडायतलाई दोषी ठहऱ्याइ पक्राउ गरियो। उनलाई बीचमा ६ दिन रिहा गरिएको थियो। तर पछि पुन: पक्राउ गरे। उक्त घटनाका सम्बन्धमा यहाँ विभिन्न किसिमका मतहरु पाइन्छन्। एकथरीको भनाई अनुसार उनलाई राजनीतिक प्रतिशोधका कारण फसाइएको हो, उनी निर्दोष छन्। तर अर्को थरिका अनुसार ती कडायतले मिना शाहीलाई बलात्कारगर्न खोज्दा मिनाले प्रतिकार गरे पश्चात उनको हत्या गरिएको हुनु पर्छ।

हाल अछाम कारागारमा रहेका टिका कडायत यस सम्बन्धमा भन्दछन् - "मलाई पहिले त मिना मरेको भन्ने थाहा पनि थिएन। मेरो गाई बस्तुले खसालेको ढुंगाले लागेर मरेको होला। तर मैले नै मारेको हो भनेर मलाई फसाइयो। मलाई न कुनै बयान गराइयो न मैले वकिल राख्न पाएँ।"

*०४९ पुष ९ गते जिल्लाको सदरमुकाम साँफेबगर मा एउटा लाश बेवारिश अवस्थामा फेला पऱ्यो। त्यस गा.वि.स.का अध्यक्ष लगायत धेरै व्यक्तिले लाशलाई नचिनेको बताए। एकजनाले "यो त प्रेम रावत हो" भन्न मात्र खोज्दा उनलाई त्यहाँ रहेका नेताले लघारे छन्। पछि पत्तो लाग्यो त्यो लाश प्रेम रावत कै थियो। रावत ०४९ मंसीर २२ गते बेलुकी देखि आफ्नो सिद्धेश्वर गा.बि.स. डिक्र्याहनी सियतघर बाट बेपत्ता भएका थिए। उनकी पत्नी धेरै दिनसम्म आफ्नो पति बम्बई हिंडेको विश्वासमा थिइन्। तर पछि थाहा पाए भए पश्चात पनि उनलाई मुद्दा मामिला नगर्न दवाब दिइयो। हाल मृतकका दाजुले मुद्दा दायर गरेका छन् र दुईजनालाई मुद्दाको तहकिकातका लागि प्रहरी हिरासतमा राखिएको छ।*

### १.२ जेल

यहाँ रहेको सानो जेलमा अहिले १७ जना बन्दीहरु रहेका छन्। प्रहरी र प्रशासनका अनुसार जेलको स्थिति राम्रो छ। एकजना प्रतिपक्षी राजनीतिक कार्यकर्ताले समेत "जेलको स्थिति सुनेसम्म राम्रो छ" भने। यहाँका राजनीतिक कार्यकर्ताहरुले जेलका विषयमा कुनै जानकारी नराख्ने गरेको देखियो। अछामको जेलमा पंचायत काल भन्दा निकै सुधार भएको बताइन्छ। तर मानव अधिकारको दृष्टिकोणबाट हेर्दा जेल भित्रको स्थिति अत्यन्त दयनीय रहेको देखिन्छ। बन्दीहरु पानीको सुविधाबाट वंचित छन्। जेलभित्र एकदिन पानी आयो भने चार दिन आउँदैन। औषधी उपचारको उचित व्यवस्था छैन। र राती कोठा भित्रै दिसा पिसाब गर्नु पर्दछ।

जेल भित्र मनोरंजन र आयमूलक रोजगारीको कुनै व्यवस्था छैन ।

### १.३ गिरफ्तारी यातना

यस जिल्लामा पनि अरु जिल्लामा जस्तै विना पूर्जी गिरफ्तार गरी यातना दिइएको पाइन्छ ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता/भेला र संगठित हुने अधिकार

जन चेतनाको कमीका कारणले यहाँका मानिसले मानव अधिकारका बारेमा बुझ्नै पाएका छैनन् । यहाँको समाजमा संविधानद्वारा प्रत्याभूति गरिएका कतिपय अधिकार पनि उपभोग गर्ने चेतना रहेको छैन । त्यस कारण अछामको मानव अधिकारको स्थितिलाई राम्रो भन्न सक्ने स्थिति कुनै राजनीतिक कार्यकर्ताको देखिदैन । सरकारी कर्मचारीहरुलाई सदैव सत्ताको दवावमा काम गर्नु पर्ने गरेको कुरा प्रतिपक्षी कार्यकर्ताहरु बताउँछन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

"हुन त जिल्ला अदालतले जे जस्तो काम गरे पनि सर्वोच्च अदालतमा रिट हाल्न सक्ने प्रावधान छ । तर पनि न्यायालय र अन्यत्र प्रशासनमा हुने ढिलासुस्तीले गर्दा संतोष गर्ने ठाउँ छैन ।" यहाँका राजनीतिक कार्यकर्ताहरु बताउँछन् ।

दुई वर्ष भई सक्दा पनि सार्वजनिक मुद्दामा कुनै कारवाही भएको देखिदैन । यहाँको न्यायिक निकायको निष्पक्षता माथि शंका गर्ने ठाउँ प्रतिपक्षी राजनीतिक कार्यकर्ताहरु पनि देख्दैनन् । तर सुगम न्याय भने अछामबासीहरुका निम्ति अफ टाढैको वस्तु प्रतित हुन्छ ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४ महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस जिल्लामा महिलाहरुको किनबेच र बलात्कार सम्बन्धी कुनै घटना घटेको कुरा सार्वजनिक चर्चामा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, वादी प्रथा

अछामका सुदूर ग्रामीण इलाकाहरुमा ऐन, कानूनको होइन मान्यताहरुको बोलवाला छ । जारी प्रथा पनि एउटा त्यस्तै मान्यता हो । यहाँ कतिपय मानिसले सर्वस्व हुने गरी जारी तिरेको पनि देखिन्छ । हाल १५००/- देखि ५०,०००/- सम्म जारी रकम लिने दिने गरेको देखिन्छ ।

बर्दियां र कैलालीका वादी समुदाय जस्तो यहाँका वादी महिलाहरु देहव्यापारमा संलग्न रहेको पाईदैन । तर वादी समुदायका तन्नेरी छोरी बेटीका इज्जत लुटिने गरेको पनि सुनिन्छ । चंदिका गा.बि.स. बयलपाटामा र अन्यत्र गरी ५-६ घर वादीहरु रहेका छन् । उनीहरु फिरन्ते जिन्दगी बिताउने गर्दछन् । नाचगान गरेर जीविका चलाउँछन् । सुल्फा, चिलिम आदि बनाएर बेच्ने गर्दछन् र विवाह आदिमा नाचगान गर्ने गर्दछन् ।

अछाममा पनि रिस उठेको आईमाईलाई बोक्सी भनेर सताउने गरेको पाइन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा पनि छुवाछुतको समस्या विकराल रहेको छ । यहाँ तल्लो जातिका भनिने मानिसहरुलाई सार्वजनिक स्थलहरु पानी पँधेरा, होटल, मन्दिर आदि सबै ठाउँमा छुन मनाही गरिन्छ । तल्लो जातिका भनिने मानिसहरु पनि हिन्दू धर्मावलम्बी नै हुन् । तर उनीहरु हिन्दू धर्म अनुसार पूजा पाठ र धर्म कर्ममा समेत संलग्न हुन पाउँदैनन् ।

यस जिल्लाको जनजीवन पनि रुढिवादी, धामी झांक्री र अन्धविश्वासमा अल्झिएको छ । अन्तर्जातीय विवाह गर्ने महिला वा पुरुष समाजबाट तिरस्कृत समेत हुन पुग्दछन् ।

अछाममा देखिएको अर्को मानव अधिकार सम्बन्धी समस्या सेनासंग जोडिएको छ । खप्तड वन्य जन्तु निकुञ्जको राम्रोसंग सिमा निर्धारण नभएकोले सेनाको यत्रतत्र चलफीर भइरहेको धारणा यहाँका बासिन्दाहरु व्यक्त गर्दछन् । जंगलमा घाँस, पात लिन जाने महिलाहरु सेनाद्वारा सताइने गरेको बताइन्छ ।

*०४८ साउन ६ गते भास्कून पोष्टका सेनाले पातल गा.वि.स.का मानिसहरुलाइ हातखुट्टा बाँधी घुंडाको सहाराले ढुंगे बाटोमा हिंडाए । गाउँलेहरुले पूर्जी काटेर नै निकुञ्ज भित्र गाई, भैंसी चराएका थिए । तर तत्कालिन हवल्दार चन्द्र सिं साउदले अनाहकमा गाउँलेलाई दुख: दिए ।* पातल गा.वि.स. वडा नं. ७ का जनताले कति पटक निजी वन बगैंचामा घाँस, दाउरा काट्दा पनि उनीहरुलाई सेनाले गिरफ्तार गरेको छ । सेनाका बंगुरहरु सर्वसाधरण जनताका खेतीमा छोडिने गरेको कुरा पनि बताइन्छ ।

"जहाँ जहाँ स्वास्नी मान्छेहरु हुन्छन्, सेना पनि त्यहीं त्यहीं पुग्छ । उनीहरु निकुञ्जको पुरानो सिमानाको लगभग डेढ घण्टा सम्मको दूरीमा घुमफिर गर्ने गर्दछन् ।" - स्थानीय बासिन्दाहरु बताउँछन् । सेनाले यस क्षेत्रका जात्रा, चाडपर्व आदिमा रक्सी खाएर होहल्ला र जथाभावी गर्ने गरेको कुरा यहाँका राजनीतिक कार्यकर्ताहरु व्यक्त गर्दछन् । अछामको जनजीवन सेनासंग कतिसम्म त्रसित छ भन्ने कुरा एकजना वृद्धले व्यक्त गरेको यस पंक्तिबाट पनि प्रष्ट हुन्छ - "यहाँका जनताको लागि सरकार भनेको तिनै सैनिकहरु हुन् ।"

सेनाको अत्याचार बारे यहाँका बासिन्दा कुनै टिप्पणी गर्न चाहँदैनन् । सेनाको हातमा परेका महिलाहरु पनि डर र सामाजिक प्रतिष्ठाका कारण सैनिकहरुका सम्बन्धमा कुनै नकारात्मक कुरो बोल्न हिचकिचाउँछन् ।

सेनाहरुले महिलाहरुलाई समातेर लैजाने र रातभरी राखेर भोली, पर्सी पल्ट मात्र छोड्ने गरेको गुनासो पनि त्यस क्षेत्रमा व्यापक रुपमा पाइयो । कतिपटक स्थानीय जनताको संगठित विरोधले अप्रिय स्थिति पैदा गर्ने गरेको पनि पाइयो । ■



# ५. सुदूर पश्चिमाञ्चल

## सेती

# ५.३ डोटी

| | | |
|---|---|---|
| जनसंख्या | : | १६७४६९ |
| साक्षरता | : | २९.९ प्रतिशत |
| महिला साक्षरता | : | १०.९ प्रतिशत |
| क्षेत्रफल | : | २०२५ वर्ग कि. मी. |

डोटी सुदुर पश्चिमाञ्चलका दुर्गम जिल्लाहरु मध्ये एक हो । भौगोलिक रुपमा दुर्गम ठाउँमा अवस्थित डोटीमा मानव अधिकार हननका प्रत्यक्ष घटनाहरु त्यति नसुनिने भए पनि यहाँका पुरातन मान्यता र संस्कारहरुले भने मानव अधिकार उल्लंघन ठूलै मात्रामा भइरहेको देखिन्छ । छुवाछुतको प्रथाले यहाँ नराम्रोसंग जरो गाडेको छ ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

०४८ पुष देखि ०४९ पुषसम्म जिल्ला प्रहरी कार्यालय डोटीमा जम्मा ८ वटा कर्तव्य ज्यान सम्बन्धी र एउटा भवितव्य ज्यान सम्बन्धी मुद्दा दर्ता भएका थिए ।

०४९ असार २३ गते सिलगढी-दिपायल मार्गमा पर्ने चिसापानी भन्ने ठाउँमा एकान्तमा रहेको एउटा घरमा रक्सीको नशाले चूर भएका एकजना प्रहरीले बाटो सोधे। त्यहीं स्थानीय युवकहरुसंग प्रहरीको झगडा पर्‍यो । ती युवकहरुले प्रहरीलाई पक्रिएर दिपायलको चौकीमा बुझाउन लगे । तर चौकीमा ती युवाहरुलाई नै पक्राउ गरियो र रातारात १६-१७ जना प्रहरी साथ लगाएर उनीहरुलाई जिल्ला प्रहरी कार्यालय सिलगढी चलान गरियो ।

सोही राती ती पक्राउ पर्ने मध्ये एक तुलाराम भण्डारीकी पत्नी र डेढ महिनाको बच्चाको समेत जघन्य हत्या भयो । घाँटी छिनालिएको र लाश घोप्टो परेको थियो । महिलाका दुबै कान काटिएका थिए, बच्चाको लाश चाहिं उत्तानो परेको थियो । हत्या गरिएका ठाउँ वरपर मोजा लगाएको खुट्टाले रगतमा कुल्चिएको दाग पनि देखिन्थ्यो । पछि पोष्टमार्टमको रिपोर्टमा धारिलो हतियारले काटिएको कुरा उल्लेख गरिएको थियो ।

स्थानीय निर्वाचनताका वापलमा एकजना दमाईको हत्या भएको बताइन्छ । निर्वाचनका क्रममा प्रहरी प्रशासनले उक्त घटनाको अनुसन्धानमा ध्यान दिन नपाएको ठानिन्छ । तर स्थानीय जनतालाई अपराधीका बारेमा जानकारी रहेको चर्चा गरिन्छ। र त्रासका कारण कसैको मुख खुल्न नसकेको बताइन्छ ।

### १.२ जेल

डोटीमा रहेको जेल पनि देशका अन्य जेलहरु भन्दा फरक छैन । स्थानीय अधिकारीहरु यहाँको जेल अन्यत्रको भन्दा राम्रो रहेको दावी गर्दछन् ।

### १.३ गिरफ्तारी / यातना

२०४९ असार २३ गते चिसापानीमा भएको एउटी महिला र नवजात शिशुको हत्या सम्बन्धी हल्ला फिंजिने

बित्तिकै प्रहरीले तुलारामलाई तुरुन्तै रिहा गऱ्यो । तर अपराधी पत्ता लगाउने नाममा प्रहरीले ठूलो धरपकड आरम्भ गऱ्यो । मृतकका आफन्त, छरछिमेकका मानिसहरु र सडक निर्माणमा काम गर्ने मजदूरहरु समेतलाई गिरफ्तार गरियो । तिनीहरुमध्ये अधिकांशलाई निर्मम यातना दिइएको थियो । यातनाका कारण मजदूरहरु त १५-२० दिनसम्म काम गर्न नसक्ने भएका थिए । त्यस क्रममा मृतककी जेठानी दिदी लक्ष्मी भण्डारी र उनका पति अमर बहादुर भण्डारीले अत्यधिक कुटाइ खानु परेको बताइन्छ ।

लक्ष्मी भण्डारी यतिखेर डराउँदै भन्छिन् - "मेरो पति, म र मेरो छोरालाई अहिले फर्किने भनेर भुक्याएर लगे तर १४ दिन थुने । मलाई त्यहाँ पनि सिस्नु लगाउँने पिट्ने र बुटले हिर्काउने काम गरे । बुटले मेरो बच्चालाई समेत लाग्यो । पुरुष प्रहरीले सिकाउने महिला प्रहरीले कुट्ने गर्दथे । आवाज नआओस् भनी मुखमा टेप टाँसी दिन्थे र पिट्थे ।"

"सर्जमिनमा ल्याइ सकेपछि मारेर गहना चाहिं नदिमा बगाइ दिएँ भन्, तैंले इनाम पाउँछेस् भनी फकाउँथे । नगरेको काम कसरी गरें भनुँ ।" - उनी अगाडि बताउँछिन् ।

लक्ष्मी भण्डारी प्रहरी ज्यादतीको वर्णन गर्दै अगाडि भन्छिन् - "पक्राउ पर्दा घरैमा थिएँ । तीन जना पुलिस आई बुझ्नका लागि भनेर लगे । तर बाटोमा थुप्रै आइपुगे । जिब्रोमा बिजुली लगाउँछौं भनेर तार पनि ल्याए । औंलामा पीन पनि हाले । "तेरो घरमा मान्छे मर्ने तैंलाई थाहा नहुने, कि मान्छे देखा कि मैले मारेको भन" भन्दै पानीको ड्रममा चोपेर सिस्नु लगाए । लुगा सबै च्याती दिए । जगल्टा सबै लुछी दिए । इन्सपेक्टर त नगर भन्थे । तर भीम बहादुर भन्ने हवल्दार मोजा लगाएर मारें भन, मिलाउने हामी छँदैछौं, नत्र हाम्रो जागिर जान्छ भन्थ्यो ।"

मृतकका ससुरा बुढाका अनुसार लक्ष्मी प्रहरी कहाँबाट छुटेर आएको तीन महिनासम्म सुन्निएकी थिइन् । उनी २/३ महिनासम्म मान्छेसंग पनि डराउने भएकी थिइन् । मृतकका जेठाजू अमरबहादुरको खुट्टा प्रहरीको यातनाका कारण अझै दुख्ने गर्दछ र हरेक रात उनको खुट्टा सेक्नु पर्ने कुरा पनि बताउँछन् ।

मृतककी सासु र पाँच वर्षीय भतिजा दिनेशबहादुर भण्डारीलाई प्रहरीले संगै पक्राउ गरी लगेको थियो । त्यस्तै मृतकका ससुरालाई सर्जमिनमा हत्या स्वीकार गरी भुक्याएर सही छाप गराउन खोजिएको थियो तर त्यस्तो हुन पाएन । बालक दिनेश भण्डारीले आफ्नो अनुभव बताउँदै भने - "मलाई धेरै गाली गरे, हिंड्न नसके पनि गाली गर्थे । अब पुलिस देखे पनि डर लाग्छ । मेरो कानको मुन्द्रा थुतेर एउटा पुलिसले खल्तीमा राख्यो । म रोएँ, बज्यै पनि रोइन् तर दिएन ।" मृतकका नातेदार छिमेकी २२ वर्षीय रमेश भण्डारी भन्छन् - "पक्राउ परेकाहरु रोएको आवाज नजिकका घरहरुमा सुनिन्थ्यो, आइमाईलाई नाङ्गै बनाएर पिट्यो, दुधे छोरा पनि संगै थियो, उसको निधारमा पनि बुटले लाग्यो, दाग अझसम्म छ । कुनै कानूनी प्रक्रिया पूरा भएन - पूर्जी त दिएन अरु त कुरै छाडौं ।"

उक्त घटनाको अनुसंधान अझै पूरा भएको छैन र हत्यारा पत्ता लागेको छैन । स्थानीय बासिन्दा उक्त हत्याकाण्डमा केही प्रहरीहरु नै संलग्न भएको आशंका गर्दछन् । सोही क्रममा गाउँलेहरु भोलिपल्ट घटना स्थल नजिकै पाइएको सी.पी. जोरा लेखिएको प्रहरीको नेमप्लेटको पनि उल्लेख गर्दछन् । प्रहरी सूत्र चाहिं उक्त नेमप्लेट कुनै प्रहरी जवानले पानी पिउन जाँदा नजिकैको कुवाँ नेर छोडेको आशंका गर्दछन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

०४९ भदौ ५ गते कृष्ण अष्टमीका दिन सदर मुकामको शैलेश्वरी मन्दिरमा अन्य वर्षहरु झैं आयोजित महादेवको परम्परागत जात्राका क्रममा सामान्य झै-झगडा भयो । सोही झगडा बढ्दै गए पछि प्रहरी र स्थानीय युवाहरु बीच भनाभन र अन्त्यमा ढुंगामुढा नै भयो । त्यसपछि लाठीचार्ज मात्र गरिएन, प्रहरीद्वारा बन्द गरिएका ढोकाहरु माथि समेत प्रहार भयो ।

स्थानीय निर्वाचन भन्दा केही अघि नगरपालिकाको नाम सम्बन्धी विवादका कारण दिपायलका युवाहरुले बजार बन्दको आव्हान गरेका थिए । दिपायल सिलगढी वा सिलगढी दिपायल नगरपालिका कुन चाहिं नाम कायम गर्ने भन्ने विवादका कारण भएको अशान्तिका क्रममा प्रहरीले लाठीचार्ज समेत गरेको थियो । सिलगढीतर्फ जाने यातायात नै बन्द गर्ने प्रयास भए पश्चात प्रहरीले टियर ग्याँसको पनि प्रयोग गरेको थियो । उक्त आन्दोलनका क्रममा हवाईफायर समेत भएको थियो । पहिले दिपायल नगरपालिका रही आएकोमा प्रजातन्त्रको आगमन पश्चात सिलगढी दिपायल नगरपालिका नामाकरण गरियो । तर त्यस कुरोको घोषणा हुने बित्तिकै दिपायल बासीहरुले तीब्र विरोध जनाएका थिए । यिनै विरोध कार्यक्रमहरु पश्चात सिलगढी दिपायल र केही गाउँहरु समेत समावेश गरी दिपायल सिलगढी नगरपालिका कायम गरियो ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

"हामी गाउँका सबैलाई चिन्दैनौ, त्यसैले कसले कति धाँधली गऱ्यो थाहा छैन । तर कांग्रेसका केही आधिकारिक व्यक्तिहरु समेतले उनीहरु हारेको बुथमा खटिने कर्मचारीलाई बाँकी नराख्ने बताएका थिए ।" - गत स्थानीय चुनावका क्रममा डोटीमा खटिएका एकजना कर्मचारीले नाम उल्लेख नगरिदिने शर्तमा यसो भने ।

स्थानीय निर्वाचनको प्रसंगमा एमालेका एकजना नेताले बताए - "काणी गाउँमा मिल्ट्री भूमी भएको कारणले जनता भोट हाल्न जानै डराए । कांग्रेसका कार्यकर्ताहरुले टाढैबाट सिपाहीलाई देखाएर उ तिमीहरुलाई काट्न मिल्ट्रीहरु आए भनेको पनि सुनियो ।"

गडसेरामा राष्ट्रिय प्रजातन्त्र पार्टीका एकजना कार्यकर्तालाई कांग्रेसका कार्यकर्ताहरुले एक रात थुनेको पनि बताइन्छ । त्यस्तै बायल र लोली गाउँमा पनि कांग्रेसका कार्यकर्ताहरुका सामु एमालेका एजेन्टहरु अत्यन्त त्रसित देखिन्थे । विपक्षीहरुको सभा तथा कार्यक्रम बिथोल्न खोजेको दोष पनि यहाँका कांग्रेस कार्यकर्ताहरु माथि आइलागेको छ ।

स्थानीय निर्वाचनका क्रममा तोलेनी र डौढ गा.वि.स.मा कांग्रेसका तर्फबाट चुनावमा हस्तक्षेप भएको बताइन्छ । गिरि चौकाका अधिकांश पुरुषहरु रोजगारका निम्ति भारततर्फ लागेका छन् । तर त्यहाँ पनि शतप्रतिशत मत खस्नु र बहुमत कांग्रेसले पाउनुलाई हस्तक्षेप नै ठानिएको पाइयो ।

कतिपय ठाउँमा निर्वाचन-कर्मचारीहरुले प्रत्यक्ष रुपमा कांग्रेसलाई सहयोग गरेको पनि बताइन्छ । बायल र सायलमा पनि राजनीतिक पार्टीहरुले सोझा जनताको अबुझपनको फाइदा उठाए । लाना केदारेश्वर गा.वि.स.को रनकोट र मर्कोटमा एकजना पुजारीले भनेछन् - "कांग्रेसको उम्मेदवारलाई भोट दिए भने म पुज्न दिउँला नत्र विवाह जन्तीमा पनि जाने छैन ।"

दिपायल सिलगढी नगरपालिकाको वडा नं. ५ र ६ को बुथमा पनि केही झै-झगडा भएको थियो । त्यहाँ एमालेका कार्यकर्ता मदनबहादुर भण्डारी माथि कुटपिट भएको पनि बताइन्छ ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

मालिकका जग्गामा छाप्रो हालि बस्ने र मालिकको काम गर्ने डोटीका थुप्रै तल्ला जातिका मानिसहरुको भविष्य छैन । कलेना गा.वि.स.का एकजना ५० वर्षीय वृद्धका अनुसार उनका बाजे नै हाल उनी रहेका मालिककहाँ बस्न आएका थिए । मालिकहरुको तजबिज र दयामा बाँचेका र मालिकले जे अह्रायो त्यही गर्ने यस्ता भूमिहीनहरुलाई यहाँ कमिन भन्ने चलन छ । अर्काको जग्गा खनजोत गरी जिविका चलाउने हलिया परिवारहरु पनि डोटीमा थुप्रै छन् ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

छपाली गा.वि.स.मा एकजना ५८ वर्षीय लोग्ने मानिसले आफ्नो ४८ वर्षीया पत्नीलाई ५२ वर्षीय भाइले बलात्कार गऱ्यो भन्ने मुद्दा दायर गरे । तर भाइलाई तिर्नु पर्ने एकतोला सुनको लोभमा उनले त्यस्तो आरोप लगाएको पनि बताइन्छ ।

डोटीका ग्रामीण इलाकामा तल्लो जातिका भनिने महिलाहरुमाथि यदाकदा यौन अत्याचार हुने गरेको बताइन्छ ।

दिपायल सिलगढी नगरपालिकाको वडा नं. ४ मा सैनिक व्यारेक रहेको छ भने वडा नं. ७ मा पनि श्री नं. ५ वाहिनी रहेको छ । यसै जिल्लाको खप्तडमा पनि वन्यजन्तुको संरक्षणका निम्ति सैनिकहरु तैनाथ गरिएका छन् । साहल क्षेत्र र रिखाडा गाडतिरका महिलाहरु माथि सेनाका जवानहरुद्वारा यौन अत्याचार हुने गरेको बताइन्छ । कति चोटी घाँस दाउरा लिन गएका युवतीहरु निकैबेर हराउने र खोज्न जाने दाजुभाइ काकाहरुले कुटाई खानु पर्ने गरेको पनि देखिन्छ ।

श्री नं. ५ वाहिनी नजिकका राजपुर, कुमालकोट, सलेना, चौड, फलेणी आदि गाउँहरुमा पनि सेनाको आतंक छाएको बताइन्छ । सोही क्षेत्रकी एक महिलाको यस कथाले त्यस्ता थुप्रै कथाहरुको प्रतिनिधित्व गर्दछ ।

"यहाँकी एउटी युवतीले यतिखेर ५ महिनाको गर्भ बोकी रहेकी छन् । तर उनीसंग विहे गर्ने वाचा गरेको सिपाही

उक्त कुरो थाहा पाएको ३ महिना देखि बेपत्ता छ । वाहिनी भित्र सोध्दा त्यहाँ भीम बहादुर भन्ने कोही नभएको बताइन्छ ।"

"गएको माघ - फागुनतिर पहाड जंगलमा सेनाका तीन जवानले एउटी आइमाईलाई घेरेछन् । त्यही बाटो २-४ जना लोग्ने मानिसहरु आएकोले मात्र ती आइमाई बच्न सकिन् ।" - एकजना तल्लो जातिको भनिने महिलाले बताइन् ।

दिपायल नगरपालिका वडा नं. ४ बा थमान सिं दुराको छोराको छैंटीमा सेनाद्वारा महिलाहरु माथि भएको दुर्व्यवहारका कारण स्थानीय युवाहरुले संघर्ष नै गरेका थिए । युवाहरुले ब्यारेक इन्चार्ज लेफ्टिनेन्ट राजेन्द्र गंगोजुलाई सरुवा नगराइ छोडेनन् । त्यस क्रममा युवाहरुले आमरण अनसन नै गरेका थिए ।

### ४.२ जारी, बहुबिवाह, बेउकी, बादी प्रथा

अन्धविश्वास र रुढीवादले डोटीमा नराम्रोसंग जरो गाडेको पाइन्छ । यहाँ कतिपय विधवा वा अविवाहित महिलाहरुलाई बोक्सी भनेर दुःख दिएको पनि देखिन्छ । विवाह भएको केही दिन भित्रै परिवारको कुनै सदस्य मऱ्यो भने नववधुलाई पारिवारिक बहिष्कार गर्ने गरेको घटना पनि डोटीमा देखिएको छ ।

सामान्यत: डोटीको सबै भागमा वादी वा भाँड जातिका मानिसहरु रहेका छन् । यिनीहरुको वास्तविक पेशा माटाका भाँडा बनाउनु र नाचगान गर्नु भए पनि समाजका केही ठूला ठालु भनिनेहरुद्वारा उनीहरु माथि यौन अत्याचार भएको देखिन्छ । वादी जातिका महिलाहरुलाई १५-१६ वर्षको कलिलो उमेरदेखि नै वेश्यावृत्तिमा लाग्न बाध्य पारिने गरेको पनि बताइन्छ ।

डोटीमा जारी प्रथा मात्र प्रचिलित छैन यहाँ बिहे गर्दा केटी पक्षलाई "धन खुवाउने" चलन पनि छ । कतिपय बर पक्ष घर खेत बेचेर बिहे गर्न बाध्य भएको पनि देखिन्छ ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व बिरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

डोटीमा छुवाछुतको समस्या यति छ कि यहाँका तल्लो जातिका भनिने मानिसहरु दोश्रो दर्जाका नागरिक सरह रहेका छन् । जिल्लाको पूर्वी चौकीमा रक्सीले मातेका केही माथिल्ला जातिका भनिने मानिसहरुले आफुलाई तँ सम्बोधन गरेकाले एकजना तल्ला जातिका भनिने मानिसलाई आँसीले टुक्रा टुक्रा पारी काटेको कुरा पनि बताइन्छ ।

यहाँका तल्ला जातिका भनिने मानिसहरुले जुलुश प्रदर्शन पनि गरेका थिए । तर संस्कारका रुपमा गहिरिएर रहेको छुवाछुतको प्रथा यति व्याप्त छ कि तल्ला जातिका भनिने मानिसहरुले चिया खाए पश्चात होटलमा पनि उनीहरुलाई गिलास माभ्न लगाइन्छ । सार्वजनिक मन्दिर, धारा, पँधेरा आदि सबै ठाउँ तल्ला जातिका भनिने मानिसहरुका निम्ति बर्जित छ । तल्ला जातिका भनिने मानिसहरु पढे-लेखेका र योग्यतावान भए पनि उनीहरुलाई होच्याउने गरिएको छ । सिलगढीका एकजना तल्लो जातिका भनिने शिक्षकका अनुसार उनलाई नमस्ते गर्ने विद्यार्थीहरुलाई उनीहरुका अभिभावकहरु गाली गर्दछन् ।

ब्याजखोरीद्वारा पनि यहाँका सोभा बासिन्दाहरु अत्यन्त सताइएका छन् । साहुसंग ऋण लिएर कालान्तरमा घरबार विहिन हुने मानिसहरु यहाँ प्रसस्त पाइन्छन् । ■



# ५. सुदूर पश्चिमाञ्चल

## सेती

# ५.४ बाजुरा

| | | |
|---|---|---|
| जनसंख्या | : | ९२०८३ |
| साक्षरता | : | २७.२ प्रतिशत |
| महिला साक्षरता | : | ९.१ प्रतिशत |
| क्षेत्रफल | : | २१८८ वर्ग कि. मी. |

सेती अञ्चलका पाँच जिल्लाहरुमध्ये बाजुरा दुर्गम र सुगमको दोसाँधको रुपमा रहेको जिल्ला हो । यस अञ्चलका अन्य जिल्लाका तुलनामा यहाँ मानव अधिकार हनन् सम्बन्धी त्यति ठूला घटनाहरु घटेका पाइएनन् ।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

यस वर्ष हत्या / गोलीका उल्लेखनिय घटना प्रकाशमा आएनन् ।

### १.२ जेल

यहाँको जेल भवन साह्रै दयनीय अवस्थामा रहेको छ । १६ जना बन्दी अटाउन सक्ने क्षमता भएको यस जेलमा हाल १४ जना बन्दी रहेका छन् । र ती पनि उपयुक्त ठाउँको अभावमा अति कष्टका साथ बसेका भेटिए । यस जेलमा महिला कक्ष नभएको हुनाले साह्रै कठिनाईको अनुभव गर्नु परेको छ । अधिकांश बन्दीहरु कर्तव्य ज्यान सम्बन्धी मुद्दामा परेका छन् ।

### १.३ गिरफ्तारी / यातना

यस जिल्लाको मुख्य घटना भनेको २०४८ माघ ९ गते बाइबिसे गा.वि.स. निवासी प्रेमबहादुर शाहले प्राप्त गरेको दिपायल देखि बाजुरासम्म मल ढुवानी ठेक्का-पट्टामा भरियाहरूलाई समयमै ज्याला नदिएकोले त्यसबाट उत्पन्न विवादलाई लिएर जिल्लाको सदरमुकाम मार्तडीमा रहेको जिल्ला प्रहरी कार्यालय अगाडि भएको जुलुस र नारावाजी माथि प्रहरीले लाठीचार्ज गरेको थियो । यसबाट थेरैजना घाइते भए र प्रहरीद्वारा धरपकड कार्य शुरु गऱ्यो । कर्णबहादुर थापा लगायतका केही मान्छेलाई प्रहरीले हिरासतमा लियो । हिरासतमा रहेका व्यक्तिहरुमाथि मादक पदार्थ सेवन गरेका प्रहरीले आधा रातमा आई अन्धाधुन्ध कुटपिट गर्ने गर्थे । साथै बन्दीहरुलाई जिब्रोमा चुरोटले पोल्ने, पैतालामा आलपीनले घोच्ने, लिङ्गमा डोरी बाँधी ढुङ्गा तान्न लगाउने जस्ता अमानवीय यातना पनि दिइएको थियो । पक्राउ परेका सबै व्यक्तिहरु उपर सार्वजनिक अपराध अन्तरगत मुद्दा लगाइएको थियो । तर पछि सबैलाई धरौटीमा रिहा गरियो ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

बाजुरा जिल्लामा नेपाल राष्ट्रिय शिक्षक संगठनसंग सम्बद्ध ११० जना भन्दा बढी शिक्षकहरुलाई अपायक पर्ने, विकट क्षेत्रहरुमा सरुवा गरिएको थियो । संगठनसंग सम्बद्ध

शिक्षकहरूलाई बेलाबेलामा मानसिक यातना पनि दिइने गरेको पाईयो ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा दुनियाँवादी फौजदारी २७, सरकारवादी फौजदारी १०, दुनियाँदारी देवानी २९ र ज्यान, जवरजस्ती करणी, बहुविवाह र ठगी सम्बन्धी ९ बटा मुद्दा दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्वासी समस्या

बाजुरा जिल्लामा बासउठ्ठाको ठूलो समस्या रहेको छ । विभिन्न कानूनी कमी-कमजोरीहरु देखाएर स्थानीय ब्रम्हटोल गा.वि.स. वडा नं. ९ ताँप्राका बासिन्दाहरुलाई बास उठ्ठा गर्न खोजिएको थियो ।

## ४. महिला अधिकार

संविधानले प्रत्याभूति गरेको महिला हक र अधिकारहरु यस जिल्लामा अलि बढी नै कुण्ठित रहेको पाइयो । यहाँका अधिकांश पुरुष दिउँसोभरी तास जुवा खेलेर दिन कटाउँछन् भने घरका महिलाहरु सकी नसकी विहान उठेदेखि बेलुकीसम्म घरधन्दामा व्यस्त रहने गर्दछन् ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस वर्ष यस शीर्षकको उल्लेखनीय घटना प्रकाशमा आएन ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

जारी प्रथा यस जिल्लामा व्यापक छ । यो प्रथाले यहाँ व्यापारको रुप लिएको हुनाले जारी सम्बन्धी घटनाहरु अनगिन्ती घट्ने गरेका छन् ।

यस जिल्लामा देउकी र बादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ५. सुदूर पश्चिमाञ्चल

## सेती

## ५.५ बझाङ

| | | |
|---|---|---|
| जनसंख्या | : | १३९१७८ |
| साक्षरता | : | २७.२ प्रतिशत |
| महिला साक्षरता | : | ७.४ प्रतिशत |
| क्षेत्रफल | : | ३४२२ वर्ग कि. मी. |

सेती अञ्चलका पाँच जिल्लामध्ये दुर्गम क्षेत्रमा पर्ने बझाङ जिल्ला गरीबी, पछौटेपन, रुढीवादले ग्रस्त समाज भएकोले यहाँ मानव अधिकार हनन् हुनु कुनै नौलो घटना होइन ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

हत्या, गोली र दमनका उल्लेखनिय घटना यस वर्ष घटेको पाइएन ।

#### १.२ जेल

यहाँको जेलको क्षमता २८ जनाको छ । हाल यस जेलमा १९ जना बन्दीहरु छन् । जेलबाट प्राप्त भौतिक सुविधालाई दृष्टिगत गर्दा सन्तोषजनक छैन । जेलमा महिला कक्ष नहुनु प्रमुख समस्या देखियो ।

#### १.३ गिरफ्तारी / यातना

प्राय: गरेर राजनैतिक प्रतिशोधको भावनाले यस्ता घटनाहरु घट्ने गर्दछन् । २०४९ पुसमा स्थानीय नेताहरुका दवाबमा चैनपुर गा.बि.स. वडा नं. ८ बस्ने फुंगे खड्काले सुकोट गा.बि.स. वडा नं. २ बस्ने गोरख बहादुर थापा, कृष्ण बहादुर थापा र रामचन्द्र थापामाथि आफूलाई खुकुरी हानी ज्यान मार्ने उद्योग गरेको भनी ज्यान मार्ने मुद्दा लगाएका थिए, तर उक्त जाहेरीवालाको प्रवृत्ति हेर्दा सो मुद्दा सार्वजनिक अपराध अन्तर्गत चलाउनु पर्ने देखिन्थ्यो । साथै सोही मुद्दामा वर्ष १४ का रामचन्द्र थापा अद्यापि थुनामा रहेको पाइयो ।

प्रहरीले विभिन्न अपराधमा पक्राउ परेकाहरुलाई बयान लिनका लागि यातना दिने गरेको पाइयो । तर जेलमा पुगेपछि बन्दीहरुलाई त्यस्तो विभत्स यातना दिएको भेटिएन ।

### २. मौलिक अधिकार

#### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

#### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिँदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा ३०८ वटा मुद्दाहरु दर्ता भएका थिए, जसमध्ये ज्यान मार्ने उद्योग, जवरजस्ती करणी, बहुविवाह र सार्वजनिक अपराध सम्बन्धी मुद्दाहरु प्रमुख छन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

बझाङ जिल्लाका जग्गा जमिनहरु यस वर्ष नापी भएकोले नापी बदर सम्बन्धी मुद्दाहरु बढी दर्ता भएको देखियो ।

## ४. महिला अधिकार

देशको संविधानले महिलालाई समान अधिकार दिए तापनि अशिक्षा, अज्ञानता, चेतनाको अभावमा महिलाहरु समाजमा आफै पिछडिएका छन् । यस जिल्लाका पुरुषहरुको काम भनेको जाँड रक्सी खानु र दिउँसोभरी तास-जुवा खेल्नु हो । यसले गर्दा पनि यहाँका महिलाहरुले अझ बढी परिश्रम गर्नु परिरहेको छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

बलात्कार सम्बन्धी घटनाहरु यस जिल्लामा अधिक छन् । २०४९ असोज ९ गते सैनपाल गा.बि.स. वडा ३ बस्ने वर्ष १२ की जमकला जप्रेल माथि भएको बलात्कार आम चर्चाको विषय बनेको थियो । त्यस्तै लपटा गा.वि.स. वडा नं. ४ बस्ने कोहली कमेनीको गर्भपतनको मुद्दा पनि यहाँ स्मरणीय रहेको देखियो । यस्तै गरी बझाङका केही जातीहरुमा विवाह गर्दा छोरी दिए वापत १० हजार देखि २५ हजार सम्म रकम लिने चलन रहेको छ भने कहिले काहिं छोरी १० हजारमा एउटालाई दिने निर्णय गरेता पनि अर्कोले १५ हजार दियो भने थोरै रकम दिनेलाई छोरी नदिएर धेरै रकम दिनेलाई छोरी दिने गर्दछन् । यसरी छोरीलाई लिलाममा राख्ने चलन बझाङमा रहेको छ ।

### ४.२ जारी, बहु विवाह, देउकी, बादी प्रथा

यस जिल्लामा जारी, देउकी र वादी प्रथा देखा परेको छैन । त्यस्तै बहु विवाह पनि यहाँ उल्लेख्य समस्याको रुपमा प्रकट भएको छैन ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा घटेका हत्या र ज्यान मार्ने उद्योग गर्ने अभियुक्तहरु प्रायः फरार भएका तथ्यहरु फेला परे । साथै यस जिल्लाको अर्को विडम्बना के हो भने यो वर्ष पनि यस जिल्लाको जनसंख्याको ६० प्रतिशतभन्दा बढी मानिस भुकमरीको चपेटामा परेका थिए ।

■



# ५. सुदूर पश्चिमाञ्चल

**महाकाली**

# ५.६ कञ्चनपुर

| | | |
|---|---|---|
| जनसंख्या | : | २५८५०८ |
| साक्षरता | : | ४४.१ प्रतिशत |
| महिला साक्षरता | : | २५.१ प्रतिशत |
| क्षेत्रफल | : | १६१० वर्ग कि. मी. |

सुदूर पश्चिमाञ्चलमा पर्ने कञ्चनपुरमा अझ पनि बँधुवा मजदूरी प्रथा व्यापक रुपमा कायम रहेको छ। चेतनाको अभाव रहेको यस जिल्लाका बासिन्दा मानव अधिकारका बारेमा धेरै हदसम्म अनभिज्ञ देखिन्छन्।

## १. बाँच्न पाउने अधिकार

### १.१ हत्या / गोली

०४९ वैशाख ६ गते राती ११ बजे कृष्णपुर गा.वि.स. वडा नं. ४ स्थित माध्यमिक विद्यालयको प्राङ्गणमा लवकुश नाटक हेरेर बसिरहेका दर्शकहरु माझ एकाएक होहल्ला मच्चियो। एउटा ट्रयाक्टर दर्शकहरु माझ आएर वेन्चमा ठोकिँदै रोकियो। त्यस पछि जनताले ट्रयाक्टर ड्राइभर र ट्रयाक्टरलाई प्रहरी चौकीतिर लगियोस् भनी अ.स.ई. टेक बहादुर चन्द समक्ष अनुरोध गरे। तर उनले आफै ट्रयाक्टर हाँकी अन्यत्र लगी राखे। उपस्थित जनसमूदायले त्यस कुरा प्रति विरोध जनाए र एउटा जुलुस नै कृष्णपुर चौकीतिर लाग्यो। जुलुस देख्ने बित्तिकै कुनै चेतावनी पनि नदिइ अ.स.इ. टेक बहादुर चन्दको नेतृत्वमा प्रहरीले ७ राउण्ड हवाई फायर गऱ्यो।

### १.२ जेल

कंचनपुर जेलको स्थितिका बारेमा यहाँका कुनै पनि राजनीतिक वा सामाजिक व्यक्तिहरु संतोष व्यक्त गर्दैनन्। हाल १११ जना बन्दीहरु रहेका यस जेल भित्र स्वास्थ उपचारको पनि राम्रा व्यवस्था नभएको देखिन्छ। बन्दीहरुलाई कारागारको जग्गामा विना पारिश्रमिक काम लगाइन्छ। यस जेलमा पनि प्राय जसो क्षमता भन्दा बढी बन्दीहरु राखिने गरिन्छ।

### १.३ गिरफ्तारी / यातना

०४९ वैशाख ६ गते राती ट्रयाक्टर काण्डमा घाइतेहरुलाई प्राथमिक उपचार गर्ने रेडक्रसका विद्यार्थीहरु नरेन्द्र ओली र कर्ण हमाल केही बेर पछि अन्य जनसमूदायसंगै प्रहरी चौकी पुगेका थिए। उनीहरु दुवैले प्रहरीहरु समक्ष घाइतेलाई के गर्ने ? भनी सोधे पछि घाइतेको उपचार सम्बन्धी कुरो गरिएन तर प्रहरीले दुवैलाई प्रहरी चौकी तोड्न आएको अभियोग लगाएर पक्राउ गरे। त्यस पछि तत्कालै जीप मगाएर दुवैलाई हतकडी सहित सदरमुकाम महेन्द्रनगर तर्फ चलान गरियो। त्यस बखत ३ जना घाइते भएका थिए भने ४ जनालाई गिरफ्तार गरिएको थियो। पक्राउ गरिएकाहरुलाई पक्राउ गरिएको ३ दिन पछि मात्र धुनुवा पूर्जी दिइएको थियो। उनीहरुलाई सार्वजनिक अपराध ऐन अन्तर्गत मुद्दा लगाइएको थियो र प्रजिअद्वारा प्रत्येक व्यक्तिसंग साढे पन्ध सय धरौटी लिइ १९ औं दिनमा रिहा गरिएको थियो।

पक्राउ परेकाहरु मध्ये नरेन्द्र ओलीलाई अ.स.ई.ले डि.एस.पी.को उपस्थितमा बेहोस् हुने गरी पिटेका थिए। पक्राउ परेका शेर बहादुर भारतीको हातको बुढी औंलामा पीन घोचिएको थियो।

सरकार बादी रहेको मुद्दामा लगभग सबैजना यातना दिएकै बताउँछन्। कुट्ने, पिट्ने, नङमा पीन घोच्ने आदि

गरिन्छ भन्छन् । यहाँका प्रहरी अधिकृतहरु भन्दछन् -

"साधारणतया हप्काउने गरिन्छ । तर कुनै कुनै मानिसलाई तर्साउन हिर्काउनु पनि पर्दछ ।"

०४९ भदौ ११ गते महेन्द्रनगर नगरपालिका वडा नं. ९ स्थित एक चिया पसलमा राती साढे नौ बजे रक्सीको नशाले चूर भएका एकजना असईले पसलेको छोरालाई पिटे पछि अन्य ग्राहकहरु क्रुद्ध भए । उनीहरुले असईलाई पनि केही पिटे र उनलाई बाँधेर महेन्द्रनगर बजारतर्फ लैजान थाले । त्यसपछि गाउँलेहरुले असईले माफी मागे पश्चात छाडी दिए । तर



कंचनपुरका कमैया परिवार

फोटो: मर्न पुरुष

भोलि पल्ट विहान ६ बजे नै ती असइ इन्सपेक्टर सहित आइपुगे र गाउँलेहरुलाई पक्राउ गर्न थाले । पक्राउ परेका ७ जनालाई उग्रवादीको आरोप लगाउँदै निकै पिटिएको थियो । उनीहरुलाई सार्वजनिक अपराध ऐन अन्तर्गत थुनिएको थियो । हाल उनीहरु तारिखमा छुटेका छन् ।

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद बिबाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिंदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यहाँका कानूनविद्हरु न्याय सम्पादन गर्दा कुनै दवाब पर्दैन भन्ने बताउँदै भन्दछन् । - "न्याय सम्पादन गर्दा सबुत प्रमाणको आधारमा गर्ने परम्परा र कानूनी वाध्यता पनि छ । तर टाठाबाठा व्यक्तिहरु सबुत प्रमाणहरु जुटाउन सक्षम हुन्छन् । उनीहरु आफूलाई अप्ठ्यारोमा पार्ने सबुत प्रमाणहरु लुकाउन पनि सिपालु हुन्छन् । सोझासाझा, निर्धा र कमजोर मानिसहरु सबुत प्रमाणहरु जुटाउन जान्दैनन् र सजाय पाउँछन् ।

प्रहरी सूत्रका अनुसार कार्वाही गर्न वा नगर्न नेपाली कांग्रेस र नेपाल कम्युनिष्ट पार्टी (एमाले) दुवै पक्षबाट दवाब पर्ने गर्दछ ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

इन्सेकको सर्भेक्षण अनुसार यस जिल्लामा कमैया प्रथाको प्रचलन ब्याप्त छ । कैलाली बर्दिया र यस जिल्लामा गरी करिब अठार हजार कमैयाहरु रहेका छन् । ती मध्ये एकतीस प्रतिशतले सौंकी साहूसंग वा ऋण लिएका छन् । सौंकी लिएका कमैयाहरु पशुतुल्य जीवन ज्यून बाध्य हुन्छन् । कंचनपुरका कमैयाहरु मध्ये १४ प्रतिशत कमैयाहरु कति पुस्ता देखि कमैया भएको हो भन्ने बताउन पनि सक्दैनन् । लगभग ४८ प्रतिशत कमैयाहरु थारु जातिका छन् ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

बाइसी बचुवा गा.वि.स.का रुस्तम दंगौराले आफ्नी छोरी रिक्की वा रिथिया दंगौरालाई रु. तीन हजार र एक किलो मासुमा बिक्री गरे । छोरीको बिहे गर्दा पैसा लिएर छोरीलाई बिक्री गर्ने चलन यहाँका थारु जातिमा व्याप्त छ । ९ वर्षीया रिकीलाई १२ बर्षका डक्कु दंगौरासंग बिहे गरिदिइएको थियो । अहिले रिक्कीकी सासु भन्दछिन् । - "मैले पैसा असुल गर्न यो केटीलाई छोराका लागि ल्याएकी हुँ । मेरा पैसा फिर्ता गरिदिए म यो केटीलाई उसैको घर पठाइ दिन्छु ।"

### ४.२ जारी, बहुबिवाह, बेउकी, बाबी प्रथा

यस जिल्लामा बहुविवाह उल्लेख्य समस्याका रुपमा देखा परेको छैन । झलारी गा.वि.स. अर्जुनी तिर कहिलेकाही आंशिक रुपमा वदिनीहरुले बसोबास गरेको देखिन्छ । तर उनीहरु पुरानो पेशालाई परित्याग गरिसकेको बताउँछन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व बिरुद्धको अधिकार

महेन्द्र नगरपालिका वडा नं. २ उल्टाखामका एकजना शिक्षक कहाँ १२ वर्षीय राजु दंगौरा र उसको १०-११ वर्षे भाइ राजाराम विहान ४ देखि राती ८-९ बजेसम्म निरन्तर काम गरिरहन्छन् । उनीहरुका बाबु पनि बाँचुन्जेल तिनै साहुकहाँ काम गर्ने गर्दथे र उनीहरु पनि त्यहीं कमैया बन्न पुगे । गरीब-गुरुवाले अड्को पड्को पर्दा लिएको सौंकी वा ऋणलाई जालसाजी गरी बढाएर उनीहरुलाई दास तुल्याउने साहुहरु यहाँ थुप्रै देखिन्छन् । राजु दंगौराले जस्तो अमानवीय व्यवहार यहाँका सोझा थारुहरुले दिनहुँ भोग्नु परेको देखिन्छ ।

### ५.२ अन्य अमानवीय व्यवहार



# ५. सुदूर पश्चिमाञ्चल

## महाकाली

## ५.७ डँडेलधुरा

| | | |
|---|---|---|
| जनसंख्या | : | १०४४४९ |
| साक्षरता | : | ३८.९ प्रतिशत |
| महिला साक्षरता | : | १४.४ प्रतिशत |
| क्षेत्रफल | : | १५३८ वर्ग कि. मी. |

महाकाली अञ्चलमा पर्ने डँडेलधुरा नेपालका अत्यन्त विकट जिल्लाहरु मध्ये पनि एक हो । पछौटेपन र रुढीग्रस्त समाज भएकोले यहाँका बासिन्दाहरु अधिक मात्रामा मादक पदार्थ सेवन गर्ने हुनाले त्यसबाट सिर्जिएका साधारण झगडा र कुटपीट आदि नै यहाँका मानव अधिकार हननका प्रमुख घटनाहरु हुन् ।

### १. बाँच्न पाउने अधिकार

संविधानले सबै नेपालीलाई सम्मानपूर्वक बाँच्न पाउने अधिकारको ग्यारेण्टी गरेता पनि यस जिल्लामा व्याप्त अशिक्षा, अज्ञानता र गाउँघरमा धनीमानी, ठूलाठालु, सामन्तीहरुको शोषणले गर्दा यी अधिकारहरु व्यवहारमा निर्धक्कताका साथ लागू भएको देखिंदैन ।

#### १.१ हत्या / गोली

एक त अति कम आबादी भएको जिल्ला, त्यसमा पनि पुरातन, रुढीवाद र अन्धविश्वासले ग्रस्त समाज भएको हुनाले यहाँ राजनैतिक चेतनाको कुनै गुञ्जाइस देखिन्न । यहाँ हत्या र गोली काण्डका घटनाहरु घटेनन् ।

#### १.२ जेल

यस जिल्लामा जेलको स्थिति ठीकै देखिन्छ । यहाँ छिमेकी जिल्ला बैतडीबाट पनि बन्दीहरु ल्याइने हुनाले ८ जना बैतडीबाट र १२ जना यस जिल्लाका गरी कुल २० बन्दीहरु यस जेलमा छन् । सम्बन्धित निकायका अधिकृतहरुले बराबर जेल निरीक्षण गर्ने हुनाले नियमानुसार बन्दीहरुले पाउनु पर्ने सुविधा पाएका छन् ।

#### १.३ गिरफ्तारी / यातना

यस जिल्लामा गिरफ्तारी र यातनाको नाममा मादक पदार्थ सेवन गर्ने व्यक्तिहरुलाई पक्राउ गरी उनीहरुलाई विभिन्न यातना दिनुका साथै प्रहरी कार्यालय लिपपोत र लुगाहरु धुन लगाउने गरेको देखिन्छ ।

यस वर्षको विजयादशमी र तिहार सकेर घरबाट शम्भु कन्स्ट्रक्सनमा काम गर्न फर्केका यज्ञनाथ काफ्ले लगायत केही मजदूरहरुलाई आसिग्राम गा.वि.स. वडा नं. ६ मातकाडा भन्ने बजारमा सादा पोशाक लगाएका प्रहरीले आपसमा वाद विवाद भएपछि सार्वजनिक अपराधको आरोपमा पक्राउ गरी अमानवीय यातना दिएका थिए ।

### २. मौलिक अधिकार

यस जिल्लामा राजनैतिक स्वतन्त्रता प्रायः शून्य छ । गाउँका ठूलाठालुले जता भन्यो त्यतै लाग्नु पर्ने गाउँलेहरुको बाध्यता देखिन्छ ।

स्वतन्त्र, निष्पक्ष चुनावको नाममा यहाँ राजनैतिक पार्टी सिद्धान्त र विचार भन्दा पैसाको भूमिका अहं हुने गरेको छ ।

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

यस जिल्लामा व्याप्त गरिबी पछौटेपन र चेतनाको अभावमा जिल्लावासीहरुले उपरोक्त न्यायिक अधिकारहरु उपभोग गर्न सकेका छैनन् ।

यस वर्ष यहाँको जिल्ला अदालतमा देवानी, फौजदारी, दुनियावादी, सरकारवादी र विशेष अदालत आदिबाट आएका गरी ७० वटा मुद्दाहरु दर्ता भएका थिए ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लाको जोगबुढा गा.वि.स.मा पर्ने आमपानीमा ५ परिवार, खलंगा गा.वि.स. बागबजारमा १ परिवार कैयौं वर्षदेखि सुकुम्बासीका रुपमा रहेका छन् । उनीहरुले हालसम्म जग्गा जमिनको लालपूर्जा पाएका छैनन् ।

## ४. महिला अधिकार

यस जिल्लामा महिला अधिकार नेताहरुको नारा र भाषणमा मात्र सीमित रहेको देखिन्छ ।

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

यस जिल्लाको पूर्वी भाग समायलको डाँडावनतिर चेलीबेटी बेच्ने प्रचलन रहेको छ । बलात्कारका घटना यहाँ सार्वजनिक रुपमा घटेको देखिएन ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

यहाँ जारी प्रथा सामान्य रुपमा छ । जिल्लाको दक्षिणी भाग पलगदीमा जारी प्रथा अधिक देखिन्छ । बहुविवाह पनि यहाँ सामान्य देखिन्छ । जिल्लामा खास गरेर कर्मचारीहरुले बढी मात्रामा बहुविवाह गरेका छन् । जसले गर्दा यहाँ यस प्रथालाई प्रोत्साहन दिइएको प्रतीत हुन्छ । देउकी प्रथा यहाँ त्यत्ति नै व्यापक छ । देवल गा.वि.स. वडा नं. २ सुजराउल भन्ने ठाउँमा देउकीका १२ परिवारहरु रहेका छन् । देउतालाई केटीहरु चढाई देउकी बनाउने प्रथामा हिजोआज ह्रास आएको देखिन्छ । देउकी परिवारले आफूलाई खड्का लेख्ने गर्दछन् । अधिकांश रावल परिवारको बसोबास भएको यस क्षेत्रमा देउकीहरुलाई हेयको दृष्टिले हेरिन्छ भन्ने धारणा रामचन्द्र देउका (खड्का) व्यक्त गर्दछन् । रामचन्द्र देउका (खड्का) का अनुसार हाल देउकी प्रथा अन्त्य गर्न सम्पूर्ण चेतनशील देउकाहरु एकजुट भएर लागिरहेका छन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

यस जिल्लामा दासत्वको समस्या उल्लेखनीय रुपमा रहेको पाईदैन ।

### ५.२ अन्य अमानवीय व्यवहार

यस जिल्लामा लोप हुँदै गैरहेका राउटे जाती बसोबास गरेको पाइन्छ । जोगबुढा गा.वि.स. वडा नं. १ आमपानीमा १० परिवार राउटेहरु बस्तछन् । त्यस्तै शीर्ष गा.वि.स.मा २० परिवार राउटेहरु बस्तछन् । यिनीहरु आफूलाई रजवार जातले चिनाउँछन् । कन्दमूल गिठ्ठा भ्याकुर, तरुल खाएर जीविकोपार्जन गर्ने यी जातिहरु झिलिमिली लुगा लगाएका मान्छे देखे भने जंगल पस्ने गर्दछन् । सम्बन्धित निकायबाट उचित सम्बर्द्धन सहयोग नपाएमा यो जाति दिन प्रतिदिन लोप हुँदै जानेछ भन्ने धारणामा जिल्लावासीहरु एकमत देखिन्छन् ।



# ५. सुदूर पश्चिमाञ्चल

## महाकाली

## ५.८ बैतडी

| | | |
|---|---|---|
| जनसंख्या | : | २००२२९ |
| साक्षरता | : | ३८.३ प्रतिशत |
| महिला साक्षरता | : | १५.१ प्रतिशत |
| क्षेत्रफल | : | १५१९ वर्ग कि. मी. |

सुदूर पश्चिमाञ्चलमा अवस्थित बैतडी विकट र दुर्गम जिल्लाका रुपमा चिनिन्छ । पहाडै पहाड भएको यो जिल्ला अन्धविश्वास र रुढीवादको पनि नराम्रो शिकार भएको देखिन्छ । वर्षौं पहिले यसै जिल्लाका दशरथ चन्दले नागरिकहरुका निम्ति भएको राणा विरोधी आन्दोलनमा आत्म बलिदान गरेका थिए। तर बैतडी आज पनि मानव अधिकार चेतनाबाट निकै टाढा रहेको देखिन्छ । त्रिभूवन विश्व विद्यालयको एउटा पनि आंगिक क्याम्पस नरहेको यो जिल्ला नेपालमा देउकी प्रथाका लागि सबभन्दा अगाडि रहेको छ ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या / गोली

यस वर्ष बैतडी जिल्ला अदालतमा भवितव्य र कर्तव्य गरी कूल १६ वटा ज्यान मुद्दाहरु दर्ता भएका थिए। अदालतको एक सूत्रका अनुसार आत्महत्याका रुपमा देखा परेका घटनाहरुका बारेमा पनि यकिनका साथ केही भन्न गाह्रो छ । एकजना कानून विशेषज्ञ भन्दछन् - "पेटमा वा शरीर को अन्य भागमा घाउ चोट पटक देखिदैन, घाँटीमा गहिरो डाम भेटिदैन र झुण्डिएको ठाउँमा मृतकको खुट्टाले भुई छोइरहेको हुन्छ, त्यस्तो अवस्थामा आत्महत्या नै हो भनेर कसरी भन्न सकिन्छ ।"

जिल्ला प्रहरी कार्यालयका अनुसार रक्सी सेवन पश्चात हुने झै झगडा यहाँ बढी मात्रामा देखिएका छन् । कतिपय बेला त्यस्तै झै झगडाका क्रममै हत्या समेत हुने गर्दछ ।

#### १.२ जेल

बैतडी जेलको अवस्था दयनीय रहेको कुरामा यहाँको प्रशासन र प्रतिपक्षी राजनीतिज्ञहरु सबैको मतैक्य पाइन्छ । कूल २५ जना अटाउन सक्ने यहाँको जेलमा हाल ४२ जना बन्दीहरु राखिएका छन् । बन्दीहरुलाई "अपराधमा भावनात्मक परिवर्तन" नामक पुस्तक सोही पुस्तकका लेखक दिनेश न्यौपानेले वितरण गरेका थिए । तर पछि गृहमन्त्रालयबाट जफत गर्ने निर्देशन आएको भनी उक्त पुस्तक सबैबाट खोसियो ।

#### १.३ गिरफ्तारी / यातना

यहाँको प्रहरी प्रशासन पक्राउ परेका मानिसहरुलाई यातना दिइने गरेको कुरा अस्वीकार गर्दछ । तर यहाँ प्रहरीसंग अनुसंधानका निम्ति कुनै साधन नभएकोले यातना अस्वभाविक कुरो होइन भन्ने नेताहरु पनि रहेका छन् ।

*३९ वर्षीय चन्द्र सिंह कार्कीलाई ०४८ असार ५ गते एक जना विद्यार्थीको हत्या गरेको अभियोगमा पक्राउ गरिएको थियो । "मलाई लगातार चार दिनसम्म कुटपीट गरी असार ९ गतेका दिन साबित बयानमा ल्याप्चे र सही गर्न लगाइएको थियो । मलाई पक्राउ पूर्जी असार ५ गते पनि पुरानो मिति राखेर सोही दिन बुझाएको थियो ।" - उनी भन्दछन् । कार्की*

*प्रहरी हिरासतमा सिस्नो लगाइने, कठबाँस र बुट्ले पिटिने मात्र होइन औंलामा पीन समेत घोच्ने गरेको कुरा बताउँदछन् । कार्कीका अनुसार उनलाई उल्टो भुण्ड्याएर पनि पिटिएको थियो । जुंगा र कपाल तान्ने, मलद्वारमा लठ्ठी कोच्ने यातना समेत पाएको दावी गर्ने कार्की भन्दछन् - "राती ८ बजे देखि २/३ बजेसम्म कुट्ने-पिट्ने गर्दथे । उनी हाल बैतडी जेलमा छन् र उनले आफू निरपराधी भएको दाबी गर्दै पटक पटक गर्दै ४४ दिनसम्म भोक हडताल गरी सकेका छन् । उनी अपराधी कोही अरु नै भएको दावी गर्दै त्यस अपराधी माथि कार्वाही गरियोस् भन्ने माग गर्दछन् ।*

दूर संचार शाखा बैतडीका पिउन किसन सिंह बोहोरालाई उनको भाईसंगै ०४९ वैशाख २२ देखि ३० गतेसम्म पक्राउ पूर्जी पनि नदिइ हिरासतमा राखिएको थियो । प्रहरी हिरासतमा हातमा हत्कडी लगाइ उनीहरु दुबै दाजुभाईलाई निकै पिटिएको बताइन्छ । किसन सिंह बताउँछन् - "हामीलाई राती ८ बजेदेखि ११-१२ बजेसम्म लगातार पिटिन्थ्यो ।"

०४९ कार्तिक ४ गते लामाखेल स्थिति घरै नजिक बारीमा मृत अवस्थामा फेला परेकी आफ्नै पत्नीको हत्यारा भएको अभियोगमा हाल बैतडी जेलमा रहेका करणाकर पन्तलाई पनि तीव्र यातना दिइएको बताइन्छ । "प्रहरी थानामा मलाई गर्न सम्म कुटपीट गरे । मलाई उल्टो भुण्ड्याएर तल खुर्सानी बलियो, मेरो शरीरमा सिस्नो पानी लगाइयो, लामा लामा लठ्ठीले कुटियो ।" - उनी बताउँदछन् । उनी आफ्नो नङमा पीन घोचिने गरेको पनि बताउँछन् । पन्तका अनुसार उनलाई एक सातासम्म यातना दिइएको थियो ।

आफ्नै पत्नीलाई मारेको कुरा स्वीकार गर्ने ३६ वर्षीय रतन सिंह महरा यतिखेर बैतडी जेलमा राखिएका छन् । आफूलाई पक्राउ गरिएको ५-६ दिन पश्चात मात्र पक्राउ पूर्जि दिइएको बताउने महरा भन्दछन् - "मलाई सबभन्दा बढी इन्सपेक्टरले पिट्यो, उसलाई त सम्झयो कि अझै पनि शरीर काँप्छ ।"

## २. मौलिक अधिकार

### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णत: उपभोग गर्न सकेका छैनन् ।

### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, वाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन । स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन ।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

"प्रजातान्त्रिक मुलुकमा न्यायालय स्वतन्त्र हुन्छ । तर यहाँ त्यति पनि छैन ।" - बैतडीका केही प्रतिपक्षका राजनीतिक कार्यकर्ता यस्तो पनि भन्दछन् । तर अर्ध न्यायिक निकायहरुका साथै सार्वजनिक चासोका कामहरुमा सत्तापक्षको दवाब पर्ने गरेको कुरामा भने धेरैको सहमति पाइन्छ । स्थानीय प्रशासन र प्रहरीका मानिसहरु कामका दौरान सबै राजनीतिक पक्षको दवाब सहनु पर्ने बताउँछन् । "अनावश्यक ढिलाइ गर्ने देशभरका अदालतको प्रकृयाबाट यहाँको न्यायिक निकाय पनि अछूतो रहन सकेको छैन ।" - एकजना स्थानीय कानून व्यवसायी यस्तो धारणा व्यक्त गर्दछन् ।

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

यस जिल्लामा भूमिहीन तथा सुकुम्बासी समस्या त्यति विकराल रुपमा देखिदैन ।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

बैतडीको पुरचौडी क्षेत्रमा छोरीको किनबेच गर्ने चलन रहेको देखिन्छ । खेतीपातीको काम गराउन, छोरा जन्माउन वा अर्को बिहे पनि गरे भन्ने सामाजिक धाक जमाउन समेत अर्काकी छोरीको खरिद गर्ने चलन रहेको देखिन्छ । त्यसरी खरिद गरिएका केटीलाई कतिले त रक्सी बनाउन र वेश्यावृत्ति गराउन समेत लगाएको पाइन्छ । हाल ५-६ हजार देखि २० हजारसम्म छोरीबेटीको किनबेच गर्ने गरेको देखिन्छ । चेली बेच्ने चलन मूलत: क्षेत्री जातिमा देखिने

गरेको भए पनि ठाउँ ठाउँमा अन्य जातिका मानिसहरु पनि यस संस्कारबाट प्रभावित भएको देखिन्छ । चेलीको किनबेच गरिंदा लिने दिने काम गोप्य रुपमा गर्ने गरिन्छ । कतिपयले देखाउन कै लागि पनि कन्यादान गर्ने गर्दछन् ।

### ४.२ जारी, बहुविवाह, देउकी, बादी प्रथा

वैतडीमा जारी प्रथा अद्यापी कायम रहेको देखिन्छ । खासगरी क्षेत्रीयहरुमा जारी प्रथाले गहिरो जरो गाडेको बताइन्छ ।

यस जिल्लाका अधिकांश लोग्ने मानिसहरु "मर्दकी दशौटी" भन्ने पुरातन मान्यताबाट ग्रसीत रहेका देखिन्छ । कतिपयले काम लगाउने उद्देश्यले दोश्रो वा तेश्रो विहे गरेको पाइन्छ ।

संभवत हाल नेपालमा देउकी प्रथाले सबभन्दा बढी प्रभावित तुल्याएको जिल्ला वैतडी नै हो । भगवतीको सेवा गर्न चढाइएको नाममा कन्या केटीलाई अग्नी साक्षी राखी देवतामा अर्पण गर्ने चलन यहाँका अधिकांश भगवती मन्दिरहरुमा देखिन्छन् । त्यसरी चढाईदा केटीको कपालमा तेल र सिन्दूर हालिएको हुन्छ । निर्जिव देवतालाई अर्पीत गरिएका त्यस्ता अबोध बालिकाहरु उमेर चढ्दै गए पश्चात यौन शोषणको शिकार हुन पुग्दछन् । देउकी माथिको यौन संसर्गले यहाँको समाजमा मान्यता नै पाएको छ भन्दा पनि त्यति फरक पर्दैन । तर देउकीहरुबाट जन्मिने केटाकेटीहरुको पालन पोषण भने कसैको जिम्मेवारी भित्र पर्ने गर्दैन ।

आज पनि रातारात गरेर मन्दिरमा देउकी चढाउने गरेको बताइन्छ । आज पनि धनाढ्यहरु अरुको छोरी किनेर मन्दीरमा बेच्ने गर्दछन् भन्ने कुरा यहाँका बासिन्दाहरु बताउँदछन् ।

पंचायतीकालमा देउकीहरुको संख्या सबभन्दा सघन रहेको मेलौली गाउँमा उनीहरुको लागि एउटा घरेलु उद्योगको स्थापना गरिएको थियो । तर त्यस उद्योगलाई "राम्री केटी छान्ने ठाउँ" पनि भन्ने गरिन्थ्यो । त्यस बेला वैतडीका देउकीहरु सरकारी कर्मचारीहरुद्वारा ठूलो यौन शोषणमा परेका थिए । देउकीहरुको उद्धार गर्ने नाममा संचालित कार्यक्रमहरुमा समेत उनीहरुको शरीरको शोषण नै हुने गरेको थियो । तर यहाँका बासिन्दा त्यति बेला केही देउकीहरुलाई प्रहरीमा लिइएको, केहीको सामूहिक विहे सम्पन्न गरि दिइएको वा केही देउकीका सन्तानलाई काठमाण्डौका बोर्डिङहरुमा पढ्न पठाइएको कुरा पनि सम्फन्छन् । हाल ती सम्पूर्ण कार्यक्रमहरु बन्द गरिएका छन् । आज पनि देउकी चढाइने क्रम गोप्य रुपमा जारी रहेको बताइन्छ । अहिलेको स्थिति के छ भने कुनै अबोध केटी आफू चढाइएको कुरा पहिले त थाहा पाउँदिन । तर ८/१० वर्ष पश्चात यो त चढाइएकी देउकी पो हो भन्ने कुरो खुल्न पुग्दछ । त्रिपुरा सुन्दरी, निगालासैनी, मेलौली, दिलासैनी, उदयदेव बाययो, केदारेश्वर आदि मन्दिरहरु यहाँका देउकी चढाइने प्रमुख मन्दिरहरुमा पर्दछन् ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

वैतडीमा हलिया प्रथा व्याप्त छ । यहाँका बाहुन र क्षत्री जातिका मानिस आफू हलो जोत्दैनन् । उनीहरु पुस्तौनी देखि आफू कहाँ रहेका तल्ला जातिका भनिने हलियाहरुबाट काम लिने गर्दछन् । काम गरेको दिन अन्न र पैसा लिने हिसाबमा ती हलियाहरुलाई करारमा राखिएको हुन्छ । उनीहरुले काम छोडे भने पैसा फिर्ता गर्नु पर्दछ । त्यस्ता हलियाहरु अति कम ज्यालामा काम गर्न बाध्य छन् ।

### ५.२ अन्य अमानवीय व्यवहार

यहाँका महिलाहरु पनि पुरुषहरु सरह शारीरिक श्रम गर्दछन् । तर पुरुषले दैनिक रु ६० ज्याला पाउने गरेको स्थितिमा महिलाहरुले रु २० देखि ३० मै चित्त बुझाउनु पर्दछ ।

यहाँका ८ वर्ष देखिका बालबालिकाहरु कठोर श्रममा संलग्न रहने गर्दछन् । कम उमेरका केटाकेटीहरु भारत तर्फ गएर पनि मजदूरी गर्ने गर्दछन् ।



# ५. सुदूर पश्चिमाञ्चल

## महाकाली

## ५.९ दार्चुला

| | | |
|---|---|---|
| जनसंख्या | : | १०१६१४ |
| साक्षरता | : | ४१.९ प्रतिशत |
| महिला साक्षरता | : | १८.५ प्रतिशत |
| क्षेत्रफल | : | २३२२ वर्ग कि. मि. |

सुदूर पश्चिमाञ्चलको सानो पहाडी जिल्ला दार्चुलाका बासिन्दामा मानव अधिकार सम्बन्धी अत्यन्त न्यून चेतना रहेको पाइन्छ । भारतीय सिमासंग जोडिएको यस जिल्लाका अधिकांश मानवीय शक्ति भारततिर नै लाग्ने गरेको देखिन्छ । यहाँको स्थानीय प्रशासनले बदलिएको परिस्थितिमा पनि मानव अधिकारलाई त्यति महत्व दिएको पाईदैन । दार्चुलाको प्रहरी प्रशासन नियम कानून भन्दा पनि आफ्नो इच्छा बमोजिम चलिरहेको प्रतित हुन्छ ।

### १. बाँच्न पाउने अधिकार

#### १.१ हत्या गोली

जिल्ला प्रहरी कार्यालयका अनुसार यस वर्ष दार्चुला जिल्लामा जम्मा दश वटा "ज्यान मार्ने उद्योग" का घटनाहरु घटे । व्यक्तिगत रिसइवीका कारण भएका त्यस्ता हत्याहरुमा २४ देखि ५२ वर्षसम्मका नागरिकको संलग्नता रहेको कुरा प्रहरी सूत्र बताउँदछ ।

#### १.२ जेल

नेपालका साना जेलहरु मध्येको एक दार्चुला जेलमा हाल २१ जना बन्दीहरु रहेका छन् । "बन्दीहरुका निम्ति सरकारद्वारा प्रदत्त सबै सुविधाहरु यहाँका बन्दीहरुले पाएका छन्" - जेल सूत्रको दावी छ । तर यस जेलमा खेलकूद र मनोरंजनको भने कुनै सुविधा नरहेको कुरा बन्दीहरु बताउँदछन् । एकजना बन्दीका अनुसार पैसा दिएर बजारबाट आवश्यक कुराहरु मगाउँदा पनि जेल प्रशासनले उपलब्ध गराउँदैन ।

#### १.३ गिरफ्तारी / यातना

*दत्तु गा.वि.स. वडा नं. ७ र ४ मा बसोबास गरि रहेका ५१ वर्षीय नैन सिंह नआरीलाई जिल्ला प्रहरी कार्यालय दार्चुलाले ०४८ जेठ ५ गतेका दिन पक्रिएको थियो । उनलाई असार ५ गतेसम्म बिना पूर्जी हिरासतमा राखी तत्कालिन डि.एस.पी. स्वयंले यातना दिएको कुरा नआरी बताउँछन् । नआरी डि.एस.पी. आफैले उनको अण्डकोषमा दखल गरी पीडा दिएको बताउँछन् । उनी उक्त कुराका बारेमा आफूले ०४८ असार ३ गते अदालतमा पनि बयान गरेको दावी गर्दछन् । अदालतबाट समेत न्याय पाउन नसकेको बताउने नआरी भन्दछन् - "प्रहरी मलाई यस्तरी पिटेकी मेरो खुट्टा नै भाँचिन पुग्यो, महिनौंसम्म म चलफिर गर्न सकिन ।"*

*यहाँका प्रहरी यातना दिने कुरामा अगाडि रहेको कुरा दार्चुलाका कानून व्यवसायी लगायतका बुद्धिजीवीहरु पनि बताउँदछन् । ०४९ कार्तिक-मंसीर तिर रावला गा.वि.स. का कुनै बेलाका प्रधानपंच र एकजना व्यापारी बजित सिंहलाई प्रहरी हिरासतमा राखी मरणासन्न अवस्थामा पुर्‍याएर छोडिएको कुरा पनि बताइन्छ । दुबै पीडितहरुले जिल्ला अदालत र अन्यत्र समेत अपील गरेका छन् । तर हालसम्म उनीहरुको सुनुवाइ नभएको बताइन्छ ।*

### २. मौलिक अधिकार

#### २.१ अभिव्यक्ति स्वतन्त्रता / भेला र संगठित हुने अधिकार

देशको संविधानले उपरोक्त अधिकारहरु ग्यारेण्टी गरेको छ । तथापि शिक्षा, ज्ञान, चेतना आदिको अभावका कारण यहाँका बासिन्दाले ती कुनै पनि अधिकारहरु पूर्णतः उपभोग गर्न सकेका छैनन् ।

#### २.२ धार्मिक स्वतन्त्रता

यस जिल्लामा धार्मिक कलह, बाद विवाद सम्बन्धी त्यस्तो खास कुनै घटना भएको देखिदैन । अर्थात् यहाँ धार्मिक सहिष्णुता देखिन्छ ।

### २.३ राजनैतिक स्वतन्त्रता / स्वतन्त्र र निष्पक्ष चुनावको अधिकार

यस जिल्लामा खुलेआम रुपमा राजनीतिक स्वतन्त्रता कुण्ठित भएको देखिदैन। स्वतन्त्र र निष्पक्ष चुनावका क्रममा पनि यहाँ उल्लेखनीय हस्तक्षेप भएको ज्ञात हुन सकेन।

### २.४ सुगम र निष्पक्ष न्यायिक अधिकार

सुगम र निष्पक्ष न्यायिक अधिकारको दार्चुलामा बेलाबेला कुठाराघात हुने गरेको बताइन्छ। खार गा.वि.स.का रवी ठगुना जारी सम्बन्धी विवादका कारण यथोचित कार्वाही विना थुनामा राखिएका थिए।

"विभिन्न ऐन कानून अनुसार मुद्दा चलाउने क्षेत्राधिकार तोकिएको छ। तर यहाँको प्रहरी र प्रशासनद्वारा सत्तारुढ दलको मौखिक सिफारिशमा विपक्षीहरुलाई अनेक मुद्दामा फसाएर दुःख दिने काम भइरहेको छ।"- यहाँका केही बुद्धिजिवी यस्तो टिप्पणी पनि गर्दछन्। प्रतिपक्षीहरुको स्वतन्त्रता र मौलिक हकको समेत सोही प्रकृतिमा हनन भइरहेको धारणा पनि प्रतिपक्षका कार्यकर्ताहरु व्यक्त गर्दछन्।

*धनपति कुँवर माथि ज्यान मुद्दा लागेको छ। हाल उनी दार्चुला जेलमा रहेका छन्। एक जना व्यक्तिको अकाल मृत्युको दोष उनी माथि लगाइएको छ। तर उनी आफूलाई निर्दोष बताउँदछन्। उनी आफूलाई केही व्यक्तिले रिसइबीका कारण फसाएको दाबी गर्छन्। उक्त हत्या अभियोगमा हुन्या नामका एकजना भारतीय नागरिक सहित बीर सिंह कुँवर र उनलाई ०४६ पुष ९ गते पक्राउ गरिएको थियो। तर उनीहरुको कागजातमा तीनै जनालाई ०४६ माघ ११ गते मात्र पक्राउ गरिएका जनाइएको छ। हिरासतमा उनीहरुमाथि कूटपिट समेत भएको बताउँदै धनपति कुँवर भन्दछन् - "मलाई ०४८ जेठको फैसला अनुसार थुनिएको छ। तर मलाई दिइएको सजायलाई सही तुल्याउने कुनै प्रमाण पनि पेश गरिएको छैन।" दार्चुला जिल्ला अदालतले जमानतमा छोडेको बीर सिंह भने हालसम्म फेला परेका छैनन्।*

## ३. भूमिहीन तथा सुकुम्बासी समस्या

जिल्लाको मर्मा गा.वि.स.मा जन्मिएका प्रताप सिंह ठगुना यतिखेर सदरमुकामको टिंकर टोलमा अस्थायी बसोबास गरी गुजारा गरिरहेका छन्। आफ्नो "कूडो" (झोपडी) पनि नभएका तर कुनै बेला यसै जिल्लामा जन्मिएका यस्ता सुकुम्बासीहरु दार्चुलामा पनि उल्लेख्य संख्यामा छन्।

## ४. महिला अधिकार

### ४.१ महिलाहरुको किनबेच र बलात्कार

दार्चुला जेलमा हाल तीन जना जबरजस्ती करणी गरेको अभियोगमा सजाय काटिरहेका छन्। तर ती तीनजना मध्ये बहादुर सिंह धामी चाहिं आफू निर्दोष भएको बताउँदै भन्दछन् - "मैले केटीसंग विहे गर्ने हिसाबले र जीवन साथी बनाउने उद्देश्यले फकाई फुलाई खर्क तिर लगेर उसलाई, उसैको मंजूरीले करणी गरेको हुँ। तर उसको बाबुले केटीलाई डराई धम्क्याइ मंजुरी थिएन भनी बयान गर्न लगाएका हुन्।" नावालक केटीसंग शारीरिक सम्बन्ध राख्ने बहादुर सिंहले जिल्ला अदालतको जबरजस्ती करणी नै भएको हो भन्ने फैसला विरुद्ध पुनरावेदन भने गरेका छैनन्।

### ४.२ जारी, बहुविवाह, देउकी, बाबी प्रथा

यस जिल्लामा जारी प्रथा पनि रहेको छ। लालवीरे कोठारीकी पत्नी शेरी गा.वि.स.को फाराका दोलोसंग पोइल गइन्। त्यसपछि लालवीरे र उनका दाजु किन्नेले दिलोबाट १४ हजार जारी रकम असुल गरे। केही समय पश्चात कसैले उक्त कुरो प्रशासन समक्ष पुऱ्याइ दियो र दुबै दाजु भाई पक्राउ परे। तर त्यसपछि दुबै पक्षका केही भलाद्मीहरुले उक्त १४ हजार रकमबाट केही बाँडचुड गरेको चर्चा समेत गाउँलेहरुमा ज्यूँदै छ।

जिल्लाको मालिकार्जन गा.वि.स. को ग्वानीमा देउकीका १०/१२ परिवार रहेका छन्। दार्चुलाका अन्य गाउँहरुमा पनि फाट्टफुट्ट देउकीहरु घर परिवार गरि बसी र हेको बताइन्छ।

## ५. मानव अधिकार सम्बन्धी अन्य प्रश्न

### ५.१ दासत्व विरुद्धको अधिकार

दार्चुलामा पनि अरु घरमा बाँधा भएर गुजारा चलाउने चलन रहेको छ। हलीका रुपमा यहाँ पनि कतिपय भूमिहीन मानिसहरु कमैया भएर जिविका चलाइरहेका छन्।

### ५.२ अन्य अमानवीय व्यवहार

जाँड रक्सीको अत्यधिक चलनले दार्चुला जिल्लालाई आक्रान्त पारेको छ। "मद्य निषेधित क्षेत्र घोषणा गर्ने कानूनी प्रावधान बनाई त्यसलाई कडाइका साथ लागु गर्न सकिएको भए जिल्लाको शान्ति, सुव्यवस्थाको समस्याको आधा त यत्तिले समाधान गर्ने थियो।" - यहाँका प्रमुख जिल्ला अधिकारीको टिप्पणी यस्तो थियो।

■

# परिच्छेद – ९

# वर्ष पुस्तकको उद्देश्य र तयारीका क्रममा देखिएका समस्याहरु

मानव अधिकार आदर्श कल्पना मात्र होइन । विश्वका न्यायप्रेमी जनसमुदायले साम्राज्य, शोषण, अत्याचार र युद्धबाट विमुक्ति पाउन गरेको अथक प्रयासको सार हो । मान्छेले मान्छेबाट भोग्नु परेको यन्त्रणा र थिचोमिचोको प्रत्यक्ष अनुभवबाट विश्वमानव समुदायले सिकेको पाठ हो ।

देशभित्र सामन्ती संस्कार, शोषण, निरंकुशता र देश बाहिरबाट हैकमवाद, साम्राज्यवाद र युद्धको विभीषिकाले मानिस आफ्नो नैसर्गिक अधिकारप्रति चेतनशील भएका छन् ।

विकासको नाममा प्रकृति र वातावरणलाई परास्त गर्ने मानव व्यवहारले उसको आफ्नो पृथ्वी ऊ आफ्नै लागि खतरायुक्त हुन थालेको छ ।

विकासको भौतिक धारणामा सर्वाधिक पछि परेको एशिया र त्यसमा पनि पिछडिएको दक्षिण एशियाली मुलुकहरुले विकसित भू-भागको अनुभवबाट सिक्नुपर्छ । हाम्रो सम्पदा र संस्कृतिको रक्षा गर्नुपर्छ । प्रकाश काफ्लेले भन्नुभएको थियो - "दक्षिण एशियाबाटै मानव अधिकारको नयाँ अवधारणाको विकास गर्नुपर्छ" । यस कुरालाई उहाँले यसरी स्पष्ट शब्दमा परिभाषित गर्नु भएको थियो - "हामीले भन्ने गरेको मानव अधिकार प्रेस स्वतन्त्रता, संगठन निर्माण गर्ने स्वतन्त्रता मात्र हैन स्वास्थ्य उपचारको अधिकार, शिक्षाको अधिकार, राष्ट्रको सम्पत्ति र सम्पदा सम्पूर्ण नेपालीको हो भन्ने भावनायुक्त विकासका लागि अधिकार सहित संयुक्त राष्ट्र संघले घोषणा गरेको विश्व मानव अधिकार हो" ।

उहाँले थाल्नु भएको यो काममा हामीले आफ्नो सम्पूर्ण शक्ति र प्रयास केन्द्रित गर्यौं र माथिका परिच्छेदहरुलगायत संलग्न अनुसूचीहरुमा आफूलाई प्रस्तुत गरेका छौं ।

हाम्रो देशमा प्रजातान्त्रिक आन्दोलन शुरुदेखि नै मानव अधिकारसंग अन्योन्याश्रित छ । जंगबहादुर राणाकै पालामा गोरखाका लखन थापाले नागरिक हकको कुरा उठाएबापत शहादत प्राप्त गरेका थिए । यहाँका कांग्रेस, कम्युनिष्ट सबै राजनीतिक दलहरुले राजनीतिक स्वतन्त्रताको संघर्षमा नागरिक, राजनैतिक र आर्थिक अधिकारलगायत समग्रमा मानव अधिकारको मागलाई आफ्नो प्रमुख मुद्दा बनाएका थिए । त्यसैले जनआन्दोलन ०४६ मा यी दुबै शक्तिको संयुक्त पहल हुनसक्यो । बहुदलीय खुला समाज, पूर्ण राजनीतिक स्वतन्त्रता र मानव अधिकारप्रतिको प्रतिबद्धतासहितको संवैधानिक व्यवस्थाको स्थापना हुनसक्यो ।

हामीले विश्व अनुभवबाट भोगेका छौं कि अकंगका हेरफेर ल्याइदिने राजनीतिक आन्दोलनहरु केही दिनमै पनि सफल हुँदा रहेछन् । त्यस्तै आमूल आर्थिक उन्नति केही दशकभित्रै पनि हासिल गरिंदा रहेछन् । तर सांस्कृतिक परिवर्तनका लागि अर्थात् - "चिन्तन र व्यवहारमै पूर्ण स्वच्छता राखुँ अनि आफ्नो अधिकार प्रयोग गर्ने नाममा अर्काको हक नखोसुँ" भन्ने संस्कारको विकास गर्न दशकौं होइन शताब्दियौंले पनि पुग्दो रहेनछ । हामी यही अर्थमा मानव अधिकार संस्कृतिको विकास र जगेर्नामा लागेका छौं । हजारौं जनताका दशकौंको बलिदानी संघर्षले प्राप्त प्रजातान्त्रिक हक अधिकारको रक्षा र विकास गर्दै मानव अधिकार प्राप्तिको दिशामा अगाडि बढ्नु पर्ने यो चुनौतीपूर्ण बेला हो ।

यसका लागि निम्न उद्देश्य र कार्य सम्पादन विधि लिई यो वर्ष पुस्तकको कामको थालनी गरियो:-

## उद्देश्य

क. आधारभूत तहमा नै मानव अधिकार उल्लंघन हुन नदिन जनतामा सचेतनता ल्याउने । उनीहरुका बीचमा कार्यरत मानव अधिकार संस्था वा कार्यकर्तामार्फत मानव अधिकार उल्लंघनका घटनाहरु बटुल्ने ।

ख. यस्ता घटनापिच्छेको जानकारी एवम् निष्कर्षको अभिलेख राख्ने र त्यसबारे भविष्यमा अनुगमन समेत गर्ने ।

ग. घटनाहरुको विश्लेषण गर्ने र त्यसबारे आधारभूत तहमा चासो, छलफल, परिचर्चा बढाउने ।

घ. मानव अधिकार उल्लंघनका विरुद्ध रणनीति तयार गर्ने ।

ङ मानव अधिकारको क्षेत्रमा भएका उल्लंघन र उपलब्धिको अद्यावधिक अभिलेखको प्रकाशन गर्ने । यस्तो प्रकाशनलाई हरेक वर्ष निरन्तरता दिइरहने ।

## कार्य सम्पादन विधि

०४९ मंसीर १ मा हामीले यो काम सम्पन्न गर्न एउटा मानव अधिकार वर्ष पुस्तक समितिको निर्माण गर्‍यौं । यो समितिले वर्ष पुस्तकमा समावेश गरिने विषयहरु निर्क्यौल गर्‍यौं । कार्यकारी समितिका सदस्यहरुका कार्य विभाजन गर्‍यो । ०४९ पुष १६ गतेको बैठकमा घटना संकलनका लागि स्थानीय तहमा प्रयोग गरिने निर्देशिका, प्रश्नावली आदि तय गरियो । त्यसपछि पचहत्तरै जिल्लामा मानव अधिकार बारे वर्ष पुस्तकमा समावेश गरिने तथ्य तथ्याङ्कहरुको संकलन र अध्ययनका लागि स्वयंसेवकहरुको छनौट तथा उनीहरुलाई सामान्य प्रशिक्षण पश्चात् जिल्लाहरुमा पठाउने काम भयो । जिल्लामा घटनाहरुबारे बुझ्दा मूलतः जिल्लामा रहेका अगुवा सामाजिक कार्यकर्ताहरु, राजनैतिक दलहरुका स्थानीय नेता, सामाजिक संघ संस्था, मानव अधिकारका क्षेत्रमा कार्यरत संस्थाका शाखाहरुसित सम्पर्क गरिने मात्र हैन प्राप्त सूचनाको अझ बढी प्रमाणिकताको लागि प्रशासन, प्रहरी तथा न्यायिक इकाईसित पनि छलफल गरी सूचनाहरु लिइएको थियो । यसरी सम्पर्क गर्दा मूलतः जिल्ला अदालत, जिल्ला कार्यालय, प्रहरी कार्यालय लगायत जेल अनि अर्धन्यायिक संस्थाहरुमा पनि सम्पर्क गरिएको थियो । घटना घटेको ठाउँमा जतिसक्दो चाँडो गई घटनाका प्रत्यक्षदर्शी पीडित व्यक्तिहरुसित पनि प्रत्यक्ष भेटघाट गर्ने गरियो । ०४९ फागुन १२ सम्ममा अधिकांश जिल्लाका स्वयंसेवकहरु आ-आफ्नो कार्यक्षेत्रमा पुगिसकेका थिए । बाँकी जिल्लाका लागि स्वयंसेवकहरुको छनौट र विभिन्न परिच्छेदको लेखन-सम्पादनको काम पनि कार्यसमितिका सदस्यहरुबिच बाँडफाँड गरियो । पत्रपत्रिकामा विज्ञापन गरियो । कार्यसमितिका केही सदस्यहरुले ४१ जिल्लाको स्थलगत भ्रमण पनि गर्नुभयो । ०४९ चैत २० सम्ममा हामीले ६१ जिल्लाका प्रतिवेदन प्राप्त गरी ४० जिल्लाको सम्पादन कार्य पनि समाप्त गरिसकेका थियौं । यसरी ७५ मध्ये ४१ जिल्लामा का.का. सदस्यहरुले स्वयं सम्पर्क, भेटघाट गर्ने, स्वयंसेवक, स्थानीय मानव अधिकार कार्यकर्ता, स्थानीय न्यायिक, प्रशासनिक, सुरक्षाका निकायहरुमा भेटघाट गर्ने, जेल निरीक्षण गर्ने आदि काम सम्पन्न गरिसकेका थिए ।

विकट भौगोलिक अवस्थिति, वर्षमा ८ महिना हिउँले ढाकेर पैदल पुग्नु पर्ने बाटो पनि अवरुद्ध रहने हुम्ला र मुगु जस्ता बिकट जिल्लामा हामी तेश्रो प्रयास गर्दा मात्र पुग्न सक्यौं । वैशाखको आधातिर मात्र, सबैभन्दापछि मुगु जिल्लाको रिपोर्ट प्राप्त भयो ।

तथ्य संकलनका क्रममा अनेक समस्या पनि झेल्नु पर्‍यो । ती मध्ये केही निम्नानुसारका छन्

## समस्या

१. बाटोघाटो यातायातको समस्या, सञ्चारको साधन नभएको आदि कारणले हामीलाई फिल्डमा समयमा पुग्न र निरन्तर सम्पर्क गर्न समस्या पारिरह्यो ।

२. अधिकांश पहाडी जिल्लामा एक ठाउँबाट अर्को ठाउँ जान कैयौं दिन हिंड्नुपर्ने हुँदा प्रत्यक्षदर्शी, पीडित समेतलाई सबै सिलसिलाबद्ध रुपमा भेट गर्न सकिएन । हामीसंग समय कम थियो । त्यसले पनि समस्या पर्‍यो ।

३. पचहत्तरै जिल्लामा का.का. सदस्यहरुले भ्रमण गर्ने, त्यहाँका मानव अधिकारप्रति सचेष्ट व्यक्तित्वहरु, प्रशासन, प्रहरी, न्यायाधिशहरुसंग छलफल गर्ने जुन उद्देश्य राखिएको थियो त्यो भौगोलिक बिकटता र समयको कमीका कारण यस पटक आंशिक रुपमा मात्र पूरा गर्न सकियो ।

४. मानव अधिकार उल्लंघनका घटनालाई अभिलेख गर्ने, त्यसबारे संगठित जनचासो बढाउने निकायहरुको मोफसलमा नितान्त कमी छ । यसर्थ सूचना श्रोतका लागि साह्रै मिहेनत गर्नु पर्‍यो ।

५. प्रहरी र न्यायालयमा उजुरीका अभिलेख हुने गर्छन् । कतिपय प्रहरी प्रशासन कार्यालयहरुले हामीलाई सहयोग गरेनन् । न्यायालयले समेत कार्य व्यस्तता जनाएर मागिएको अभिलेख दिन सकेन । बिकट पहाडी जिल्लामा न्यायाधीशको अनुपस्थितिले गर्दा पनि समस्या पर्‍यो ।

६. केही जिल्लामा प्रशासक र प्रहरीबाट खुला असहयोग मात्र होइन हाम्रो काममा बाधा पनि हालियो । रोल्पा जिल्लाका प्रमुख जिल्ला अधिकारी अब्दुल रईस खाँ र प्रहरी नायब उपरीक्षक (DSP) मदन बहादुर खड्काले हाम्रा स्वयंसेवकलाई जेल निरीक्षण गर्न नदिएको मात्र होइन, बन्दीहरुसंग गरिएको अन्तर्वार्ताको कागजै खोसे । नवलपरासीका प्र.जि.अ. विजयराज

भट्टराई लगायत थुप्रैले जेल निरीक्षण गर्न दिएनन् । पछि का.का. सदस्यहरुले अनुरोध गरेपछि जेल निरीक्षण आफ्नै रोहवरमा त गर्न दिइयो तर फोटो खिच्न दिइएन । प्युठानमा पनि प्रहरीले सुरुमा समस्या खडा गरे ।

७. कतै कतै प्रशासक, प्रहरीहरु मानव अधिकारप्रति सचेष्ट पनि देखिए । मागेको जानकारी उनीहरुले दिए । जेल निरिक्षण गर्न दिए । खुलस्त ढंगले कुराकानी गरे । आफ्ना हरेक क्रियाकलापमा तार्किक र जिम्मेवार देखिए ।

८. तर कुनै कुनै जिल्लामा प्रमुख जिल्ला अधिकारीहरुले सत्तापक्षीय भनाइलाई आधिकारिक ठानेर काम गर्ने प्रवृत्ति देखियो ।

९. कुराकानीमा र सिद्धान्ततः स्वीकार गरे तापनि व्यवहारमा निर्देशन नभई कुनै पनि निर्णय लिन नसक्ने, सकेसम्म अर्काको टाउकोमा पन्छाउने प्रवृत्ति पनि देखियो । जस्तै कतिपय प्रजिअले जेल निरीक्षण गर्ने स्वकृतिका लागि अनुरोध गर्दा जेल जान भन्ने र त्यहाँका प्रहरी वा जेलरले प्रजिअको चिठी बेगर दिँदैनौं भनेर अस्वीकार गर्ने गरियो । टेलिफोन भएका प्रजिअले फोनबाटै आदेश गरे ।

१०. प्रहरी हिरासत, अझै पनि पञ्चायतकालीन यातना गृह भन्दामाथि छैन, सायद त्यसैले होला धेरैजसो त्यस्ता ठाउँहरुमा निरीक्षण गर्न दिइएन । एक दुई ठाउँमा स्थापित मानव अधिकार कार्यकर्ताहरुले भने निरीक्षण गरे ।

११. देशमा राजनीतिक प्रभाव र प्रशासनिक सहयोगको आड भरोसामा नै धेरैजसो मानव अधिकार उल्लंघनका घटना घटेका छन् । यस्ता प्रभावशाली व्यक्ति तिनै हुन जसले वर्षमा ६ महिना पनि खान नपुग्ने गरिब किसानहरुलाई चर्को ब्याज लिएर अनेकन प्रकारका शोषण, ज्यादती गरेर भए पनि ऋण सापट दिन्छन् । त्यति नभए गरिब गाउँलेले भोकै मर्नुपर्ने हुन्छ । यस कारण पीडितबाट पीडाको अभिव्यक्ति नै गाह्रो भयो । भइहाले पनि पीडकबारे किटानी हुनै गाह्रो भयो ।

१२. सेना र जमिन्दारहरुको दबदबाले पीडित जनताले त झन् मुखै खोलेनन् । कतिपय स्वयंसेवकहरुले यलो छोडेर रातारात भाग्नुपऱ्यो ।

१३. कतिपय जेलरहरु बन्दीका समस्याप्रति सम्वेदनशील, मानव अधिकारप्रति जागरुक पनि पाइए । जस्तै:- काठमाण्डौ सेन्ट्रल, ललितपुर, मोरङ, झापा, तर कतिपय निर्दयी पनि पाइए जस्तै:- सप्तरी ।

१४. बलात्कारका घटनाका १० प्रतिशत पनि हामीले बटुल्न सकेनौं । घटना भएको कुरा दबिएको मुखले भन्छन् । तर पीडित महिलाको इज्जत जाने, उनलाई कसैले बिहे नगर्ने, समाजबाट उल्टै अपहेलित हुनु पर्ने डरले मानिसहरु यस्ता घटना प्रकाशमा ल्याउन चाहँदैनन् । कतिपय बलात्कार पीडित बालिकाहरुसंग उनीहरुका आमाबाबुको अनुपस्थितिमा घटना विवरण प्राप्त गर्नुपर्ने स्थिति पनि झेल्नु पऱ्यो ।

१५. हामी स्वयं यस्तो राष्ट्रिय स्तरको मानव अधिकार वर्ष पुस्तक प्रकाशन सम्बन्धी कुनै अनुभव नबटुलेका थियौं । हाम्रा स्वयंसेवकहरुमा जाँगर त प्रशस्त थियो तर अनुभव थिएन । क्यामरा, क्यासेटजस्ता साधनको अभावले पनि कतिपय महत्वपूर्ण सूचना र दृश्य अभिलेख गर्न कठिन भयो । स्वभावैले सूचनाका आधारको रुपमा प्रशासन, प्रहरी र अदालतलाई उनीहरुले लिए । तर एक त चाँडै सूचना पाउन नै गाह्रो भयो । स्थलगत छानबीनमा जाँदा स्थानीय ठालुहरु जो मानव अधिकार उल्लंघनका मूलनायक हुने गर्छन् तिनको डरले धेरैले यथार्थ बताउने साहस गरेनन् । कतिपय पीडितले गाउँ छोडेर अन्तै गइसकेका थिए ।

१६. एउटा राजनैतिक दलको रिपोर्ट बटुलेपछि अर्कोले आफ्नो शत्रु देख्ने प्रवृत्तिले पनि हामीलाई साह्रै दुख दियो । अधिकांश जिल्लामा सत्तापक्ष मानव अधिकारको पूर्ण ग्यारेण्टी रहेको, शान्ति सुव्यवस्था अति उत्तम रहेको भन्ने प्रतिवेदन मात्रै जाओस् भन्ने चाहन्थ्यो भने प्रतिपक्षहरु यसको विपरीत । प्रशासकहरु पनि आफ्नो मूल्यांकनका लागि यस्तै विवरण मात्र प्रकाशमा आओस् भन्ने ठान्दथे । कुनै राजनीतिक

दलहरु यो पुस्तकको उद्देश्य सत्तापक्ष नेपाली कांग्रेस वा प्रमुख प्रतिपक्ष नेपाल कम्युनिष्ट पार्टी (एमाले) को अभिष्ट पूरा गर्नु मात्र हो भन्ठान्थे । रा.प्र.पा.को केन्द्रीय कार्यालयमा पत्र लेखी कैयौं पटक प्रयास गर्दा पनि सो पार्टीको दृष्टिकोण प्राप्त भएन ।

१७. हाम्रा स्वयंसेवक र का.का. सदस्यहरुलाई पनि कुन पार्टीको मान्छे हो वा कुन पार्टीको नजिक रहेको मानव अधिकारवादी संगठनको मान्छे हो भनी सोध्न थालियो ।

१८. गृह मन्त्रालयले सबै प्र.जि.अ.हरुलाई आवश्यक सहयोगका लागि परिपत्र गरी प्रशंसनीय काम गऱ्यो । उसले गरेको उक्त सहयोगबाट हामी आशावादी भई गृह मन्त्रालयसंग पञ्चायती व्यवस्थाको अन्तिम वर्ष र प्रजातन्त्र प्राप्त गरिसकेपछिका वर्षहरुमा देशमा भएका विभिन्न घटना र ती घटनाहरुका विषयमा श्री ५ को सरकारको धारणा र दृष्टिकोण के कस्तो रहयो सोबारे माग गऱ्यौं । हामीले बारम्बार सचिवलाई भेट्यौं । उहाँले सुरुमा आफै केही दिन पर्खिन भन्नुभयो । त्यसपछि गृह मन्त्रालयका प्रवक्ता देखाइयो । त्यहाँ पनि बारम्बार उही कुरा दोहराइयो कि तथ्यांक तयार पार्ने काम हुँदैछ । हामीले प्रहरीसित पनि घटनाहरुबारे तथ्यांक माग्यौं । गृह सचिवले तत्कालीन प्रहरी नायब महानिरीक्षक मोतीलाल बोहरालाई भेट्न भन्नु भयो । नायब महानिरीक्षकले महानिरीक्षकलाई सोधेर तथ्यांक दिइने छ भन्नुभयो । हामीले फेरि प्रयास गऱ्यौं । त्यतिन्जेल उहाँको पदोन्नति भयो र उहाँ प्रहरी महानिरीक्षक पनि बन्नुभयो । तर हामीले मागेको तथ्यांकका लागि फेरि गृह मन्त्रालय नै देखाइयो । अन्त्यमा हामीले कमसेकम राष्ट्रिय स्तरमा जनधनको क्षति भएका मानव अधिकारको क्षेत्रमा व्यापक प्रश्न उठाइएका घटनाहरुका बारेमा गृह मन्त्रालयको वक्तव्यको प्रति माग्यौं । कहिले हामीलाई सरकारी समाचार पत्र गोरखापत्रमा खोज्न भनियो त कहिले त्यस्ता घटना कुन कुन हुन् ? भनी प्रतिप्रश्न गरियो । आखिर हामीले आजित भएर सरकारको आधिकारिक तथ्यांकको खोजीमा समय खेर नफाल्ने निर्णय गर्नुपऱ्यो ।

१९. राजधानी रहेको काठमाण्डौ जिल्लाका प्र.जि.अ.ले समेत हामीले खोजेका र उपलब्ध गराउन सकिने खालका तथ्यगत जानकारी पनि दिनु भएन । राजधानीको एउटा जेल निरीक्षण गर्ने अनुमति पनि दिइएन ।

२०. जब हामीले जिल्ला-जिल्लामा मानव अधिकारको दृष्टिकोणले घटनाहरुका बारेमा प्र.जि.अ. प्रहरी अधिकृतसंग प्रश्न गर्न थाल्यौं, संविधानको आशय र मर्मको आधारमा घटनाहरुको विवेचना गर्न थाल्यौं तब लगभग देशभरिका प्रशासकहरुको व्यवहारमा फरक आयो ।

# परिच्छेद - १०

# निष्कर्ष र सुझाव

मानव अधिकारको क्षेत्रमा देशमा देखापरेका समस्या र समाधानका उपायहरु बुंदागत रुपमा प्रस्तुत गरेका छौं ।

## निष्कर्ष

१. सरकारमा बसेकाहरुले बारम्बार मानव अधिकारप्रति बचनवद्धता देखाए तापनि त्यो केवल "ओठे भक्ति" मा परिणत भएको छ । उनीहरुमा आफू जनताप्रति उत्तरदायी भन्ने भावनाभन्दा पनि आफूलाई प्रहरी/प्रशासनका "हितपोषक" बढी ठान्ने भावना पाइएको छ र यसले गर्दा तल्लो स्तरका जनताले राज्य इकाईद्वारा प्रतारण र निम्न स्तरको व्यवहार गरेको पाइन्छ । जति ग्रामीण र गरिब जनता छन् उत्तिनै उनीहरुले प्रशासनलाई टाढा वा आफूमाथि शासन गर्ने सम्झन्छन् ।

२. राजनीतिक दलहरुमा मानव अधिकारबारे यथेष्ट चेतना छैन । प्रजातन्त्र र मानव अधिकार संस्कृतिको अन्योन्याश्रित सम्बन्धबारे उनीहरु प्रष्ट छैनन् ।

३. नेपालमा मानव अधिकारको विषयमा सचेतनताको कमी जुनसुकै क्षेत्रमा अनुभव गर्न सकिन्छ । मूलत: ग्रामीण इलाकाहरु परम्परागत सोचाइ र विद्यमान सामन्ती चिन्तनले गर्दा पनि मानव अधिकारलाई बुझ्ने र बुझाउने परिस्थिति श्रृजना भएको छैन ।

मानव अधिकारको हनन मूलत: गाउँमा ठालुहरु शहर-बजारमा साहु, प्रहरी र प्रशासनमा रहेकाहरुबाट भएको छ । यसरी हेर्दा मानव अधिकार हननमा सदैव राज्यपक्ष मानव अधिकार हननमा मात्र संलग्न नभएको हुन सक्छ, तर गाउँघरमा सदैव अरु पक्षहरु संलग्न छन् तर त्यस्ता पक्षहरुको संलग्नतामा प्रचुर मात्रामा स्थानीय राज्य इकाईहरुको समर्थन र सहभागिता रहेको हुन्छ ।

४. विगत ३० वर्ष निरंकुश पञ्चायत कालमा प्रजातान्त्रिक आन्दोलनका क्रममा आमजनताले नागरिक र राजनैतिक अधिकारबारे केही जानकारी पाए पनि सांस्कृतिक, आर्थिक र सामाजिक अधिकारबारे कुनै जानकारी पाएनन् ।

मानव अधिकारको अर्थ घिचोमिचो गर्नेले आफ्नो सबै अधिकार खोसिने भनी ठानेका छन् । प्रहरीले यसको अर्थ आफूले मूकदर्शक बन्नु पर्ने भन्ठानेको छ भने असचेत ग्रामीण जनताले कसैले कुनै अत्याचार गर्न नपाउने, गरेमा जनता आफैले ठिक पार्न (सजाय दिन सक्ने) अर्थमा लिएको छ । अर्थात् मानव अधिकारको सही परिभाषा आधारभूत तहसम्ममा पुगेको छैन ।

५. प्रहरी प्रशासनमा प्रजातान्त्रिक संस्कारको विकास भैसकेको छैन । प्रशासन कतिपय मामिलामा राजनीतिकरण गरिएको छ । केही अपराधीहरु राजनीतिक पार्टीसंग सम्बन्धित भएका कारणले अदालतको आदेश भएर पनि पक्राउ परेका छैनन् । बरु अपराधीहरुलाई अदालतले तोकेको सजायबाट मुक्त गर्ने, हत्याराहरुको मुद्दा फिर्ता लिने काम भएको छ ।

६. देशमा मानव अधिकारको स्थितिलाई विकसित गराउँदै प्रजातन्त्रलाई स्थायी बनाउन जुनसुकै मानव अधिकार हननकर्तालाई कानून अनुसार कार्वाही गर्नु पर्नेमा त्यसो नगरेर जनताको मनोबल गिराउने काम हुँदैछ । उदाहरणका रुपमा मल्लिक आयोगको प्रतिवेदनमाथि कार्वाही नहुनुलाई लिन सकिन्छ । यसले अन्तरवस्तुमा मानव अधिकार आन्दोलनमा नकरात्मक प्रभाव पर्छ ।

प्रहरी ज्यादतीबाट भएका कतिपय मानव अधिकार उलघंनका घटना सम्बन्धमा पनि सरकारले आफ्नो गल्ती लुकाउने उदेश्यले गलत सूचना प्रचार-प्रसारमा ल्याएको छ ।

शान्तिपूर्ण जुलुस तथा प्रदर्शनहरुमा हस्तक्षेप गर्ने तथा विना पूर्व चेतावनी गोली चलाइएको धेरै घटनाहरु पाइएको छ ।

७ जनआन्दोलनको मर्म र उद्देश्य अनुरुप काम भएका छैनन् । जनआन्दोलनका अपराधीहरु पुरस्कृत र सम्मानित गरिएका छन् ।

८. जनतामा कानून निर्माता नै कानून मिच्छन् भन्नेखालको मनस्थिति विकसित हुँदै गैरहेको छ । एउटा सांसद् जसले कानून बनाउँछ र उसैले नै कानून मिचेका उदाहरणहरु धेरै ठाउँमा जनताले दिएको पाइयो - जस्तै बहुविवाह वा विवाहविना सन्तान जन्माउने वा महिलाप्रति ज्यादै अपहेलना गर्ने इत्यादि । देशमा व्यापक रुपमा बलात्कार सम्बन्धी घटनाहरु घट्दै छ । यसप्रति सरकारले अपनाउनु पर्ने नीति कडा नभएको गुनासो प्रशस्त पाइएको छ । बलात्कार सम्बन्धी कानून नै अपूरो र कमजोर भएको कुरा कतिपय कानूनविद्हरुले बताउनु भएको छ जसले गर्दा मूलतः महिला मानव अधिकारको व्यापक रुपमा हनन भैराखेको छ ।

९. मानव अधिकारवादी संगठन र कार्यकर्ताहरु आधारभूत तहसम्म पुग्न सकेका छैनन् । जनताले तिनीहरुलाई स्वदेशीभन्दा विदेशी विचार र व्यवहारको प्रतिनिधिका रुपमा हेरेका छन् ।

१०. सरकारी र आम सञ्चार माध्यमहरुले मानव अधिकारको प्रचार प्रसार गरेका छैनन् । पाठ्यक्रम र पाठ्यपुस्तकहरुमा मानव अधिकार शिक्षालाई समावेश गरिएको छैन ।

११. कतिपय मानव अधिकार विरोधी कानूनहरुलाई निरस्त गर्नुको सट्टा अझ क्रूर बनाइएको छ । प्रशासकहरुलाई न्यायिक अधिकार दिइएको छ ।

१२. मानव अधिकारको क्षेत्रमा सरकरको प्रयास ज्यादै न्यून छ । मानव अधिकारवादी संगठन र सरकारका बीचमा दोहोरो सम्वाद र आपसी विश्वासको वातावरण छैन । मानव अधिकारको क्षेत्रमा काम गर्ने संस्थाहरुप्रति सरकारी रवैया सहयोगात्मक छैन ।

१३. जारी, देउकी, झुमा, बहुपति जस्ता पिछडिएको संस्कारका कारण पनि मानव अधिकार उललंघन हुने गरेका छन् । धामी, झाँक्री, बोक्सी, देवी देउताप्रतिको विश्वासले गर्दा मानव अधिकारको उल्लंघनको व्यापकतामा बल पुगेको छ ।

१४. २०४६ सालको जनआन्दोलन पश्चात् आएको बहुदलीय र खुला राजनैतिक वातावरणले समाजमा तीव्रताका साथ राजनैतिक ध्रुवीकरण हुँदै गएको छ । राजनैतिक संस्कृतिको विकास हुन नसकेका कारणले राजनैतिक संकीर्णता व्याप्त छ र यसले जुनसुकै घटनाहरुलाई राजनैतिक टक्करमा पुऱ्याउँछ जसले गर्दा व्यापक रुपमा मानव अधिकारका समस्याहरु भित्र्याएको छ ।

राजनैतिक दलहरुले धेरै मात्रामा प्रशासनको दुरुपयोग वा आफ्नो निजी हितमा प्रयोग गरेका छन् जसले गर्दा प्रशासनमा बस्नेहरु "जनताको हक हित" प्रति इमान्दार हुनुभन्दा पनि राजनैतिक दल त्यसमा पनि सत्ताधारीप्रति बढी बफादार भएका छन् ।

१५. देशका राजनैतिक शक्ति/दलहरुले जनतामा राजनैतिक संस्कृतिको विकास गर्ने कुरामा कार्यकर्ताहरुलाई सचेत बनाउनेभन्दा पनि इतर वितर फरक मत राख्नेहरुप्रति असहिष्णु हुनेखालबाट निर्देशन/तालिम दिएको प्रशस्त फेला परेको छ ।

१६. देशको कानून भनेको समाजलाई मर्यादित रुपमा अगाडि बढाउने माध्यम भए तापनि कानूनको मर्यादा गर्ने परिपाटीको कमी समाजमा व्याप्त देखिन्छ । कानूनलाई "मिलाउने" दृष्टिकोणबाट हेरिएको प्रष्ट छ । कतिपय उच्च पदस्थ सरकारी कर्मचारी सरकारमा पुगेका मन्त्री राजनैतिक दलका नेताहरु सबैले चाहिने मात्रामा कानूनलाई मर्यादित पार्ने व्यवहार गर्नुभन्दा पनि नचाहिंदो रुपमा कानून छल्ने काम गरेको पाइएको छ । यसले गर्दा जनतामा कानून मात्र हैन प्रजातन्त्र र मानव अधिकारप्रति नै उदाशीनता देखिएको छ ।

१७. राष्ट्रिय स्तरमा मानव अधिकारलाई स्थापित गर्न निष्पक्ष मानव अधिकार आयोगको कमी नराम्ररी खड्किएको छ । जबकि यस्तो आयोगको गठन जिल्ला तहमै गर्नुपर्ने आवश्यकता दिन परदिन टड्कारो हुँदैछ ।

१८ देशमा विद्यमान महिला तथा बालबालिका ओसार पसार, बलात्कार, महिला बेचबिखन आदिप्रति सरकारले कुनै क्षेत्र नीतिका साथ ती कुराहरुलाई अन्त गर्ने प्रयास गरेको पाइएको छैन जसले गर्दा महिलाहरुप्रतिको व्यवहारमा अझै प्रशस्त भेदभाव र दमनात्मक स्वरुप देखिन्छ । त्यस्तै बालश्रमको व्यापक प्रयोग भएको देहिन्छ ।

१९. सरकारले कतिपय मानव अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्धहरुमा हस्ताक्षर गरेर सह्राहनीय काम गरेको छ तर त्यस अनुरुप राष्ट्रिय कानून वा नीतिहरुको भने निर्माण गरिएको छैन । आफूले हस्ताक्षर गरेका सन्धिदाहरुको सीमाभित्र इमान्दारीपूर्वक रहने प्रयास गरेको पनि पाइँदैन ।

२०. देशमा रहेका जनजातिहरुबारे प्रशस्त मात्रामा चर्चा परिचर्चाहरु हुँदैछन् तर सरकारको यसप्रति स्पष्ट नीति भने रहेको छैन । उनीहरुले अनुभव गरेको असमान व्यवहारलाई कसरी हटाउने भन्नेबारेमा सरकारले अझै आफ्नो स्पष्ट धारणा प्रस्तुत गरेको छैन । अझ बढी त नेपालमा रहेका क-कसलाई जनजाति भन्ने बारेमा सरकारको ठोस नीति र योजना समेत देखिदैन ।

## सुझाव

मानव अधिकारको सुदृढीकरणका लागि तपसिलका सुझाव प्रस्तुत गर्दछौं ।

### सरकार समक्ष

१. मानव अधिकारबारे प्रशासन र प्रहरीलाई सचेष्ट पार्नु पर्छ । कानून लागू गर्ने न्यायिक, अर्धन्यायिक तथा सुरक्षासंग सम्बन्धित निकायका पदाधिकारीहरुलाई मानव अधिकार शिक्षा दिने प्रवन्ध गर्नुपर्छ । तिनीहरुले निष्पक्ष भई काम गर्ने वातावरण बनाउनु पर्छ ।

२. मानव अधिकार शिक्षालाई विद्यालय तथा विश्वविद्यालय स्तरका पाठ्यक्रममा समावेश गरिनु पर्छ ।

३. ग्रामीण जनतामा मानव अधिकार चेतनाको अभिवृद्धि गर्न अनौपचारिक शिक्षा कार्यक्रम चलाउनु पर्छ । यसका लागि गैर सरकारी र मानव अधिकारवादी संघ-संस्थाहरुको सहयोग लिई उक्त कार्यक्रम सञ्चालन गर्ने व्यवस्था गर्नुपर्छ ।

४. सम्पूर्ण मानव अधिकार विरोधी कानून र कानूनका धाराहरु रद्द गरिनु पर्छ ।

५. सम्मिलन गरिएका मानव अधिकारका अन्तर्राष्ट्रिय दस्तावेज अनुसारका कानूनहरु निर्माण गरिनु पर्छ । यो जिम्मेवारीमा बाधा हाल्ने कानूनहरु निरस्त गरिनु पर्छ ।

६. मल्लिक आयोग, बेपत्ता पारिएका मानिसहरु पत्ता लगाउने समिति लगायत समय समयमा गठन गरिएका आयोगहरुको प्रतिवेदन सार्वजनिक प्रकाशमा ल्याउनु पर्छ । तिनका आधारमा न्यायिक कारवाही गरिनु पर्छ ।

७. मानव अधिकार उल्लंघनका विभिन्न घटनाहरुको निष्पक्ष छानवीन गरिनु पर्छ ।

८. प्रतिष्ठित मानव अधिकारवादी व्यक्ति र संगठनहरु सम्मिलित एउटा निष्पक्ष राष्ट्रिय मानव अधिकार आयोग गठन गरिनु पर्छ ।

९. सम्मिलन/अनुमोदन गर्न बाँकी अन्तर्राष्ट्रिय दस्तावेजहरुको अनुमोदन गरी सो मुताविकको कानून निर्माण गर्नुपर्छ ।

१०. नागरिक, राजनीतिक अधिकारका अन्तर्राष्ट्रिय दस्तावेजका पालना गर्ने, केही कानून जारी गरिएको भए तापनि सामाजिक, आर्थिक, सांस्कृतिक अधिकारको रक्षा गर्ने कानूनी प्रवन्ध गर्न बाँकी रहेकोले त्यस अनुसारको व्यवस्था गरिनु पर्छ ।

११. आम सञ्चारका माध्यमहरुलाई कानूनी रुपले पूर्ण स्वायत्तता प्रदान गर्दै उनीहरुलाई मानव अधिकार शिक्षाको प्रचार/प्रसारलाई व्यापक पार्ने काममा सहभागी बनाउनु पर्छ ।

१२. महिला, बालबालिका तथा आदिवासीको हित संरक्षण गर्न र उनीहरुको विकासका लागि आम सहमतिका साथ विशेष प्रबन्ध गरिनु पर्छ ।

महिला किनबेच, बलात्कार र वेश्यावृत्तिलाई रोक्न तत् सम्बन्धी कानूनहरुको निर्माण र भएका कानूनहरुलाई परिमार्जित गरी प्रयोग गरिनु पर्दछ ।

१३ अनेकन निर्माण गर्न बाँकी कानूनहरुमध्ये बाँधा प्रथा (दास प्रथा) विरुद्धको कानून यथाशीघ्र निर्माण गरिनु पर्छ ।

बाँधा श्रमिकमा रहेका कमैयाहरुको विमुक्तिका लागि विशेष अभियान सञ्चालन गर्नुपर्छ ।

१४. विभिन्न अमर्यादित पेशामा संलग्न हुन बाध्य भएका वादी, भाँड जस्ता जातिहरुको सुरक्षा गर्दै उनीहरुका कल्याणका लागि दीर्घकालीन कार्यक्रम लागू गरिनु पर्छ । त्यस्तै - देउकी, झुमा प्रथाका पीडितहरुको विमुक्तिका लागि पनि कार्यक्रम सञ्चालन गरिनु पर्छ ।

१५. समाजमा व्याप्त अनेकन अन्धविश्वास र कुसंस्कारका विरुद्ध अनौपचारिक शिक्षा र औपचारिक कार्यक्रम/योजना अनुसार राष्ट्रव्यापी कार्यक्रम सञ्चालन गरिनु पर्छ ।

बोक्सी, झुमा, देउकी, जारी, बहुपति, बहुविवाह, बालविवाह जस्ता कुसंस्कारहरुको विरुद्ध सरकार र गैर सररकारी संस्थाहरुको संयुक्त पहलमा राष्ट्रव्यापी अभियान नै सञ्चालन गरिनु पर्छ ।

१६. मानव अधिकारवादी क्षेत्रीय तथा अन्तर्राष्ट्रिय संघ संस्थाहरुलाई नेपालमा दर्ता गर्ने व्यवस्था गरिनु पर्छ ।

१७. मानव अधिकार संघ संस्था तथा गैर सरकारी संस्थाहरुलाई देशको दुर्गम क्षेत्रहरुमा कार्य गर्न गराउन अभिप्रेरित गरिनु पर्छ । सो सम्बन्धमा सरकारी नीति प्रष्ट पनि हुनुपर्छ ।

१८. जेल

क. अधिराज्यभर निर्माण गरिने जेलहरुको एउटा निश्चित नक्शा निर्धारित गरिनु पर्छ । जम्मा कोठाको न्यूनतम क्षेत्रफल, झ्याल, ढोकाहरुको आकार र संख्या पनि तोकिनु पर्छ । प्रतिव्यक्ति न्यूनतम क्षेत्रफल तोकिनु पर्छ । स्वास्थ्य र सुविधाको दृष्टिकोणले चर्पी, धाराको पनि प्रतिबन्दीका हिसाबले किटान गर्नु पर्छ ।

ख. पञ्चायतकालमा अनावश्यक मुद्दाहरु लगाइ जेल हालिएकाहरुको संख्या ठूलो छ । अत निष्पक्ष रुपमा एउटा आयोग गठन गरी पुन छानवीन गरिनु पर्छ । एकपटक जेल बन्दी संख्या घटाउने अभियान सञ्चालन गरिनु पर्छ । रोगी, धेरै कैद भुक्तान गरिसकेकाहरु र बढी उमेर भएकाहरुको मुद्दा र कैद मिनाहाबारे उदारतापूर्वक निर्णय गरिनु पर्छ ।

ग. जेलमा दिइनु पर्ने न्यूनतम सुविधाहरु किटान गरिनु पर्छ । शिक्षा, स्वास्थ्य, खेलकूदका कुन कुन सुविधाहरु न्यूनतम रुपमा प्रदान गरिनु पर्ने हो सोबारे प्रष्ट उल्लेख गरिनु पर्छ ।

घ. दीर्घरोगी, सरुवा रोगी र मानसिक रोगीहरुका लागि प्रत्येक विकास क्षेत्रमा कमसेकम एक एक ठाउँमा बेग्लै स्वास्थ्य प्रबन्ध भएको जेल निर्माण गरिनु पर्छ ।

ङ. बद्रीराम भण्डारीको अध्यक्षतामा गठित जेल सुधार आयोगको सुझाव र त्यसअघि गठित तत्सम्बन्धी आयोगहरुका प्रतिवेदनका आधारमा यथाशीघ्र जेल सुधारको काम थाल्नुपर्छ ।

च. जेलमा पस्तासाथ बन्दीलाई सुविधा दिइनेबारे एकरुपता छैन । धेरैजसो जेलहरुमा बिछ्यौना, लुगाका लागि पालो पर्खिनु पर्ने हुन्छ । दिइने सुविधामा २ वर्षमा मात्र एकपटक बिछ्यौना दिइन्छ । यसर्थ जेलमा पस्तासाथै बिछ्यौना, लुगा र चप्पल समेत दिइनु पर्छ ।

१९. संयुक्त राष्ट्र संघद्वारा पारित विभिन्न दस्तावेजमा हस्ताक्षरमा नेपालले समय समयमा संयुक्त राष्ट्र संघ समक्ष बुझाउन प्रतिवेदनहरु समय समयमा नबुझाएको कुराहरु प्रकाशमा आएका छन् । सरकारले यसप्रति चनाखो भई समयमै प्रतिवेदन बुझाउने परीपाटी बसाल्नु पर्छ ।

## संसद् समक्ष

१ संसद्मा मानव अधिकार समितिको बेग्लै व्यवस्था गरिनु पर्छ । यसको साथै संसद्ले देशको समस्त "मानव अधिकारको" स्थितिलाई अनुगमन गरी मानव

अधिकार आयोगसंग मिलेर वार्षिक प्रतिवेदन बनाई छलफल गर्ने र त्यसलाई सार्वजनिक गराउने परिपाटी बसाल्नु पर्छ ।

२ संसद्मा मानव अधिकार सम्वर्द्धनका लागि प्रस्तुत हुने कुनै पनि विषयलाई राजनीतिक प्रतिद्वन्दिताका दृष्टिकोणले नहेरिने आदर्श नजीर स्थापित गर्नेतर्फ ध्यान दिनुपर्छ ।

३. संसद्ले मानव अधिकार आयोगको साथसाथै अन्य मानव अधिकारवादी संघ संस्थाहरुसंग मानव अधिकारसित सम्बन्धित विषयहरुमा छलफल गरी निष्कर्ष निकाल्ने र कार्यान्वयन गर्ने गर्नुपर्छ ।

## राजनीतिक दलहरु समक्ष

१. प्रत्येक राजनीतिक दलहरुले मानव अधिकारको समग्र र अद्यावधिक कुराहरुलाई आफ्ना कार्यकर्ताहरु बीच प्रचार गर्नुपर्छ र तद्अनुकूल आफ्नो व्यवहार प्रदर्शित गर्नेतर्फ लाग्नुपर्छ ।

२. पिछडिएका जाति, जनजाति, आदिवासी, महिला, बालक लगायत असहाय अवस्थाका जनताको सुरक्षा र कल्याणका लागि आफ्नो स्पष्ट दृष्टिकोण जनसमक्ष प्रस्तुत गर्नुपर्छ ।

३. निर्वाचनमा हुने गरेको हिंसा, त्रास, किनबेच जस्ता क्रियाकलापको विरुद्ध शान्तिपूर्ण र स्वच्छ निर्वाचनका लागि आम सहमतिका आधारमा आचार संहिता बनाई दृढतापूर्वक लागू गर्नुपर्छ ।

४ कुनै पनि घटनाको राजनीतिकरण गर्ने प्रवृत्तिलाई आधारभूत तहदेखि नै निरुत्साहित पार्न आवश्यक कदम चाल्नुपर्छ ।

५. समाजमा व्याप्त मानव अधिकार विरोधी कुरीतिहरुका विरुद्ध आ-आफ्ना पार्टी इकाई र सदस्यहरुलाई परिचालन गर्नुपर्छ ।

६. मानव अधिकारको क्षेत्रमा काम गर्ने संस्था र व्यक्तिहरुलाई कुनै भेदभाव नगरी उनीहरुको कार्यक्रमका आधारमा सबै राजनीतिक दलहरुले सहयोग गर्नुपर्छ ।

७. मानव अधिकारको दृष्टिकोणले महिला, मजदूर, बालक आदि जस्ता क्षेत्रमा आ-आफ्नो दलको दृष्टिकोण र योजना स्पष्ट रुपमा जनसमक्ष प्रस्तुत गर्नुपर्छ ।

८. पार्टीभित्रका मानव अधिकार हननकर्तालाई कुनै हालतमा पनि प्रश्रय दिइनु हुन्न ।

## गैरसरकारी सामाजिक संस्थाहरु समक्ष

१. प्रजातन्त्रको स्थापना पश्चात् देशमा सामाजिक संघ संस्थाहरुक द्रुत गतिमा स्थापना हुँदै आएका छन् । विभिन्न क्षेत्रमा काम गर्ने यी संस्थाहरु विशेष गरी शहरी क्षेत्रमा अझ खासगरी राजधानी केन्द्रित भएका छन् । यसले गर्दा ग्रामीण जनताले यिनको सीधा फल प्राप्त गर्न सकेका छैनन् । त्यसैले यस्ता संस्थाहरुले आफ्नो गतिविधिलाई दूरदराजका क्षेत्रहरुमा र विशेष गरी गरिब निमुखा जनताका बीचमा पुऱ्याउने प्रयास गर्नुपर्छ ।

२. देशमा आएको खुला वातावरणले गर्दा अब धेरै संख्यामा मानव अधिकारका विधिक्षेत्रमा काम गर्ने संघ संस्थाहरुको स्थापना भएका छन् । यसरी स्थापना हुनुले एकातिर जनताका अधिकार संरक्षण र सम्वर्द्धनमा योगदान पुगेको छ भने अर्कोतिर ती संस्थाहरुका क्रियाकलापमा पनि व्यापक रुपमा दोहोरोपन देखिएको छ । धेरै संस्थाहरु एउटै क्षेत्रमा मात्र सीमित भएका छन् भने यिनीहरु कै हित संरक्षणका लागि पनि संस्थाहरुको बीचमा समन्वय र सहयोग हुनु नितान्त आवश्यक छ । त्यसका लागि संस्थागत व्यवस्था गरिनु पर्छ ।

३. मानव अधिकारको दृष्टिले गाउँघरमा प्रचलनमा रहेका विधि क्रियाकलाप, कुसंस्कारका विरुद्ध समन्वयात्मक ढंगले कार्यक्रम सञ्चालन गर्नुपर्छ ।

४. सबै ठाउँमा हुने मानव अधिकार विरोधी क्रियाकलापको अभिलेख गर्ने, त्यसलाई आवश्यक क्षेत्र र तहमा प्रचारित गर्ने काममा निरन्तर लागिरहनु पर्छ ।

५. एकातिर देशमा मानव अधिकार तथा सामाजिक क्षेत्रमा संघ संस्थाको निर्माण भएर जनताका हक, हित संरक्षणमा सकारात्मक योगदान प्राप्त भएको छ भने अर्कोतिर यी संस्थाहरुलाई नै राजनैतिक विभाजन गरी हेर्ने परम्परा पनि स्थापित हुँदैछ । गैर सरकारी

संस्थाहरुका काम कुनै एउटा राजनैतिक विचार वा क्षेत्रका लागि मात्र नभई आम जनसमुदायका लागि गरिने भएकोले राजनैतिक सीमाभन्दा माथि उठेर काम गर्ने परिपाटी बसाल्दै अगाडि बढ्नु आवश्यक भएको छ ।

६ मानव अधिकारका क्षेत्रमा काम गर्ने संस्थाहरुप्रति जनतामा राम्रो विश्वसनीयता र प्रतिष्ठाका लागि उनीहरुको क्रियाकलापमा पारदर्शिता हुनु नितान्त आवश्यक छ । त्यसैले यी संस्थाहरुले आम सहमतिका आधारमा एउटा आचार संहिता बनाई त्यस अनुसार चल्नु आवश्क देखिन्छ ।

७. विभिन्न सामाजिक संस्थाहरुले जनताका हित हुने विभिन्न विकास कार्यक्रम गर्दै छन् जसले गर्दा उनीहरु आधारभूत जनसमुदायसम्म पुग्न सफल भएका छन् । तर जनतामा जबसम्म चेतनाको अभिवृद्धि हुँदैन तबसम्म विकास दिगो हुन नसक्ने स्वत: सिद्ध छ । त्यसैले ती संस्थाहरुले विकास कार्य संगसंगै चेतना अभिवृद्धि कार्यक्रम अर्थात् मानव अधिकार शिक्षालाई पनि संगसंगै सञ्चालन गर्नुपर्छ ।

## आम सञ्चार समक्ष

१. निजी तथा सरकारी दुबैखालका सञ्चारका माध्यमहरुले मानव अधिकारबारे प्रचार/प्रसार गर्नेतर्फ आफूलाई केन्द्रित गर्नु पर्दछ ।

२. जुनसुकै घटनाको विश्लेषण गर्दा पनि मानव अधिकारको क्षेत्रमा त्यसले पार्ने तत्कालीन तथा दूरगामी प्रभावलाई निष्पक्षतापूर्वक जनतामा प्रवाहित गरिदिनु पर्छ ।

३. मानव अधिकार उल्लंघनका घटनाहरु प्रसार गर्दा सकेसम्म पीडितसंग प्रत्यक्ष सम्पर्क गरी जनतामा जस्ताका तस्तै प्रस्तुत गरिदिनु पर्छ ।

४ सामन्ती व्यवस्था दवदवा रहेको समाजमा परम्परागत रुपमा अनेक मानव अधिकार विरोधी प्रचलनहरु कायम रहेका छन् । सञ्चार माध्यमहरुले देशका दुर्गम गाउँ बस्तीहरुमा कायम रहेका त्यस्ता कुरीतिहरुका बारेमा यथासक्य गहिराइयुक्त सामग्री पेश गर्नुपर्छ । लाठी चार्ज, गोली फायर, कुटपीट आदि मानव अधिकार उल्लंघनका घटनाहरुको उजागर गर्ने मात्र होइन विभिन्न कुरीति र कुप्रथाहरुद्वारा शताब्दीयौंदेखि भइरहेका मानव अधिकार उल्लंघनका सम्बन्धमा आमजनतालाई सचेत तुल्याउने सञ्चार माध्यमको कर्तव्यभित्र पर्नुपर्छ । सञ्चार क्षेत्रले आपसमा समन्वय गरी देशका दुर्गम तथा बिकट ठाउँहरुलाई पनि मध्यनजर राखेर आफ्ना सञ्चार कार्यक्रममा ती क्षेत्रका प्रचलनहरुलाई मानव अधिकारको दृष्टिकोणले विश्लेषण गरी प्रसारण गरिदिनु पर्छ ।

५. सञ्चार माध्यमहरुमा संलग्न व्यक्तिहरुले आफ्नो जिम्मेवारीलाई कुनै पनि क्षण भुल्नु हुँदैन । उनीहरुको थोरै असावधानी, हेलचक्र्याई र स्वार्थ मात्रले पनि अन्य क्षेत्रमा झैं मानव अधिकारको क्षेत्रमा दूरगामी प्रभाव पार्दछ । तसर्थ उनीहरुले वास्तवमै चौथो अंग वा "वाचडगका" भूमिका खेल्न व्यावसायिक मर्यादालाई हरसमय शिरोपर गर्नुपर्छ । उनीहरुले एक पक्षमा रहेर कलम चलाउँदा अर्को पक्षको मानव अधिकारको उल्लंघन हुन हुँदैन ।

## अन्तर्राष्ट्रिय गैर सरकारी संघ-संस्थाहरु समक्ष

१. नेपालमा अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरुले जनताका हित सम्बन्धी विकास कार्यहरुमा लामो समयदेखि योगदान गर्दै आएका छन् । प्रजातन्त्रको आगमन पश्चात् उनीहरुले मानव अधिकारको क्षेत्रमा पनि आफ्नो योगदान विस्तार गरेका छन् । तर पनि उनीहरुद्वारा मूलत: मानव अधिकार क्रियाकलापलाई कम महत्व दिने प्रचलन अझापि कायम छ । उनीहरुले एकातिर जनताको जीवनस्तर उठाउने खालको काममा संलग्न संस्थाहरुलाई सहयोग गर्नुपर्छ भने अर्कोतिर ती संस्थाहरुलाई जनतामा मानव अधिकार शिक्षा र चेतना अभिवृद्धि कार्यहरु सञ्चालन गर्न पनि अभिप्रेरित गर्नुपर्छ ।

२. अन्तर्राष्ट्रिय गैर सरकारी संस्थाहरुका सहयोगको ठूलो राशि शहरी इलाकामा तथा स्वयं उनीहरुकै प्रशासनिक प्रयोगमा खर्च भैराखेको चर्चाहरुका सन्दर्भमा त्यस्तो परिपाटीलाई क्रमश: निरुत्साहित गर्दै जनताका आधारभूत काम गर्ने स्थानीय संस्थाहरुलाई सरसहयोग बढाउँदै लैजानु पर्छ ।

३. अन्तर्राष्ट्रिय गैर सरकारी संघ-संस्थाहरुका बीचमा पनि कतिपय क्षेत्रमा कामहरुका दोहरोपन भएको

पाइएको छ । त्यसैले उनीहरु बीचमा पनि समन्वय हुनु आवश्यक छ ।

## क्षेत्रीय संगठनहरु समक्ष

१. मानव अधिकार आन्दोलनलाई अगाडि बढाउने काममा विभिन्न क्षेत्रीय संगठनहरुले ठोस योगदान गर्दै आएका छन् । कतिपय क्षेत्रीय संगठन गैर सरकारी स्तरका छन् भने कतिपय अन्तर सरकारी पनि छन् । जुनसुकै क्षेत्रीय संगठहरुले पनि क्षेत्रीय स्तरमा मानव अधिकारको विकासका लागि क्षेत्रिय राष्ट्रिय मानव अधिकारवादी संस्थाहरुसित संयुक्त रुपमा काम गर्ने परिपाटीको विकास गर्नुपर्छ ।

२. दक्षिण एशियाली सहयोग संगठन (सार्क) ले आफ्नो नियमित बैठकहरुमा मानव अधिकारको क्षेत्रमा काम गर्ने क्षेत्रीय संस्था तथा राष्ट्रिय संस्थाहरुलाई पनि निमन्त्रणा गरी सुझाव लिने परिपाटीलाई अगाडि बढाउनु पर्छ ।

३. दक्षिण एशियाली सहयोग संगठन (सार्क) जस्ता क्षेत्रीय संगठनहरुले आफ्नो क्षेत्रभित्र मानव अधिकारको स्थितिबारे नियमित अनुगमनको व्यवस्था गर्नुका साथै तिनको आवधिक प्रतिवेदन प्रकाशित गर्ने व्यवस्था गर्नुपर्छ ।

४. क्षेत्रभित्र बढ्दै गएको शरणार्थी समस्याका समाधानका लागि क्षेत्रीय स्तरमा प्रयास गरिनु पर्छ । शरणार्थी समस्यालाई द्विपक्षीय समस्या मात्र भनी पन्छ्याउने परिपाटीको अन्त्य गरिनु पर्छ ।

५. दक्षिण एशियाली क्षेत्रीय सहयोग संगठन (सार्क) का राज्यहरुले पालन गर्नुपर्ने गरी एउटा मानव अधिकार क्षेत्रीय बडापत्र तयार गरी लागू गरिनु पर्छ ।

## संयुक्त राष्ट्र संघ समक्ष

१. संयुक्त राष्ट्र संघले संसारमै मानव अधिकार आन्दोलनलाई अगाडि बढाउन तथा दिशा दिने काममा आफूलाई निरन्तर संलग्न गराउँदै आएको भए तापनि यस देशमा अझ धेरै काम हुन बाँकी छ । मूलत: तेश्रो विश्वमा पर्ने नेपाल जस्तो देशमा मानव अधिकार शिक्षाको प्रचार प्रसारमा संयुक्त राष्ट्र संघले आफ्नो संलग्नतालाई बढाउनु पर्छ ।

२. संयुक्त राष्ट्र संघद्वारा पारित मानव अधिकार सम्बन्धी घोषणा तथा सम्विदाहरु लागू गर्ने काममा उदाशीनता देखिएको छ, संयुक्त राष्ट्र संघीय प्रावधानलाई अक्षरस: पालन गराउने काममा संयुक्त राष्ट्र संघ दृढतापूर्वक अगाडि बढ्नुपर्छ ।

३. संयुक्त राष्ट्र संघले आफ्नो भेला/बैठकहरुमा केही अन्तर्राष्ट्रिय संघ संस्थाहरुलाई बोलाई उनीहरुबाट पनि सुझावहरु लिने परिपाटीलाई खुकुलो पारी कम्तीमा क्षेत्रीय गैरसरकारी संघ-संस्थाहरुलाई प्रतिनिधित्व गराउनु पर्छ ।

४. नेपालमा कानून लागू गर्ने संस्था जस्तै प्रहरी तथा गृह मन्त्रालय अनि जेलमा कार्यरत पदाधिकारीहरुका तालिमका लागि सहयोग गर्नुपर्छ ।

५. संयुक्त राष्ट्र संघले आफ्नो सूचना तथा प्रचार प्रसार निकायलाई सुदृढ बनाउनु पर्छ ।

६. नेपालमा भएका कतिपय मानव अधिकार हनन बारेमा गैरसरकारी संघ-सस्थाहरुले प्रकाशित गरेका प्रतिवेदनहरुमा संयुक्त राष्ट्र संघले ध्यान दिन आवश्यक देखिन्छ ।

# अनुसूची – १

# कर्मचारी संघर्ष र मानवअधिकार

तत्कालीन अवस्थामा रहेका देशका कुल १ लाख ३७ हजार सरकारी कर्मचारीहरु ०४८ असार १६ देखि भदौ ९ गतेसम्म विभिन्न पेशागत मागहरुका साथ संघर्षमा ओर्लिएका थिए । उक्त संघर्षका क्रममा देशका विभिन्न भागका कर्मचारीहरु सरकारी दमनको शिकार भएका थिए ।

तीस वर्षसम्म पञ्चायती जाँतोमा पिसिएका कर्मचारीहरु माफ पनि बहुदलीय प्रजातन्त्रको आगमन पश्चात् नयाँ प्रत्यासा जाग्यो । श्री ५ को सरकारको विभिन्न तह र निकायमा कार्यरत कर्मचारीहरुले प्रजातन्त्रको बहालीसँगै ०४७ वैशाख ७ गते नेपाल निजामती कर्मचारी संगठनको निर्माण गरे । ०४७ कार्तिक १९ मा संगठन विधिवत दर्ता पनि भयो ।

अन्तरिम काल (०४७ साल) मा संगठनको निर्माण गरे पश्चात् कर्मचारीहरुले श्री ५ को सरकार समक्ष केही पेशागत मागहरु प्रस्तुत गरे । उनीहरुले तलब र सुविधामा सुधार गर्नु पर्ने माग मात्र उठाएका थिएनन्, भ्रष्टाचारी कर्मचारीहरुमाथि कारवाही गर्नु पर्ने माग समेत गरेका थिए । उनीहरुले जनतालाई अप्ठ्यारो पार्ने नियम कानूनलाई समयानुकूल सरलीकृत गर्नु पर्ने र परिवर्तन गर्नु पर्ने माग पनि राखेका थिए ।

अन्तरिम सरकारले ०४७ पुस १९ गते कर्मचारीहरुको तलब सुविधा सुझाव आयोगको गठन गऱ्यो । उक्त आयोगले आफ्नो प्रतिवेदनमा ०४८ को सुरुवातदेखि नै कर्मचारीहरुको खाजा भत्ता, घर भाडा, महंगी भत्ता परिवहन र शैक्षिक भत्ता आदिमा बढोत्तरी गर्नु पर्ने कुरा प्रतिवेदनमा उल्लेख गरेको थियो । उक्त प्रतिवेदनअनुसार ०४७ साउनदेखि नै कर्मचारीहरुको तलबमानमा वृद्धि हुनु पर्ने थियो ।

अन्तरिम सरकारले उक्त प्रतिवेदनलाई लागू गर्न आनकान गरे पनि कर्मचारीहरु तुरुन्तै संघर्षमा ओर्लिएनन् । तत्कालीन सरकारले प्रजातन्त्रको सुदृढीकरणका निम्ति आम चुनाव निर्विघ्न रुपमा सम्पन्न गराउन सबैलाई आव्हान गरेपछि कर्मचारीहरुले पनि तत्कालका लागि आफ्नो समस्यालाई थाँती लगाए ।

निर्वाचित सरकारको स्थापना भइसकेपछि पनि आफ्नो पेशागत समस्याको समाधान नभएको कारण देखाई असार १६ गते देखि उनीहरु विधिवत ढंगले आन्दोलनमा उत्रिए ।

कर्मचारी आन्दोलनलाई प्रतिपक्ष र जनताका विभिन्न तहको समर्थन पनि प्राप्त भयो । तर सरकारले आन्दोलनलाई दबाउन दमनको उपयोग गऱ्यो । आन्दोलन टुंगिएको दिनसम्म मात्र सय जनाभन्दा बढी आन्दोलनकारी कर्मचारीहरु सेवाबाट बर्खास्त गरिएका थिए भने करिब पाँच हजारभन्दा बढी आन्दोलनकारी कर्मचारीहरुलाई निलम्बन गरिएको थियो । ठूलो संख्यामा विभिन्न तहका कर्मचारीहरु संग स्पष्टीकरण सोधिएको थियो । संघर्षका क्रममा दुई हजारभन्दा बढी कर्मचारीहरु हिरासतमा राखिएका थिए । पक्राउ परेका कर्मचारीहरुलाई "ख" श्रेणीको सिदा दिइएको थियो ।

नेपाल निजामती कर्मचारी संगठनले असार १६ गते एक वक्तव्य जारी गर्दै भनेको थियो - "देशमा प्रजातान्त्रिक वातावरण प्रारम्भ भए पश्चात् आएको जनादेश प्राप्त अन्तरिम सरकारबाट निजामती कर्मचारीहरुको वर्गीय हितको निमित्त संगठन खोल्न पाउने अधिकारको साथै आर्थिक राहत पाउने लिखित आश्वासन समेत हामीले पाएका थियौं । अन्तरिम सरकारबाट पाएको उक्त सदाशयताकै कारणबाट कर्मचारीका बाँकी समस्याहरु समेत समाधान हुने आशा राख्दै श्री ५ को सरकारको ध्यानाकृष्ट गर्ने प्रयास गरिएको थियो । यसै क्रममा श्री ५ को सरकारसंग वार्ताद्वारा नै आफ्ना समस्याहरुको समाधान गर्न प्रयत्नशील रहँदारहँदै पनि वार्ताको मार्ग प्राप्त गर्न नसक्नाले गत असार १६ गतेदेखि विभिन्न विरोध कार्यक्रम सञ्चालन गर्न संगठन बाध्य हुनु पऱ्यो ।" कर्मचारीहरुले विधिवत आन्दोलन सुरु गर्नुअघि सांकेतिक कदमहरु समेत चालेका थिए ।

आन्दोलनकै क्रममा असार ३१ गते आयोजित धर्ना कार्यक्रममा ललितपुरस्थित सामान्य प्रशासन मन्त्रालयबाट कर्मचारी संगठनका ६ जना केन्द्रीय पदाधिकारीहरु सहित २६ जना कर्मचारीहरुलाई पक्राउ गरिएको थियो । पक्राउ परेका कर्मचारीहरुलाई जावलाखेलको प्रहरी चौकीको साँघुरो कोठामा २४ देखि २६ दिनसम्म राखिएको थियो । उनीहरुलाई ४-५ दिनपछि मात्र पक्राउ पुर्जी बुझाइएको थियो । नेपाल

निजामती कर्मचारी संगठनका तत्कालीन अध्यक्ष प्रेम दंगाल लगायत एक जना महिला कर्मचारी शोभा गौतमलाई पनि पक्राउ गरिएको थियो। गिरफ्तार गरिएका कर्मचारीहरुलाई शान्ति सुरक्षाको पुर्जी थमाइएको थियो र उनीहरु माथि सार्वजनिक अपराध ऐन अन्तर्गत मुद्दा चलाइएको थियो ।

छपन्न दिवसीय कर्मचारी आन्दोलन कै क्रममा साउन १५ गते दिक्तेल बजारमा प्रहरीको गोलीबाट एक जना छात्रको मृत्यु भएको थियो । घटनाको छानवीन गर्न गोली काण्ड भए पश्चात् त्यहाँ पुगेको गैर सरकारी संस्थाको छानवीन टोलीका अनुसार त्यस बेला त्यहाँ गोली चलाइहाल्नु पर्ने स्थिति आइ-परेको थिएन । टोलीका अनुसार गोली चल्नुअघि अश्रु ग्याँसको प्रयोग गरिएको थिएन । प्रहरीले चलाएको पहिलो राउण्ड कै गोली स्थानीय विद्यार्थी मनोज जोशीको देब्रे कोखाबाट पसी दाहिने छातीभन्दा माथिबाट निस्केको थियो । उनलाई प्रहरीले बन्दुक ताकेको देखेर भाग्न खोज्दा पछाडिबाट गोली लागेको थियो ।

मनोज जोशी ढालिएको १०-१२ मिनेटपछि नै प्रशासकीय भवनबाट करिब ३० मिटरको दुरीमा रहेको १ मन्दिरमा एकत्रित जनसमुदायतर्फ ताकी पुन २ राउण्ड गोली चलाइएको थियो । सोही क्रममा एउटा गोली मन्दिरको भित्तामा लागी उछिट्टिएर कर्मचारी परशुराम आचार्यको कुर्कुच्चाभन्दा माथि नली खुट्टामा लागेको थियो ।

गोली काण्डका प्रत्यक्षदर्शीहरु बताउँछन - "प्रशासकीय भवनमा शान्तिपूर्ण तरिकाले धर्नामा बसेका कर्मचारीहरुमाथि विना सूचना लाठी चार्ज गरी गेह कुमार, चिजकुमार र नारायण जोशीलाई घाइते बनाइए पश्चात् केही अग्लो स्थानमा रहेको हेलिप्याडमा जम्मा भएका विद्यार्थीहरु क्रुद्ध भए । विद्यार्थीहरुले प्रहरीमाथि ढुङ्गा बर्साउन थालेपछि प्रहरी बिस्तारै पछाडि हट्दै गए । तर एक्कासि प्रशासकीय भवनको आडबाट ४ जना प्रहरीले गोलाबारी सुरु गरे । गोली ५-९ राउण्डका बीच चलाइएको थियो ।"

साउन १९ गते देखि काठमाण्डौ भद्रकालीमा आमरण अनसनमा बसेका कर्मचारीहरु दीपक देवकोटा, प्रेम पराजुली, गजाधर यादव र शोभाकान्त न्यौपानेप्रति ऐक्यबद्धता जनाउन प्रगतिशील कवि लेखकहरु पनि अनसनमा बसेका थिए ।

साउन १९ गते कर्मचारीहरुले देशभर मैनवत्ती जुलुस निकालेका थिए भने साउन ११ गते कर्मचारीहरुको समर्थनमा काठमाण्डौ टुडिखेलमा संयुक्त वाममोर्चाको जनसभा पनि भएको थियो । तर यी सबका वावजुद सरकारले भने आन्दोलनलाई दबाउन कुनै कसर बाँकी राखेको थिएन । कर्मचारीहरु माथि भइरहेको दमन धरपकडका विरुद्ध एम्नेष्टी इन्टरनेशनलले पनि सरकारलाई जनाउ दिएको थियो । आन्दोलनको २६ औं दिनदेखि सरकार र प्रमुख प्रतिपक्षी एमालेबीच वार्ताको थालनी भएको थियो । तर सरकारी तर्फबाट कर्मचारीहरुलाई निलम्वन, सरुवा स्पष्टीकरण आदि जस्ताका सजायहरु भइनै रहेको थियो । आन्दोलनको अन्तिम चरणमा कर्मचारीहरु अत्यन्त आतंकित देखिएका थिए ।

साउन २८ गते राती भद्रकालीका अनसनकारी कर्मचारीहरुलाई जवरजस्ती अपहरण गरेर त्रिविवि शिक्षण अस्पताल लगिए पश्चात् त्यहाँ लाठी चार्ज र धरपकड भएको थियो । मूलढोका र अस्पतालका प्रत्येक तलामा राखिएका प्रहरीद्वारा अस्पताल कर्मचारी र नर्सहरुमाथि समेत हातपात भएको थियो । सोही रात संसद्मा प्रमुख प्रतिपक्षी नेता



फोटो: मन पुलक

*कर्मचारी आन्दोलनका क्रममा राजबिराजमा भएको कर्मचारीहरुको प्रदर्शन*

मनमोहन अधिकारी माथिल्लो सदनका प्रमुख प्रतिपक्षी नेता माधव नेपाल लगायत सांसद् प्रदीप नेपाललाई गिरफ्तार गरी संसद्को विशेषधिकारको हनन गरिएको थियो ।

कर्मचारी संघर्षकै क्रममा साउन २७ गते जुम्लामा पनि गोली चलेको थियो । २ जना कर्मचारी गोली लागि घाइते भएका थिए ।

०४८ भदौ ९ गते नेपाल निजामती कर्मचारी संगठनले शिक्षण अस्पताल, महाराजगंजमा एक पत्रकार सम्मेलन गरी आन्दोलन फिर्ता लिएको घोषणा गरे । श्रावण १४ गते देखि आन्दोलनकारी कर्मचारी र सरकारवीच वार्ता भइरहेको थियो। कर्मचारीहरुले आन्दोलन फिर्ता लिई "संघर्ष कार्यक्रमबाट जनसाधारणमा पर्न गएको असुविधा र अफ हुन सक्ने धनजनको क्षतिलाई रोक्न, आमरण अनशनकारी साथीहरुको अपमानजनक ढंगले जीवन वर्वाद हुन नदिन र कार्यक्रम स्थगित गरेपछि सम्पूर्ण समस्या समाधान हुने भन्ने सरकारी दृष्टिकोणप्रति सदाशयता एवं विश्वास राखी आन्दोलन फिर्ता लिएको" जानकारी गराएका थिए ।

नेपालको इतिहासमा भएको उक्त सबभन्दा ठूलो कर्मचारी आन्दोलनमा सरकारले लिएको दमनकारी नीति प्रजातान्त्रिक सरकारको निम्ति सुहाउँदो थिएन । आन्दोलनको स्थगन पश्चात् पनि कर्मचारीहरु खोसुवा, घटुवा, सरुवा आदि कार्वाहीहरुमा परिनै रहे । कर्मचारी सूत्रका अनुसार संघर्षमा उत्रेका सबै कर्मचारीहरु कुनै न कुनै रुपमा आन्दोलन पीडित भएका छन् । त्यसमध्ये ५०० खोसुवा र हजारौ जना अपायक सरुवामा परेका छन् । कर्मचारी आन्दोलनमा लागेवापत सयौं जना कर्मचारीहरुको ग्रेड घटाइएको थियो । जबकि सरकारले पहिले कर्मचारीहरुले आन्दोलन स्थगित गरेमा कुनै कारवाही नगर्ने घोषणा गरेको थियो ।

कर्मचारी आन्दोलनको प्रसंगमा ०४७ चैत्र १७ गते विधिवत दर्ता भएको नेपाल राष्ट्र बैंक कर्मचारी संघको इतिहास पनि उल्लेखनीय रहेको छ । एक वर्षको तदर्थकाल पूरा गरिसके पश्चात् दर्ता भएको संघले त्यसपछिका दिनमा संघर्षको थालनी गरेको थियो । कर्मचारी वर्ग पनि समाजको एक अङ्गको रुपमा रहेकोले प्रतिस्पर्धायुक्त राजनैतिक व्यवस्था विद्यमान हाम्रो मुलुकमा पेशागत हकहित र आफ्नो पदीय दायित्व मर्यादित रुपले निर्वाह गर्न कर्मचारी वर्ग संगठित हुन पाउनु पर्दछ भन्ने आवाजको कदर गर्दै सरकारले "कर्मचारी संगठन सम्बन्धी" अध्ययन समिति गठन गरेको थियो। सो समितिको प्रतिवेदनका आधारमा निजामती कर्मचारी संगठन दर्ता भयो साथै संस्थानहरुतर्फ पनि राष्ट्रिय स्तरमा संघ दर्ता भै निर्वाचन समेत भयो । तर त्यसपछि समस्त कर्मचारी वर्गको चाहनाअनुसार गठित र निर्वाचित संगठन/संघ प्रतिको सरकारी रवैया अनुकूल रहेन । सरकारले कर्मचारी संगठनमा अधिकृत स्तरका कर्मचारी संलग्न हुन नपाउने, संगठनको इकाई कार्यालय हातामा खोल्न नपाईने जस्ता संगठनको स्थायित्व र सक्रियतामा असर पर्ने कुराहरु लागू गऱ्यो । यस अर्थमा कर्मचारी संगठनलाई कमजोर पार्ने र संगठित हुने नैसर्गिक अधिकारलाई अति सीमित पार्ने चेष्टा सरकारको तर्फबाट प्रशस्त भयो ।

कर्मचारी वर्ग संगठित हुनेक्रममा नेपाल राष्ट्र बैंकका कर्मचारीहरु पनि श्री ५ को सरकारको सम्बन्धित निकायबाट स्वीकृत विधानका आधारमा संगठित भई निर्वाचन सम्पन्न गरेका थिए । कर्मचारीको दह्रो समर्थन पाएको संघलाई बैंक व्यवस्थापनले चुनौतीको रुपमा लियो । खासगरी बैंकभित्र भएका अनियमितताबारे संघको विधानअनुसार आवाज उठाउन कस्सिएको बैंकको कर्मचारी संघले विगतदेखिको अनियमितता र भ्रष्टाचारका बारेमा व्यवस्थापनका कमी कमजोरी औंल्याउन थाल्यो । त्यसपछि बैंक व्यवस्थापनले संघको कार्य सञ्चालनमा असहयोग मात्र गरेन बाधा नै पुऱ्याउन थाल्यो । निजी क्षेत्रको फिल्म कम्पनीलाई फिल्म सुटिङका निम्ति अनुमति दिइएको बैंकर्स क्लवको हल बैंकको कर्मचारी संघको औपचारिक बैठकका लागि दिइएन । त्यति मात्र होइन बैंकको हाताभित्र छलफल गरिरहेका कर्मचारीहरुलाई सुरक्षाकर्मी लगाएर हाता बाहिर पुऱ्याइयो ।

श्री ५ को सरकारद्वारा गठित कर्मचारी संगठन सम्बन्धी प्रतिवेदनमा केन्द्रीय पदाधिकारीलाई पदावधिभर अन्यत्र सरुवा नगर्ने कानूनी व्यवस्था गर्ने प्रावधान हुँदाहुँदै बैंकको संघको केन्द्रीय पदाधिकारीहरु दुई जनालाई सुदूर पश्चिमाञ्चल सरुवा गरियो । व्यवस्थापनद्वारा संघको क्रियाकलापलाई निष्क्रिय पार्ने निकै प्रयास भयो । उक्त निर्णयको औचित्य नभएकोले संघको कार्यमा बाधा नपार्न सो निर्णय रद्द गरियोस् भनी व्यवस्थापन समक्ष गएको प्रतिनिधि मण्डललाई "ढुकुटीमा असुरक्षा पुऱ्याएको" भन्ने आरोप लगाई एकजना महिला कर्मचारी प्रमिला घिमिरे, संघका अध्यक्ष दीपेन्द्रबहादुर क्षेत्री, उपाध्यक्ष प्रेमप्रसाद पाण्डे, कोषाध्यक्ष चन्द्रमान मलेकु, सदस्य मोतिमान साक्य, वासुदेव अधिकारी, रमण नेपाल, बद्रीप्रसाद अधिकारी समेत नौजना कर्मचारीहरुलाई आफ्नो भनाइ राख्ने अवसर नै नदिई ०४८ भदौ १४ गते निलम्बन गरियो ।

निलम्बन गरिएको भोलिपल्ट संघका अध्यक्षलाई बैंकले सोधेको स्पष्टीकरण बुझाउन जाँदा बैंक कार्यालयभित्र पस्न बैंकका उच्च पदाधिकारीको आदेश भनी सुरक्षाकर्मीले प्रवेश निषेध गरे । जबकि निलम्बनमा परेकै भए पनि कानून अनुसार एक चौथाई तलब भत्ता त्यस्ता कर्मचारीले बैंकबाट पाउने गर्दछन् ।

निलम्बन पश्चात् बैंकका अस्थायी सुरक्षागार्डहरुलाई अनुचित दबाब दिई प्रतिनिधि मण्डल गएका दिनको नक्कली वारदात खडा गरीएको थियो । निलम्बित कर्मचारी विरुद्ध

बनावटी कागज तयार पारी सो आधारमा कर्मचारीहरु बर्खास्त गरिए । यसअघि बैंकको इलाम शाखाका तत्कालीन कर्मचारी सघका अध्यक्ष तुलसी घिमिरेलाई पनि पदबाट मुक्त गरिएको थियो ।

एकजना सरुवा भएका कर्मचारी कल्याणबन्धु अर्याललाई पाँच दिनसम्म सरकारी अस्पतालमा भर्ना भै उपचार गराएका र सो सबुद पेश गर्दा पनि लगातार सात दिनसम्म गयल भएको भनी पदबाट बर्खास्त गरिएको थियो ।

बहुदलीय व्यवस्थाको स्थापना पश्चात् सम्पूर्ण संस्थानका कर्मचारीहरुको पेशागत हकको संरक्षण र सम्वर्द्धन गर्ने उद्देश्यले ०४७ जेठ २ गते अन्तर संस्थान कर्मचारी संघको स्थापना भएको थियो। सोही वर्ष मंसीर २६ गते संघको दर्ता भएको थियो । उक्त संघको स्थापना पश्चात् विभिन संस्थान अन्तर्गत रहेका अनियमितता तथा भ्रष्टाचार र कर्मचारी वर्गले उपभोग गर्न पाउने सुविधाका सम्वन्धमा कर्मचारीहरुले आवाज उठाउन थाले । मानवअधिकार तथा सार्वभौमिकतालाई सविधानमा स्पष्ट ढङ्गले व्याख्या गराउन संघले ठूला-ठूला सभा जुलुस, आदिको अयोजना गर्दै सम्पूर्ण कर्मचारीलाई गोलबन्द गरेको थियो ।

संस्थानका तर्फका कर्मचारीहरुको समस्या सामान्य रुपमा हल भइसकेपछि पनि निजामती तर्फ भने समस्या यथावत रहेका थिए । यसै सिलसिलामा नेपाल निजामती कर्मचारी संगठनले आफ्ना पेशागत मागहरु श्री ५ को सरकार समक्ष पेश गरेको र समयभित्र पूरा नगरेमा चरणबद्ध रुपमा संघर्षको कार्यक्रम अघि बढाउने घोषणा गऱ्यो ।

नेपाल निजामती कर्मचारी संगठनका मागप्रति अन्तर संस्थान कर्मचारी संघले समर्थन जनाउदै ०४८ असार २ र ३ गते एक वक्तव्य प्रकाशित गरेको थियो । ०४८ असार ३० गते अन्तरसंस्थान कर्मचारी संगठनका सम्पूर्ण पदाधिकारीहरुले संगठनको समर्थनमा हातमा कालो पट्टी बाधेर सामान्य प्रशासन मन्त्रीलाई विरोध पत्र दिएका थिए । अन्तर संस्थान कर्मचारी संघ राष्ट्रिय समितिको आव्हानमा विभिन्न संस्थानका कर्मचारी संघ, केन्द्रीय समितिका प्रतिनिधिहरुको मिति २०४८ असार ३१ मा भएको भेलाले निजामती कर्मचारी संगठनले सञ्चालन गरेको संघर्षलाई सक्रिय रुपमा सहयोग गर्ने निर्णय गरेको थियो ।

अन्तर संस्थान कर्मचारी संघको आव्हानमा नेपालमा पहिलोपल्ट ०४८ साउन २ गते ५.१५ देखि ६.१५ बजेसम्म एक्यबद्धता साङ्लो कार्यक्रमको आयोजना गरिएको थियो । राजधानीको प्रमुख स्थान रत्नपार्क, बसपार्क, भद्रकाली शहीद गेट, आर.एन.ए.सी., वीर हस्पीटल आदि ठाउँको दाहिने किनारमा हातमा हात समातेर उक्त कार्यक्रममा करिव ४० हजार कर्मचारीको उपस्थित भएका थिए। करिव ४२ जिलामा ०४८ साउन ३ र ४ गते जिल्ला स्तरीय एकताको साङ्लो प्रदर्शन गरिएको थियो । ०४८ साउन ३ गते अन्तरसंस्थान कर्मचारी सघका राष्ट्रिय पदाधिकारी सम्पूर्ण संस्थानका केन्द्रीय समितिका सम्पूर्ण पदाधिकारी सम्मिलित भई सामान्य प्रशासन मन्त्रीलाई वार्ताद्वारा समस्याको समाधान गर्ने आव्हान गर्दै विरोध पत्र दिइएको थियो । सोही दिन सिंह दरवार अगाडि सरकारको वृद्धि फिरोस भनेर प्रार्थना सभा गरिएको थियो । संघको राष्ट्रिय समितिको आव्हानमा संगठनको समर्थनमा राष्ट्रिय समतिका सदस्यहरु, संस्थानका केन्द्रीय समितिका पदाधिकारीहरुले २०४८ साउन ५ गते कार्यालय समयमा हातमा कालोपट्टि बाँधी कार्य संपादन गरेका थिए ।

त्यसै क्रममा अन्तर संस्थान कर्मचारी संघका केन्द्रीय अध्यक्ष सुनिल पोखरेलको संयोजकत्वमा विभिन्न पेशागत संगठनहरु त्रि.वि. कर्मचारी संघ, नेपाल राष्ट्रिय शिक्षक संगठन, प्यारा मेडिकल एशोसिएसन, नर्सिङ्ग संघ अदिको उपस्तिथिमा पेशागत ऐक्यवद्धता समूहको गठन गरिएको थियो । ०४८ साउन २७ र २८ गते पेशागत ऐक्यवद्धता समूहको आव्हानमा संस्थानका करिब २०० कर्मचारीहरु १२ घण्टे रिले अनसनमा बसेका थिए ।

निजामती कर्मचारी संगठनले आव्हान गरेका कार्यक्रममा सहभागी हुनुका अतिरिक्त अन्तर संस्थान कर्मचारी संघले आफ्नै सक्रियता र सहभागितामा पनि विभिन्न कार्यक्रम सञ्चालन गरेको थियो ।

सरकारले संगठनका जायज मागहरुप्रति पेशागत एक्यवद्धता जनाउदै समर्थन र सहयोग गरेको अभियोगमा विभिन्न संस्थानका कर्मचारी तथा संघका पदाधिकारीहरुलाई विभिन्न कारवाही गऱ्यो। निजामती कर्मचारीहरुलाई सघाएकै अभियोगमा अन्तर संस्थान कर्मचारी संघका केन्द्रीय उपाध्यक्ष सुश्री शान्ता श्रेष्ठलाई ३४ वर्षको ज्यालादारी जागिरबाट अवकाश दिइयो । संघको आव्हानमा विरोध कार्यक्रममा सहभागी भएको अभियोगमा एन.सी.सी.एन. कर्मचारी संघका केन्द्रीय अध्यक्ष तथा राष्ट्रिय समितिका प्रतिनिधिलाई वर्खास्त गरियो। १२ घण्टे रिले अनसनमा सहभागी भएको विषयलाई राजनीति गरेको भन्ने आरोप लगाई नेपाल आयल निगमका ६ जना कर्मचारीहरुलाई जागिरबाट अवकाश दिइयो। अन्तर संस्थान कर्मचारी संघको नेपाल दूर सञ्चार संस्थान शाखाका केन्द्रीय कमिटिका महासचिवलाई सरुवा गराई राजिनामा दिन बाध्य तुल्याइयो ।

विभिन्न संस्थानका कर्मचारीलाई सरुवा गर्ने, विनाकारण दु:ख दिने कार्य हालसम्म पनि जारी रहेको बताइन्छ ।

माथि उल्लेख गरिएका केही उदाहरण मात्र हुन् । यसै बीच कर्मचारी संघ/महासंघ पनि खोलिएकोछ । नेपाली कांग्रेस सम्बद्ध नेपाल ट्रेड युनियन कांग्रेसमा सरकारी संस्थानका कर्मचारी संघहरुले सम्बद्ध हुनु पर्ने भनी मन्त्री र सो ट्रेड युनियनका अध्यक्षले आव्हान गरिरहेका छन् ।

# अनुसूची – २

# सन् १९९२ मा मानवअधिकार र विभिन्न राजनैतिक पार्टीहरुको धारणा

## १. नेपाल सद्भावना पार्टी

मानव अधिकार जस्तो पवित्र शब्दको प्रयोग नेपालको परिप्रेक्ष्यमा स्पष्ट भएको आभास भइरहेको छैन। आज विश्वमा जहाँ मानव अधिकारसंग सम्बन्धित संघ संस्थाहरु अति नै सम्वेदनशील भई काम गरिराख्या छ त्यहीँनिर नेपालमा "मानव" मात्रको व्याख्याको आवश्यकता छ जस्तो लाग्छ। संविधानदेखि लिएर कानूनी प्रावधानमा समेत कतिपय मानव अधिकारलाई खण्डित र मण्डित गर्ने प्रावधानहरु रहेका छन्। कतिपय ठाउँहरुमा नियुक्तिदेखि लिएर प्रमोशनसम्ममा पनि अघोषित प्रतिबन्धहरु लागेको प्रष्ट छ। जुनकि मानव अधिकारको उल्लंघनको नग्न प्रदर्शन मात्र हो भन्न सकिन्छ। आफ्नै देशमा राष्ट्रियताको पहिचानको संकट हुनु, मातृभूमिको रक्षा गर्ने पवित्र भावनामा अघोषित प्रतिवन्ध लाग्नु, कुनै पनि सेवामा नियुक्ति, सरुवा, बढुवा आदिमा सामुदायिक दृष्टिकोण राख्नु, जनसंख्याको आधारमा प्रतिनिधित्व हुनु पर्ने विश्वसम्मत प्रजातान्त्रिक अधिकारको प्रत्यक्ष उल्लंघन हुनु, राष्ट्र निर्माणमा सुनियोजित रुपले समुदाय विशेषलाई सम्मिलित नगराई एकांकी लङ्गडो सोचाइद्वारा राज्य सञ्चालन गर्नु आदि जस्ता क्रियाकलाप आजको सभ्य समाजको लागि प्रत्यक्ष रुपले मानव अधिकारको उल्लंघन हो । यी प्रसंगहरुलाई सम्भिदा १९९२ मा मानव अधिकारको स्थितिभन्दा यो मुलुकमा निर्वाध रुपले मानव अधिकारको प्रयोजन कस्तो रह्यो भन्ने कुराको उल्टो प्रश्न गर्न मन लाग्छ। यो सवालको जवाफ यहाँका मानव अधिकारवादी संस्थाहरुले आफ्नै आत्मासंग निष्पक्ष रुपमा सोधे प्रष्ट हुन्छ।

मानव अधिकारसंग सम्बन्धित संस्थाहरुले मानव अधिकारको कोरा आदर्शभन्दा व्यावहारिक दृष्टिकोण राख्नु पर्ने, फाईलमा भन्दा फिल्डमा अध्ययन गर्नु पर्ने, पूर्वाग्रहभन्दा सत्याग्रहतिर अग्रसर हुनु पर्ने र वास्तविकतालाई प्रष्ट रुपमा भन्न सक्नु पर्ने हिम्मत गर्नु पर्ने आजको आवश्यकता महसूस गरिएको छ। होइन भने मानव अधिकार जस्तो पवित्र शब्दको औचित्यतामाथि प्रश्नवाचक चिन्ह लाग्नेछ । आजसम्म नेपालमा भइरहेको भेदभावको सम्बन्धमा कुनै पनि मानव अधिकारवादी संस्था वा व्यक्तिले औपचारिक रुपमा प्रतिवाद गर्नु त कहाँ हो कहाँ स्वीकार समेत पनि नगरेको हुँदा यी संस्था वा सम्बन्धित व्यक्तिहरु नै मानवतावादी होइनन् कि भन्ने आशंका आम मानवमा पर्न थालेको छ।

*रामेश्वर राय यादव*
*संयुक्त महामन्त्री एवं सांसद्*
*नेपाल सद्भावना पार्टी*

## २. नेपाल मजदूर किसान पार्टी

२०४८ पुसदेखि ०४९ पुससम्म अर्थात सन् १९९२ पनि मानव अधिकारको दृष्टिले सन्तोषजनक देखिएन। सत्तासंग नजिक रहेकाहरुले मात्र मानव अधिकारको उपभोग गर्न पाउने स्थितिको आधारमा मानव अधिकारको मूल्यांकन गर्नु हुँदैन भन्ने हाम्रो ठम्याइ छ। यसरी मूल्यांकन गरिएको खण्डमा राणा शासन र पञ्चायती शासनमा घटेका मानव अधिकार हननका घटनाहरुलाई बिर्सनु पर्ने हुन्छ । तसर्थ बहुमत शोषित-पीडीत जनताले मानवको रुपमा सर्वांगीण विकास गर्न पाउने पूर्ण मानव अधिकारको पक्षमा हाम्रो पार्टी रहेको छ र रहने छ।

देशमा बहुदलीय प्रजातन्त्र पुन: स्थापनापछि सन् १९९२ मा भएका उप निर्वाचन र स्थानीय निर्वाचनहरुमा दलीय शासन पद्धतिको प्राकृतिक स्वरुप विपरीत एउटा सिंगो दलको मौलिक अधिकार समेत हनन भएको छ । काठमाण्डौ जिल्लाको क्षेत्र नं. ५ को उप-निर्वाचनमा नेपाल मजदूर किसान पार्टीका अधिकारिक उम्मेदवारलाई दलगत रुपमा निर्वाचन लड्नबाट बन्चित गरियो। त्यसले व्यक्ति विशेषको मात्र होइन एउटा सिंगो राष्ट्रिय दलको प्राकृतिक अधिकार माथि बलजफ्ती हनन गरेको हामी ठान्दछौं। त्यसको विरुद्ध हाम्रो पार्टीले संवैधानिक उपचार निम्ति न्यायालयमा रिट

निवेदन दियो । न्यायालयले दलगत रुपमा निर्वाचन लड्न पाउने फैसला गऱ्यो । तर स्थानीय निर्वाचन (२०४९ जेष्ठ) मा त्यस फैसलालाई निर्वाचन आयोगले अवहेलना गऱ्यो । स्थानीय निर्वाचनमा नेपाल मजदूर किसान पार्टीलाई कतै दलगत रुपमा उम्मेदवारी दिन दिइयो भने अधिकांश ठाउँमा दिइएन । फलस्वरुप नेमकिपाले जुम्ला, हुम्ला, कालिकोट, दैलेख, काभ्रे, बाँके, वर्दिया, काठमाण्डौ आदि जिल्ला र भक्तपुर का गा.वि.स.हरुमा स्वतन्त्र उम्मेदवारको रुपमा बहुदलीय व्यवस्थामा राजनैतिक अधिकार प्रयोग गर्नु पऱ्यो । निर्वाचन आयोगको यस निर्दलीय चरित्रमा अझ थप विडम्बनाको काम भयो - निर्वाचन चिन्ह मादल दिइएन । नेपाल मजदूर किसान पार्टीका उम्मेदवारले नेमकिपाको चुनाव चिन्ह नदिएबाट संवैधानिक अंग निर्वाचन आयोगको बहुदलीय व्यवस्था विरोधी क्रियाकलापलाई जगजाहेर गऱ्यो । अर्को शब्दमा संवैधानिक अंग नै मानव अधिकार हननका निम्ति लागि परेको सन्दर्भमा व्यक्तिको मानव अधिकारको स्थिति कति दयनीय होला सहजै अनुमान गर्न सकिन्छ ।

त्यस्तै जनताको राजनैतिक अधिकार उपभोगमा सत्ताको दुरुपयोग गरी नेपाली कांग्रेस नै प्रमुख बाधकको रुपमा देखा पऱ्यो । देशका सबै जसो स्थानमा सत्ताधारी पार्टीले देशको राजस्वमा आफ्नो प्रचार गरेको, मतदाताहरुलाई प्रभावित पारेको र विपक्षी पार्टीको कार्यकर्तालाई जाली मुद्दामा थुनछेक गरेको घटनाले पनि नेपाली कांग्रेसको सरकारले मानव अधिकारको स्थिति झनै दुरावस्थामा पुऱ्याएको थियो ।

नेपाल अधिराज्यको संविधानले सार्वजनिक महत्वको कुनै पनि विषयमा सूचना माग्ने र पाउने हक नेपाली जनतालाई दिएको छ । तर नेपालको सीमा नदी महाकालीको पानी र टनकपुर ब्यारेजको सवालमा देशको कार्यपालिकाले नेपाली जनताको सुसूचित हुने अधिकारमाथि थिचोमिचो गरेको छ, मानव अधिकारको ठाडो उल्लंघन गरेको छ र अझ भ्रमपूर्ण सूचना दिएर "अपराध" समेत गरेको छ । यसरी कार्यपालिका नै जनताको मानव अधिकार हनन निम्ति जिम्मेदार रहने देशमा मानव अधिकारको स्थितिको अनुमान गर्न कसैलाई कठिन हुने छैन ।

यस बाहेक देशका विभिन्न भागमा जनताले असुरक्षित हुनु, गैर कांग्रेसी कर्मचारीहरुले आफ्नो नोकरीको प्रत्याभूति नपाउनु, महिला बन्दीले आफ्नो अस्मिता बचाउन नपाउनु, बाल मजदूरको संख्या बढ्दै जानु, बन्दीहरुमाथि यातनाका खबरहरु निरन्तर प्रकाशमा आउनु, शान्तिपूर्ण विरोध प्रदर्शन माथि पनि निर्मम दमनका गतिविधिहरु बढ्नु, सुकुम्बासीहरु निम्ति कुनै वैकल्पिक बन्दोवस्त नै नगरी बर्बर दमन गर्नु आदि इत्यादि घटनाले सन् १९९२ मा मानव अधिकारको स्थितिलाई स्पष्ट गर्छ ।

नेपाली कांग्रेस सत्तामा आएपछि निरकुश शासनमा झैं लाठी गोलीको प्रयोग अत्यधिक बढेको छ र जेल सुधारतर्फ पुग्दो ध्यान दिएको देखिदैन । मानव अधिकारको बहाली, संरक्षण र सम्बर्द्धन लाठी गोलीले हुँदैन भन्ने कुरा सत्ताशीनहरुलाई बोध गराउन मानव अधिकारवादी व्यक्ति र संस्थाहरुको निरन्तर प्रयासको हामी खाँचो देख्दछौं । त्यसैले सन् १९९२ सन्तोषजनक नभए पनि सन् १९९३ मा मानव अधिकारको स्थितिमा सुधार हुने हामी आशा गर्दछौं ।

धन्यवाद ।

*प्रेम सुवाल*
*सचिव*

## ३. नेपाल कम्युनिष्ट पार्टी (मसाल)

मानिसको अन्तरआत्माको विरुद्धमा कसैलाई दवाव दिएर कुनै कामकार्वाही गराउनु हुँदैन भन्ने मानव अधिकार सम्बन्धी संघ-संस्था र संगठनहरुले भन्दै आएका छन् । राष्ट्र संघको घोषणा-पत्रमा पनि मानव अधिकारको सम्बन्धमा स्पष्ट किटान गरेको पाइन्छ तर आज मानव अधिकारको व्यापक रुपमा उल्लंघन भैरहेको छ । सत्ताधारीहरुले गरेका मानवअधिकारको उल्लंघन, ज्यादती कायम रहेको देख्दा सारा मानव अधिकार सम्बन्धी संघ संस्था र व्यक्तिहरुको फलाको कागजी मात्र भैरहेको छ ।

नेपालमा पञ्चायती व्यवस्थाको ३० वर्षे कालरात्रीमा मानव अधिकारसंग सम्बन्धित संघ-संस्था र संगठनहरुले पञ्चायती शासकहरुको अपराधपूर्ण कार्वाहीलाई समर्थन, सहयोग गर्दै गरेका उचित ठहऱ्याउने निर्लज्ज कार्यहरु हाम्रा अगाडि छन् । तिनै संघ-संस्थाहरुले आज पनि मानव अधिकारका हिमायती हौं भन्दै अन्तर्राष्ट्रिय दाताहरुबाट पाउने रकम पचाउने काम पनि नभएका होइनन् ।

देशमा ३० वर्षको अन्धकारका वर्षहरु पछि पनि नेपाली जनताहरुले मानव अधिकार पाएका छैनन् भन्ने कुरा बहुदलीय व्यवस्था पछिका ३ वर्षहरुमा देशव्यापी रुपमा घटेका घटना र सत्ताधारीहरुले गरेका मानव अधिकार विरोधी कुराहरुले प्रष्ट पारेका छन् । नेपाली जनताहरुले बहुदलीय व्यवस्था आएपछि आफ्ना इच्छा विपरीत हिड्नु पर्दैन होला भन्ने ठानेका थिए तर बहुदलीय व्यवस्थामा पनि मुठ्ठीभर शोषक सामन्त र दलाल पुँजीपतिहरुको सत्ता भएकाले नेपालमा मानव अधिकार तिनै सामन्त र दलाल पूँजीपतिहरुलाई छ । सर्वसाधारण जनतालाई पञ्चायती व्यवस्थाका तुलनामा केही भए तापनि खास रुपमा छैन । देशमा सत्ताधारीको सिद्धान्त,

राजनीति र संगठनलाई स्वीकार नगर्ने हो भने मानिसहरुले कुनै प्रकारको अवसर पनि नपाउने कुरा दिउँसोको घाम झैं छर्लङ्ग भएको छ। देशमा मानव अधिकार उल्लंघन भएको छ भन्ने कुरा बहुदलीय व्यवस्थापछि घटेका केही घटनाहरुबाट प्राप्त हुनेछ। बाग्लुङको बुर्तिवाङमा भूमिराज सापकोटाको हत्या, प्यूठानको पूजाकाण्ड, ज्यामिरघाट काण्डमा निर्दोष जनताहरुमाथि प्रहरीहरुले गरेको ज्यादती, मनोज जोशी हत्याकाण्ड, तीज काण्डमा राजु पौडेल लगायतका जनताहरु माथि प्रहरीले गरेका अमानवीय घटनाहरु ताजै छन्। ०४८ चैत्र २४ गते ने.का. सरकारले गरेको खुलेआम हत्याले नेपालमा मानव अधिकार उल्लंघन व्यापक रुपमा भैरहेको कुरालाई स्पष्ट रुपमा पुष्टि गर्दछ।

प्रहरीहरुले हिरासतमा विना कसुरका राजबन्दीहरुलाई जबर्जस्ती कागज गराउने, शरीरमा अपराधी हुँ भन्ने पोष्टर टाँसेर फोटो खिचाउने, कुटपिट गर्ने, जिउँदै मट्टीतेल खन्याएर आगो लगाउनु, रोल्पामा आमसभामा रोक लगाउनु, झुठ्ठा मुद्दाहरु लगाउनुका साथै ने.का.को पार्टीमा सामेल नभएको कारणबाट घरको सम्पति लुटिएको, घर भत्काएको, गोठको भैंसीसम्म काटी मासु खाएका घटनाले मानव अधिकारको ठाडो उल्लंघन भएको कुरा प्रमाणित गर्दछन्। सत्तापक्षले आफैं घटना घटाउने र भिन्नमत राख्नेहरुलाई झुट्टा मुद्दामा फसाई जेल नेल र यातना दिइराखेको र बिना प्रमाण सार्वजनिक, राजकाज तथा ज्यान सम्बन्धी मुद्दामा फसाइएका घटनाहरु पनि देशभरिनै व्याप्त छन्।

मानव अधिकारका नाममा देशभरिमा करिब २ दर्जन संघ-संस्था खुलेका छन् तर केही घटनाहरुमा आवाज उठाई पीडित पक्षलाई मद्दत गरे तापनि हाम्रो जस्तो भौगोलिक विकटता भएको मुलुकमा खास गरेर राजधानी बाहिर भिन्नमत राख्ने कर्मचारी र सर्वसाधारण जनतामाथि जति ज्यादती भएको छ शायद पञ्चायती अन्धकारका दिनहरुमा पनि भएन होला। हत्या, लुट, बलात्कार गर्न पञ्चायती शासकहरु लुकी छिपी गर्न गर्थे भने ने.का. ले खुलेआम गर्दै गैरहेको छ। मानव अधिकार सम्बन्धी संघ-संस्था र संगठनहरुले सत्तापक्षको दलाली र चाकरी हैन मानव अधिकार उल्लंघन भएका सत्य तथ्य घटनाहरु यथार्थ रुपमा जनता समक्ष ल्याउनु र पीडित पक्षलाई सहयोग पुऱ्याउनु आवश्यक छ।

*चित्रबहादुर के.सी.*
*केन्द्रीय कार्यालय*

## ४. नेपाली कांग्रेस

देशको मानवअधिकारको स्थितिप्रति समग्रमा हामी सन्तुष्ट छौं। मानव अधिकारका लागि जुन कुराहरुको पालन हुनु पर्ने हो ती कुराहरु पालन गरिएका छन्। कतिपय ठाउँमा मानव अधिकारको उल्लंघन भएको भन्ने कुरा प्रतिपक्षबाट सुनिन्छ र संसारभरि मानव अधिकारको सबभन्दा ठूलो उल्लंघनकर्ता सरकारलाई नै मानिन्छ। तर उल्लंघनका लागि एक पक्षमात्र जिम्मेवार हुँदैन। जस्तो कतै दुर्घटना भयो भने घाइते वा बढी क्षतिमा पर्ने व्यक्ति मात्र जिम्मेवार हुँदैन। किच्ने वा थिच्ने मात्र जिम्मेवार हुँदैन। दुर्घटना एउटै शक्तिका कारण मात्र हुँदैन। त्यहाँ दुईवटा शक्तिले काम गरिरहेको हुन्छ। अनि उक्त दुर्घटना घटाउनमा को बढी जिम्मेवार छ भन्ने मात्र हेरिन्छ।

विगत एक वर्षमा कतै बन्दुक पनि चले। अरु लाठी चार्ज इत्यादि पनि भए। तर त्यसमा को जिम्मेवार हो त्यो कुरालाई तलैदेखि नै हेर्नु पर्दछ। मानव अधिकारको उल्लंघन भएको छ छैन भनेर छुट्याउने कसीको आधारमा हामी भन्छौं मानव अधिकारको उल्लंघन भएको छैन। त्यसोभन्दा ट्रेजरी बेन्चमा छौं, त्यसैले सधैं आफ्नो कामको समर्थन गर्छौं भन्नु हुन्छ होला। तर हामी पनि हिजोसम्म त संघर्ष नै गरी आएका मानिस हौं। मानव अधिकारकालागि बोली आएका मानिस हौं। यतिखेर भएका घटनाहरुप्रति सरकारले मानव अधिकारको उल्लंघन गऱ्यो भनेर सरकारलाई मात्र जिम्मेवार बनाउन मिल्दैन। किनभने प्रतिपक्ष वा त्यसमा संलग्न तत्वहरु पनि उत्तिकै जिम्मेवार छन्। संसदीय अभ्यासमा राष्ट्र सञ्चालनका निम्ति प्रतिपक्ष एउटा बलियो आधार नै हो। ट्रेजरी बेन्च एकातिर छ भने अर्कोतिर प्रतिपक्ष हुन्छ। यी दुईटा मिलेर जाँदा प्रजातन्त्र दीर्घायु हुन्छ। तर ती आधारहरुमध्ये कहीं पनि केही खराबी भयो भने प्रजातन्त्र अगाडि बढ्न सक्दैन।

कतिपय दुर्घटनामा दुवै पक्ष जिम्मेवार हुन्छ र जिम्मेवारीको प्रतिशत कति हो भन्ने मात्र हो। अहिले त धेरै परिवर्तन भएको छ, जनतामा निकै प्रत्यासा जागेको छ। जनता प्रजातन्त्रको बढी अभ्यास पनि गर्न चाहन्छन्। तर कहिलेकाहीं जनताकै पक्षबाट पनि अप्ठ्यारो हुन सक्दछ। सरकारले पनि अनुभवहरु कम भएको हुनाले वा काम गर्ने शैली नजानी सकेको हुनाले, एउटा खुला समाजमा कसरी शान्ति सुरक्षा कायम गराउने भन्ने कुरामा ज्ञान नभएर वा अनुभव नभएर, प्राविधिक रुपमा त्यति सक्षम नभएकोले केही भएको हुन सक्छ। तर अतीतमा प्रजातन्त्रको स्थापना गर्न वा प्रजातन्त्रलाई बलियो बनाउनका लागि गरिने आन्दोलनमा जुन प्रकारले हामी लाग्यौं र राजनीतिक आदर्शलाई नै

कुल्चिने किसिमले जुन दमन हुन्थ्यो, त्यस प्रकारका कुनै पनि कुराको तपाई यहाँ संकेतसम्म पनि पाउनु हुन्न। हिंसा बढ्यो भन्ने कुरो चाहिं के हो भने हिंसा नबढेको होइन, तर यो भन्दा बढी थियो पहिले। एउटै कुरो छ तपाईले देख्न पाउनु हुन्छ र पारदर्शीपन हाम्रा धेरै कुरामा छन्। सबै कुरामा छन्। कहाँनेर कुन गाउँमा के भएको छ भन्ने तपाई देख्न सक्नु हुन्छ। १९८३ मा टनकपुर ब्यारेज बन्न थालेको हामी कसैलाई थाहै थिएन। तर अहिले सरकारले गरेको सहमतिमा कहाँनेर के छ भन्ने मेचीदेखि महाकालीसम्मका सबैलाई थाहा छ। सामान्य साक्षर मानिसहरुलाई पनि त्यहाँ के भएको छ भन्ने थाहा छ। अब समाज पूर्णतः खुला भएको छ।

हामी मानव अधिकार सम्बन्धी प्रतिवेदन र कागजातहरु भेटेसम्म राख्दछौं। नबुझेको कुराका बारेमा सरकारलाई सूचना गर्दछौं। एम्नेष्टीको नयाँ प्रतिवेदन पनि हेर्‍यौं। तर त्यो अति हाइपरबोलिक छ। तपाईलाई म प्रष्ट भनिदिन्छु।

तपाई र अर्को कोही बाटोमा हिंड्दा, मुक्कामुक्की, बाझबुझ पर्‍यो भने मानव अधिकार हनन भयो भन्न हुँदैन। त्यस्ता कुरा मानव अधिकार उल्लंघनभित्र पर्दैनन्। ती त अपराधी घटनाहरु हुन्। मैले गएर कसैलाई पिट्दछु, मार्दछु, भने मैले मानव अधिकारको उल्लंघन गरें - त्यो होइन, मैले अपराध गरें। एउटा अपराधीलाई हुने दण्ड मलाई हुनु पर्छ। र धेरै ठाउँहरुमा अपराधका घटनाहरु घटेका छन्।

हामी अन्तर्राष्ट्रिय मानव अधिकार संस्थाका प्रतिवेदनहरु हेर्छौं, स्वीकार गर्छौं, त्यस्ता प्रतिवेदनहरुको विश्लेषण गर्छौं, त्यस पछि वास्तवमा हो कि होइन हामी बुझ्दछौं र हामीले त्यो क्रम जारी राखेका छौं। त्यस विषयमा हामी हाम्रो क्षमताले भ्याएसम्म गर्दछौं।

अन्तरिम कालमा जेल सुधार सम्बन्धी आयोग बन्यो र त्यो भन्दा पहिले पञ्चायतकालमा पनि आयोग बनेको थियो तर तपाईले जेल भ्रमण गर्नु भएको छ हैन ? जुन बेला म जेल बसेको थिएं त्यस बेलाको जेल र अहिलेको जेल हेर्नुहोस् धेरै फरक पाउनु हुन्छ। तर जहाँ नराम्रा जेल छन्, साना जेलहरु छन् त्यस्ता समस्याहरुलाई हटाउन त हाम्रो आर्थिक स्थिति पर्याप्त हुनुपर्छ।

हेराइमा मात्र फरक होला तर म भन्छु जेलमा धेरै परिवर्त नभएको छ। म राजविराज जेलमा बसेको थिएं, २०२२-२३ सालतिर। त्यतिखेर मेरो खुट्टामा नेल राखिएको थियो अनि चर्पीनेर राखिदिएको थियो। मलाई कसैसंग भेट्न दिईदैनथ्यो। यी सब कुरो मैले भोगेको छु।

अहिले राजनीतिक सिद्धान्तमा आस्था राख्नेहरुलाई नेल लगाईदैन। अब अपराधी भाग्छ भने त त्यसलाई त लगाउनै पर्‍यो। भरिसक्य त्यो पनि नहोस् भन्ने हाम्रो चाहना रहेको छ।

गएको स्थानीय निर्वाचनताका जाजरकोट जेलमा नेपाली कांग्रेसकै एकजना कार्यकर्तालाई नेल लगाएर राखिएको थियो भन्ने कुरा उल्लेख गर्नु भयो। एउटा पार्टी जो सत्तामा छ उसले आफ्नो कार्यकर्तालाई पनि उस्ले गरेको खराबीप्रति त्यत्रो दण्ड दिन्छ भने त्यो भन्दा ठूलो के होला ? उसलाई कांग्रेस भयो भनेर जेलमा राखेको होइन होला। उसले अपराध गर्‍यो, उस्लाई अपराध गरेपछि त्यत्रो सजाय दिन्छ भने नेपाली कांग्रेस मानव अधिकारप्रति आफ्नो र अर्काको नछुट्याई दण्ड दिने गर्दछ भन्ने पुष्टि हुन्छ। हामी के भन्छौं भने अपराधी मान्छे जस्ले फेरि त्यहाँबाट निस्केर तपाईमाथि आक्रमण गर्छ, तपाईलाई समाप्त गर्ने प्रयास गर्छ, त्यस्तो व्यक्तिलाई नेल लगाउनु पर्‍यो।

नेपाली कांग्रेसको सरकारले मानव अधिकारको उल्लंघन गरेर काम गरेको छैन। केही हिंसा भने भएको छ। केही मरे गोलीले, कसैलाई कहीं आघात पुग्यो। तर त्यो आघात पुग्न वा गोली लाग्नमा के कांग्रेस मात्र जिम्मेवार छ या त्यो दुर्घटना घटाउनमा अर्को पक्षको पनि हात छ कि छैन ? किनभने दुर्घटना एउटा पक्षका कारणले मात्र त हुँदैन। त्यो कुरा चाही तपाईहरुले हेरिदिनुभयो भने जाती हुन्छ।

एउटा पुलिसले कुखुरा बोकेर हिंड्नेलाई कुट्यो। त्यो मान्छे ल मरेछ रे। अब त्यसमा चाहिं सरकारले मार्‍यो भनेर हेर्नु भन्दा त्यो अपराधी हो कि होइन ? एउटा प्रहरीलाई शान्ति सुरक्षा कायम गर्न राखिएको छ। उसैले खराब गर्‍यो भने त्यो त अपराधी नै हो नि। एउटा प्रहरी वर्दी नै लगाएर हिंड्छ र मान्छे मार्छ भने त्यो त अपराधी नै हो नि।

बाटोमा हिड्दा पुलिसले कसैलाई पिट्यो। त्यो पनि सरकारले नै खतम गर्‍यो। बाटोमा हिड्दा पुलिसले खाना खाएको ठाउँबाट पैसा नतिरी हिंड्यो। त्यो पनि सरकारले नै गर्‍यो भन्न मिल्दैन।

मानवका आफ्ना भावनाहरु व्यक्त गर्ने, शान्तिपूर्ण ढंगले बस्न पाउने यी नै आधारभूत दर्शन हुन्। त्यसकालागि बाधक को हुन् भन्दा सबभन्दा ठूलो त्यो गर्न सक्ने सरकार नै हो भन्ने एउटा धारणा छ र त्यो हो पनि, त्यही नहोस् भनेर व्यवस्थापनले ज्यादा गर्छ भनेर प्रजातन्त्रमा पारदर्शी नीति लिन सरकारले चाहेको हो। यसमा तल गएर कुनै व्यक्ति विशेषले केही गर्छ भने त्यो सरकारले गरेको भन्न चाहिं मिल्दैन। त्यो मानव अधिकारको हनन भयो भन्ने मलाई चाहिं लाग्दैन हेर्नोस्। त्यो त पुलिसले पिट्यो भने त्यो पुलिसलाई अदालतमा लैजानु पर्छ, सजाय गर्नु पर्छ।

बाल मजदूर हुनै हुँदैन। यो मानवीय सिद्धान्त विरुद्धको कुरो हो। मानवीय जीवनदर्शन विरुद्धको कुरो हो। तर जब एउटा सरकार बाल मजदूरीबाट बालकहरुलाई मुक्त गराउनका निमित्त कटिबद्ध छ वा नीतिगत रुपमा उसले

त्यसलाई स्वीकार गरेको छ भने कार्यान्वियनको प्रक्रियामा छिटो ढिलो हुन सक्दछ । तर हामी त्यही दिशामा अघि बढी रहेका छौं ।

हामी जुन गतिमा जानु पर्ने हो त्यो गतिमा जान नसकेका हौला । तर बाल मजदूर हुनु हुँदैन, बच्चाको बेला पढ्ने बेला हो, सबैथोक गर्ने बेला हो । तर सरकारले सबैलाई शिक्षा उपलब्ध गराउन सकेको छैन । त्यो गर्न नसकेकोमा निश्चय पनि सरकार जिम्मेवार छ । तर यसका लागि केही समय लाग्दछ ।

कुनै चिज पूर्ण र सम्पूर्ण रुपमा ठीक त हुँदै हुँदैन । तर अहिले मानव अधिकार उल्लंघन भएको छैन । शान्ति सुरक्षा कायम गर्ने क्रममा केही भए होलान् । तर व्यक्ति विशेषले कँही कसैको हत्या गर्छ भने त्यो हत्या र हिंसालाई तपाईले मानव अधिकारको हनन भयो, पुलिसले चोऱ्यो, त्यो मानव अधिकार को हनन भयो, पुलिसले माऱ्यो त्यो पनि मानव अधिकारको हनन भयो । चोर्दा खेरी मानिसलाई कुटेर चोऱ्यो त्यो पनि मानव अधिकारको हनन भयो भन्न मिल्दैन ।

अहिले राष्ट्रको नेतृत्वमा धुप्रै मानिस जेल बिताएका, कष्ट पाएका छन् । त्यसकारण त्यो नहोस् भन्ने मनसा वाचा कर्म उनीहरुको छ । तर भनी हालें कार्यान्वयनका क्रममा हाम्रो उद्देश्यलाई प्राप्त गर्ने क्रममा कति कुराहरु असक्षमताका कारणले गर्दा, कति कुराहरु साधनहरुको कमजोरीले गर्दा त्यस्तो भएका होलान् । तर तपाईको चिन्तनलाई नै बन्धनमा राख्नका लागि तपाईको स्वतन्त्रताको नै हनन गर्नका लागि, गरिएका कुनै पनि कुरा छैनन् । त्यसमा चाहिं म तपाईहरुलाई विश्वास दिलाउँछु ।

भोलि हाम्रा सबै जनता खान पुग्ने हुन सकुन्, सबैतिर फलोस् फुलोस् हाम्रो चाहना त यस्तो छ । तर त्यसका लागि त समय लाग्दछ । प्रजातन्त्र आएकै भोलिपल्ट, संसद्को पहिलो बैठक बसेकै केही दिनपछि नै यहाँ हड्ताल त्यसो भेर होला, फेरि टनकपुर भन्ने चिज पनि आउला भन्ने लागेको त थिएन । कहिं कहिं धिमा गतिमा बढनु परेको होला, कहिं कहिं रोकिएको होला । तर हामी ठीक दिशातर्फ नै बढ्दैछौं ।

बर्ष पुस्तक तपाइहरुले राम्रोसंग निकाल्नु होस् । र सत्य कुरा छापिदिनोस्, यथार्थ कुरा । तपाईहरुले गरेको कामबाट मानव अधिकारको रक्षा गर्ने दिशामा केही योगदान गर्न सकोस् ।

*(नेपाली कांग्रेसका केन्द्रीय कार्यालय सचिव कौशलराज रेग्मीसंग मानव अधिकार बर्ष पुस्तकका तर्फबाट डा. राजेश गौतम र कुन्दन अर्यालले २०४९ चैत २८ गतेका दिन कांग्रेस केन्द्रीय कार्यालय बानेश्वरमा गर्नु भएको कुराकानीमा आधारित)*

## ५. नेपाल कम्युनिष्ट पार्टी (एमाले)

०४६ सालको जनआन्दोलन मानव अधिकारको मूल्य तथा मान्यतालाई सिद्धान्त तथा व्यवहारमा उतार्ने प्रतिबद्धता समेतले प्रेरित थियो । यसै भावनाले प्रेरित भएर नयाँ संविधानको प्रस्तावनामा नै नेपाली नागरिकको आधारभूत मानव अधिकार सुरक्षित गर्ने घोषणा गरिएको छ । तर परिवर्तन पश्चात्का दिनहरुमा के यसो हुन सकेको छ ? प्रश्न गरिएको समयावधि (सन् १९९२)मा मानव अधिकारप्रति सिद्धान्त तथा व्यवहारमा सम्मान गर्न सकिएको छ ? स्वभाविक रुपमा अहिले उठिरहेका यी प्रश्नहरु महत्वपूर्ण छन् र यसलाई विभिन्न कोणबाट हेर्न सकिन्छ ।

<u>मानव अधिकारको अवस्था</u>

परिवर्तन पश्चात् मानव अधिकारको अवस्थालाई निम्न सन्दर्भमा हेर्न सकिन्छ :

१. संविधानसंग सम्बद्ध कानूनहरु
२. मानव अधिकार उल्लंघनकारी कानूनहरु
३. निर्माण हुन नसकेका कानूनहरु
४. व्यवहारमा मानव अधिकार उल्लंघनका घटनाहरु

१. <u>संविधानसंग सम्बद्ध प्रश्नहरु</u>

नयाँ संविधानको निर्माण भएदेखि नै देश तथा जनताको पक्षमा यसलाई परिवर्तन तथा परिमार्जन गरिनु पर्ने कतिपय प्रावधानहरु छन् भनेर सार्वजनिक रुपमा नेकपा(एमाले) ले उठान लिइआएको छ । यी प्रावधानहरुमा जनताको मानव अधिकारसंग सम्बन्धित कतिपय प्रश्नहरु छन् । उदाहरणका लागि धार्मिक स्वतन्त्रता, विभिन्न भाषा तथा संस्कृतिको सम्वर्द्धन तथा विकास, काम गर्न पाउने लगायतका आर्थिक अधिकारहरु र स्वास्थ्य सम्बन्धी अधिकारहरुलाई लिन सकिन्छ। नयाँ संविधानले यी महत्वपूर्ण विषयहरुलाई आत्मसात् गर्न सकेको छैन ।

संसद्का चारवटा अधिवेशन समाप्त भइसकेका छन् तर संविधानका यी लगायतका कमजोर पक्षहरुलाई संशोधन गर्ने प्रक्रियाको थालनी भएको छैन । प्रस्तुत सन्दर्भमा इमान्दार प्रयास भएको छैन । संविधानमा उपयुक्त संशोधन गरेर धर्म निरपेक्ष बनाउने सन्दर्भमा राष्ट्रिय सभामा प्रस्तुत नेकपा (एमाले) का भिक्षु अश्वघोषको संशोधन विधेयकलाई संसद्को बहुमतले छलफलसम्म गराउन चाहेन र अस्वीकृत गरिदिएको छ ।

## २. मानव अधिकार उल्लंघनकारी कानूनहरु

देशले नयाँ संविधान प्राप्त गरे पनि मानव अधिकार उल्लंघनकारी कानूनहरुलाई संशोधन गरिएको छैन । उदाहरणका लागि महिला विरुद्धको भेदभावपूर्ण कानूनी व्यवस्थालाई लिन सकिन्छ । संविधानले लिङ्गको आधारमा भेदभाव गर्न नपाइने घोषणा गरे पनि सम्पत्ति सम्बन्धी भेदभावपूर्ण कानूनी व्यवस्था अहिलेसम्म विद्यमान छ। संसद्को चौथो अधिवेशनसम्ममा यस दिशामा केही पनि गरिएको छैन ।

सार्वजनिक अपराध र सजाय ऐन अन्तर्गतका मुद्दाहरु प्रमुख जिल्ला अधिकारीले हेर्ने कानूनी व्यवस्था कायम नै छ। यस्ता मुद्दाहरुलाई जिल्ला अदालतको अधिकार क्षेत्र भित्र राख्न नेकपा (एमाले) को तर्फबाट सांसद् सुवास नेम्वाङले राष्ट्रिय सभामा पेश गरेको संशोधन विधेयकलाई छलफलका लागि प्रस्तुतसम्म गरिएन । संसद्को चौथो अधिवेशनसम्ममा कैद सजाय गर्न सक्ने अधिकार गैर न्यायिक अधिकारी वा निकायमा सुम्पने गरी सरकारद्वारा धेरै विधेयकहरु प्रस्तुत भएका छन् र बहुमतद्वारा पारित गरिएका छन् ।

## ३. निर्माण हुन नसकेका कानूनहरु

सार्वजनिक प्रतिवद्धताको वावजुद मानव अधिकारसंग प्रत्यक्ष सरोकार राख्ने धेरै विधेयकहरु संसद्मा प्रस्तुत गर्न सरकार असफल भएको छ । निर्वाचित सरकारको दुई वर्ष र संसद्को चार वटा अधिवेशन समाप्त भएको छ तर यातना विरुद्धको कानून, क्षतिपूर्ति सम्बन्धी कानून, सुसूचित हुने अधिकार सम्बन्धी कानून र नि:शुल्क कानूनी सेवा सम्बन्धी कानूनजस्ता मानव अधिकारसंग सम्बन्धित कानूनहरुको निर्माण गर्ने प्रयाससम्म गरिएको छैन ।

## ४. व्यवहारमा मानव अधिकार उल्लंघनका घटनाहरु

संविधान र कानूनका अक्षर तथा भावनाको प्रतिकूल हुने काम कारवाहीबाट व्यवहारमा मानव अधिकारको उल्लंघन भइरहेका हुन्छन् । दुर्भाग्यवश यस्ता घटनाहरुको संख्या वृद्धि भइरहेको छ र उदाहरण स्वरुप यस्ता केही प्रवृतिहरुको बारेमा तल उल्लेख गरिएको छ ।

(क) मानव अधिकारका उल्लघंनकारीहरुलाई कानून बमोजिम सजाय गरिनुपर्छ भन्ने धारणालाई अन्तर्राष्ट्रिय स्तरमा नै मान्यता प्राप्त छ तर मल्लिक आयोगको प्रतिवेदनमा दोषी ठहऱ्याइएका व्यक्तिहरुलाई राजपरिषद्सम्ममा नियुक्त गर्दै पुरस्कृत गरिएको छ ।

(ख) प्रहरी हिरासतमा यातना दिइएका घटनाहरु सार्वजनिक प्रकाशन र आधिकारिक छानवीन मार्फत जनता समक्ष प्रस्तुत भइरहेका छन् । बाग्लुङ्को प्र.नि. बैद्यको हत्याको सिलसिलामा गिरफ्तार अभियुक्तहरु र सिन्धुली ज्यान मुद्दाका अभियुक्तहरुलाई प्रहरी हिरासतमा अमानवीय यातना दिइएको तथ्य प्रमाणित छ र सार्वजनिक प्रकाशनमा समेत आइसकेको छ । काठमाडौं बूढानीलकण्ठको प्रहरी हिरासतमा मणिकला राईलाई शारीरिक यातनासम्म दिइएको हो भनेर सरकारी सूत्रले नै स्वीकार गरिसकेको छ । सम्बन्धित पक्षद्वारा बलात्कार भएको दावी गरिएकी मणिकला राई हाल अर्ध विक्षिप्त अवस्थामा पुगेकी छिन् ।

(ग) सार्वजनिक अपराध र सजाय ऐनको प्रयोग अहिले पनि राजनैतिक विरोधीलाई दवाउनका लागि भइरहेको छ । देशभर नै यसलाई राजनैतिक विरोधीको विरुद्ध दमनकारी हतियारको रुपमा प्रयोग गरिएको छ । उदाहरणका लागि बूढानीलकण्ठ घटनामा च्यातिएको लुगा लगाएकी मणिकला राईको फोटो खिच्ने फोटोग्राफर र सोधी खोजी गर्ने गाउँले-हरुलाई काठमाडौं जिल्ला कार्यालयमा सार्वजनिक अपराध सम्बन्धी मुद्दा चलाइएको छ । अहिले देशभरि नै यस्ता उदाहरणहरुले सयौंको संख्या नाधिसकेको छ ।

(घ) ०४६ सालमा जनआन्दोलनको क्रममा स्थानीय प्रशासन ऐनको गलत प्रयोग गर्दै गोली प्रहार लगायतका काम कारवाही भएको थियो भन्ने मल्लिक आयोगको प्रतिवेदन छ। अहिले पनि यस्ता घटनाहरु देखा परिरहेका छन् । मनोज जोशीको हत्या, बशिर मियांको हत्या र कावासोतीको गोलीकाण्ड यस्तै उदाहरण हुन् ०४८ साल चैत्र २४ गते काठमाण्डौ उपत्यकामा भएको गोलीकाण्ड मानव अधिकार उल्लंघनको गम्भीर घटना हो । संसद्को चौथो अधिवेशन चलिरहेको समयमा सिंहदरवार ढोकामा गरिएको कारवाही र सिन्धुलीमा गरिएको सम्झना दाहालको हत्या निर्वाचित सरकारको लागि अर्को कालो धब्बा हो तर न्यायिक आयोग गठन गर्ने आम जनताको मागलाई लत्याएर सिन्धुली हत्याको सम्बन्धमा सरकार मौन छ भने भरत देवकोटाको हत्यालाई लिएर एकपक्षीय ढंगले राजनैतिक प्रतिशोध पूरा गर्नमा सरकार लागिरहेको छ ।

(ङ) शान्तिपूर्ण विरोध प्रदर्शनको अधिकार माथि निरन्तर प्रहार भइरहेको छ । प्रधानमन्त्रीलाई ज्ञापन-पत्र दिन जाँदा प्रेमसिंह धामी लगायतलाई गिरफ्तार गर्ने, भारतका प्रधानमन्त्री आउनु भएको अवस्थामा जनमोर्चाका सांसद्हरुलाई गिरफ्तार गर्ने र यसै पटक पनि अधिवेशन चलिरहेकै अवस्थामा सांसद् कृष्ण गोपाललाई गिरफ्तार गर्ने सरकारको कामकारवाहीलाई उदाहरणको रुपमा लिन सिकन्छ ।

(च) राजद्रोह सम्बन्धी कानूनी हतियार प्रयोग गर्दै भर्खरै पत्रकारहरुमाथि गरिएको कारवाहीलाई मानव अधिकार उल्लंघनको पराकाष्ठा मान्न सकिन्छ ।

(छ) मानव अधिकारको क्षेत्रमा देशको अवस्थालाई निरन्तर आंकलन र मूल्यांकन गर्दै आवश्यक कार्यार्थ सिफारिस गर्ने सर्वदलीय राष्ट्रिय आयोगको अविलम्ब स्थापना गरियोस् भन्ने नेकपा (एमाले) को तर्फबाट सांसद् सुवास नेम्वाङ्ले राष्ट्रिय सभामा राखेको संकल्प प्रस्तावलाई सत्तापक्षले अस्वीकृत गरेको छ । यसैलाई सिद्धान्तमा मानव अधिकारप्रति प्रतिवद्धता देखाउदै व्यवहारमा भने स्वेच्छाचारिता अपनाउने प्रवृतिको द्योतक मान्न सकिन्छ। यो घटना मानव अधिकारको क्षेत्रमा निर्वाचित सरकारले उठाएको प्रतिगामी कदमको रुपमा स्मरणीय रहनेछ ।

<u>निचोड</u>

राजनैतिक परिवर्तन पश्चात् पनि देशको मानव अधिकारको अवस्था सन्तोषजनक छैन। नेकपा (एमाले) ले यसै कुरालाई मनन गरेर प्रमुख प्रतिपक्षको रुपमा मानव अधिकार को क्षेत्रमा पनि आफ्नो जिम्मेवारीलाई गम्भीरतापूर्वक निर्वाह गरिरहेको छ । सत्तापक्ष निरंकुशतातर्फ उन्मुख र मानव अधिकारको विपरीत काम कारवाही गरिरहेको अवस्थामा नेकपा (एमाले) ले संसद्‌देखि सडकसम्म आफ्नो दायित्व निर्वाह गर्ने काम गरेको छ। मानव अधिकारको रक्षाको लागि सार्वजनिक प्रस्ताव, ध्यानाकर्षण, संकल्प, अल्प सूचनाको प्रश्न र विभिन्न प्रस्तावहरु संसद्‌मा प्रस्तुत गरिएका छन्। साथै सरकारमाथि दवाव सिर्जना गर्न आम जनतालाई शिक्षित तथा संगठित गर्ने काममा समेत नेकपा (एमाले) गम्भीर रुपमा लागिरहेको छ । मानव अधिकारलाई सिद्धान्तको साथै व्यवहारमा पनि सुनिश्चित गर्न व्यापक जन दवावको सिर्जना आवश्यक छ ।

*ईश्वर पोखरेल*
*सचिव*
*केन्द्रीय कार्यालय*

## ६. नेपाल कम्युनिष्ट पार्टी (संयुक्त)

नेपाली जनताले आधा शताब्दी लामो राजनीतिक संघर्षको परिणाममा प्राप्त गरेको नेपाल अधिराज्यको संविधान २०४७ ले नेपालमा नागरिकहरुलाई मौलिक र मानव अधिकारहरुको प्रत्याभूति गरेको छ । यो संविधान नेपालको राष्ट्रिय स्थिति, शक्ति सन्तुलन र अन्तरराष्ट्रिय अवस्थाको प्रतिविम्ब हो । मानव अधिकारसित सम्बन्धित विभिन्न १४ वटा महासन्धि, अनुवन्ध र प्रोटोकलहरुमा नेपालले हस्ताक्षर गर्नु र वर्तमान संविधान मानव अधिकार को क्षेत्रमा नेपाली जनताको ठोस उपलब्धी हो ।

संविधानको भाग ३ ले मौलिक हक अन्तरगत नेपाली नागरिकहरुलाई समानताको हक, स्वतन्त्रता, छापाखाना र पत्र-पत्रिका फौजदारी न्याय सम्बन्धी निवारक नजरबन्द विरोधी, सूचना, सम्पत्ति, संस्कृति र शिक्षा, धर्म, शोषण विरोधी, देश निकालाको विरुद्ध, गोपनीयता र संवैधानिक उपचारका हकहरु दिएको छ ।

संविधानको भाग ४ ले मुलुकमा न्यायपूर्ण र लोक कल्याणकारी व्यवस्था खडा गर्नु, आर्थिक स्रोत र साधनहरुलाई सिमित व्यक्तिहरुमा केन्द्रित हुन नदिनु, सामाजिक न्यायको आधारमा आर्थिक उपलब्धिको न्यायोचित वितरणको व्यवस्था मिलाई कुनै पनि वर्ग वा व्यक्ति उपर आर्थिक शोषण हुन नपाउने व्यवस्था गर्नु, राष्ट्रिय अर्थतन्त्रलाई आत्मनिर्भर बनाउनु पर्ने नीतिहरुलाई राज्यको निर्देशक सिद्धान्तको रुपमा स्वीकार गरेको छ। संविधानको भाग ४ दफा २५ (३) ले सवै किसिमका आर्थिक एवं सामाजिक असमानता हटाई विभिन्न जाति, धर्म, भाषा, वर्ण र सम्प्रदायका बीच सामन्जस्य स्थापना गरी न्याय र नैतिकतामा आधारित स्वस्थ सामाजिक जीवनको स्थापना र विकास गर्नु राज्यको सामाजिक उद्देश्य हुने छ भनेको छ ।

तर संविधानको भाग ३ र भाग ४ मा जे जस्तो लेखिए तापनि नेपाली कांग्रेसको सरकारले विगत २ वर्षहरुमा नेपाली जनताहरुलाई प्राप्त मौलिक र मानव अधिकारको वारम्वार उल्लंघन गरेको छ । यो सरकारको निर्देशक सिद्धान्त र नीतिहरु जे जस्तो भने तापनि मुलुकमा आर्थिक सामाजिक असमानता बढाउने, अन्याय र अनैतिकता बढाउने काम गरेको छ ।

प्रशासनको कांग्रेसीकरण र कर्मचारीहरुको मनपरी छटनीले नागरिकहरुलाई प्राप्त समानताको संवैधानिक हकको उल्लंघन गरेको छ । सरकारी प्रचार साधनहरुलाई नेपाली कांग्रेसको हित पूर्तिको साधन बनाएकोले जनताको सुसूचित हुने अधिकार माथि चोट परेको छ ।

गिरिजा सरकारले आफ्ना जनविरोधी, गलत आर्थिक र सामाजिक नीतिहरुको परिणामहरुमा जन्मिएको बढ्दो जनविरोधलाई प्रहरी आतंकको मार्फत मुकाबिला गर्ने प्रयास गरिरहेको छ। जसले गर्दा प्रहरी शासनद्वारा जनताको सभा, संगठन, जुलुश प्रदर्शन गर्ने अधिकारमाथि अंकुश लगाउने प्रयास भैरहेको छ ।

सानोभन्दा सानो उत्तेजनामा पनि गोली काण्ड गरेर नागरिकहरुको हत्या गरिँदै छ । प्रहरी निम्ति वारेन्ट नदिई गिरफ्तार गर्नु, हिरासतमा यातना दिनु, कांग्रेस विरोधीहरुलाई चोरी, खुन र डकैतीका झुट्ठा मुद्दाहरुमा फसाउनु साधारण भएको छ। सरकारद्वारा सार्वजनिक अपराध तथा सजाय ऐनको बढ्दो दुरुपयोग भएको छ । यी सबै कार्यहरुमा स्थानीय प्रशानहरुलाई कांग्रेसी नेतृत्वको पूर्ण सहयोग प्राप्त छ। नेपाली कांग्रेसका नेता तथा कार्यकर्ताहरु बढ्दो मात्रामा आर्थिक भ्रष्टाचार र कमिसनखोरीमा संलग्न हुँदैछन् । यी सबलेगर्दा मौलिक हकको ठूलो हनन भइरहेको छ ।

टनकपुर सन्धिलाई सम्झौता भनेर नेपाली कांग्रेसको सरकारले संविधानको नांगो उल्लंघन गरेको थियो ।

गिरिजा सरकारका यी मौलिक हक विरोधी कार्यहरुको प्रारम्भ संसदीय र स्थानीय निर्वाचनमा नेपाली कांग्रेसद्वारा सञ्चालित राष्ट्रव्यापी हिंसा, धाँधली, मतचोरी थियो ।

संविधानले लोक कल्याणकारी, न्यायपूर्ण, शोषण विहीन समाजको निमार्णतिर राज्यले बढ्नु पर्दछ भनेर किटान गरेको छ तर नेपाली कांग्रेसको सरकार श्रमिक विरोधी, अन्यायपूर्ण र शोषणमा आधारित पूंजिवादी समाजको निर्माणतिर उन्मुख छ ।

यसरी प्रष्ट हुन्छ नेपाली कांग्रेसको वर्तमान सरकारले संविधान ०४७ को भाग ३ र भाग ४ को जानाजान उल्लंघन गरी नेपाली जनताका यावत मौलिक-मानव अधिकारहरुमाथि चोट पुऱ्याइरहेको छ ।

*विष्णुबहादुर मानन्धर*
*नेपाल कम्युनिष्ट पार्टी (संयुक्त)*
*डिल्लीबजार*

## ७. संयुक्त जनमोर्चा नेपाल

३० वर्षे निरंकुश एकदलीय पञ्चायती व्यवस्थामा राजनैतिक पार्टी प्रतिवन्ध भएको कारण राजनैतिक गतिविधिमा रोक, मानव अधिकारको पूर्ण हनन, त्यस व्यवस्थाको मौलिक विशेषता नै थियो। राजनैतिक स्वतन्त्रता र मौलिक अधिकार को निम्ति संघर्षरत हजारौं नागरिकमाथि दमन र गोलीको भाषा प्रयोग गर्ने निरंकुश व्यवस्थामा सयौं सपूतले शहादत प्राप्त गर्न पुगेको इतिहास हाम्रा सामु प्रष्टै छ र यिनै कारणले गर्दा पनि यो व्यवस्थाको अन्त अनिवार्य बनाइदियो । २०४६।४७ को ऐतिहासिक जनआन्दोलन पश्चात् बहुदलीय राजनैतिक व्यवस्थाको स्थापना र त्यसै अनुरुपको संविधानको निर्माणले जनतालाई पूर्ण प्रजातन्त्र प्रदान गर्न नसके तापनि सीमित प्रकारको प्रजातन्त्र र मानव अधिकारको व्यवस्था गरेको हो । त्यसै अनुरुप देशमा आम निर्वाचन सम्पन्न भई नेपाली कांग्रेसले देशमा आफ्नो सरकार समेत बनायो । तर जुन आकांक्षाले कांग्रेस सरकारमा सत्ताशीन हुन पुग्यो जनताको विश्वास माथि त्यति नै तुषारापात भएको अनुभव भइरहेको छ । जनता संविधान प्रदत्त मौलिक अधिकारको उपभोग गर्नबाट समेत बञ्चित भएका छन् ।

सरकार सामु आफ्ना मागहरु राखेर शान्तिपूर्ण रुपमा जुलुस सभा प्रदर्शन गर्न पाउने संवैधानिक अधिकारलाई वर्तमान सरकारले बुट, लाठी र गोलीले दमन गरी ३० वर्षे पञ्चायती व्यवस्थालाई समेत बिर्साइदिने कार्य गरेको छ । देशको संविधान र कानूनको उल्लंघन गरी देशको प्राकृतिक सम्पदा र जलस्रोत भारतलाई सुम्पी राष्ट्रघाती कार्य गरेको कुराको प्रमाणित देशको न्यायपालिका सर्वोच्च अदालतले समेत पुष्टि गरेको छ । महंगी कालाबजारी भ्रष्टाचारलाइ प्रश्रय दिई जनताको जिउने अधिकार माथि समेत अंकुश लगाएको छ । यी विविध सबाललाई लिएर संयुक्त जनमोर्चा नेपाल समेत सम्मिलित केन्द्रीय संघर्ष समितिले गतवर्ष १४ सूत्रीय माग सरकार समक्ष पेश गर्दा पनि कुनै कदम नचालेपछि शान्तिपूर्ण रुपमा गरेको आन्दोलन माथि निर्मम दमन गरी सरकारले निरकुंश रुप धारणा गऱ्यो। २०४८ चैत्र २४ को नेपाल बन्दमा शसस्त्र दमन गरी घरभित्र बसेका जनतामाथि समेत गोली प्रहार गरी १२ जनाको ज्यान लियो भने सयौंलाई घाइते तथा हजारौंलाई जेल यातना दिने कार्यले ३० वर्षे पञ्चायती व्यवस्थालाई बिर्साइदिने कार्य एकैदिनको दमन कार्यले गऱ्यो । त्यसबेला संविधान र कानून केवल कागजको खोस्टाको रुपमा विद्यमान रहे। सरकारको संविधान र मौलिक अधिकारको हननको यस कार्यको विरोधका साथै अन्य समेत गरी १९ सूत्रीय माग अघि राख्दै पुन: ०४९ वैशाख २१ मा नेपाल बन्द कार्यक्रम पनि अभूतपूर्व रुपमा सफल भएको हो तर संविधान र कानूनलाई कुल्चने यो सरकारमा कुनै नैतिकता समेत नभएकाले सरकार आन्दोलन-कारीका कुनै पनि माग पूरा गर्नतिर लागेन र आफ्ना निरंकुश क्रियाकलाप जारी राख्दै गयो । उल्टै राजनैतिक प्रतिशोध कायम राख्दै देशभर संयुक्त जनमोर्चा लगायत अन्य प्रतीपक्षी पार्टीका कार्यकर्तामाथि झुठा मुद्दा लगाउने कार्य गऱ्यो । कैयौं कार्यकर्ताको अपहरण र हत्या समेत गर्न पुग्यो । यसका केही मात्र तल उल्लेखित उदाहरणले यो कुरा अरु स्पष्ट गर्ने छ:

<u>रामेछाप</u>: सांसद् कमल चौलागाई लगायत ४६८ जना हाम्रा कार्यकर्तालाई सार्वजनिक अपराध डकैती, ज्यानमार्ने उद्योग जस्ता झुठ्ठा मुद्दा लगाएको छ भने गत स्थानीय निर्वाचनमा संयुक्त जन मोर्चाका कार्यकर्ता भुवन थापालाई अपहरण गरी हत्या गरी लाश बेपत्ता पारेको छ ।

रोल्पा: हाम्रा ५०० कार्यकर्ता माथि विभिन्न झुठ्ठा मुद्दा लगाई राजनैतिक प्रतिशोध लिने कार्य गरेको छ ।

सिन्धुली: गत साल जेठ ८ गते सिन्धुलीको अमले गाविसको घटनामा संयुक्त जनमोर्चाका कार्यकर्ता ध्रुव देवकोटालाई गिरफ्तार गर्न नसकी उनका बाबु खड्गबहादुर देवकोटालाई थुनामा राख्नुले देशमा भएको मानव अधिकारको खिल्ली उडाउदैन र ? साथै हाल त्यहा ५० जनालाई बिभिन्न झुठा मुद्दा लगाइएको छ। त्यस्तै कैलालीमा २०, तनहुँमा ३०, धनुषामा ५, बर्दियामा ५०, सिराहामा १३, काभ्रेपलान्चोकमा ७०, रुकुममा १००, गोरखामा ६०, कपिलवस्तु, चितवन, हुम्ला आदि गरी हजारौं कार्यकर्ता बिभिन्न झुठा मुद्दामा फसाइएका छन् ।

त्यस्तै गत वर्ष साउनमा बागलुङको गल्कोटमा संयुक्त जनमोर्चाका कार्यकर्ता मुकुन्द चोखालको हत्या भएको छ । धनुषामा रामसागर यादवको हत्या भएको छ । सिन्धुलीका टाडीगुरास गाविसका वाम उम्मेदवार पशुवा दनुवारको हत्या पनि कांग्रेसकै जिल्ला स्तरीय कार्यकर्ताबाट भएको छ ।

राष्ट्रघाती टनकपुर सन्धिलाई सर्वोच्च अदालतले समेत सन्धि ठहर गरेपछि संयुक्त जनमोर्चा नेपाल लगायत ४ राजनैतिक पार्टीले शुरु गरेको शान्तिपूर्ण कार्यक्रम अन्तरगत फागुन २२ गते सिंहदरवार घेराउमा सांसद् लगायत अन्य जनसमुदाय माथिको बर्बर पुलिस दमन र त्यसै दिन सिन्धुलीमा छात्रा संझना दाहालको हत्या र सयौं कार्यकर्तामाथि लगाइएका झुठा मुद्दाले पनि देशमा मानव अधिकारको स्थितिलाई व्यक्त गर्दछ ।

यी हत्या, आतंक, गुण्डागर्दी र झुठा मुद्दाको पछाडि निश्चित राजनैतिक उद्देश्य रहेको र अपराधीलाई सत्तापक्षको संरक्षण र प्रोत्साहन रहेको कुरा घटनाक्रमले पुष्टि गरेका छन् । नेपाली कांग्रेसले बहुदलीय व्यवस्थालाई आदर्श व्यवस्थाको नाम जप्दै निरंकुशता कायम गर्दै संविधान र मानव अधिकारमाथि धावा बोल्दै जनघाती, राष्ट्रघाती र मानव अधिकार उल्लंघन गर्दै आफ्नो सक्कली रुप धारण गरेको छ । हामी यी अपराधपूर्ण कार्यको घोर निन्दा गर्दछौं । साथै हाल देशमा भइरहेका यस प्रकारका घटनाको देशमा विद्यमान केही मानव अधिकारवादी संघ संस्थाले घटनाको यथार्थ रुप जनसमक्ष राख्ने सह्राहनीय कार्य गरेका छन् । गत २०४८ चैत्र २४ को नेपाल बन्दमा सरकारी पक्षबाट भएको नरसंहारको छानवीन गर्न गठित "नागरिक छानविन आयोग" मा मानव अधिकार संरक्षणसित सम्बन्धित विभिन्न संस्थाका प्रतिनिधि रहनु र रिपोर्ट तयार गर्नुले स्पष्ट पार्दछ। तर सरकारी पक्ष नत न्यायिक आयोग गठन गर्न तयार छ नत आयोगको रिपोर्ट कार्यान्वयन गर्न तयार छ। त्यस्तै एम्नेष्टी इन्टरनेशनलको नेपाल बारेको रिपोर्टले पनि नेपालमा मानव अधिकारको व्यापक हनन भएको कुरा उल्लेख गरेको छ। तर सरकारी पक्ष यो स्वीकार गर्न तयार छैन । धन्यवाद ।

*पम्फा भूसाल*
*सचिव*
*संयुक्त जनमोर्चा नेपाल*
*पाटनढोका, ललितपुर*

# अनुसूची – ३

# सन् १९९२ र नेपालका बालबालिकाको अधिकार

## १. विषय प्रवेश

बालबालिकाले कुल जनसंख्याको करिब आधा हिस्सा ओगटेका छन । हाम्रो देशका जनताको न्यून जीवन स्तर र विपन्नताको कारण अधिकांश बालबालिकाहरु अंधेरो परि स्थितिमा बाँचिरहेका छन् । आजभोलि एकातिर बालबालिकाहरुको हक अधिकार र विकासको कुरा उठिरहेको छ भने अर्कोतिर ठीक यसैबेला गरिबी, अभाव र विपन्नताको बीच हाम्रा बालबालिकाहरु बाँच्न विवश छन् ।

नेपालमा पनि गत केही वर्षदेखि बालअधिकार आन्दोलनले जनस्तरमा आफ्नो जग बसाल्न थालेको छ । समाज परिवर्तन संगसंगै क्रमश: हाम्रो देशमा पनि बाल अधिकार, बाल विकास र बालबालिकाहरुमाथिको शोषण र उत्पीडनका सवालहरु उठीरहेका छन् । बाल अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय आन्दोलनको "बाल अधिकार सम्बन्धी महासन्धि - १९८९" पारित गरेपछाडि संसारका धुप्रै देशहरुमा यसको प्रभाव पर्न थालेको छ । उपरोक्त "बाल अधिकार सम्बन्धी महासन्धि" लाई समर्थन र अनुमोदन गर्ने सन्दर्भमा नेपालले पनि शुरु मै आफ्नो प्रतिबद्धता जाहेर गरी आफूलाई राज्यपक्षहरुको पक्तिमा उभ्याएको छ ।

नेपाल "बालअधिकार सम्बन्धी महासन्धिलाई अनुमोदन गरे पश्चात् त्यसलाई व्यवहारमा कार्यान्वयन गर्ने क्रममा सरकारी तथा गैर सरकारी स्तरमा विविध गतिविधिहरु सञ्चालन भइरहेका छन् । तर यसको वावजुद पनि बाल अधिकारको उल्लंघन र बाल विकास सम्बन्धी अवान्छनीय क्रियाकलापहरु यत्रतत्र भइरहेकै पाइन्छ । यहाँ सन् १९९२ मा बाल अधिकारको विकास र संरक्षणको सन्दर्भमा भएका गतिविधिहरुलाई सरसरती उल्लेख गरिएको छ ।

## २. बालबालिकाको वास्तविक स्थिति

दक्षिण एशियाका अन्य मुलुकहरुमा जस्तै नेपालमा पनि बालबालिकाको जनसंख्याले ठूलो ठाउँ ओगटेको छ । सन् १९९१ को जनगणना तथ्यांक अनुसार नेपालमा १४ वर्ष मुनिका बालबालिकाहरुको संख्या मात्र करिब ४२.३% छ । तिनीहरुमध्ये ३७.३% बालबालिकाहरु शहरी क्षेत्रमा र बाँकी ग्रामीण क्षेत्रमा बसोबास गर्दछन् । सरकारी तथ्याङ्कहरुमा अधिकांश बालबालिकाहरु विद्यालयमा भर्ना भएको देखिए तापनि यथार्थमा ती बालबालिकाहरुले बारम्बार विद्यालय छाड्न परेको छ भने अर्कोतिर ग्रामीण तथा शहरी गरिब वस्तीहरुमा जन्मे हुर्केका बहुसंख्यक बालबालिकाहरुले प्राथमिक विद्यालयहरुमा पाइला टेक्ने अवसर पनि पाएका छैनन् । एकातिर उनीहरु गरिबी, विपन्न परिस्थिति र कुपोषणको बीच हुर्किरहेका छन् भने अर्कोतिर जीवन धान्नको निम्ति आफ्नो सम्पूर्ण बालापनलाई धितोमा राखी बालमजदूरी गर्न बाध्य भएका छन् ।

कुनै पनि देशको बाल अधिकार आन्दोलनको प्रकृति र गतिविधिलाई जानकारीमा राख्न त्यस देशका बालबालिकाहरुको वास्तविक स्थिति कस्तो छ बुझ्न अति जरुरी छ ।

### (क) बालबालिका र तिनको सामाजिक स्थिति

प्रत्येक वर्ष हाम्रो देशमा लाखौं बालबालिकाहरु जन्मन्छन्, तर तिनीहरुमध्ये प्रतिहजार १०७ बालबालिका ६ महिना नपुग्दै र प्रतिहजार १६५ पाँच वर्ष नपुग्दै मर्दछन् । शिशु तथा बालमृत्यु दरको यो महामारीबाट जो बाँच्दछन्, तिनीहरुमा ज्यादै थोरै प्रतिशत मात्रले आफ्नो बालापनमा र माउन पाएको हुन्छ । अन्यथा, बहुसंख्यक बालबालिकाहरु साह्रै दु:ख कष्ट र विपन्नतामा आफ्नो हुर्कंदो जीवन बिताउन बाध्य छन् । एकातिर हाम्रो देशमा बालबालिकाहरुको पोषण, स्वास्थ्य र शिक्षालाई सामान्यतया उच्च प्राथमिकता दिने सामाजिक प्रचलन नै छैन भने अर्कोतिर समाजमा विद्यमान कुसंस्कार, कुरीति र सामाजिक अन्धविश्वासको स्थितिले बाल विकासमा अवरोध खडा गरेको छ । यसबाहेक, कुपोषण, झाडापखाला, निमोनिया, धनुष्टंकार र क्षयरोगजस्ता प्रतिरोधात्मक रोगका कारण पनि हाम्रा बालबालिकाहरु आफ्नो बाँच्न पाउने अधिकार गुमाउन बाध्य भएका छन् ।

आर्थिक विपन्नता र सामाजिक विचलनको कारण निरन्तर बढ्दै गएको पारिवारिक विस्थापन र वियोगको कारण पनि आजभोलि धुप्रै बालबालिकाहरुले अँधेरो र अनिश्चिततामा आफ्नो जीवन व्यतीत गर्न परेको छ। फलस्वरुप, घर परिवारबाट बालबालिकाको विचलन, टुहुरा, खाते तथा सडक बालबालिकाहरुको वृद्धि तथा निरन्तर रुपमा बालबालिकाहरु जोखिमपूर्ण परिस्थितिमा घचेटिइरहेका छन् । एकातिर समाजमा विद्यमान बालविवाह अर्कोतिर देवकी, झुमा, बादी जस्ता सौंस्कृतिक कुसंस्कारको उपस्थितिले खासगरी बालिका र चेलीबेटिहरुको विकासमा सामाजिक बाधा-अड्चन खडा गरेको छ। यस बाहेक वर्षौं देखि विद्यमान बाल मजदूरी, बंधुवा बालमजदूरी र बालबालिका र चेलीबेटीको अस्मिताको बिक्री-वितरणको सबालले बाल अधिकार आन्दोलनको बाटोलाई समस्यापूर्ण बनाएको छ। यस विषयलाई अझै विस्तृत रुपमा जानकारी दिनाको लागि बालबालिकासंग सम्बन्धित विविध पक्षहरुलाई निम्नानुसार राखिएको छ।

(ख) बालबालिका र तिनको आर्थिक स्थिति

नेपालका दुई तिहाइभन्दा बेसी बालबालिकाहरु अति विपन्न परिवारमा जन्मे हुर्केका हुन्छन्। परिवारमा विद्यमान आर्थिक विपन्नता, अशिक्षा, असचेतनाको कारण यी बालबालिकाहरुको बालापन कष्टप्रद त छँदैछ त्यसमा पनि तिनीहरु स्वयम् नै परिवारमा आर्थिक योगदान गर्न समेत बाध्य छन्। "केन्द्रीय तथ्याङ्क विभाग" को एक तथ्याङ्क अनुसार १०-१४ वर्षका ५७% बालबालिकाहरु आर्थिक उत्पादन कार्यमा संलग्न छन् । "सीवीन" लगायत कतिपय गैरसरकारी संस्थाहरुको सर्वेक्षण अनुसार नेपालमा ७-८ वर्षका केटाकेटीहरु पनि "बालश्रम" मा संलग्न हुन बाध्य भएका छन्। आर्थिक उत्पादन कार्यमा कति बालबालिकाहरु संलग्न छन् भन्ने बारे पूर्ण तथ्यांकको अभाव भए तापनि १६ वर्षमुनिका लाखौं बालबालिकाहरु कठिन बालश्रममा संलग्न रहेको पाइन्छ। बालश्रम सम्बन्धी एक आधिकारिक तथ्याङ्क अनुसार नेपालमा बालक र बालिका दुवै बालश्रममा संलग्न रहेको पाइए तापनि बालकको तुलनामा बालिकाले प्रतिदिन ३ देखि ५ घण्टासम्म बढी काम गरेको पाइयो। ग्रामीण इलाकामा निरन्तर बढ्दै गइरहेको बेरोजगारी, अभाव, महंगी तथा समय समयको खडेरी र अति वर्षाले ग्रामीण अर्थतन्त्रलाई नै नराम्रो प्रभाव पारेको छ। जसले गर्दा बालबालिकाहरु बढीभन्दा बढी समय बालश्रममा संलग्न भई पारिवारिक जीवन निर्वाह गर्न बाध्य भएका छन्। ग्रामीण इलाकाहरुबाट जीविकाका निम्ति शहर बजार पसेका बालबालिकाहरु सस्तो र सुपथ श्रमको स्रोत बनेका छन् भने उनीहरुमाथि भइरहेको आर्थिक शोषणको स्तर पनि निरन्तर बढ्दै गइरहेको छ । खासगरी गलैंचा, गारमेण्टस्, इटाभट्टा जस्ता उद्योग व्यवसायमा बालश्रमको शोषण बालदासताको एक उदाहरण नै बनेको छ। एकातिर परम्परागत कमैया प्रथाभित्र अझै पनि प्रशस्त बालबालिकाहरु बँधुवा मजदूरको रुपमा रहेका पाइए भने अर्कोतिर कतिपय आर्थिक उत्पादनका क्रियाकलापहरुमा बालदासता र बालशोषणका नौला स्वरुपहरु देखापरेका छन्। यस बाहेक केटाकेटीहरुलाई भारतीय शहरमा लगी त्यहाँका श्रम बजार तथा वेश्या बजारहरुमा बेचबिखन गर्ने प्रक्रियाहरु निरन्तर रुपमा बढ्दै गइरहेको छ।

"बालश्रम" कानूनी रुपमा निषिद्ध छ, तर उत्पादन गतिविधिहरुमा बालश्रमको उपस्थिति एक सामाजिक-आर्थिक वास्तविकता बनेकोछ। सायद नेपालको कुनै पनि उत्पादन क्षेत्र त्यस्तो नहोला जुन प्रत्यक्ष या परोक्ष रुपमा बालश्रमको संलग्नताबाट अलग रहेको होस्। गलैंचा र पर्यटनजस्ता डलर को स्रोत बारेका राष्ट्रिय उद्योगहरुभित्र पनि बालश्रम शोषित भइरहेको छ । शहर बजारमा थुपारिएका फोहोरको ढंगुर हरुमा जीवन पालेर बसेका सयौं र हज्जारौं खाते बालबालिकाहरु हाल आएर शहरी जनजीवनका अङ्ग बनिसकेका छन्। त्यस्तै ग्रामीण बस्तीहरुमा बालबालिकाहरु टाढा टाढाका कुवा पँधेराहरुबाट खानेपानी ओसार्छन्, बनजंगलबाट घाँस, स्याउला र दाउरा खोजेर ल्याउँछन् र घरमा भाइ बहिनीहरुको स्याहार-सुसार गर्ने काम त यिनीहरुको दैनिकी नै हो ।

(ग) बालबालिका र तिनको शैक्षिक स्थिति

विगतको तुलनामा विद्यालय जाने बालबालिकाहरुको संख्या निरन्तर बढ्दो छ। यो स्वभाविक पनि हो। तर शैक्षिक वर्षको शुरुवातमा जति केटाकेटीहरु विद्यालय भर्ना हुन्छन् वर्षको अन्तमा आइपुग्दा तिनीहरुमध्ये लगभग ५०% ले विद्यालय छाड्ने गरेको पाइन्छ । यसबाहेक, आफ्नो जीवनमा कहिले पनि विद्यालयको छायाँ सम्मन् देख्न नपाएका बालबालिकाको संख्या पनि लाखौं रहेको छ। पुस्तक र कलम च्यापेर विद्यालय धाउने उमेरका यी लाखौं लाख बालबालिकाहरु गाईवस्तु चराउने र खेतबारीमा डल्लामाटो फोर्ने काममा व्यस्त छन्। सन् १९७५ मै प्राथमिक विद्यालय शिक्षा निःशुल्क भएको घोषणा भए तापनि यथार्थमा उक्त कुरा पूर्णत रुपान्तरित भइसकेको छैन। सरकारी तथ्याङ्क अनुसार पनि अझ सम्म बालिका साक्षरता प्रतिशत बालकहरुको तुलनामा ५०% नै कम रहेको पाइएको छ। त्यस्तै विद्यालय भर्ना भएको बाल बालिकाहरुमा ६४% ले पुनः कक्षा दोहऱ्याउने गर्दछन् भने बाकी ३६% ले विद्यालय छाड्ने गर्दछ । यसबीच विभिन्न सरकारी तथा गैर सरकारी निकायहरुले चेलीबेटी तथा बाल

साक्षरता जस्ता अनौपचारिक शैक्षिक कार्यक्रमहरु सञ्चालन गरेका छन् । ग्रामीण इलाका तथा शहरी गरिब वस्तीहरुमा यसको लोकप्रियता बढ्दै गएको भए तापनि माग अनुसार आवश्यक ठाउँहरुमा यी कार्यक्रमहरु पुगि सकेका छैनन् ।

वर्तमानमा सरकारी तथा गैर सरकारी संघ संस्थाहरुका माध्यमबाट बालबालिकाको शिक्षाको बारेमा निरन्तर रुपमा प्रचार प्रसार भइरहेको छ तापनि अपेक्षित रुपमा बालबालिकाको शिक्षाको विकास हुन सकेको छैन । यसमा एकातिर राष्ट्रिय शिक्षा पद्धतिमा प्रशस्त मात्रामा कमी-कमजोरी देखापरेको छ भने अर्कोतिर समाजमा विद्यमान कुसंस्कार, सामाजिक असचेतनता र बिपन्न आर्थिक सामाजिक परिस्थितिले पनि बाल शिक्षाको विकासमा अवरोध खडा भएको छ ।

## ३. बाल अधिकार सम्बन्धी कानूनी प्रावधानहरु

सन् १९९२ मा "बालबालिका सम्बन्धी कानून" बन्नु अगाडिसम्म नेपालमा बालअधिकार सम्बन्धी पूर्ण कानून थिएन । यसको अर्थ "बालबालिका सम्बन्धी कानून - १९९२" लाई पूर्ण कानून भन्न खोजेको होइन । किनभने उक्त कानूनमा पनि बाल अधिकारलाई संरक्षण र सम्बर्द्धन पार्ने दिशामा थुप्रै कमजोरीहरु निहित छन् भने कतिपय अवस्थामा कानूनको भाषा अस्पष्ट र परस्पर बाझिएको स्थितिमा पनि छ । यद्यपि बाल अधिकार आन्दोलनको मार्गमा यो कानून धेरै हदमा सकारात्मक छ । यसअघि बालबालिका सम्बन्धी सबालहरुलाई विभिन्न ऐन कानूनको प्रावधानहरुमा समाविष्ट गरिएको थियो र तीमध्ये धेरैजसो प्रावधानहरु वर्तमानमा पनि यथावतै छन् ।

नेपालको संविधान, २०१९ (तेश्रो संशोधन समेत मिलाइएको, प्रथम संशोधन २०२३, दोश्रो संशोधन २०३२ र तेस्रो संशोधन २०३७) को मौलिक कर्तव्य र हक, समानताको हक र समानताको हक सम्बन्धी धाराहरुमा वयस्क र बालबालिकाहरुसंग सम्बन्धित संवैधानिक प्रावधानहरु उल्लेख गरिएका छन् । त्यस्तै नेपालका कानूनका विभिन्न दफाहरुमा पनि बालबालिका सम्बन्धी विशेष प्रावधानहरु उल्लेख गरिएका छन् । मुलुकी ऐन २०२० (नवौं संशोधन सहित, २०४३) को अदालती बन्दोवस्त सम्बन्धी महलको ११, २२, २४, ४३, ८३ र ११८ नं. हरुमा क्रमश: बालबालिका सम्बन्धी विषयलाई प्राथमिकता दिनु पर्ने, बालबालिकासंग सम्बन्धित कागजातलाई संरक्षण गर्नुपर्ने, नाबालकको कानूनी क्षमता, जस्ता प्रावधानहरु राखिएका छन् । त्यस्तै दण्ड संजायको १ नं. जमानी गर्नेको ८ नं., गरीब कङ्गालको १, २, ३, ४, ५, ८, ९, १० नं का महलहरुम क्रमश: नाबालकले गर्ने अपराध (Child delinquency), नाबालक जमानी बस्न नहुने, नाबालकको संरक्षण, नाबलक र पोइलजाने आमाको कानूनी सम्बन्ध, अशक्त बालबालिकाप्रति राज्यको सम्बन्ध, असमर्थ बालबालिकालाई सदावर्त वा हण्डीको व्यवस्था, शिक्षाको अवसर तथा नाबालकले अदालती कारवाहीद्वारा हिनामिना भएको सम्पत्ति भराउन सक्ने कुरा उल्लेख गरिएको छ । त्यस्तै "भाग ३ महल १२ लोग्ने स्वास्नीको" को ३ नं मा लोग्ने स्वास्नीको सम्बन्ध विच्छेद भएको मितिले २७२ दिन भित्र जन्मेको सन्तान वैध हुने कुरा उल्लेख गरिएको छ ।

भाग ३ महल १३ अंशवण्डाको ७, ८, १०, १० नं. ख., ११, १७, ३२ नं. मा विवाह नभइ जन्मेको बालबालिकको अधिकार, नाबालकको भरण-पोषण बाबुले गर्नु पर्ने, सौताबाट जन्मेको छोरा अंशमा समान हकदार हुन सक्ने, अंशवण्डा गर्दा नाबालक वा अविवाहित अंशियारले विवाह खर्च पाउने इत्यादि कुराहरु उल्लेख गरिएको छ । त्यस्तै भाग ३ महल १५ धर्मपुत्रको १, २, ३, ४, ४क., ५, ७, ८, ९, ९क., ९ख., ९ग., १०, ११, १२, १२क., १३ नं.हरुमा धर्मपुत्र राख्दा क्रमश: आफ्नै सन्तानका वंशजको रित पुऱ्याइ राख्नु पर्ने, छोरा हुने दम्पतीले धर्मपुत्र राख्न नहुने, धर्मपुत्र पनि अंशमा समान हकदार हुन सक्ने, धर्मपुत्र राखेकोमा बदर नहुने, फालिएको बालकलाई धर्मपुत्र राख्न पाइने, छोरीलाई धर्मपुत्रसरह दोलाजी राख्न हुने, दोलाजीको सन्तान नभए सम्पत्ति लोग्नेमा जान सक्ने, दोलाजीले धर्मपुत्र सरह बाबुको हक प्राप्त गर्ने, धर्मपुत्र राख्दा १० वर्षमुनिकालाई लिखत गरी राख्न पर्ने, धर्मपुत्री राख्ने र धर्मपुत्रीको उमेर २५ वर्षको फरक हुन पर्ने, धर्मपुत्रीको हक धर्मपुत्रसरह हुने, विदेशी नागरिकले नेपाली धर्मपुत्र राख्न सक्ने, अदालती निर्णयद्वारा धर्मपुत्र बदर हुन सक्ने इत्यादि प्रावधानहरुको व्यवस्था गरिएको छ । त्यस्तै भाग ३ महल १६ अपुतालीकोमा हकबालाको, भाग ३ महल १७ लेनदेन व्यवहारकोमा नाबालकलाई लेनदेन कारोवार गर्न कानूनत: असमर्थ मानेको छ । भाग ३ महल २१ रजिष्ट्रेशनको भाग ४ महल ४ चोरीको, भाग ४ महल १० ज्यान सम्बन्धीको, भाग ४ महल ११ जीउ मास्ने बेच्नेको, भाग ४ महल १४ जबरजस्ती-करणीको, भाग ४ महल १५ हाडनाता करणीको, भाग ४ महल १७ बिहावारीका प्रावधानहरु उल्लेख छन् । यस बाहेक, नेपाल कानून व्यवसाय सम्बन्धी ऐन २०२१, संक्षिप्त कार्यविधि ऐन २०२८, प्रमाण ऐन २०३१, कारागार ऐन २०१९, नेपाल नागरिकता ऐन २०२०, कर्मचारी संचय कोष ऐन २०१९, राष्ट्रिय सेवा दल ऐन २०२७, आयकर ऐन २०३१, नेपाल कारखाना तथा कारखानामा काम गर्ने मजदूर सम्बन्धी ऐन २०१६, नागरिक अधिकार ऐन २०१२, विवाह दर्ता ऐन २०२८, केटा (सैनिक भर्ना सेवा शर्त) नियमहरु २०२८, र प्रहरी नियमावली २०३३ मा पनि बालबालिकाहरुसंग सम्बद्ध

प्रावधानहरु उल्लेख गरिएका छन्। त्यस्तै, बालबालिकाको अधिकार संरक्षण र सम्बर्द्धन गर्ने सन्दर्भमा "बालबालिकाको अधिकार सम्बन्धी प्रस्तावित विधेयक २०३९" मस्यौदा गरिएको थियो। तर उक्त विधेयक पारित हुन सकेको थिएन।

## ४. बालबालिका सम्बन्धी ऐन, २०४८ तथा तिनमा निहित बाल अधिकार सम्बन्धी महत्वपूर्ण प्रावधानहरु

पञ्चायती व्यवस्थाको शासनकालमै अर्थात ०३९ सालमै बालबालिकाको अधिकारलाई ध्यानमा राखेर एउटा विधेयक अगाडि सारिएको थियो, तर सो कुरा पूरा हुन सकेन।

खासगरी "बाल अधिकार सम्बन्धी महासन्धि" को मस्यौदा कार्य शुरु भए पश्चात् अन्य देशहरुमा जस्तै नेपालमा पनि बाल अधिकार सम्बन्धी सबालहरुमा छलफल र बहस हुन थालेको हो। १९८७ पछि यस सम्बन्धी सबालहरु सामाजिक आन्दोलन कै रुपमा अगाडि आउन थालेका छन्। यसबीच श्री ५ को सरकारले "सं. रा. बाल अधिकार सम्बन्धी महासन्धि" मा आफ्नो प्रतिबद्धता जाहेर गरी औपचारिक हस्ताक्षर अनुमोदन गऱ्यो। महासन्धिको अन्तर भावनालाई व्यवहारमा उतार्न सं.रा.सं. कै पहलमा "बालबालिका विश्व शिखर सम्मेलन" ले निर्माण गरेका लक्ष्यहरुमा सरकारले आफ्नो पूर्ण समर्थन र अनुमोदन व्यक्त गऱ्यो। साथै नेपालमा पनि बाल अधिकार ऐन निर्माण गर्न तत्पश्चात् सरकारी तथा गैर सरकारी प्रयत्नहरु भइरह्यो, अन्ततः सन् १९९२ मा बालबालिकासम्बन्धी ऐन ०४८, पारित भयो। श्री ५ महाराजाधिराजबाट उक्त ऐनमाथि लालमोहर भइसके पश्चात् पनि विभिन्न कारणवशः उक्त कानून कार्यान्वयन भने हुनसकेको छैन।

उक्त "बालबालिका सम्बन्धी ऐन - २०४८", बाल अधिकार आन्दोलनको दिशामा एक सकारात्मक कदम हो। यसले बाल अधिकार आन्दोलनको मार्गलाई चौडा बनाएको छ। उक्त कानूनले एकातिर बालबालिकाको सामाजिक सुरक्षा, शैक्षिक सुविधा र बालबालिकालाई कठिन परिस्थितिबाट जोगाउन प्रयत्न गरेको छ भने अर्कोतिर बाल मजदूरीको शोषण, बाल यौन शोषण, देह व्यापार तथा दाशतापूर्ण परिस्थितिबाट सुरक्षा प्रदान गरेको छ। साथै बाल दुराचारलाई घटाउन या निर्मूल पार्न तथा बालबालिका सम्बन्धी मुद्दा मामिलालाई विशेष ढङ्गले सञ्चालन गर्न "बाल अदालत", "बाल सुधार गृह" तथा "बाल गृह" हरुको पनि व्यवस्था गरेको छ। यस बाहेक बालबालिकाको पालनपोषण, टुहुरा तथा परित्यक्त बालबालिकाको पुनःस्थापन, यातना र पिडाबाट संरक्षण गर्नेजस्ता कल्याणकारी र मानवीय कुराहरुलाई पनि समावेश गरिएको छ।

नेपालका केही ठाउँहरुमा देवीदेवताका नाममा बालिकालाई चढाउने, उनीहरुलाई कठोर सजाय दिने, बालबालिकालाई बेचबिखन तथा बलात्कार गर्ने, केटाकेटीहरुलाई कठोरभन्दा कठोर काममा लगाउने चलन पनि विद्यमान भइरहेको सन्दर्भमा त्यसलाई नियन्त्रण, निर्मूल र रोकथाम गर्न पनि यस ऐनले विभिन्न प्रावधानहरुको व्यवस्था गरेको छ। त्यस्तै बालबालिकालाई धर्म, लिङ्ग, जाति, वर्ण इत्यादिको आधारमा भेदभाव नगरी तिनीहरुलाई समान अवसर र समान पारिश्रमिक दिन पर्ने प्रावधान पनि उल्लेख गरिएको छ। साथै टुहुरा, अपाङ्ग तथा सुस्तमनस्थितिका बालबालिकाहरुको सामाजिक सुरक्षा र स्वास्थ्य पुनर्स्थापनाको निम्ति पनि उक्त ऐनले विभिन्न प्रावधानहरुको व्यवस्था गरेको छ। यस बाहेक बाल विकास र बाल कल्याणका सबालहरुलाई राष्ट्रिय तथा जिल्ला स्तरमा सञ्चालन गर्न एक छुट्टै निकाय केन्द्रीय तथा जिल्ला बाल कल्याण समितिको व्यवस्था गरेको छ। यसको निम्ति श्री ५ को सरकारले राजपत्रमा सूचना प्रकाशित गरी उक्त "कल्याणकारी व्यवस्था" लाई व्यवहारमा लागू गर्न बाँकी छ।

## ५. सन् १९९२ मा बाल अधिकारको स्थिति – केही उदाहरणहरु

विगतका वर्षहरुमा झैं सन् १९९२ पनि बालविकासको सन्दर्भमा त्यतिका उत्साहप्रद रहेन। यद्यपि धेरै वर्षको मेहनत, श्रम र प्रतिबद्धतापूर्ण गतिविधिहरुले जुन "बालबालिका सम्बन्धी ऐन - ०४८" परित भयो, त्यो सकारात्मक छ। तर संसद्‌बाट सर्वसम्मतिले पारित भई श्री ५ महाराजाधिराजको लालमोहर (लालमोहर सदर मिति ०४९-२-७-४) समेत भएको कानून व्यवहारमा लागू हुन नसक्नु एउटा दुःखको कुरा हो। उक्त कानून घोषणा हुँदा नेपाली जनसमुदाय हर्षविभोर देखिन्थे। त्यति नै दुखित त्यस कानूनको कार्यान्वयनार्थ श्री ५ को सरकारको तर्फबाट प्रभावकारी प्रयत्न नहुँदा भएको छ।

कुनै पनि कुरालाई मूल्याङ्कन र विश्लेषण गर्दा त्यसको सकारात्मक र नकारात्मक दुवै कुरा भेटिन्छ। त्यही कुरा बाल अधिकारको सम्बन्धमा पनि लागू हुन्छ। बाल अधिकार र बाल विकासका सबालहरुलाई संस्थागत गर्न र त्यसलाई जनस्तरमा पुऱ्याउन थुप्रै गतिविधिहरु सम्पन्न भएका छन्, त्यस्तै कतिपय अवस्थामा देशका विभिन्न क्षेत्रहरुमा बालबालिकाको अधिकारको ठाडो उल्लंघन भएका घटनाहरु पनि प्रकाशित भएका छन्। हुनत सन् १९९२ को वर्षभरिमा बाल अधिकार

आन्दोलनको वास्तविक स्थिति कस्तो रह्यो भन्ने सन्दर्भमा खास आधिकारिक तथ्य-तथ्याङ्कहरु प्राय: छैनन्, तापनि "नेपालमा बालबालिकाको स्थिति - १९९२" लाई निम्नानुसार उल्लेखित गर्न सकिन्छ :

*(क) सर्वसम्मतरुपमा संसद्‌बाट पारित "बालबालिका सम्बन्धी विधेयक - २०४८"*

नेपालको संविधान २०४७ अन्तरगत निर्वाचित व्यवस्थापिका (संसद्) द्वारा "बालबालिका सम्बन्धी विधेयक - २०४७" मा व्यापक छलफल र वहस गरी सर्वसम्मतिले पारित गऱ्यो । उक्त कानून बाल अधिकारलाई संरक्षण र सम्बर्द्धन गर्ने सन्दर्भमा बालबालिका सम्बन्धी पहिलो छुट्टै कानून हो । मानव अधिकार, बाल अधिकार तथा समाज विकासमा संलग्न विभिन्न व्यक्ति तथा निकायहरुले श्री ५ को सरकारको उक्त कदमलाई हार्दिक स्वागत गरे तथा उक्त कानूनलाई यथासम्भव छिटो कार्यान्वयन गर्न पनि सम्बन्धित निकायलाई अनुरोध गरे। तथापि उक्त कानूनलाई कार्यान्वयनार्थ लागू गर्न भने श्री ५ को सरकार सफल भएन ।

*(ख) गलैंचा कारखानाहरुभित्र विद्यमान बालमजदूरीको शोषण तथा बालदाशताको बारेमा वृहत् प्रतिवेदन प्रकाशित*

आर्थिक उत्पादनका विविध क्षेत्रहरुमा बालमजदूरहरु-माथि भइरहेको शोषण र पीडनको बिभत्स कथाहरु अनुसन्धान र सर्वेक्षणको आधारमा नेपाल बाल मजदूर सरोकार केन्द्र (सीवीन) ले विगत केही वर्षदेखि जनसमक्ष राख्दै आएको छ । यस सन्दर्भमा, "गलैंचा कारखानाहरुमा बालमजदूरहरुको स्थिति र समस्या विषयक" सर्वेक्षण अध्ययनमा आधारित तथ्य-तथ्याङ्कले बालबालिकाहरुमाथि भइरहेको शोषण र अत्याचारको स्थितिलाई उद्‌घाटन गरेको छ। उक्त सर्वेक्षित तथ्याङ्कअनुसार गलैंचा कारखानाहरुभित्र १६ वर्षमुनिका ५०,००० बालमजदूरहरु रहेको बताएको छ भने ती बालबालिकाले सरदर प्रतिदिन १५ घण्टा काम गर्न बाध्य रहेको कुरा पनि उल्लेख गरेको छ । त्यस्तैगरी, ती कामदार बालबालिकाले सरदर प्रतिमहिना रु ३९६/- पाउने गरेको र करिब ८% बालबालिकाहरु पारिवारिक ऋणको कारण कार्यर त भएको कुरा पनि उक्त सर्वेक्षण अध्ययनले प्रकाश पारेको छ । यस बाहेक कतिपय गलैंचा बुनकर बालिका मजदूरहरु यौन शोषण, बलात्कार तथा देह व्यापार जस्ता अनैतिक र अमर्यादित क्रियाकलापको शिकार भएको कुरा पनि उल्लेख गरिएको छ ।

श्री ५ को सरकारले पहिलोपटक "श्रम ऐन - २०४८" लाई कार्यान्वयन गर्ने सन्दर्भमा बालमजदूरहरुलाई (१४ वर्ष मुनिका) लाई रोजगारी प्रदान गरेको तथा कानूनअनुसारको सुविधा प्रदान नगरेको आरोपमा २३ कारखानाहरुलाई जरिवाना गरी कारवाही चलायो । तर कारखानाहरुमा बालमजदूरहरुमाथि शोषण र अत्याचारलाई सुपरिवेक्षण गर्ने प्रभावकारी निकायको अभावमा र बालमजदूरहरुको जीविकाको विकल्पको पूर्ण अभावमा श्री ५ को सरकारको उक्त कारवाही "उद्देश्य विहीन" देखियो । यस बाहेक, बालमजदूर शोषण सम्बन्धी वृहत् समस्या समाधान गर्न जनसहभागितालाई परिचालन गरेको पनि देखिएन ।

*(ख) "चैत्र २४ को गोली काण्ड" र बाल हत्या*

मानव अधिकारको उल्लंघनकै सन्दर्भमा ०४८"चैत्र २४-" एक दु:खदपूर्ण घटना हो । सत्तापक्ष र सत्ता विपक्षका राजनैतिक दलहरुका बीचको तनावपूर्ण स्थिति र तात्कालिन प्रहरी दमनको कारण देशका विभिन्न भागहरुमा वियोगपूर्ण घटनाहरु हुन पुग्यो। त्यसमध्ये देशको राजधानी काठमाण्डौमा भएको गोलीकाण्डले साह्रै दु:खद परिणाम निकाल्यो । त्यतिन्जेल थुप्रै प्रदर्शनकारीहरु प्रहरी ज्यादतीको शिकार बने । दु:खदपूर्ण कुरा त यो थियो कि ती प्रदर्शन, झडप, ढुङ्गामुढा कुनैसंग पनि सम्बन्ध नरहेका सानासाना केटाकेटीहरु पनि प्रहरी दमनको शिकार बने । अनिश शाक्य नामको ८ वर्षे बालकको ज्यान गुम्यो भने अन्य कैयन्‌को शरीर अंगभंग भयो। त्यसबेलाको घटनाक्रमको निम्ति सत्तापक्ष र विपक्षका राजनैतिक दलहरुले एकअर्कालाई दोषारोपण गरे तर गोलीका शिकार बनेका ती बालबालिकाहरुमाथि भने कुनै पनि न्याय भएन ।

**०४८ चैत्र २४ को गोली काण्डका शिकार भएका बालकहरु**

| | | |
|---|---|---|
| १. | अनिश शाक्य (मृत) | वर्ष ८ |
| २. | सञ्जिता शाक्य | वर्ष २ |
| ३. | टवन राणा | वर्ष २ |
| ४. | श्रेया राणा | वर्ष ८ |
| ५. | पुष्कर पराजुली | वर्ष १० |
| ६. | कान्छा तामाङ्ग | वर्ष १२ |
| ७. | महेशकुमार राना | वर्ष १३ |
| ८. | कवीन्द्र श्रेष्ठ | वर्ष १३ |
| ९. | रमेश महर्जन | वर्ष १४ |
| १०. | मिलन कपाली | वर्ष १५ |
| ११. | सोभेन्द्र तण्डुकार | वर्ष १५ |
| १२. | मनोज शाही | वर्ष १७ |

*(ग) बालबालिकाको गिरफ्तारी र बन्दीगृहमा बालबालिकाहरु*

कानूनत: १० वर्षमुनिका बालबालिकाहरुलाई कुनै पनि प्रकारको सजायको भागी गराइदैनन् । १०-१४ वर्षका केटाकेटीहरुलाई सामान्यतया सम्झाउने - बुझाउने र तिनको सुधारको निम्ति अधिकतम २ महिनासम्म बन्दीगृहमा राख्न सक्ने तथा १४-१६ वर्षकालाई वयस्कलाई हुने सजायको आधी (५०%) सम्म दिन सक्ने कुरा कानूनमा उल्लेख गरिएको छ। यद्यपि नेपालका विभिन्न बन्दीगृहहरुमा थुप्रै बालबालिकाहरु गैरकानूनी ढङ्गबाट वयस्कहरुलाई राखे जस्तै गरी राखिएको भेटियो। थिनीहरुमध्ये कतिपयलाई चोरी, सार्वजनिक स्थलमा मगन्ते भएर बस्ने, लागु पदार्थ सेवन गर्ने, बेश्यावृत्तिमा लाग्ने इत्यादि मुद्दाहरु चलाई बन्दीगृहहरुमा राखेको पाइयो। साथै १५० भन्दा बेसी सडक बालबालिकाहरुलाई गैर कानूनी ढङ्गले समात्ने, उनीहरुलाई यातना र दु:ख दिने तथा उनीहरुलाई खतरनाक बन्दीहरुबीच राखेको पनि पाइयो। बालबालिका सम्बन्धी कानूनमा बालअदालत र बाल सुधार गृह, को प्रावधानहरु भए तापनि यी कुराहरु व्यवहारमा चाहिं लागू भएनन् ।

बालबालिका र बन्दीगृह सम्बन्धी अर्को महत्वपूर्ण सबाल वयस्कहरु रहने बन्दीगृहमा सानासाना केटाकेटीहरु रहनु हो। यी बालबालिकाहरु बाल दुराचारको शिकार नभएर तिका आमा-बाबुले गरेका अपराधमूलक क्रियाकलापहका कारण जेल परेका हुन्। सन् १९९२ को एउटा सर्वेक्षित तथ्याङ्क अनुसार नेपालका बन्दीगृहहरुमा १०० भन्दा बेसी सानासाना केटाकेटीहरु ठूला अपराधीहरु बस्ने बन्दीगृहभित्र हुर्किरहेका छन् । यस परिस्थितिले ती बालबालिकाहरुभित्र स्वाभाविक रुपमा बाल दुराचार जन्मन र बढ्न सक्ने सम्भावना हुन्छ र यसले उनीहरुको मनोविज्ञान र भावनामा नकारात्मक प्रभाव पार्न पनि सक्दछ ।

**जेलमा रहेका केही केटाकेटीहरु**

भद्र बन्दी गृह

| नाम | लिङ्ग | बाबुको नाम |
|---|---|---|
| १. विनोद कु. बुढाथोकी (१०) | पु. | सुवास बुढाथोकी |
| २. गोपाल ब. तामाङ (१०) | पु. | पूर्ण ब. तामाङ |
| ३. विकास ब. तामाङ (८) | पु. | " |
| ४. विकास लामा (६) | पु. | रामबहादुर लामा |
| ५. सुवास भूजेल (८) | पु. | झरिलाल भूजेल |
| ६. राज कु. परियार (२ १/२) | पु. | रामजी परियार |
| ७. मिङबर दोर्जे लामा (९) | पु. | लाक्पासितर लामा |

केन्द्रीय कारागार

| | | |
|---|---|---|
| १. उमेश थापा (३) | पु. | राम थापा |
| २. दीपक श्रेष्ठ(९) | पु. | अमृत श्रेष्ठ |
| ३. जीवन राई (७) | पु. | मोहन राई |
| ४. गोविन्द नेपाली (७) | पु. | कुमार नेपाली |
| ५. मान ब. तामाङ (८) | पु. | सिङे तामाङ |
| ६. नवराज दहाल (७) | पु | रुद्र प्र. दहाल |
| ७. नवे विश्वकर्मा (५) | पु. | लाल ब. विश्वकर्मा |
| ८. किशोर लामा (६) | पु. | रिषी लामा |
| ९. रामहरि चौलागाई (८) | पु. | गोपाल चौलागाई |
| १०. लोप्साङ तामाङ (६) | पु. | सुफत सिं तामाङ |
| ११. ज्ञान ब तामाङ (६) | पु. | सुक ब. थिङ |
| १२. गोकुल पोडे (५) | पु. | अक्कल ब. पोडे |
| १३. कैलाश पुन (६) | पु. | लाल ब. पुन |
| १४. सन्तोष कु. राउत (१०) | पु. | बिराराउन कुर्मी |
| १५. मोहनसिंह धलान (९) | पु. | कृष्ण ब. धलान |

महिला जेल

| नाम | लिङ्ग | आमाको नाम |
|---|---|---|
| १. मनिषा तामाङ (३) | स्त्री. | लक्ष्मी तामाङ |
| २. मिङमार शेर्पा (४) | पु. | डोल्मा शेर्पा |
| ३. दावा छिरिङ शेर्पा (३) | स्त्री | " |
| ४. राधिका तामाङ(१० महिना) | स्त्री. | च्यामामाया तामाङ |
| ५. वाङ्जु लामा (४) | पु. | दालचिनी तामाङ |
| ६. राजु लामा (१) | पु. | " |
| ७. सिर्जना परियार (२) | स्त्री. | शान्ति परियार |

श्रोत: प्राची, संचेतना द्वैमासिक वर्ष १, अंक २, पुस-माघ-०४९/फेब्रुअरी, १९९३

*(घ) बालबालिकाको अवैध ओसारपसार र बलात्कारका घटनाहरु*

हाम्रो देशमा केही वर्षदेखि निरन्तर रुपमा बालबालिकाहरुलाई बेश्यावृत्ति र बंधुवा मजदूरी जस्तो अनैतिक र अमर्यादित पेशामा संलग्न गराउन भारतका शहर बजारमा ओसार-पसार गरिएका समाचारहरु प्रकाशित भएका छन् । यो क्रम प्रत्येक दिनजसो बढ्दै गैरहेको छ ।

यस विषयमा कुनै आधिकारिक तथ्य तथ्यांक नभए तापनि करिब २००,००० चेलीबेटीहरु भारतका विभिन्न शहर बजारका कोठीहरुमा बेचिएका कुरा विभिन्न पत्र-पत्रिकामा प्रकाशित भएका छन्। ती बेचिएका चेलीबेटीहरुमा २०% सोह्र वर्षमुनीका भएको थाहा भएको छ । ती चेलीबेटीहरुलाई विभिन्न लोभ, लालच र झुठो आकर्षण दिएर विदेशतिर पैठारी गरिएको हुन्छ भने कतिपयलाई डर, धम्की र नक्कली विवाह (Fake Marriage) रची अपहरण गरिएको हुन्छ ।

यस विषयमा सीवीनले गरेको "पत्रपत्रिका समाचार सर्वेक्षण" - १९९२ को प्रतिवेदन निम्नानुसार छ :

## १. देह व्यापार बारे पत्रिका सर्वेक्षण

देह व्यापारको विषयमा नेपाली पत्र-पत्रिकाहरुले बेला-बखतमा समाचारहरु दिँदै आएका छन् । यद्यपि, जति देह-व्यापारका घटनाहरु भएका छन्, त्यसको तुलनामा पत्र-पत्रिकाहरुमा आएका समाचारहरु अपर्याप्त छन् । तर, थोरै मात्र भए पनि पत्र-पत्रिकाहरुले देह-व्यापारका घटनाहरुलाई आम पाठकहरु बीचमा पुऱ्याएकै छन् ।

वि.स. २०४६ सालदेखि वि.स. २०४७ भदौसम्ममा नेपालबाट भारतमा भएको देह-व्यापारको विषयमा नेपाली पत्र-पत्रिकाहरुमा ३७ वटा समाचारहरु प्रकाशित भएका छन्। यसरी समाचार प्रकाशित गर्ने पत्र-त्रिकाहरुमा - गोरखापत्र, वार्तालाप, जनता, दृष्टि, नेपालीपत्र, नयांकिरण, छहरा, मातृभूमि, देशान्तर, चित्रण, समीक्षा, छलफल, महिमा, विप्लव, विमर्श र पृष्ठभूमि छन् ।

वि.स. २०४६ सालदेखि वि.स. २०४८ भदौसम्म प्रकाशित भएका समाचाहरुका अनुसार - बेचिएका चेलीहरुमा सबैभन्दा बढी काठमाडौंका छन् । त्यसपछिको संख्या, विराटनगर, झापा, नुवाकोट, मकवानपुर र मोरङका चेलीहरुको छ। बेचिएकाहरुमध्ये अत्यधिकको उमेर १५ देखि २० वर्ष बिचको छ ।

देह-व्यापारको विषयमा वि.सं. २०४८ साल भदौदेखि २०४९ भदौसम्ममा २९ वटा समाचारहरु प्रकाशित भएका छन्। यो बीचको एक वर्षभित्र देह-व्यापारको विषयमा समाचार प्रकाशित गर्ने पत्र-पत्रिकाहरुमा पुनर्जागरण, महिमा, देशान्तर, गोरखापत्र, दृष्टि, जनता, सुरुचि, छलफल, स्वतन्त्र राष्ट्र, प्रयास, नेपाली आवाज, हिन्दू दैनिक, जनबल, विमर्श र प्रतिपक्ष हुन् । पत्रिकाहरुमा प्रकाशित समाचार अनुसार बेचिएका चेलीहरुमा १९ जना १६ वर्षभन्दा कम उमेरका छन् । ८ जनाको उमेर त १३ वर्ष मात्र छ । ३ जना १४ वर्षका छन् । र ४ जना १५ वर्षका छन् । बेचिएका चेलीहरुमा सबै भन्दा बढी उमेर २२ वर्ष मात्र छ ।

पत्र-पत्रिकाहरुको अनुसार बेचिएकाहरुमा सबै जना भारतमा नै बेचिएका छन् । भारतको पनि बम्बई शहरमा सबैभन्दा बढी नेपाली चेलीहरु बेचिएका छन् । बेचिएकामध्ये धेरैलाई विभिन्न लोभ-लालच देखाएर बेच्न लगिएको छ । एउटा घटना मात्र जबरजस्ती बेच्न लगेको पाइएको छ । धेरैलाई काममा लगाइदिने भनेर लगिएको छ । केहीलाई विवाहको आश्वासन दिएर दलालहरुले बेच्न लगेका छन्। थोरैलाई मात्र घुमाउन र सिनेमाको अभिनेत्री बनाइदिने आशा देखाएर बेचिएको छ । चेलीहरुलाई बेच्न लग्नेहरुमा धेरै नजिककै गाउँलेहरु भएको पाइएको छ । केही टाढाका र नचिनेकाहरु छन् । वि.स ०४९ साल असार ६ गते प्रकाशित गोरखापत्रको समाचार अनुसार त गीता नाम गरेकी एक जना चेली आफ्नै काकाबाट समेत बेचिएकी छिन् । सिनेमाको अभिनेत्री बनाइदिने आशा देखाएर बेचिएकी चेलीको विषयमा "प्रयासले" वि.स. २०४८ सालको पुस महिनाको अंकमा समाचार प्रकाशित गरेको छ । विवाह गर्ने झुठो आश्वासन दिएर भारतका विभिन्न शहरहरुमा नेपाली चेलीहरुलाई बेचिएका घटनाहरु पनि विभिन्न पत्र-पत्रिकाहरुमा प्रकाशित भएका छन् ।

वि.स. ०४९ साल जेठ ८ गते प्रकाशित समाचार अनुसार मकवानपुर चुरेमाई वडा नं. १ निवासी सभाबहादुर घलानले आफ्नै श्रीमती कान्छी माया दोङलाई उपचार गर्ने बहानामा भारतको बम्बईमा लगेर बेचेका थिए ।

अहिले उनी जेलमा कैदी जीवन बिताइरहेका छन् । पत्र-पत्रिकाका अनुसार वि.स. ०४८ साल भदौ देखि २०४९ साल भदौसम्ममा देह-व्यापारमा संलग्न अपराधीहरुका तल दिइएको छ ।

पत्र-पत्रिकामा प्रकाशित समाचारहरुका अनुसार देह-व्यापारमा संलग्न अपराधीहरुमा थोरैले मात्र सजाय पाएका छन् । धेरै अपराधीहरु फरार हुन सफल भएका छन् भने चेलीहरु भारतको वेश्यालयको नारकीय जीवनबाट आफ्नै प्रयासले भागेर आए पनि उनीहरुलाई नै अनुसन्धानको बहानामा कैद गरिएको छ ।

लेखिरहनु पर्दैन, देह-व्यापारका जति घटनाहरु प्रकाशित भएका छन् । तिनीहरु अत्यन्तै कम छन् । देह-व्यापारका अप्रकाशित यथार्थ कथाहरु प्रकाशित समाचाहरु भन्दा कैयौं गुणा बढी दर्दनाक छन् । ती घटनाहरु अझसम्म पत्र-पत्रिकाको श्रोत नजिकै नआइ पुग्नुमा देह-व्यापारका अपराधीहरु प्रहरी प्रशासनको तुलनामा चतुर भएर पनि हुनसक्छ । आशा गरौं, आगामी दिनहरुमा पत्र-पत्रिकाहरुले त्यस्ता घटनाहरुको भण्डाफोर गर्न सफलता पाउने छन् ।

त्यस्तै सानासाना चेलीबेटीहरुको अस्मिता लुट्ने बलात्कारी घटनाक्रमहरु पनि हाम्रो समाजमा निरन्तर बढिरहेको छ । दशरथ रंगशालामा भएको खेल प्रदर्शन हेरिरहेकी ७ वर्षकी मीरा गुरुङ, घरमा भाइबहिनीसंग खेलिरहेकी ८ वर्षे बालिका लक्ष्मी, काठमाडौं, झाँक्रीलाई देखाउन भनी आफ्नो आमाको साथ लागेर गएकी १२ वर्षकी फुलोरी, आफ्नो विद्यालयमा पढ्न गएकी अर्घाखाँची जिल्लाकी

१२ बर्षे शकुन्तला, पोखराकी ८ बर्षे तारा गुरुङ र झापाकी १३ बर्षीया बालिका गीता, केही यस्ता उदाहरणहरु हुन्, जो यौन पिपाशुहरुको आक्रमणको शिकार भएका छन् । यी यौनपिपाशु भक्षकहरुमा कोही पेशागत गुण्डा, फटाँकी, शिक्षक, प्रौढ र नाताकुटुम्बका मानिसहरु छन् । सन् १९९२ को जुन, जुलाई र अगष्टको बीच बाल बलात्कारका थुप्रै घटनाहरु घटे । यसबिच ५ देखि १२ बर्षका २८ जना बालिकाहरुमाथिको बलात्कारका घटनाहरु प्रहरी कार्यालयमा दर्ता भएको थियो । वास्तवमा यस्ता दुर्घटनाका कतिपय हृदय-विदारक कथाहरु गर्भ भित्र लुकेका छन् र जति पनि घटनाहरु प्रकाशित भएका छन् ती त वास्तविकताको एउटा सानो अंश मात्र हुन् । बलात्कारका घटनाक्रमहरुमा समाजका प्रतिष्ठित पेशाका व्यक्तिहरु जस्तैः शिक्षक, डाक्टर, प्रहरी, राजनैतिक व्यक्तित्व, सरकारी कर्मचारीको संलग्नता देखिनु वास्तवमा हाम्रो समाजको निम्ति इज्जतको विषय बनेको छ । निरन्तर रुपमा बढिरहेको यस्तो दुर्घटनाहरुले नागरिकहरुका सामाजिक हांक दिएको छ ।

यसबाहेक हाम्रो समाजमा बढ्दै गइरहेको बाल बेश्यावृत्ति अर्थात बेश्यावृत्तिको निम्ति बालिकाहरुको प्रयोग अर्को गंभीर सामाजिक समस्या बनेको छ भने यसले बाल अधिकारको ठाडो उल्लंघन पनि गरेको छ । त्यस्तै सामाजिक कुरीतिको रुपमा स्थापित देवकी प्रथा, बादी समुदायमा देह व्यापार तथा यौन व्यापारको "कान्छी बजार" हरुले बालबालिकाको शोषण मात्र नगरी समाजलाई नै विकृतिको दिशातिर घचेटिराखेको छ ।

बाल बलात्कार र बेश्यावृत्तिलाई लिएर समाजको विभिन्न बर्गले आफ्नो रोश व्यक्त गरे र नागरिकहरुको सामाजिक सुरक्षाका निम्ति उनीहरुले बिरोध प्रदर्शन गर्नाका साथै सरकारलाई यस सम्बन्धी सबालमा गम्भीरताका साथ ध्यान पुर्याउन अपिल गरे । समाजका विभिन्न क्षेत्रहरुमा कार्यरत संघ संस्था र व्यक्तिहरुको सहभागितामा "महिला सुरक्षा दबाब समूह" खडा गरे । उक्त समूहको सक्रियतामा संयोजक तथा सांसद् साहना प्रधानले बाल बलात्कार र देह-व्यापार बिरुद्ध संकल्प प्रस्ताव प्रस्तुत गर्नु भयो । उक्त संकल्प प्रस्तावलाई सांसद्हरुले सर्बसम्मतले र एउटै आवाजले पारित पनि गरे । यस सन्दर्भमा महिला सांसद्हरु जस्तै, मीना पाण्डे, उमा अधिकारी, यममाया थापा, मैयादेवी र अष्टलक्ष्मी शाक्य वोहराले महत्वपूर्ण भूमिका निर्बाह गर्नुभयो । यद्यपि यस विषयमा के गर्ने भन्ने सबालमा न कुनै ठोस निचोडमा पुग्न सकियो न कुनै ऐन कानून नै बन्यो ।

## ६. अन्त्यमा

बहुदलीय प्रजातन्त्र प्राप्त भइसकेपछाडि श्री ५ को सरकारले मानव अधिकारसंग सम्बन्धित १४ वटा अन्तर्राष्ट्रिय संविदा र महासन्धिहरुमा हस्ताक्षर र अनुमोदन गरेको छ । मानव अधिकार, बाल अधिकार तथा महिलाहरुलाई शोषण र उत्पीडनबाट जोगाउने अन्तर्राष्ट्रिय आन्दोलनमा प्रतिबद्ध भई श्री ५ को सरकारले आफूलाई राज्यपक्षको पंक्तिमा उभ्याउनु आफैमा सकारात्मक छ । यस बाहेक, ती उद्देश्यहरुकै प्राप्तिका



फोटो: मन गुरुङ

*बिराटनगर जेलमा रहेका बालबालिकाहरु*

निम्ति भएका प्रयत्न र प्रयासहरु सराहनीय छन् । तर, ती प्रतिबद्धताहरुलाई व्यवहारमा उतार्नेक्रममा सम्बन्धित पक्षबाट थुप्रै कमजोरीहरु र आलोच्यपूर्ण कामहरु पनि भएका छन् । नेपाली माटोमा बाल अधिकार र विकासका सबालहरुलाई व्यवहारमा साँच्चिकै उतार्ने हो भने ती कमी-कमजोरीहरुलाई समयमै हटाउन र संशोधन गर्न जरुरी छ ।

"बालबालिका सम्बन्धी ऐन - ०४८" पारित हुनु बाल अधिकारको सन्दर्भमा एउटा सकारात्मक पक्ष हो । यो ऐन व्यवहारमा कसरी लागू हुँदैछ यसका निम्ति भविष्यलाई प्रतिक्षा गर्नु छ ।

तर, हाम्रो समाजमा जतासुकै व्याप्त रहेको समस्याहरु जस्तै बालमजदूरीको शोषण, बाल विवाह, बाल वेश्यावृत्ति तथा बालबालिकाको अवैध ओसारपसार जस्ता कुराहरुको समाधान कानून बनाएर मात्र हुन सक्दैन । यसलाई ठोस ढङ्गले व्यवहारमा उतार्न राजनैतिक प्रतिवद्धता, सामाजिक सचेतनता र जनसमुदायको सक्रिय सहभागिता परिचालन र विकास गर्नु अति आवश्यक छ ।

नेपालमा बाल अधिकार र बाल विकासको विद्यमान स्थितिलाई दृष्टिगत गर्दा तिनलाई वास्तविकतामा रुपान्तरण गर्न नसक्नुमा प्रमुख दुई/तीन कारणहरु छन् । ती हुन्, सरकार पक्ष आफूलाई प्रजातान्त्रिक र मानव अधिकारवादी देखाउन सजिलैसंग अन्तर्राष्ट्रिय महासन्धिहरुलाई अनुमोदन गर्छ । तर त्यसलाई लागू गर्न यथेष्ट राजनैतिक प्रतिवद्धता प्रदर्शन गर्दैन । दोश्रो, सरकार आफूलाई जतिसुकै प्रजातन्त्रवादी देखाए तापनि राज्य संयन्त्र (State Machinery) त्यस दिशामा न कार्यरत छ नत प्रतिवद्ध नै । सरकारका नीति र कार्यक्रमहरुलाई व्यवहारमा उतार्न बसेका राज्य यन्त्रका पार्टपूर्जाहरु नै सक्षम, सक्रिय र इमान्दार छैन् भने कसरी देशमा मानव अधिकार, सामाजिक न्याय र प्रजातन्त्रका मूल्य र मान्यताहरु संस्थापित हुन सक्छन् । अर्को पक्ष, नेपाली जनमानसको कमजोर सामाजिक सचेतनता हो । आज पनि बहुसंख्यक नेपाली जनसमुदायलाई उसको नागरिक हक - अधिकार र कर्तव्य केके हुन भन्ने ज्ञात छैन । यो विषय उनीहरुको सामाजिक असचेतनतासंग मात्र गाँसिएको छैन बल्की मानव अधिकार, सामाजिक न्याय तथा स्वतन्त्रता र विकासको निम्ति कार्यरत संघ-संस्था र समुदायहरुको प्रतिवद्धतासंग पनि गाँसिएको छ । तसर्थ ती सरोकारवालाहरुले आफ्नो काम-कर्तव्यको सम्वर्द्धनमा पनि उपयुक्त समीक्षा र अनुगमन गर्नु जरुरी छ ।

तालिका - १

| कामका लगाइदिने भनेर बेच्न लगिएका घटनाहरु यहाँ तालिकामा प्रस्तुत छन् । | | |
|---|---|---|
| समाचार दिने पत्रिका | कामको विवरण | बेच्ने अपराधी |
| पुनर्जागरण - २०४८/७/१९ | काममा लगाइदिने बहानामा | रजनी शाक्य, ललितपुर |
| देशान्तर - २०४८/८/१ | हङकङमा काम लगाइदिने भनेर बम्बई पुऱ्याएको | अर्थमान तामाङ, दाल चिनी माया तामाङ |
| नेपाली आवाज - २०४८/१०/१० | नारायणघाटमा जागिर दिने भनेर भारत लान लाग्दा बाटोमै पक्रिएको | नरबहादुर लामा |
| नेपाली आवाज - २०४९/३/५ | कपडा व्यापारी बनाइदिने भनेर बम्बई पुऱ्याएको | गणेशबहादुर श्रेष्ठ र राजकुमार महर्जन |
| विमर्श | घरमा काम दिलाउँछु भनेर बम्बईमा पुऱ्याएको | रामनारायण र मनोजकुमार श्रीवास्तव |

तालिका - २

| समाचार दिने पत्रिका | अपराधी | अपराधको विवरण |
|---|---|---|
| दृष्टि (२०४८/५/१९) | राम कुमार थापा | काठमाडौंबाट विवाह गर्ने बहानामा बम्बई पु-याएको |
| स्वतन्त्र राष्ट्र | वसन्त मानन्धर | " |
| गोरखापत्र २०४८/१२/४ | मानबहादुर कुँवर योगी र फूलमाया कुँवर योगी | " |

तालिका - ३

| अपराधीको नाम | ठेगाना | अपराधीको स्थिति |
|---|---|---|
| रजनी शाक्य | लगनखेल ललितपुर | - |
| संजय श्रेष्ठ, कमल श्रेष्ठ | प्युठान | - |
| अर्यमान तामाङ | " | - |
| दालचिनी माया तामाङ | काभ्रेपलाञ्चोक, दाप्चा | - |
| रामकृष्ण बास्ने | नुवाकोट, चौघेडा | - |
| रामकुमार थापा | नुवाकोट, रलुका, गा.वि.स. | - |
| सन्ते लामा | काठमाडौं | - |
| विनोद सुवेदी, ईश्वर तिवारी | " | - |
| श्याम शाही | भक्तपुर | - |
| वसन्त मानन्धर | जनकपुर | - |
| श्याम कुमार | काठमाडौं | - |
| नरबहादुर लामा | ककनी, काठमाडौं | - |
| शंकर थापा | मकवानपुर, बसामाडी | - |
| रतन हमाल, पी माया हमाल | तनहुँ | पुर्पक्षका लागि थुनामा राखिएको |
| मानबहादुर, कुँवर योगी | " | - |
| फूलमाया योगी | उदयपुर, गिजरा | - |
| सभाबहादुर थलान | मकवानपुर | दश वर्ष कैद |
| विष्णुबहादुर नेपाली | गोरखा | - |
| संजय तामाङ | नुवाकोट | - |
| पूर्णबहादुर लिम्बु | " | चार वर्ष कैद |
| रामहरि थपा, भगवान् बस्नेत | | |
| श्याम तामाङ | नुवाकोट, आपखर्क | - |
| गणेशबहादुर श्रेष्ठ | | |
| राजकुमार महर्जन | कीर्तिपुर, पाँगा | - |
| रामनारायण, तारादेवी | | |
| र मनोजकुमार श्रीवास्तव | | |
| पवन थापा, शेरबहादुर तामाङ | | |
| रामबहादुर क्षेत्री | | |

*श्रोत: बाल सरोकार, अंक ११, प्रकाशक: सीवीन*

# अनुसूची – ४

# प्रहरी यातना र नेपाल

आधुनिक समाजमा मानिसले मानिसलाई दिने पीडा, दुर्व्यवहार वा यातना असभ्यताको परिचायक मानिए पनि नेपालको प्राचीन शासन विधान र दण्ड प्रणालीमा जताततै यातनाको प्रयोग हुने गरेको थियो। प्राचीन शासनको शैली र प्रशासनिक यन्त्रको साँघुरो ढाँचाले यातना त्यस बेलाका लागि अनिवार्य थियो होला । तर अहिले पनि नेपालमा यातनाका अनेक रुप र अवशेषहरु पाइन्छन्। मानव अधिकार को कुरा नेपालमा पटक-पटक उठ्न थालेपछि र खासगरी कानूनी शासनको अवधारणालाइ अंगिकार गरिएपछि पनि यातनालाई राज्यको संगठित शक्तिले व्यक्तिका विरुद्ध प्रयोग गर्दै आएका घटनाहरु पञ्चायती शासन कालमा सामान्य नै थिए। पञ्चायत कालमा व्यक्तिको आस्थालाई कमजोर पार्ने नियतले यातना दिइन्थ्यो र त्यस्ता यातना शारीरिक र मानसिक दुवैखालका हुन्थे ।

०१७ सालको घटनापछि पक्राउ गरिएका बन्दीहरुलाई उनीहरुको आस्था र विश्वास गिराउन दिइएको यातना, ०२८, ०३५/०३६ र ०४२ सालको संघर्षमा पक्राउ परेका विद्यार्थी र राजनीतिक बन्दीहरुलाई दिइएको यातनाका वर्णनहरु सुन्दा अहिले पनि धेरै मानिसलाई रिंगटा लाग्छ। तर त्योभन्दा पनि दुखद् तथ्य के छ भने मानव अधिकारको चेतना जतिसुकै व्यापक भए पनि त्यस्तै क्रूर र अमानवीय व्यवहार हरु नेपालमा अझै जीवित छन् । अहिले पनि, यातना पक्राउ परेको वा पक्राउ गरिएका मानिसलाई दिइने अवैधानिक दण्डका रुपमा रहिरहेकै छ ।

०४६ सालको जनआन्दोलनमा पक्राउ गरिएका व्यक्तिहरुमध्ये अधिकांश अहिले पनि प्रहरी हिरासतमा पाएका यातनाका खतहरु बोकेर बाँचेका छन् । कतिपयको मानसिक अवस्थामा नराम्रो असर परेको छ भने कतिपयले अपांगको जीवन बाँच्न बाध्य हुनु परेको छ ।

पञ्चायतकालीन संविधान र ऐन कानूनहरुले पनि हिरासतमा वा अन्यत्र यातना दिने वा व्यक्ति विरुद्ध अमानवीय कर्म र अपमानजनक व्यवहार गर्ने छूट दिएका थिएनन् । तर पनि जनआन्दोलनताका त्यस्तो नृशंस यातना दिने अधिकारीहरुलाई आजसम्म कुनै कारवाही भएको छैन ।

यातना उन्मूलन गर्ने सन्दर्भमा जनआन्दोलनपछि गठित अन्तरिम सरकारको पालामा उल्लेखनीय प्रयासहरु भए । अन्तरिम सरकारको पालामा बनेको नेपाल अधिराज्यको संविधान २०४७ को धारा १४ को उपधारा ४ मा यातना दिन, अमानवीय र अपमानजनक व्यवहार गर्न नपाइने कुरा स्पष्ट उल्लेख गरिएको छ भने हिरासतमा यातना पाएको व्यक्तिले क्षतिपूर्ति पाउनु पर्ने कुरा समेत उल्लेख गरिएको छ । तर क्षतिपूर्तिको कानून अहिलेसम्म बनिसकेको छैन ।

अन्तरिम सरकारकै पालामा नेपालले "यातना तथा अन्य क्रूर, अमानवीय वा अपमानजनक व्यवहार वा सजाय विरुद्धको महासन्धि" लाई सम्मिलन र अनुमोदन गर्‍यो। १३ जुन १९९१ का दिनदेखि नेपालमा यो महासन्धि लागू भएको छ । यो सहासन्धिको भावनाको उल्लंघन गर्ने सरकारका विरुद्ध अन्तर्राष्ट्रिय न्यायालय र नेपालकै न्यायालयमा जाने हक महासन्धि र नेपालको संविधानले प्रत्येक नागरिकलाई प्रदान गरेको छ ।

तर यी दस्तावेजहरुमा सरकारले देखाएको प्रतिबद्धता व्यवहारमा भने प्रकट हुन सकेको छैन। अन्तरिम सरकारपछि बनेको निर्वाचित सरकारका पालामा नेपाल अधिराज्यको संविधान०४७ को धारा १४ को उपधारा ४ र महासन्धिको भावना र मर्म विपरीत धेरै ठाउँमा प्रहरीले पुर्पक्षको सिलसिलामा अमानवीय र नृशंस तरिकाले यातना दिएका घटनाहरु सार्वजनिक जानकारीमा आएका छन् । केही समय यता हिरासतमा अनुसन्धानको सिलसिलामा दिइएका यातनाहरुले नेपालका मानव-अधिकारवादी संस्थाहरुको मात्र होइन, एम्नेष्टी इन्टरनेशनलको समेत ध्यान आकर्षित भएको छ । स्मरणीय के पनि छ भने, यातनाको विषयलाई लिएर एम्नेष्टी इन्टरनेशनलले नेपालको विषयमा पहिलो पटक एक अलग्गै प्रतिवेदन प्रकाशित गरेको छ ।

२०४६ सालको जन-आन्दोलन र प्रजातन्त्र प्राप्तिपछि यातना दिइएका गंभीर घटनाहरु निम्न बमोजिम छन् ।

**बाग्लुङ**

बाग्लुङको ज्यामिरघाटमा ०४८ माघ १ गते प्रहरी इन्स्पेक्टर ज्ञानेश्वर वैद्यको छुरी प्रहारद्वारा हत्या भएपछि

प्रशासनले हत्यारा पत्ता लगाउन व्यापक गिरफ्तारीको अभियान चलायो । यस सिलसिलामा करीब ५०० मानिस पक्राउ गरिए । पक्राउ गरिएका १० जना बाहेक अरुलाई सामान्य सोधपुछ गरेर छाडियो । १० जनामा १ जनालाई थरौटीमा रिहा गरेपछि ९ जनालाई ३० देखि ५५ दिनसम्म हिरासतमा राखेर अमानवीय यातना दिइयो । यसरी यातना दिइएकाहरु प्राय: सबै नेकपा (मसाल) संग सम्बद्ध थिए ।

३२ वर्षीय राम पौडेललाई एस.एस.पी. र इन्स्पेक्टरले सरकारी वकिलको उपस्थितिमा कम्बलले बेरेर पिटेका थिए । उनलाई फालंगामा हालेर पिटिएको थियो र उनको फालंगामा जुंगामा आगो लगाईयो । आगोले उनका पाइताला डढाइयो, पानी माग्दा दुई जना प्रहरीले उनको मुखमा पिसाव फेरिदिए । उनको नङमा पिन रोपियो ।

२२ वर्षीय विद्यार्थी दलबहादुर वि. क., २८ वर्षीय भीम बहादुर थापा, २४ वर्षीय प्रेम राना मगर, २९ वर्षीय जीतबहादुर राना, १९ वर्षीय गीर बहादुर, ३० वर्षीय कपिल मल्ल, २३ वर्षीय रामबहादुर चापागाई, २३ वर्षीय हिमाल शर्मा र ३३ वर्षीय किसान नारायण हमाललाई हिरासतमा रहँदा पैतालामा मट्टीतेल डुवाएको कपडा लौरोमा बाँधेर पिट्ने, नङमा पिन घुसार्ने, चौखुऱ्याउने , फालंगामा झुण्ड्याउने, लातले पिट्ने, बुट र लट्ठीले पिट्नुका साथै खाना नदिने, जवर्जस्ती वकिलले तयार पारेको वयानमा सही गर्न लगाउने जस्ता यातना दिइयो ।

पक्राउ गरिएका र यातना दिइएका यी मानिसहरुमध्ये एकजना हत्या हुनु अगावै पक्राउ गरिएका थिए भने अरु दुईजना घटना बारे अनभिज्ञ थिए । नेकपा (मसाल) समर्थक भएकै कारणले यातना दिइएको हो भन्ने कुरा पक्राउ परेकाहरुले अनुभव गरेका छन् ।

## सिन्धुली हत्या काण्ड

अक्टोवर २७,१९९२ (२०४९ कार्तिक ११ गते) का दिन भीमानमा पनि अन्यत्र जस्तै भाइटीकाको उल्लास थियो । तर, त्यो उल्लास साँझपख डरलाग्दो घटनामा परिणत भयो। विहान आफ्नी बहिनीलाई गिज्याएको कुरालाई लिएर विवाद हुँदा रत्नबहादुर सार्कीले हानेको छुराबाट १७ वर्षीय रेखबहादुर ठकुरी र २१ वर्षीय धुवराज डोटेलको घटनास्थलमै मृत्यु भयो ।

प्रहरीले ७ जना लोग्नेमानिस र १ जना महिलालाई विना पुर्जी पक्राउ गरेर पुर्पक्षका लागि हिरासतमा राख्यो । पक्राउ गरिएका ८ जनामध्ये ६ जनालाई निर्मम तरिकाले यातना दिइयो । यी ८ जना पक्राउ पर्दा कांग्रेसी कार्यकर्ताहरुका हात, लात र ढुंगाबाट पिटिएका र गोहोरो झै घिसारिएका थिए।

त्यस बखत पक्राउ गरिएका ५१ वर्षीय वद्रीनाथ देवकोटा नेकपा (एमाले) को जिल्ला सल्लाहकार कमिटीका संयोजक हुन् । उनी घटना भएको बखत प्रहरी ठाना नजिकै थिए र सो घटना भएको दुई घण्टापछि मात्र उनले हत्या काण्डको जानकारी पाएका थिए ।

भीमान गा.वि.स.का सदस्य छैठु लामा एमालेका कार्यकर्ता हुन् । उनलाई आफ्नो साथी दुर्गा श्रेष्ठसंग बसेर कुरा गरिरहेको बखत कांग्रेस समर्थक हुलले पक्रेर पिट्दै थाना पुऱ्यायो । कार्तिक १३ गते उनलाई प्रहरी हिरासतमा लगातार १५ घण्टा यातना दिइयो । १४ र १५ गते पनि उनलाई प्रहरीले अमानवीय तरिकाले कुटपिट गऱ्यो । यातनाबाट बेहोश भएको अवस्थामा प्रहरीले तयार पारेको बयानमा उनको ल्याप्चे लगाइयो । मृतकहरुलाई वद्री देवकोटाले मार्न लगाएको हो भन्ने बयानमा सही गराउन उनलाई यो यातना दिइएको थियो । उनको जीउमा यातनाका खत र घाउहरु भएकाले जिल्ला अस्पतालमा लगेर औषधि उपचार समेत गरिएको थियो ।

छैठु लामासंगै बसेका कर्मचारी दुर्गा श्रेष्ठ (३९ वर्ष) लाई पनि सो काण्डमा पक्राउ गरेर यातना दिइयो । पक्राउ परेका भरतबहादुर विसंखे, तुलबहादुर सार्की, सुब्बा सार्की र ज्ञानबहादुर भुजेललाई पनि हिरासतमा डोरीले बाँधेर बाँसका भाटाले पिटिएको, टाउकोमा कुर्सी बोकाएर उठ्बस गर्न लगाएको, पक्राउ गरेका व्यक्तिहरुको पाखुरा, छेपारी, जोर्नी, पिठ्यूँ र शरीरका अन्य भागमा हात, लात्ती र लौराले कुटेर सख्त यातना दिइएको थियो ।

## गोरखाको चोरी काण्ड

०४९ कार्तिक १४ गते राती स्थानीय (थालाजुङ) तेजबहादुर गुरुङको १ लाख ५० हजार रुपैयाँ बरावरको सम्पति चोरी भयो । सो चोरीमा संलग्न व्यक्तिहरु पत्ता लगाउने सिलसिलामा १६ गते साँझपख ६१ वर्षीय पूर्णबहादुर विश्वकर्मालाई प्रहरीले सोही रात पक्रेर पिटेपछि अरुलाई पोलेका भरमा प्रहरीले अरु ५ जना व्यक्तिलाई पक्राउ गऱ्यो । पक्राउ गरिएका चरि भन्ने देवानसिंह गुरुङ, भीमबहादुर गुरुङ, प्रताप सुनार, सूर्य थापा र पूर्णबहादुर विश्वकर्माकी श्रीमती सानुमाया विश्वकर्मालाई ७ देखि २४ दिनसम्म गोरखा जिल्ला प्रहरी कार्यालयमा राखियो । तर उनीहरुलाई पक्राउ पुर्जी पनि दिइएन र अदालतमा पनि हाजिर गराइएन ।

पक्राउ गरिएका रोगी पूर्णबहादुरलाई दरौदी नदीको चिसो पानीमा चोबलिएको थियो । उनलाई हिरासतमा पनि पटक-पटक कुटपिट गरिएको थियो । हिरासतमा भएको यातनाले हिंडडुल गर्न नसक्ने अवस्थामा उनलाई रिहा गरियो । रिहा भएको छैठौं दिन उनी बेवारिस अवस्थामा मरे । पोष्टमार्टमको रिपोर्टमा उनको मृत्युको कारण उल्लेख गरिएको छैन । तर उनको छाती र कोखमा घाउ-चोट लागेको कुरा उल्लेख छ ।

यस काण्डमा पक्राउ गरिएका सबैलाई लौराले शरीरका विभिन्न भागमा पिट्ने, कुखुरो बनाएर उफार्ने, पैतालामा भाटाले पिट्ने, बक्सिंग हान्ने, दुईतिरका मुश्ला र कानमा असर पर्ने गरेर घुंडा र हातले चेप्ट्याउने, सिस्नुपानी लगाउने, घंगरुको लौरा हातमा रगड्ने र हात खुट्टा बाँधेर यातना दिने गरिएको थियो । प्रहरीले दिएको यातनाका कारण प्रताप सुनारको देब्रे गोडाको पैतालामा नीलो भएर रगत जमेको थियो । पछि त्यस ठाँउमा घाउ भएको थियो भने सूर्यबहादुर रानाको देब्रे हातका औंलाको जोर्नी खुस्केको र भाँचिएको थियो । यसैगरी देवानसिंह गुरुङका दुबै पैताला यातनाका कारण पिल्सिएका पाइए भने भीमबहादुर गुरुङका गोडामा यातनाका खतहरु थिए र उनी राम्ररी कान सुन्न नसक्ने अवस्थामा थिए ।

## अन्य घटनाहरु

यसैगरी प्रहरी हिरासतमा यातना दिइएका घटनाहरु बेला-बखत चर्चामा आइरहेकै छन् ।

### *पोखरा*

तालवाराही मा.वि. पोखरामा भएको जुलुस र विरोध प्रदर्शनको सिलसिलामा प्रहरीले पक्राउ गरेका ५ जनालाई यातना दिएको थियो । २३ नोभेम्बरका दिन प्रहरीले पक्राउ गर्दा १६ वर्षीय विद्यार्थी धर्मराज पहारीलाई लछार-पछार गर्दै पिटेको थियो भने २३ वर्षीया गंगा बराललाई प्रहरीले कपालमा समातेर लछारपछार गरी लठ्ठीले पिटेको थियो । यही विरोध प्रदर्शनको सिलसिलामा प्रहरीले स्थानीय दुईजना कामदारलाई पक्राउ गरेको थियो, जसको सो प्रदर्शनसंग कुनै लिनुदिनु थिएन । पक्राउ परेका एक श्रमिकलाई पिठ्युँ, टाउको र पाखुरामा बाँसको लौरो र बन्दुकको कुन्दाले पिटिएको थियो भने अर्का श्रमिकलाई पक्राउ गर्दा टाउको र पिठ्युँमा पिटिएको थियो ।

### *विराटनगर*

राष्ट्रिय वाणिज्य बैंकमा मोहिनी देवी पोद्दारको बन्द भैसकेको खाता नं. ३३७७ बाट १२ जुलाई १९९२ का दिन ७ लाख भुक्तानी भएपछि त्यसको छानवीन विशेष प्रहरी विभागले गऱ्यो ।

विशेष प्रहरीले कामको थालनी ११ जना कर्मचारीलाई गिरफ्तार गरेर गऱ्यो । ३० अक्टोबर १९९२ का दिन ११ जना कर्मचारीलाई गिरफ्तार गरिएकोमा १७ दिनको छानवीनपछि ६ जना रिहा गरिए र ५ जनालाई काठमाडौं पुऱ्याइयो ।

पक्राउ गरिएका ५ जनालाई काठमाडौंमा हनुमान ढोका प्रहरी कार्यालयमा राखियो । तीमध्ये ३५ वर्षीय परमानन्द सिंहलाई पटक-पटक प्रहरी हिरासतबाट विशेष प्रहरी कार्यालयमा लगेर यातना दिइयो भने मीरा दाहाललाई पनि त्यस्तै यातना दिइयो ।

अनुसन्धानका सिलसिलामा बयान लिंदा उनीहरु दुवै जनालाई पोलिथिनको पाइपले जथाभावी कुटपिट गरियो । उँधो मुण्टो पारेर झुण्ड्याउने, कपाल भुत्ल्याउने, बाँधेर पिट्नुका साथै पैतालामा "इलेक्ट्रीक शक" समेत दिइयो । यी दुवैजना अहिले पनि विराटनगर जेलमा छन् र यातनाका कारण मानसिक र शारीरिक दुवैखालका समस्याले सताइएका छन् ।

पक्राउ गरिएका अरु ३ जनालाई जेलमा अपमानजनक व्यवहार गर्न लगाइएको, विशेष प्रहरीले यातना दिने धम्की दिएको र उल्लखित २ जनालाई दिइए जस्तै यातना दिने धम्की दिएर यातना दिंदा संगै राखी आतंकित पारिएको थियो ।

"यातना तथा अन्य क्रूर, अमानवीय वा अमपानजनक व्यवहार वा सजाय विरुद्धको महासन्धि" मा हस्ताक्षर गरेपछि नेपाल त्यस सन्धिलाई लागू गराउने अभिभारा राज्यपक्षको हो । यस्ता अमानवीय व्यवहार र यातनाको विषयमा जानकारी पाएपछि त्यसको छानवीन गराउनु महासन्धिको अनुमोदन गर्ने राज्यपक्षको दायित्व हुन्छ, तर सन् १९९२ मा सार्वजनिक रुपले सप्रमाण चर्चामा आएका यी घटनाहरुको छानविन अहिलेसम्म भएको छैन ।

प्रहरीको छानवीनको आधारनै यातना भएको छ । दुर्गम ठांउहरुवाट रगत, विर्य, आदि जांच गर्न रोनाष्टमा पठाउनु पर्छ । तर एकत समयमा ति प्रमाण काठमाण्डौ पुऱ्याउनै गाऱ्हो पर्छ । पुगिहाले पनि यसको परीक्षण गर्न कहिले काहीं वर्ष दिनमा पालो आउनेगर्छ । यतिन्जेल यसले काम गर्दैन । धेरै जसो बलात्कारीहरु यिनै कारणले पनि रिहा हुन्छन् भन्ने भनाइ प्रहरी सुत्रको छ । "अनुसन्धानका आधुनिक प्रविधि र साधनको त कुरै छोडौं सामान्य हिंडडुल, यातायातको लागि आवश्यक खर्च र बन्दोवस्त छैन अनि चांडोचांडो काम सक्ने उपाय भनेको मारमुग्री लगाएर साबिति बयान लिने हो" एकजना अनुभवी भूतपूर्व प्रहरीले वर्ष पुस्तकको सिलसिलामा भेट्दा हामीलाइ भनेका थिए ।

नेपालको राज्य सञ्चालनको प्रमुख अंगमध्ये एक प्रहरी सेवामा ९० प्रतिशतलाई मानव अधिकार के हो भन्ने थाहा छैन । उनीहरु मानव अधिकार भनेको प्रहरी विरोधी, शान्ति विरोधी र अराजकताको पक्षपोषक मात्र हो भन्ने ठान्दछन् । अनि सिंगो समाजको ठूलो हिस्सा जो प्रभावशाली छ, त्यो पनि यही मनोरोगले ग्रस्त छ ।

# अनुसूची – ५

# नेपालमा शरणार्थी समस्या

दुई ठूला देशहरु भारत र चीनको बीचमा रहेको नेपालमा शरणार्थीको समस्या अहिले एकदमै जटिल अवस्थामा छ । खासगरी, भुटानको दक्षिणी क्षेत्रमा रहेका नेपाली भाषी भुटानी शरणार्थीहरुको ओइरो नेपालमा बढेको बढ्यै छ । तर, नेपालमा हाल आएका भुटानी शरणार्थीहरु नेपाल प्रवेश गर्ने इतिहासका प्रथम शरणार्थीहरु चाहिं होइनन् । यसअघि नै नेपालले तिब्बती र बंगलादेशी शरणार्थीहरुलाई एकपल्ट आफ्नो भूमिमा शरण दिइसकेको छ ।

## १. तिब्बती शरणार्थीहरु

सन् १९५९ मा तिब्बतका धार्मिक नेता दलाई लामाको युरोप पलायनपछि नेपालमा पहिलोपल्ट तिब्बती शरणार्थीहरु प्रवेश गर्न थालेका हुन् । भारतको धर्मशाला र नेपाल र तिब्बतलाई जोड्ने कोदारी राजमार्गबाट सर्वप्रथम तिब्बती शरणार्थीहरु नेपाल प्रवेश गरेका थिए ।

सन् १९५९ मा पहिलोपल्ट नेपाल प्रवेश गर्ने शरणार्थीहरुको संख्या करिब २० हजार थियो । त्यसबेला नेपालमा रेडक्रसको स्थापना भएको थिएन । दलाइ लामाको तिब्बत पलायनले संसारको ध्यान तिब्बती शरणार्थीहरु तर्फ आकर्षित भयो, फलत: रेडक्रसको अन्तर्राष्ट्रिय समिति आई.सी.आर.सी., स्वीस रेडक्रस र राष्ट्र संघीय शरणार्थी उच्चायोग (यु.एन.एच.सी.आर.) ले नेपालमा आएर तिब्बती शरणार्थीहरुको रेखदेख गरे ।

अन्तर्राष्ट्रिय स्तरमा ठूलो चर्चा पाएको कारण तिब्बती शरणार्थीहरुको सहयोगका निम्ति प्रशस्त सहयोग पनि प्राप्त भयो । तिब्बती शरणार्थीहरुको नेपाल प्रवेशपछि त्यस समस्यालाई समन्वय गर्ने सिलसिलामै सन् १९६३ मा नेपाल रेडक्रसको पनि जन्म भयो ।

तिब्बती शरणार्थीहरुलाई आई.सी.आर.सी., स्वीस रेडक्रस र राष्ट्र संघीय शरणार्थी उच्चायोगले गलैंचा बुन्न तालिम दिने, ऊन उपलब्ध गराउने र तयारी मालका लागि बजार खोजिदिने जस्ता कामहरु गरे भने उनीहरुको शिक्षा, स्वास्थोपचारको पनि यिनै संस्थाहरु र सरकारले मिलेर बन्दोवस्त गरे ।

सर्वप्रथम तिब्बतीहरुका लागि जाउलाखेलमा क्याम्प राखिएको थियो । तिब्बती शरणार्थीहरुलाई त्यसबेला ६ वटा प्रमुख क्याम्पहरुमा राखिएको थियो । काठमाडौं उपत्यकाभित्र जावलाखेलबाहेक बौद्ध र स्वयंभूमा उनीहरुको बसोबासका लागि क्याम्प खडा गरिएको थियो भने राजधानी उपत्यका बाहिर पोखराको ह्यांग्जा छोरेपाटन, रसुवा र मुस्ताङ जिल्लामा अरु क्याम्पहरु बनाएर उनीहरुलाई शरण दिइएको थियो ।

सन् १९५९ मा पहिलोपल्ट प्रवेश गरेका तिब्बती शरणार्थीहरुको दोश्रो र तेश्रो पुस्ता अहिले नेपालमा हुर्कदैछन् । कतिपयले नेपालको नागरिकता पाएका छन् भने कति पाउने अवस्थामा समेत पुगिसकेका छन् ।

सन् १९५९ मा दलाई लामाको तिब्बत पलायनपछि तिब्बती राजनीतिमा देखा परेको अस्थिरता अहिलेसम्म पनि यथावत छ । फलत: नेपालमा १९५९ मा शुरु भएको तिब्बती शरणार्थीहरुको नेपाल पस्नेक्रम जारी छ । नेपाल र तिब्बत बीच रहेका हिमश्रृंखलाबीचका भन्ज्यांगहरु पार गरेर शरण माग्न वा दलाई लामालाई भारतमा भेट्न जान तिब्बतीहरुले नेपाललाई प्रवेश मार्गका रुपमा प्रयोग गर्दै आएका छन् ।

बेला-बखत यसरी नेपाल पस्ने तिब्बतीहरु र नेपाली सीमा सुरक्षाकर्मीहरुबीच भडपहरु हुने गरेका छन् भने उत्तरी सीमामा पर्ने नेपालका गाउँहरुमा पसेर तिब्बतीहरुले उपद्रो मच्चाउने गरेका घटनाहरु पनि बेला बखत चर्चामा आइरहेका छन् ।

नेपालमा प्रत्येक वर्ष यति नै तिब्बतीहरु प्रवेश गर्छन् भन्ने कुरा अहिलेसम्म किटान गरेर भन्न सकिने स्थिति छैन । तिब्बतमा राजनीतिक चहलपहल र अस्थिरता बढ्दा नेपाल पस्ने तिब्बतीहरुको संख्या अचानक बढ्ने गर्दछ । गत वर्ष, तिब्बतीहरु २४ सयको संख्यामा नेपाल प्रवेश गरेका थिए

तिब्बतबाट नेपाल पस्ने प्राय जसो तिब्बतीहरुले त्यहाँका महिलालाई सरकारी अधिकृतहरुले जबर्जस्ती गर्भपतन गराउने गरेको, जबर्जस्ती परिवार नियोजन गराउने गरेको, दलाई लामाका तस्वीर बेच्न नदिएको र राजनीतिक स्वतन्त्रता नभएको तथा पक्राउ गरेपछि हिरासतमा यातना दिने गरेको बताउने गरेका छन् ।

## २. अन्य देशका शरणार्थीहरु

नेपाल र भारतबीचको खुला सीमाको कारण तेश्रो देशबाट शरणार्थीहरु नेपाल पस्नेक्रम बंगलादेश र पाकिस्तान-बीच भएको सन् १९७२ को मुक्ति संग्रामबाट शुरु भएको हो । पूर्वी पाकिस्तान (हालको बंगलादेश) र हालको पाकिस्तान बीच भएको सन् १९७२ को मुक्ति संग्रामको कारण पूर्वी पाकिस्तानबाट भारत प्रवेश गरेका शरणार्थीहरुको ठूलो संख्या नेपालमा प्रवेश गर्‍यो ।

तर, बंगलादेशी शरणार्थीहरुको समस्या नेपालका निम्ति तिब्बती वा हालका भुटानीको जस्तो गम्भीर र डरलाग्दो किसिमको थिएन । शरणार्थीको स्थिति दयनीय भए पनि त्यसबेला नेपाल रेडक्रस सोसाइटी र आई.सी.आर.सी. ले उनीहरुका समस्यालाई अस्थायी रुपले रेखदेख गरेका थिए । बंगलादेश पाकिस्तानबाट स्वतन्त्र भएपछि उनीहरुलाई आफ्नो देश फर्काउन आई.सी.आर.सी.ले हवाइजहाज चार्टर गर्‍यो ।

पाकिस्तान जान चाहनेहरुलाई पाकिस्तान र बंगलादेश जान चाहने शरणार्थीहरुलाई बंगलादेश जाने बन्दोवस्त मिलाउन नेपालस्थित पाकिस्तानको राजदूतावासले आफ्ना नागरिकहरुको पहिचान गर्‍यो । त्यसबेलाका बंगाली शरणार्थीहरु प्राय:जसो सबै बंगलादेश र पाकिस्तान फर्किए । त्यसबेला कसै कसैले नेपालमा नै बसोबास गरेका थिए, तिनीहरु अहिले नेपालमै पारिवारिक जीवन बिताएर बसेका छन् ।

यसैगरी सन् १९७९ ताका नेपालमा अफगानी र इराकी नागरिकहरु पनि भारत हुँदै नेपाल प्रवेश गरेका थिए। अवैध सीमा पार गरेर आएका यस्ता नागरिकहरु (जो शरणार्थी भएर आएका छन्) लाई नेपाल रेडक्रसले आवश्यक जाँचबुझ गरेर ट्राभल डकुमेण्टहरु बनाइदिने र अस्थायी सहयोग गर्ने गरेको छ ।

यसरी अवैध आप्रवासीको रुपमा नेपाल आएकाहरुमा हाल काश्मिरी र तमिल नागरिकहरु छन् भन्ने कुरा बेलाबखत हुने गरेको उनीहरुको पक्राउले पनि पुष्टि गर्दछ । नेपालको विभिन्न भागमा पक्राउ पर्ने तिब्बतीहरु र काठमाडौं उपत्यकाभित्र बेला बखत पक्राउ पर्ने गरेका काश्मिरी, तमिल, पन्जाबी आदिको स्थिति हेर्दा नेपालमा गैर कानूनी रुपमा धेरैले शरण लिइरहेको तथ्य स्पष्ट हुन्छ ।

## ३. भुटानी शरणार्थीहरु

सन् १९९० सेप्टेम्बर १९ का दिन दक्षिण भुटानमा मानव अधिकार र प्रजातन्त्रको माग गर्दै ठूला ठूला प्रदर्शन शुरु भएपछि सो प्रदर्शनलाई दबाउन भुटान सरकारले दक्षिणी भुटानमा दमन अभियान शुरु गर्‍यो । भुटान सरकारको दमनबाट आतंकित हजारौं नेपाली भाषी भुटानीहरु भुटानबाट धपाइन थाले भने कैयौं सरकारी आतंकबाट त्रस्त भएर भाग्न थाले ।

भुटानमा शुरु भएको यो दमन जति जति बढ्दै गयो, भुटानबाट लखेटिने र भाग्ने व्यक्तिहरुको संख्या पनि बढ्दै गयो । ०४७ साल मंसीरताका भुटानबाट नेपाल आएका शरणार्थीहरुको परिवार ४५ मात्र थियो । यो ४५ परिवारमध्ये २९ परिवारले कन्काई नदीको किनारमा छाप्रो हालेका थिए भने बाँकी १६ परिवार टिमाइमा थिए ।

समय संगसंगै भुटानमा सरकारको दमन तीव्र हुँदै गयो र भारत हुँदै नेपाल पस्ने शरणार्थीहरुको संख्या बढ्दै गयो । २०४७ मंसीरताका ४५ परिवारबाट शुरु भएको शरणार्थी-हरुको परिवार संख्या सन् १९९२ को अन्त्यमा १३ हजार ११७ पुगेको थियो भने हाल आएर यो संख्या करीब १५ हजार पुगेको छ । पहिले २ वटा ठाउँमा शरणार्थी बसेका थिए भने अहिले भुटानी शरणार्थीहरुकै लागि झापामा मात्रै ५ वटा शिविरहरु खडा भएका छन् । मोरंगमा प्रत्येक महिना सरदर ६ सय परिवारका दरले भुटानी शरणार्थीहरुको संख्या बढिरहेको छ।

भुटानी शरणार्थीको कारण अहिले नेपालमा ठूलो आर्थिक, सामाजिक र वातावरणीय समस्या उत्पन्न भएको छ भने उता शरणार्थी शिविरहरुको हालत पनि कम दयनीय छैन । भुटानी शरणार्थी शिविरमा टी.वी. रोगले ग्रस्त भएका शरणार्थीहरुको संख्या मात्रै ४ सयबाट उकालो लागिसकेका छन्। सन् १९९२ को अन्त्य सम्ममा झापामा शरणार्थी शिविरहरुमा बस्नेहरुको संख्या मात्रै ७२ हजार ३ सय पुगेको थियो ।

यी शरणार्थी शिविरहरुमा प्रत्येक दिन १७७ जना जन्मिने र प्रत्येक दिन करीब ५५ जना मर्ने गरेका छन् । जन्मदा र मर्दा गरिने सामाजिक संस्कारले दाउरा र केराका बोटहरुको विनाश डरलाग्दो रुपले बढेको छ ।

शरणार्थीहरुको स्वास्थ्य, शिक्षा, खाद्यान्न र अन्य सहयोगका लागि राष्ट्र संघीय शरणार्थी उच्चायोग, लुथरन विश्व सेवा, युनिसेफ, अक्स्फाम जस्ता अन्तर्राष्ट्रिय गैर सरकारी संस्थाहरुले सहायता प्रदान गरिरहेका छन् भने देशभित्रका थुप्रै गैर सरकारी संस्था र श्री ५ को सरकारले पनि शरणार्थीहरुलाई उपचार, सुरक्षा, लत्ता कपडा आदि उपलब्ध गराउन मद्दत गरिरहेको छ ।

झापा जिल्लाको टिमाई, गोलधाप र बेलडाँगी तथा मोरंगको पथरीका ६ वटा शरणार्थी शिविरमा जतिसुकै सहायता राशि बढाए पनि दिनदिनै बढ्ने गरेका शरणार्थीको संख्याले प्राप्त सहायतालाई अपर्याप्त बनाइरहेको छ । विद्यालय पढ्दै गरेका बालबालिकामध्ये अहिले धेरैले विद्यालय विमुख हुनु परेको छ। शरणार्थी शिविरमा भएको बाक्लो बस्ती र घना आवादीले रोग बढाउने काम गरेको छ। नयाँ आउने शरणार्थीहरुलाई बस्ने ठाउँको अभाव छ । फोहोर फ्याँक्ने उचित प्रवन्धको अभावले गर्दा सरुवा रोग कुनै पनि बेला नराम्ररी फैलने अवस्था छ ।

शरणार्थी शिविरमा रहेका हरुमध्ये ७७ प्रतिशत शरणार्थी कुनै न कुनै रोगले सताइएका छन्। सन् १९९२ को अन्त्यमा राष्ट्र संघीय शरणार्थी उच्चायोगले तयार गरेको प्रतिवेदन अनुसार, शरणार्थी शिविरका भुटानीहरुमध्ये २४.१ प्रतिशत यू.आर.आई., १६ प्रतिशत छाला सम्बन्धी रोग, १५ प्रतिशत झाडा पखाला, १३ प्रतिशत श्वास-प्रश्वास र करीब १० प्रतिशत जाडो र ज्वरो जस्ता रोगबाट पीडित छन्। विरामी पर्ने र निको हुने निरन्तरको प्रक्रियामा प्राय: ७७ प्रतिशत शरणार्थीहरु विरामी भइनै रहन्छन् ।

भुटान सरकारका प्रहरी र सेनाले अमानवीय र अकल्पनीय यातना दिएर लखेटेका यी शरणार्थीहरु कहिले स्वदेश फर्कने हुन् भन्ने कुरा अहिलेसम्म कसैले पनि अनुमान गर्न सकेका छैनन् । भुटान सरकारले यी शरणार्थीलाई शरणार्थी भनेर नमान्नु, भारतले यस विषयमा चासो नदेखाउनु तथा नेपाल सरकारले शरणार्थी सम्बन्धी महासन्धिमा हस्ताक्षर नगरेकोले अर्न्तार्ष्ट्रिय स्तरमा भैरहेका प्रयासहरुले कुन दिशा र गति लिने हुन्, यसै भन्न सकिने स्थिति अझै स्पष्ट देखिएको छैन ।

# अनुसूची - ६
# नेपालमा बाँधा मजदूर

नेपालमा दास प्रथाको उन्मूलन गरिएको घोषणा वि.स.१९८२ मै गरिएको थियो । यस देशमा एक व्यक्तिले अर्को व्यक्तिको श्रम शोषण गर्ने परिपाटीमाथि सोही घोषणाले पहिलो मुक्का प्रहार गरेको थियो ।

दासदासी उन्मूलनको घोषणाले ००४ मा "नेपाल सरकार वैधानिक कानून ००४" प्रकाशित गरिएपछि कानूनी मान्यता पनि पाएको थियो । त्यसबेलादेखि विभिन्न कालमा निर्मित नेपालका सम्पूर्ण संविधानले मानिसको बेचबिखन र दास प्रथालाई अस्वीकृत गरेको छ । तर कानूनी र संवैधानिक रोकावटका वावजुद पनि यहाँ मानवीय शोषण विविध रुपमा जीवित रहेको देखिन्छ । अझ पनि पश्चिमी तराईमा कमैया प्रथा कायम रहेको छ ।

विगतका कुनै पनि सरकारले दास प्रथाको समस्यालाई गंभीरतापूर्वक लिएन । उनीहरुले कहिल्यै संवैधानिक प्रावधानलाई व्यवहारमा उतार्ने प्रयास गरेनन् । जनआन्दोलनको सफलता पश्चात् बनेको नेपालको संविधान ०४७ को धारा २० को उपधारा (१) मा भनिएको छ - "मानिसलाई बेच-बिखन गर्न, दास तुल्याउन, बाँधा बनाउन वा कुनै किसिमले निजको इच्छाविरुद्ध काम गराउन निषेध गरिएको छ । त्यस्तो कार्य कानूनद्वारा दण्डनीय हुनेछ ।......" तापनि यहाँ बाँधा मजदूर राख्ने मानिसलाई अभियुक्त ठहऱ्याउन सक्ने प्रष्ट कानूनको भने अभाव छ ।

कमैया वा बाँधा मजदूरहरुको स्थिति, प्रकृति र संस्थाको समेत पत्तो लगाउन अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ले ०४८-४९ मा गहन सर्भेक्षण गरेको थियो । उक्त सर्भेक्षण देशको मध्य पश्चिमाञ्चल क्षेत्रका तीन जिल्लाहरु - कैलाली, कन्चनपुर र बर्दियामा सञ्चालन गरिएको थियो ।

उक्त अध्ययनको मुख्य उद्देश्य समस्याको प्रकृतिको आंकलन गर्नु थियो । अध्ययनले नेपालको यस क्षेत्रमा देखिएका बँधुवा मजदूरहरुको स्वरुप र आनीवानीका बारेमा उजागर गऱ्यो । अध्ययनले बँधुवा मजदूरहरुको सीप, ज्ञान र स्रोतका सम्बन्धमा तथ्याङ्क उपलब्ध गरायो । उक्त अध्ययनले कमैयाहरुको वर्तमान स्थिति, उनीहरुको पीडाको परिणाम र चरम गरिबीको पनि उजागर गऱ्यो । त्यसपछि तय गर्नुपर्ने उनीहरुको विमुक्ति एवं पुनर्वासको योजना वा कार्यक्रमका सम्बन्धमा भने विभिन्न समस्याहरु देखा परेका छन् । इन्सेकको सर्भेक्षणका क्रममा करिब १७ हजार कमैयाहरुसंग सोधपुछ गरिएको थियो । सोही अध्ययनका आधारमा थाहा भएको छ - नेपालको तराई क्षेत्रमा रहेका ती तीन जिल्लाहरुमा कमैयाहरुका २५ हजार परिवार रहेका छन् । त्यसै आधारमा भन्न सकिन्छ त्यस क्षेत्रमा करिब एक लाख कमैयाहरु रहेका छन् ।

तीनै जिल्लामा रहेका कमैयाहरुमा अधिकांश थारु जातिका मानिसहरु छन् । कुल जनसंख्याको १६ प्रतिशत वा थारु जनसंख्याको ५० प्रतिशत मानिसहरु कमैयाका रुपमा जीविका धानीहेका छन् । उनीहरु स-साना बुकुराहरुमा बस्ने गर्दछन् । कमैयाहरु खासगरी सामन्त वा जमिन्दारकहाँ एक वर्षको मौखिक करारमा रहेका हुन्छन् । उनीहरुमाथि खास खास शर्तहरु पनि थोपरिएको हुन्छ । सामान्यत: ती शर्तहरु कमैया र उनीहरुका परिवारका निम्ति कष्टकर हुने गर्दछन् । शर्तका केही नमूनाहरु

- कमैयाहरुले मालिकद्वारा खाद्यको खास परिमाण, बस्ने सानो टुक्रो जमिन र केही अन्य कुरो पाउँछन् । तर त्यसरी दिइएका अधिकांश कुरो कमैया र उनीहरुको परिवारका लागि अपुरो हुन्छ ।

- कमैयाले एक दिन पनि कुनै कारणवश कामबाट विदा लिए भने मालिकद्वारा नेपाली रुपैयाँ ५४ सम्म जरिवाना गरिन्छ । उनीहरुलाई कुनै चिज कामकै सिलसिलामा भत्क्यो, बिग्रियो भने पनि जरिवाना गरिन्छ ।

- मालिकको शर्त बमोजिम कमैयाका छोराछोरी र सन्तानले पनि उही मालिककहाँ काम गर्नुपर्छ ।

मालिकले कमैयालाई प्रदान गर्न निधो भएका सामग्री दिएन वा शर्त बमोजिमको व्यवहार गरेन भने पनि एक वर्ष नबितुन्जेल कमैयाले अन्यत्र जान पाउँदैनन् । कमैया परिवारका महिला सदस्यहरुले मालिकहरुका यौन शोषण पनि खप्नु परेको देखिन्छ ।

वर्षको एकचोटि माघी भन्ने पर्वमा कमैयाले नयाँ मालिकको खोजी गर्न सक्दछ । प्रायजसो मालिकहरु थारु होइन पहाडीमूलका बासिन्दाहरु नै हुन्छन् । उनीहरुको थारुभन्दा बढी मोलतोल गर्ने क्षमता हुन्छ । यहाँ मागभन्दा बढी श्रमिक अथवा कमैयाहरुको वितरण देखिएको छ । कमैयाहरुसंग कृषि मजदूरी बाहेक अन्य सीपहरु नभएका कारणले उनीहरु अरु विकल्प रोज्न सक्दैनन् । त्यसैले उनीहरु थोरै मजदूरीमा बाँच्न बाध्य छन् । उनीहरुको जीवन मालिकको तजवीजमा निर्भर गर्दछ । परिणाम स्वरुप उनीहरुको जीवन अत्यन्त दयनीय रहेको छ । उनीहरुको कार्य दिवस १८ घण्टाको हुनु सामान्य ठानिन्छ । कमैयाहरुले कुनै दिन विदा पाउँदैनन् । उनीहरुले विरामी भएको अवस्थामा समेत विदा पाउँदैनन् ।

सामान्यत: कमैयाहरुको परिवार संख्या ६ जनाभन्दा बढीको देखिएको छ । सम्पूर्ण परिवारले एउटै मालिकको सेवामा कार्यरत रहनु पर्दछ । तर त्यसबापत उनीहरुले छुट्टै पारिश्रमिक पाउँदैनन् । कमैया प्रथामा एउटा कमैयाको सम्पूर्ण परिवारलाई नै श्रम इकाई मानिन्छ । कमैयाले वर्षमा एकचोटि भए पनि आफ्नो मालिक परिवर्तन गर्न सक्दछ । तर उसको परिवारले ऊ जहाँ काम गर्छ त्यहाँ अनिवार्यत: खट्नै पर्छ । त्यस मामिलामा उनीहरुले विकल्प पाउँदैनन् ।

कमैया प्रथाको सबभन्दा खतरनाक पक्ष सौंकी वा ऋण नै हो । कमैयाहरुलाई उनीहरुको आवश्यकताभन्दा कम पारिश्रमिक दिइने गरिन्छ । त्यसैले ढिलो चाँडो सौंकी लिनै पर्ने स्थिति रहेको देखिन्छ । अहिले कम्तिमा ३०.६७ प्रतिशत कमैयाले ऋण लिएको देखिन्छ । ती ऋणहरु सामान्यत: घरेलु आवश्यकताहरु पूर्ति गर्न प्रयोग गरिएको पाइन्छ । उनीहरुले मालिकबाट चाडपर्वमा बढिमा करिब साढे पाँच हजार, बिहेमा करिब चार हजार र मृत्यु पश्चात् गरिने संस्कारमा झण्डै दुई हजार नेपाली रुपैयाँ सौंकी स्वरुप लिने गरेको देखिन्छ । औषधि उपचार, खाद्य आपूर्ति र लत्ता कपडाहरुका निम्तिसमेत सौंकी लिन बाध्य हुनुपर्ने कमैयाहरुलाई पुर्ख्यौली सौंकीले अत्यधिक पिरोल्ने गरेको देखिन्छ ।

एउटा कमैयाले सौंकी रकम चुक्ता नगरुन्जेल मालिकको सेवा अनिवार्य रुपले गर्नु पर्दछ । तर दिनरात काम गर्दा पनि चर्को ब्याज दर र मालिकको एकतर्फी रवैयाका कारण कमैयाको सौंकी झन् झन् बढ्दै जाने गरेको देखिन्छ । नेपालका कुल कमैयाहरुमध्ये झण्डै साढे छयानब्बे प्रतिशत निरक्षर छन् । सामान्यत: उनीहरु ज्यादै सोझा र प्रतिवाद गर्न नसक्ने स्वभावका हुन्छन् । त्यसैले मालिकहरुका निम्ति उनीहरुको शोषण गर्न सहज भएको छ । कतिपय कमैयाहरु जीवनभर बँधुवा जीवन बिताउन बाध्य हुन्छन् । अझ कतिपय त जीवन लीला समाप्त भएपछि पनि बँधुवा जीवनबाट मुक्त हुँदैनन्, मालिकहरु त्यस्ता कमैयाका सन्तानको टाउकोमा उसको बाबुको ऋण थोपरिदिन्छन् । निर्दोष सन्तान बाबुको सट्टामा बँधुवा हुन पुग्दछ । नेपालका झण्डै साढे तीन प्रतिशत कमैया चौथो पुस्ताको बँधुवा जीवन बिताइरहेका छन् । झण्डै बाइस प्रतिशत दोश्रो पुस्ता र अठ्ठाइस प्रतिशत तेश्रो पुस्तामा बँधुवा जीवन व्यतीत गरिरहेका छन् । यस देशका झण्डै तेह्र प्रतिशत कमैयाहरुले साढे दुईदेखि साढे चार दशकसम्मको बँधुवा जीवन बिताइसकेका छन् ।

सौंकी लिएको कमैयाले माघीमा आफ्नो मालिक हत्पति परिवर्तन गर्न सक्दैन । कुनै जमिन्दार वा मालिकले उसको पुरानो मालिकसंग लिएको सौंकी तिरी दिने भयो भने मात्र उसले मालिक परिवर्तन गर्न सक्दछ । सौंकी बढ्दै गएपछि कमैयाको मालिक परिवर्तन गर्न सक्ने विकल्प पनि कम हुँदै जान्छ । कहिलेकाहीं कमैया र उसको परिवार थाहै नपाई अर्को मालिकको हातमा बिक्री भइसकेका हुन्छन् । कमैयाहरुको शोषण र उत्पीडन गरेबापत मालिकहरुलाई कुनै सजाय गर्ने प्रावधान रहेको देखिदैन । कमैया प्रथाले मानिसलाई अनिश्चित कालसम्मका लागि बँधुवा बनाउने गरेको देखिन्छ ।

थारुहरु यहाँका आदिवासी हुन् र परम्परागत रुपमा उनीहरु केही घुमन्ते किसिमको जाति मानिन्छ । ००७ तिर मलेरियाको उन्मूलन भए पश्चात् थारुहरुको पुर्ख्यौली थलोमा पहाड र तराईका अन्य क्षेत्रहरुबाट आप्रवासीहरु आउन थाले । तिनै आप्रवासीहरुले कालान्तरमा यहाँको जग्गा जमिनमा कब्जा जमाए र थारुहरु उनीहरुको खटनपटनमा चल्न थाले ।

संयुक्त राष्ट्रसंघको सदस्य भएको नाताले नेपालले त्यसद्वारा जारी गरिएका दस्तावेजहरुमध्ये आफूद्वारा सम्मिलन गरिएका अनुवन्धहरुको सम्मान गर्नै पर्दछ । नेपालले नागरिक तथा राजनैतिक अधिकारको अभिसन्धि, दासत्व उन्मूलन सम्बन्धी थप अनुवन्धसँग सम्बन्धित दासहरुको व्यापार र दासत्व सरहका प्रथाको उन्मूलन सम्बन्धी सन् १९५६ को अनुबन्ध, १९९० बाल अधिकार सम्बन्धी विश्व घोषणापत्र र बाल अधिकार सम्बन्धी संयुक्त राष्ट्र संघको अभिसन्धिमा पनि हस्ताक्षर गरिसकेको छ ।

नेपालमा हाल बहुदलीय व्यवस्था र निर्वाचित सरकार रहेको छ । तर विधायिकालाई यहाँको मूलत: सामन्तवादी संरचनामा परिवर्तन ल्याउने दिशामा अग्रसर गराउने काम भने बाँकी नै रहेको देखिन्छ । कमैया प्रथाले यस देशमा दासत्व अझै कायम रहेको कुरा प्रष्ट पारिरहेको छ ।

# अनुसूची – ७
# महिला र मानव अधिकार

नेपाली समाजमा महिलाहरुको स्थिति दोश्रो दर्जाको नागरिकसरह छ । राष्ट्रिय जीवनका हरेक क्षेत्रमा महिलाहरु उत्पीडित देखिन्छन् । देशको सामाजिक, आर्थिक, राजनैतिक लगायत सांस्कृतिक पक्षले पनि महिलाहरुलाई तल्लो दर्जा दिएको छ । नेपालको कुल जनसंख्याको ५०.१३ प्रतिशत ओगट्ने नारीहरु स्कूल जाने कुरामा पुरुष भन्दा साढे दुई गुना पछाडि छन् । देशको कुल महिला साक्षरता २५ प्रतिशत मात्र छ । तर पुरुष साक्षरता ५४.५ प्रतिशत रहेको छ । हिन्दू धर्मशास्त्र मनुस्मृतिका अनुसार नारीहरु यस धरतीमा ताडना पाउनका लागि नै जन्मिन्छन् र अझ पनि यहाँ यस्तो धारणा पाइन्छ ।

नेपालको बर्तमान संविधान अनुसार प्रतिनिधि सभाका लागि हुने निर्वाचनमा प्रत्येक राजनैतिक दलका उम्मेदवार हरुमध्ये कम्तिमा पाँच प्रतिशत महिला उम्मेदवार हुनु अनिवार्य छ। तर हाल कुल २ सय ५ जनाको तल्लो सदनमा जम्मा ७ जना अर्थात् ३ प्रतिशत केही मात्र बढी महिलाहरु पुगेका छन् । राष्ट्रिय जीवनका अन्य पक्षहरुमा झै राजनीतिमा पनि महिलाहरुको पकड अति कमजोर रहेको देखिन्छ । सत्ताधारी नेपाली काँग्रेसको २७ जनाको केन्द्रीय समिभितमा ३ जना महिला नेत्रीहरु रहेका छन् भने प्रमुख प्रतिपक्षी एमालेको ३५ सदस्यीय केन्द्रीय समितिमा कुल २ जना महिलाहरु रहेका छन् ।

नेपालको बर्तमान संविधानले समानताको हक अन्तर्गत समान कामका लागि महिला-पुरुषलाई समान पारिश्रमिक दिनुपर्ने स्पष्ट व्यवस्था गरेको छ । तर संविधानले महिला र पुरुषबीच समानताको सिद्धान्तलाई राम्रोसंग अंगिकार गरेको भए पनि त्यस अक्षरश: पालना हुन सकेको देखिदैन । कुनै मृतकको छोरीले भन्दा अपुतालिको क्रममा नातिले बढी प्राथमिकता पाउने भेदभावपूर्ण कानूनी व्यवस्था अधापि कायम छ ।

नारीहरुले सम्पत्तिको अधिकार पाएका छैनन् । मुलुकी ऐन ०२० ले छोरीलाई पनि छोरासरह अंश पाउन सक्ने व्यवस्था गरेको छ । तर छोरीले उक्त अंश पाउनका निम्ति अविवाहित बस्नु पर्ने हुन्छ र त्यस्तो अवस्थामा छोरीको उमेर ३५ बर्ष पुगेको हुनु पर्छ। पैतृक सम्पति छोराको जन्मजात अधिकार हुन्छ। तर अविवाहित रहेर ३५ बर्ष पुग्नु पर्ने शर्त पूरा गर्दा पनि एउटी छोरीको अंश पाउने टुङ्गो हुदैन । व्यवहारिक जीवनमा सामान्यत: छोरीको उमेर ३५ बर्ष पुग्नु अगावै दाजु-भाइका बीचमा अंशबण्डा भइसक्छ । अनि अंशबण्डा गर्दा अविवाहित दिदी बहिनीका लागि अंश भाग छुट्याउने वा छोरी ले मुद्दा दायर गर्दा पुन: अंशबण्डा हुने कानूनी व्यवस्था छैन । ३५ बर्ष सम्म अविवाहित रही अशं दिने छोरीले पनि पुन: विहे गरिन भने अशं फिर्ता गर्नुपर्छ ।

बर्तमान संविधान अनुसार नेपाली नागरिकता प्राप्त पुरुषसंग बिहे गर्ने विदेशी महिलाले विदेशी नागरिकता त्याग गर्ने कार्वाही सुरु गरेपछि नेपालको नागरिता प्राप्त गर्न सक्छिन । तर नेपाली महिलाले बिहे पश्चात् आफ्नो पतिसंगै नेपालमै बस्न चाहिन र उनको पतिले विदेशको नागरिकता त्याग गरे भने पनि नेपालको नागरिकता प्राप्त गर्न कठिनाइको सामना गर्नु पर्दछ। उक्त विषयमा कानूनी स्पष्टता रहेको देखिदैन।

छोरीहरु घरधन्दा र परिवारका सबैको स्याहार सेवा गर्न जन्मन्छन् र भोक, असुरक्षा र ताडना खप्दाखप्दै मर्छन् । नेपालका अधिकांश आमा-बाबु छोरीलाई पढाउन चाहँदैनन् । सरकारले प्रत्येक प्राथमिक विद्यालयमा १ जना महिला शिक्षक राखिने आफ्नो बचनबद्धता पनि अहिलेसम्म पालन गरेको छैन ।

पश्चिम नेपालका गाउँघरमा मन्दिरमा बालिका चढाउने र तिनीहरुलाई विवाहिता जीवन बिताउन नदिने प्रचलन अझै छ । नेपालको राजधानी अनि विश्वभरिका विद्वान्हरुको संगम काठमाण्डौमा यो चलन कुमारी प्रथाको नाममा जीवित मात्र होइन सरकारी संवैधानिक तहबाट सम्मानित पनि छ ।

नेपाली समाजमा जारी प्रथा, बाबुले धर्मको नाममा गुम्बामा छोरी चढाउने झुमा प्रथा, दाजुभाइमा सम्पत्ति बाँड्न नपरोस् भनी थुप्रै दाजुभाइले एउटै स्वास्नी राख्ने बहुपति प्रथा, दुलाहालाई किन्नुपर्ने र मागे जति सम्पत्ति दिएर मात्र छोरीलाई घर पठाउन पाइने दहेज प्रथा, यी सबै कुसंस्कार निर्लज्जतापूर्वक जीवित छन् । सम्पत्तिको लोभमा आफ्नै स्वास्नीलाई वेश्यालयमा बेच्ने र महिलालाई बेच्न कै लागि नक्कली बिहे गर्ने प्रचलन समेत यहाँ देखिएको छ । बाल

विवाह,बहुविवाह र अनमेल विवाह कानूनी रुपमा प्रतिबन्धित छन् । तर व्यवहारमा यस्ता सबै प्रकारका बिहेहरुले मान्यता पाए झैं देखिन्छ।

प्रजातन्त्रको स्थापना पश्चात् शिक्षण संस्थाहरुको पाठ्यक्रममा समावेश गरेर सार्वजनिक सञ्चारले वा कुनै पनि राजनीतिक दलले आफ्नो घोषित प्रतिवद्धताअनुरुप महिलाको चेतना अभिवृद्धि वा विकासका लागि ठोस काम गरेको छैन ।

महिलाहरुको किनबेचको मामिलामा त नेपाल कुख्यात भइसक्यो । त्यस्तै बलात्कारका घटना पनि हिजोआज निकै बढेको देखिन्छ । भारतका ठूला ठूला शहरका सबै वेश्यालय नेपाली चेलीहरुलाई जबरजस्ती थुनेर मात्र चल्ने गरेका छन् । अनेक लालच देखाएर, नक्कली बिहे गरेर नारीहरुलाई सिमाना पारि पुऱ्याइन्छ । यहांका नारीहरु कतैबाट पीडित भएको खण्डमा उल्टै समाजबाटै उनीहरु परित्यक्त समेत हुनु परेको पनि देखिएको छ ।

महिला बलात्कारका घटनाहरुलाई प्रमाणित गर्ने डाक्टरी परीक्षण गर्ने सुविधा देशको ग्रामीण भागमा छैन । गाउँ गाउँबाट परीक्षण गराउन राजधानीनै आइपुग्नु पर्छ र आइसकेपछि पनि समयमा परीक्षण हुन सक्दैन । यसले गर्दा धुप्रै अपराधी "ससम्मान" छुट्ने गर्छन् । बलात्कारीहरुलाई सजाय दिलाइ छाड्न कम्मर कस्ने महिलाहरुले अनेक अपमानपूर्ण रवैयाहरुको सामना गर्नु पर्दछ । महिलाहरुले आफै पहल नगरुन्जेल यो समस्याको स्थायी समाधान हुन सक्ने देखिँदैन । तर कमसे कम समाजका अगुवाहरुले र सरकार स्वयम्ले यस क्षेत्रमा पहल नलिने हो भने महिलाउपरको अत्याचार हटाउन सकिने छैन ।

महिला अधिकारका क्षेत्रमा काम गर्ने संघ संस्थाहरुले अझै पनि गाउँगाउँमा जानुपर्ने देखिन्छ । ग्रामीण क्षेत्रका पारिवारिक बनौट र सांस्कृतिक परम्परा भड्काउन होइन सुधार्नका लागि उनीहरुले आफ्नो क्रियाशीलताको प्रयोग गर्नु पर्छ भन्ने कुरा व्यवहारले नै सावित गर्न केही बाँकी नै देखिन्छ ।

देशका आमाहरुलाई अस्वस्थ्य, असहाय र डरपोक स्थितिमा राखेर स्वस्थ्य र सवल पुस्ताको कल्पना गर्न सकिदैन । अहिले भारतका वेश्यालयमा मात्र पनि डेढलाख-भन्दा बढी नेपाली युवतीहरु वेश्यावृत्तिमा संलग्न हुन बाध्य रहेको बताइन्छ । प्रहरी हिरासतभित्र समेत महिलाहरु बलात्कृत भएका छन् । प्रहरी जवानबाटै बालिका बलात्कृत भएका समाचार समेत प्रकाशमा आएका छन् ।

आत्महत्या गर्नेमा महिलाहरुकै संख्या अधिक छ । घर छोडेर भाग्ने, बीचैमा स्कूल छोड्ने, अकालमा बिना उपचार सुश्रुवा मर्नेमा पनि महिलाहरु नै अगाडि छन् । बोक्सीको आरोप लगाएर महिलाहरुलको बासउठ्ठा गरिएको पनि देखिन्छ । त्यस्तो आरोप लगाएर महिलाहरुको हत्या समेत गरिएको छ ।

यो तथ्य कसैबाट छिपेको छैन कि विश्वका अन्य भागहरुमा झैं नेपालमा पनि महिलाहरु हरेक क्षेत्रमा पिछडिएका छन् । यहाँका राजनेता एवं बुद्धिजीवीहरुको मुखबाट हामीले उपरोक्त कुरा धेरैचोटि सुनेका छौं । तर महिला उत्पीडनका तथ्यहरुलाई केलाएर महिलाहरुको समस्या पन्छाउन ठोस कदम चालिएको छ भन्ने अवसरचाहिं हामीले अहिलेसम्म कमै मात्र पाएका छौं ।

चालीस प्रतिशत नेपाली बालिकाहरुको चौध वर्ष पुग्दा नपुग्दै बिहे हुने गर्दछ। यस मामिलामा नेपाल दक्षिण एशियाली राष्ट्रहरुमा पहिलो कोटिमा आउँदछ । हाम्रो परम्परागत संस्कार र मान्यताका कारण यस्ता कलिला उमेरका विवाहित महिलाहरुले कठोर बुहार्तन खप्नु पर्दछ । तिनीहरुको दु:खको श्रृङ्खला अनन्त छ ।

हाम्रा परम्परागत मान्यताहरुले पनि जारी प्रथा चलाएर अप्रत्यक्ष रुपमा महिलाहरुको किनबेच गर्ने चलन स्थापित मात्र गरेको छैन् देवताहरुलाई कन्याकुमारी चढाउने देउकीहरुको प्रचलन शुरु गरेर महिलाहरुको यौन शोषणको मार्ग खोलेको छ ।

आर्थिक विपन्नताका कारण पनि महिलामाथिको उत्पीडनले प्रश्रय पाएको छ । विदेशमा ग्रामीण इलाकाबाट अर्थोपार्जनकै लोभमा महिलाहरुलाई देहव्यापारका लागि लैजाने क्रम जारी छ । एक तथ्याङ्कअनुसार भारतका वेश्यालयहरुमा नेपाली चेलीबेटीको संख्या झण्डै दुई लाख पुगिसक्यो । भारतका कुल वेश्याहरु मध्ये पचास प्रतिशत नेपालीहरु नै रहेका छन् । र भनिन्छ तिनीहरुमध्ये चालीस प्रतिशत एड्सको जीवाणुद्वारा प्रभावित भइसकेका छन् । केही दिनअघि मात्र भारतको स्वयंसेवी संस्था "सावधान" का सचिव विनोद गुप्ताले काठमाण्डौसम्म आएर बताएका थिए-बम्बईमा मात्र पच्चीस हजार नेपाली चलिबेटीहरु वेश्यावृतिमा संलग्न रहेका छन् ।

वेश्यावृति र बलात्कार देशभित्रै पनि तीव्र रुपमा बढी रहेको छ । भनिन्छ काठमाडौंमा मात्र पाँच हजार आइमाईहरु वेश्यावृतिमा संलग्न छन् ।

देहव्यापारको खाडलमा नराम्रोसंग फसिसकेका नेपालगञ्जस्थित गगनगञ्जका वादी महिलाहरु पनि उपयुक्त रोजगारीको आशा गरिरहेका छन् । तर वर्तमान प्रशासनले पनि त्यहाँ विगतमा स्थापित गरिएको वेश्यावृतिको प्रचलनलाई विस्थापित गर्ने यथोचित कदम चाल्न सकेको छैन । वेश्यावृत्तिलाई मुढेबलको प्रयोग गरेर मात्र नियन्त्रण गर्न सकिदैन । त्यस पेशामा संलग्न महिलाहरुलाई उचित रोजगारको अवसर प्रदान गरेर मात्र देह व्यापारलाई विस्थापित गर्न सकिन्छ । तर केन्द्रीय र स्थानीय प्रशासनको असक्षमताका कारण बाबुको नाम नभएका वादी-बालिकाहरु दिनहुँ वेश्यावृतिको यातना भोगिरहेकै छन् ।

वादीहरु आफ्नो मूलथलो सल्यानको फलबाङ भएको बताउँछन् । उनीहरु भन्दछन् सुरुमा उनीहरु सल्यानी राजाको दरवारमा नाच्ने गाउँने गर्दथे र बक्सिस आदिबाट जीविका चलाउँथे। कालान्तरमा राजा रजौटाहरुको उन्मूलनसंगै उनीहरु पनि देशका विभिन्न ठाउँहरुमा छरिन पुगे । अहिले नेपालमा बाँके, बर्दिया, दाङ, कैलाली, सुर्खेत र रुकुममा गरी कुल दुई लाखभन्दा बढी वादीहरु रहेको अनुमान गरिन्छ । नाचगान गर्ने गर्दागर्दै वादी महिलाहरु बाबुको नाम नभएका छोरा छोरीहरु जन्मन थालेपछि र उनीहरु स्वत: वेश्यावृतिमा संलग्न गराइन थालेका हुन् । देशको अन्य भागका वादीहरु यस्तो पेशामा संलग्न छैनन् । तर गगनगञ्जका वादी समुदायलाई वेश्यावृतिको पर्यायको रुपमा नै लिएको समेत पाइन्छ । तर यो एकदम गलत कुरो हो र सम्बन्धित निकायले मुजुरा देखाउँदादेखाउँदै यही समाजले वेश्या बन्न बाध्य गराएका वादी महिलाहरुलाई वेश्यावृतिको खाडलबाट उन्मुक्ति प्रदान गर्नु पर्दछ ।

नेपालको एकीकरण हुनुभन्दाअघि डोटीमा एक जना शक्तिशाली राजा थिए - नागि मल्ल। त्यही क्षेत्र अर्थात् हालको डडेलधुरामा भागेश्वर नामक देवता पनि रहन्थे भन्ने किम्बदन्ती पाइन्छ। समयान्तरमा नागि मल्लले भागेश्वरको अपमान गर्न थाले पश्चात् डोटी-डडेलधुरामा अनेकौ प्रलय हुन थाल्यो र त्यही समयदेखि नागि मल्लले भागेश्वरको सुश्रूषा निम्ति कन्या केटी चढाउने प्रचलन शुरु गरेका हुन् भन्ने अवधारणा पाइन्छ । आजभोलि सुदुर पश्चिमाञ्चलको बैतडी लगायत केही जिल्लाहरुमा आफ्नो मनोकामना पूरा गराउनका लागि मानिसहरु आफ्ना कुमारी छोरी वा पैसा तिरेर अरुको छोरी सानै उमेरमा देवतालाई चढाउने गर्दछन्। यस्ता केटीहरुले उमेर पुगेपछि पनि वैवाहिक जीवन यापन गर्न पाउँदैनन् । तर उनीहरुको यौन शोषण यति ठूलो मात्रामा हुने गर्दछ कि कतिपय देउकीहरु वेश्याकै थान्कामा राखिएका हुन्छन् । खासगरी नायक, नेगी, राउत, धामी वा देवाकस जातिका केटीहरुलाई देउकीको रुपमा चढाइन्छ । देउकीका रुपमा चढाइने केटीहरु प्रायस बैतडीको मेलौली गा.वि.स. हरुमा दस हजारभन्दा बढीमा किनिने गरिएको पाइन्छ । त्यसरी चढाइने गरिएका केटीहरुको उमेर ६ देखि ९ वर्षको मात्र हुन्छ । र अधिकांशले आफू बेचिएको वा चढाइएको कुरा ठूली भएपछि मात्र थाहा पाउँछन् ।

महिला उत्पीडनलाई प्रश्रय दिने हाम्रो परम्परागत प्रथामध्ये जारी तिर्ने चलन पनि एउटा उल्लेख्य प्रथा हो। यस प्रथा अन्तर्गत कुनै आइमाईले राजीखुसी आफ्नो लोग्नेलाई छोडी अर्को लोग्नेमानिससंग विवाह गरी भने उसको नयाँ पतिले पहिलेको पतिले तोके बमोजिमको बिगो तिर्नु पर्दछ । उक्त आइमाईले पहिलेको पतिसंग विवाह गर्दा जम्मा भएका सम्पूर्ण लत्ता कपडा पनि फिर्ता गर्नु पर्दछ । जुम्ला जिल्लाको चन्द्रनाथ गा.वि.स. का एकजना कृषकले एक प्रहरी हवल्दार द्वारा परित्यक्ता भइसकेकी महिलासंग विवाह गर्दा २०४९ साउनमा बाइस हजार जारी रकम ती हवल्दारलाई बुझाउनु परेको थियो । यसबाट प्रमाणित हुन्छ यो प्रथाले खासगरी कर्णाली अञ्चलमा आजसम्म पनि नराम्रोसंग जरो गाडेको छ । देशका अन्य ग्रामीण इलाकाहरुमा पनि छिटफुट रुपमा जारी प्रथा देख्न पाइन्छ ।

केही वर्ष यता विदेशी मुद्रा आर्जन गर्ने प्रमुख स्रोत बन्न पुगेको कार्पेट उद्योगमा संलग्न महिलाहरुको पीडा झन् अनन्त छ। बालिकाहरु समेत उक्त उद्योगमा विधमान विसंगतिहरुबाट पीडित त छँदैछन्, उमेर पुगेका आइमाईहरु समेत अपर्याप्त ज्यालाका कारण मात्र होइन यौन शोषणका कारण पनि आक्रान्त छन्। बाल मजदूर सरोकार केन्द्रले हालै गरेको एक सर्भेक्षण अनुसार कार्पेट कारखानाहरुमा काम गर्ने कुल महिलाहरुमध्ये पैतालीस प्रतिशत महिलाहरु कार्यस्थलमै यौन अत्याचारका शिकार बन्दछन् ।

अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ले २०४८-२०४९ मा करिब एघार महिनासम्म गरेको अध्ययनअनुसार बर्दिया, कैलाली र कञ्चनपुर जिल्लाहरुमा रहेका करिब अठार हजार कमैयाहरुमध्ये एकतीस प्रतिशतले सौंकी वा ऋण लिएका छन् र त्यसैले हाम्रो देशका पाँच हजारभन्दा बढी कमैयाहरु पशुतुल्य जीवन जिउन बाध्य बनाइएका छन् । स्वतन्त्रता कुन चरीको नाम हो कमैयाहरुलाई थाहा छैन । कतिपय स्थितिमा कमैयाले आफ्नी नवविवाहिता पत्नी पनि सर्वप्रथम मालिकलाई चढाउनु पर्ने मात्र देखिएको छैन मालिकले गर्भधारण गराएका कतिपय सोझी धरुनी केटीहरुलाई पनि कमैयाले चुपचाप स्वीकार गर्नु परेको पनि देखिएको छ । कमैयाकी सुत्केरीले पनि दस-बाह्र दिन विदा पाई भने धेरै आराम गरेको ठहरिन्छ । दिन रात काम गरेर पनि मानवोचित जीवनयापन गर्न नपाउनु कमैयाहरुका लागि सामान्य कुरो झै भइसक्यो । बर्दिया जिल्लाको कनरामा सुकुम्बासी जीवनयापन गरिरहेका कमैयाहरुलाई गएर हेरियो भने उनीहरुको समस्या धेरै हदसम्म देख्न सकिन्छ ।

यस देशमा महिला उत्पीडनका अन्य थुप्रै माध्यमहरु रहेका छन् । आफनो भविष्यबारे आफै निर्णय गर्ने सबै अधिकारबाट बञ्चित नारीहरुको क्षेत्रमा गर्नुपर्ने काम धेरै बाँकी रहेको छ ।

# अनुसूची – ८

# आदिवासी र मानवअधिकार

परम्परागत रुपमा नेपालको भू-बनौटलाई भोट (हिमाल), पहाड (शिवालिक महाभारत श्रृंखला) र मधेश (तराई) क्षेत्रमा विभाजित गरिएको पाइन्छ। यी सबै क्षेत्र पूर्व पश्चिम लम्बाई र उत्तर दक्षिण चौडाइमा पर्दछन्।

नेपाल बहुभाषिक, बहुजातीय र बहुसांस्कृतिक समाज भएको देश हो। माथि उल्लेखित तीन क्षेत्रमा बेग्लाबेग्लै जलवायु, भू-बनौट रहेअनुसार फरकफरक भाषाभाषी, संस्कृति र समुदायका मानिसहरु बसोबास गर्दछन्।

पृथ्वीनारायण शाहले नेपालको एकीकरण गर्नुअघि माथि उल्लेखित चार पहाडी क्षेत्रलाई खसान, मगरात, सेसान्त र किरांत भन्ने गरिन्थ्यो।

खसहरुको बसोबास भएको क्षेत्रलाई खसान भनिन्थ्यो र त्यो क्षेत्र आजको महाकाली एवं कर्णालीजस्ता सुदूर पश्चिमाञ्चलमा पर्दथ्यो। त्यहाँ बाइसे राज्यहरु थिए। चौधौं शताब्दीमा मुगल साम्राज्यको आक्रमण र आतंकबाट त्रस्त भएर भारतवर्षका ब्राम्हण र क्षेत्रियहरु त्यस क्षेत्रको समथर भूभागमा आइपुगेका थिए।

खसानको पूर्व र कालिगण्डकीको तलतिर तल्लो पहाडी भागमा मगरहरुको मगरात क्षेत्र पर्दथ्यो। उक्त क्षेत्रलाई चौबीसे राज्यहरु पनि भनिन्थ्यो। पछि चौबीसे राज्यहरु पश्चिमबाट खस ठकुरी र दक्षिणबाट सेन ठकुरीहरुको आक्रमणले गर्दा छिन्नभिन्न भए। माथिल्लो पहाडी भागमा गुरुङहरुको नौ सरदार वा सामन्तहरुको शासन "ग्यू रोड" थियो। सो ग्यूरोड पछि मनाङका घलेहरुको आक्रमणले गर्दा छिन्नभिन्न भई समाप्त भयो।

खसानको पूर्वमा सेसान्त क्षेत्र पर्दथ्यो। सेसान्तको मध्य भागमा नेवारहरु र त्यसको वरिपरि तामाङहरुको बाहुल्य रहेको थियो।

सेसान्तको पूर्वी भागमा किरांत क्षेत्र पर्दथ्यो। किरांत क्षेत्रलाई पनि वल्लो किरांत, माझ किरांत र पल्लो किरांत गरी ३ भागमा विभाजन गरिएको थियो।

किरांत क्षेत्रको तल्लो भागलाई थारुआन भनिन्छ जहाँ थारु जातिको बाहुल्यता थियो। मगरात, किरांत क्षेत्रमा मगर, गुरुङ र किरांत क्षेत्रमा लिम्बुहरुका स-साना राज्यहरुको बीचमा संघीय शासन प्रणालिको प्रचलन थियो। सबै भाषाभाषीहरुको आफ्नो प्रचलन र जातिगत संस्कृतिको पालन भैरहेको थियो।

अहिलेसम्मको अध्ययनले नेपालका आदिवासीहरुमा लिम्बु, राई, सुनुवार, तामाङ, गुरुङ, मगर, धामी, जिरेल, हेऊ, लेप्चा, छनत्याल, थकाली, चेपाङ, कुसुण्डा, राउटे आदि पहाडी भागका र थारु, दनुवार, बोटे, माझी, धिमाल, मेचे, कोचे आदि तराई क्षेत्रका पर्दछन्। आदिवासीहरुमा सामूहिक उत्पादन प्रणाली र सम्बन्ध थियो। मुखियाले पारिवारिक आवश्यकता अनुसार भूमि उपलब्ध गराउने र गाँउलेहरुले सामूहिक रुपमा वन जंगलको उपयोग र संरक्षण गर्ने चलन थियो। यो प्रथालाई "किपट" भनिन्थ्यो।

बाह्रौं शताब्दीमा गंगाको समतल भारतीय क्षेत्रबाट हिन्दू र क्षेत्रियहरुको प्रवेश पश्चात् त्यतैबाट हलो जोतेर ठूलो परिमाणको खेती गर्ने प्रचलन भित्रियो। तर त्यसको साथसाथै ती जातिले आफै हलो नजोत्ने हुँदा अन्य जातिका मानिसहरुबाट काम लिने प्रचलन पनि भित्रियो।

गोरखाका राजा पृथ्वीनारायण शाहले राज्य विस्तार गरेपछि, नेपाललाई हिन्दू राज्यको रुपमा घोषित गरियो। त्यसपछि किपट प्रथा अन्तर्गतको ठूलो भूभाग सरकारी खर्चका लागि सरकारले कब्जामा लियो। ठूला विद्वान् र वीर कहलिएका ब्राम्हण र क्षेत्रीहरु बीच र मन्दिर पूजाआजाको लागि ती भूमि रैकर, बिर्ता, गुठी, जागिर आदिका रुपमा वितरण गरियो। जंगबहादुर राणाको पालामा पहिलो मुलुकी ऐन विक्रम संवत् १९१० मा जारी भएपछि कानूनी रुपमा नेपालमा चार जातिको वर्गीकरण गरियो: (१) ब्राम्हण (२) क्षेत्री (३) वैश्य र (४) शुद्र।

| | | |
|---|---|---|
| ब्राम्हण | - | विद्या र ज्ञानको काम गर्ने, |
| क्षेत्री | - | शासन, सुरक्षाको क्षेत्रमा काम गर्ने, |
| वैश्य | - | व्यापारको क्षेत्रमा काम गर्ने र |
| शुद्र | - | तल्लोखालको अछुत र श्रमजीवीहरु। |

यसरी यो ऐनले जातिगत रुपमा पेशाको स्वरुप विभाजन गऱ्यो। माथिल्लो र तल्लो जातिका लागि गरिने कारवाही पनि फरक फरक परियो। ब्राम्हणलाई मृत्युदण्ड दिन नपाइने गरियो।

आदिवासीहरुलाई भने मतवाली अर्थात् रक्सी वा मादक पदार्थ खाने भनी तल्लो जातको श्रेणीमा राखियो। मतवालीहरुलाई पनि दुई वर्गीकरण गरियो:

१. मासिने मतवाली - जसलाई मृत्युदण्ड दिन वा दास बनाउन सकिन्थ्यो ।
२. नमासिने मतवाली - जसलाई मृत्युदण्ड दिन वा दास बनाउन सकिन्नथ्यो । दमै, कामी, माझी, तामाङ, चेपाङ मासिने मतवालीको वर्गमा परे ।

यसपछिका वर्षहरुमा शिक्षाको क्षेत्रमा, राज्यस्तरमा केवल संस्कृत र नेपालीको चलन कायम भयो । संस्कृतिको क्षेत्रमा हिन्दू संस्कृति र ब्राम्हणवादले नै प्रश्रय पायो । आदिवासीका लिपिहरु क्रमशः लोप हुँदै गए । अशिक्षित र विकटका दूरदराज ग्रामीण क्षेत्रमा आदिवासीका प्रचलनहरु कुनै सुरक्षा र प्रोत्साहन वेगर नै जेनतेन जीवित रहे वा लोप भए ।

विकसित, सभ्य र शिक्षित समाजको कुनै सदस्य आदिवासी नै भए पनि उसले आफ्नो संस्कृतिको रक्षा र विकास गर्ने स्थिति रहेन । शिक्षा र सरकारी कामकाजको भाषा नेपाली भएकोले अरु भाषा सिक्ने, बोल्ने कुरा विस्तारै निरुत्साहित हुँदै गयो । कतिपय जातिका आफ्ना पूजा-आजा, संस्कृति, धर्मग्रन्थका पुस्तक समेत रहेनन् ।

आदिवासीहरुमध्ये नै नेपालको बाँके, बर्दिया र कैलालीमा मात्र करीव एक लाख थारुहरु कमैया प्रथा अन्तर्गत दासको जीवन बिताइरहेका छन । उनीहरुको किनवेच हुन्छ । उनीहरुका परिवारका महिलाहरु कुनै पनि बखत मालिकले चाहेअनुसार वासनाको शिकार बन्छन् । आदिवासीहरु वातावरण र प्रकृतिसंग ज्यादै गाँसिएका हुन्छन् । कतिपय आदिवासीमा रुख नकाट्ने चलननै हुन्छ । उनीहरु जंगलमा बस्ने, प्रकृतिले दिएको सुविधालाई वातावरण नमासिने गरी प्रयोग गर्ने गर्छन् । रुखबाट झरेको फल खाएर , पोखरी-नदीका माछा र कन्दमुलको भरमा जीवन बिताउने गर्छन् । निजी सम्पत्तिको उत्पत्ति र वनजंगलको विनाश पछि यी जातिहरु लोप हुने अवस्थामा पुगेका छन् ।

सांस्कृतिक कार्य, नाचगान गर्ने वदिनीहरु अब वेश्या बनेका छन् । माटाका भाँडा बनाउने भाँड जाति सपरिवार शरीर बेच्ने पेशामा लाग्न बाध्य भएका छन् । थारु जाति आफ्नो भूमिबाट बेदखल भएका छन् । परापूर्व कालदेखि खनजोत गरी भू-स्वामी भएर बसिरहेका आदिवासीका जमिन नापी हुँदा कुनै अर्को प्रभावशाली व्यक्तिको नाममा गैसकेको छ । अशिक्षित, अड्डा अदालत जान नसक्ने आदिवासीहरुका लागि अड्डा अदालत परबाट त्रस्त नजरले हेरिने घरहरु मात्र भएका छन् ।

अहिले प्रजातन्त्रको स्थापना पश्चात् धर्म निरपेक्ष राष्ट्र घोषित गर्न व्यापक माग हुँदाहुँदै पनि देशको संविधानले नेपाललाई हिन्दू अधिराज्य नै घोषित गरेको छ । संविधानमा व्यवस्था गरिएको भए तापनि जनजातिहरुले आफ्नो भाषामा प्राथमिक स्तरको शिक्षासम्म पनि पाउने कुनै प्रवन्ध छैन । विकसित जातिसंग बराबरको प्रतिस्पर्धा गर्नुपर्ने हुनाले आदिवासी बहुल क्षेत्रबाट पनि ब्राम्हण क्षेत्री जस्ता विकसित जातिकाले नै राजनीतिक प्रतिनिधित्व गर्ने गरेका छन् । संसद् वा सरकारका अन्य कुनै निकायमा पनि आदिवासीका लागि कुनै आरक्षण छैन । एउटा शताब्दियौंदेखिको दमित लङ्डोलाई समानताको नाममा सपाङ, बलिष्ठसंगको दौडमा सामेल गराइएको छ । देशको कुल जनसंख्याको ६२ प्रतिशत आदीवासीहरु छन् । तर प्रशासनमा तिनको सहभागिता १३ प्रतिशतभन्दा कम छ ।

श्रमको क्षेत्रमा ९० प्रतिशत श्रमिकहरु आदिवासी छन् । कार्पेट उद्योगमा काम गर्ने बाल श्रमिकहरुमा पनि ९० प्रतिशत आदिवासी बालबालिका नै छन् । भारतका वेश्यालयमा बेचिने युवतीहरुमध्ये ९५ प्रतिशत आदिवासीहरु छन् । स्नातक शिक्षा हासिल गर्नेमध्ये करिव २ प्रतिशत पनि आदिवासी छैनन्, यस्तो स्थितिमा संस्कृत भाषाको विकासको लागि श्री ५ को सरकारले जसरी संस्कृत विश्वविद्यालय सञ्चालन गरीराखेको छ, त्यसैगरी देशमा रहेका अन्य भाषाहरुको विकास लागि पनि विद्यालयहरु खोलिनु आवश्यक छ । चेतनाको कमी, अशिक्षा, दरिद्रताका कारणले विकट ठाउँहरुमा बस्ने आदिवासीहरुमा जारी प्रथा, दाइजो प्रथा, बहुपति प्रथा, झुमा प्रथाजस्ता सामाजिक अभिशापका रुपमा चिनिएका चलनहरु अद्यापि छँदैछन् । आदिवासीहरु भाग्य र ईश्वरको कृपामा आफूलाई समर्पण गर्ने गर्छन र भाग्य र ईश्वरको बारेमा थाहा पाउने भनी माथिल्ला जातिकाले जे भन्यो त्यसैमा विश्वास गर्ने गर्छन् । जाँड रक्सीको अत्यधिक प्रचलनले आदिवासीहरुको जीवनको हरेक पक्षमा ठूलो नोक्सान पुऱ्याएको छ । यो स्थितिको अन्त्य पनि आदिवासीहरुलेनै गर्नुपर्ने देखिन्छ।

यस्तो अवस्थामा जातीय संसद्को निर्माण गर्ने माग पनि देशमा उठिरहेको छ । संयुक्त राष्ट्र संघले वर्ष १९९३ लाई आदिवासी वर्षका रुपमा मनाउन अर्थात् वर्षभरि आदिवासीका समस्यातर्फ ध्यान केन्द्रित गर्न आव्हान गरेको छ । अन्तर्राष्ट्रिय आदिवासी वर्ष १९९३ का लागि राष्ट्रिय समितिको निर्माण पनि भएको छ । तर वर्षको आधाआधि बितिसक्दा पनि कुनै ठोस कामको सुरुआतसम्म भएको पनि लक्षण देखिएको छैन । यसर्थ अहिले सर्वप्रथम आदिवासीहरुको पहिचान गरी उनीहरुको समस्या र स्थितिबारे राम्ररी अध्ययन गरेर समाधानका उपायहरु निर्क्यौल गरिनु अति आवश्यक छ ।

पिछडिएको क्षेत्रले बढी महत्व वा सहयोग नपाउने हो भने विकासको दौडमा संधै त्यसले पछाडि रहनु पर्नेछ ।

यसरी देशको एउटा महत्वपूर्ण हिस्सा पछाडि पर्नाले राष्ट्रियता, सामाजिक सद्भाव र मूल स्वरुपमा मानव-अधिकारको स्थिति ज्यादै नराम्रो स्तरमा खस्न सक्छ । यस्तै भेदभाव, निराशा र विभिन्न जातिबीचको दुरीले देशमा अनेकन विसंगति र उग्रवाद पनि पैदा गर्ने गर्छ ।

यसकारण आदिवासीको क्षेत्रमा न्याय, समानता र प्रगतिका लागि संयुक्त राष्ट्र संघ, युनेस्को र अन्तर्राष्ट्रिय श्रम संगठनका तमाम धाराहरुको अनुमोदन, सम्मिलन गरी तदअनुरुपको काम थालिहाल्नु नितान्त जरुरी छ ।

सन्दर्भ सामग्री


- आदिवासी वर्ष-१९९३ राष्ट्रिय समिति, नेपाल ।
- सं. रा. संघ, विश्व मानव अधिकार सम्मेलन, राष्ट्रिय समन्वय समिति, नेपाल ।

श्री ५ को सरकार

# गृह मन्त्रालय

(स्था. प्र. (क) शाखा)

सिंहदरबार
काठमाडौं, नेपाल।

पत्र संख्या:- स्था. प्र. क. ३१८/०४९/०४९
च. नं. ९४४

प्राप्त पत्र संख्या र मिति:-

मिति — — — — — —

विषय:- आवश्यक सहयोग गरि दिने।

श्री प्रमुख जिल्ला अधिकारीज्यू,
७५ जिल्ला प्रशासन कार्यालय।

मानव अधिकार वर्ष - पुस्तक १९९२ तयार गर्ने सिलसिलामा अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) बाट खटिई आएका स्वयं सेवकहरूलाई आवश्यक पर्ने सहयोग गरि दिन हुन निर्देशानुसार अनुरोध छ।

२०४९/३/१३

(कुलचन्द्र श्रेष्ठ)
उप-सचिव

बोधार्थ :-

श्री मानव अधिकार वर्ष-पुस्तक १९९२
अनौपचारिक सेवा केन्द्र (इन्सेक)
काठमाण्डौं।

# मानव अधिकार वर्ष-पुस्तक १९९२
# HUMAN RIGHTS YEAR BOOK 1992

*कार्यकारिणी*
डा. राजेश गौतम
सुबोध राज प्याकुरेल
पवन कुमार ओझा
शिवहरि दाहाल
अशोक थापा

*सल्लाहकार*
हृषिकेश शाह
वासुदेव प्रसाद ढुंगाना

*संयोजक*
सुशिल प्याकुरेल

## अनुरोध

नेपालमा पहिलो पटक मानव-अधिकार बर्ष पुस्तक, १९९२ प्रकाशित गर्न लागेका छौं । अत: १९९२ (०४८ पौषदेखि ०४९ पौष) भरिका यस क्षेत्रमा भएका, घटेका घटना र प्रगति वारे सम्बन्धित सबैले जिल्ला जिल्लामा खटिएका हाम्रा स्वयम् सेवकहरुलाई अथवा हामीलाई खवर गरी सहयोग गरिदिनुहुन हार्दिक अनुरोध गर्दछौं ।

मानव अधिकार बर्ष पुस्तक, १९९२
इन्सेक,
पोष्ट वक्स नं. २७२६, काठमाण्डौ ।
फोन : २७१५८७, २७०७७०

अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) पो.ब. नं. २७२६, काठमाडौं, नेपाल फोन: २७०७७० वर्ष-पुस्तक: २७१५८७

# मानव अधिकार वर्ष-पुस्तक १९९२
# HUMAN RIGHTS YEAR BOOK 1992

मिति २०४९।१२।२५

श्री ........................................

............................................ ।

महोदय,

हामीले "मानव अधिकार वार्षिक पुस्तक १९९२" तयार गर्न लागेका छौं । यसको लागि तपाईंको जेलमा केही जानकारी हासिल गर्न आउनु हुने स्वयंसेवकलाई आवश्यक जानकारी दिनु भइ अन्य आवश्यक सहयोग समेत गरिदिनु हुन हार्दिक अनुरोध गर्दछु ।

भवदीय,

कार्यकारी सदस्य

*कार्यकारिणी:*
डा. राजेश गौतम
सुबोध राज प्याकुरेल
पवन कुमार ओझा
शिवहरि दाहाल
अशोक थापा

*सल्लाहकार:*
ऋषिकेश शाह
वासुदेव प्रसाद ढुङ्गाना

*संयोजक:*
सुशिल प्याकुरेल

INSEC अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) पो.ब. नं. २७२६, काठमाडौं, नेपाल फोन: २७०७७० वर्ष-पुस्तक: २७१५८७

